


यसै गरी विष्णुसिंहका छोरा पुरन्दरसिंह र उद्धवसिंहले पनि आफ्नो वंशवर्णन गराई शिलालेख राख्न लाएका छन् । तिनबाट पनि उपर्युक्त वंशवृक्षको पुष्टि हुन्छ । पाटन भण्डारखालभित्र येकुलिवर्माको ने.सं. ५३५ को एक अभिलेख पाइएको छ । त्यसमा येंकुलि वर्माका छोरा जयसिंह भन्ने उल्लेख परेको छ । यसबाट विष्णुसिंहको एक पुस्ता अझ बढी थाहा भएको छ । अहिलेसम्म प्राप्त सामग्रीबाट ज्येष्ठविहरूका यी महापात्रहरूको वंश यसरी देखापरेको छ –






येंकुलि वर्माका ने.सं. ५३५ को माथि उल्लिखित अभिलेखबाहेक ने.सं. ५४७ को अर्को अभिलेख पनि पाटन भण्डारखालभित्र पाइएको छ । ती दुइ अभिलेखबाट पात्र येंकुलि वर्मा त्यति शक्तिशाली व्यक्ति थिएनन् भन्ने संकेत पाइन्छ । यसकारण विष्णुसिंहले आफ्नो यस अभिलेखमा येंकुलि वर्माको चर्चा नगरेको बुझिन्छ । जयसिंह चाहिँ वेकुलि वर्माभन्दा बढी प्रभावशाली रहेको बुझिन्छ । यद्यपि जयसिंहको पालाको अभिलेख भने प्राप्त हुन सकेको छैन तैपनि विष्णुसिंह यस अभिलेखमा जयसिंहलाई स्थान दिई वर्णन गराएको हुँदा जयसिंहको प्रभाव बढेको संकेत पाइन्छ । विष्णुसिंहको यस अभिलेखमा जयसिंहभन्दा कीर्तिसिंहलाई अझ बढी जोड दिई वर्णन गराइएको छ । कीर्तिसिंहको वर्णन गर्दा *शत्रुराजाको थुप्रोलाई खतम पार्ने, भक्तिले नुहेका राजाका शिरपेचका मणिले चरणकमल घोटिएका, लडाइँको मैदानमा शत्रुहरूलाई ध्वस्त पारेका* आदि भाव व्यक्त गरिएको छ । यद्यपि अतिशयोक्तिपूर्ण काव्यमय यस्तो वर्णनको कुनै ऐतिहासिक मूल्य छैन तापनि वर्णन गरिएको व्यक्तिको व्यक्तित्व र चरित्रको अलिकता झलक भने कहिलेकहीँ यस्तो वर्णनबाट पनि पाइन्छ । यसकारण विष्णुसिंहको भृङ्गारेश्वरको यस अभिलेखको वर्णन शैलीबाट जयसिंहभन्दा कीर्तिसिंहको प्रभाव बढेको अनुमान गर्न सकिन्छ । एक ताडपत्रमा *सं. ६०० चैत्रशुद्धि ३ श्रीकोथविहार प्रधान महापात्र श्री जयकीर्तिसिंहवमा सन ....... चोस्य विरङा भाषाथते* भन्ने उल्लेख पाइएको छ । यसबाट वि.सं. १५३७ तिर कीर्तिसिंहले ललितपुरका प्रधान महापात्र भई शासन गरिरहेको देखिन्छ ।

कीर्तिसिंहपछि कुसुमसिंह पनि ललितपुरको संयुक्त शासक अर्थात् प्रधान महापात्र भएको उल्लेख हामी पाउँछौं । कुसुमसिंहको पहिलो उल्लेख ने.सं. ६१५ को पशुपतिको सन्धिपत्रमा भएको छ । सो सन्धि रत्नमल्लले केही भाइ भानिजलाई आफ्नो साथ मिलाई दाजु रायमल्लको विरुद्ध गरेका हुन् । रायमल्लले रत्नमल्लसँग यस कुरामा विरोध दर्शाएपछि रणमल्ल, अरिमल्ल र भीममल्ललाई आफ्नो गुटमा मिलाई ललितपुर भेकमा पनि केन्द्रको अधिकार छुटाई आफ्नो गुटको अधिकार कायम गर्न यो सन्धिपत्र गरिएको हो । ललितपुरका महापात्रहरूले रायमल्लसँग सम्बन्धविच्छेद गरी रत्न मल्लहरूको समर्थन गर्नुमा नै आफ्नो हित देखे तर कान्तिपुरका महापात्रहरूलाई मासेको घटनाबाट ललितपुरका महापात्रहरू चेतिसकेको थिए । यसो हुनाले रत्नमल्लहरूलाई साथ दिए तापनि आफ्नो रक्षा पनि उनीहरूले गरे । साथै मल्लराजाहरूको यस गृहकलहबाट लाभ उठाउने विचार पनि ललितपुरका केही महापात्रहरूले भित्रभित्रबाट गर्न थाले । तिनमा कुसुमसिंह पनि एकजना हुन् । वि.सं. १५५२ को उक्त पशुपतिको अभिलेखमा ललितपुरका तर्फबाट भाग लिने मध्येमा कुसुमसिंह पनि उल्लेख परेको छ । यसबाट कुसुमसिंहको गतिविधि केही थाहा पाइन्छ ।

कुसुमसिंहको अर्को उल्लेख ने.सं. ६२० (वि.सं. १५५७) मा ललितपुरमा लेखिएको *साद्यन्तकोशसार* नामक एक हस्तलिखित ग्रन्थमा आएको छ । कुसुमसिंहबारे यस वर्णनबाट उपयोगी कुरा थाहा पाइने हुँदा त्यसको अलिकता अंश यहाँ उद्धृत गरिन्छ –

ज्येष्ठः श्रीजयरायमल्लनृपतिन्नेपालचूडामणि-
स्तन्मध्योनुज कंसकेशवबली श्रीरत्नमल्ल प्रभुः
कानिष्ठो रणमल्लदेवसुकृति कारण्यरत्नाकर-
स्ततेषां वरभागिनेयविदितः श्रीभीममल्लो नृपः"
तेषां नृपाणां विजयराज्ये । अत्र हि"
पात्रोत्तमे सप्तकुटुंबमध्ये प्रधानतः श्रीत्रिमयः प्रमुख्य ।
तीक्ष्णप्रतापैर्जितवैरिबृन्दः प्रतापसिंहः परमं विभाति ॥

अन्यच्च ॥ जयति अमृतसिंहः शत्रुमातंगसिंह ......
ललितपुरवरेस्मिन् सर्व्वसामंतसिंहः ।
अतश्वा । ... श्रीपात्रवंशशार्ण्णवजातचन्द्रः
विराजते राधवसिंहधीरः "
अपि च । श्रीमन्मणिकुमारस्य पदाम्भोजैकषट्पदः ।
जीयात कुसुमसिंहोथं कीर्तिसिंहसुतः सुधीः
अपरञ्च ॥ .. हर्षपालो विभात्युच्चैः कल्पवृक्ष इवापरः ।
विन्दुयुग्मरसे याते श्रीनेपालिकवात्सरे ।
वैशाखस्य शिते पक्षे द्वितीयायां प्रभात्नतः ।"

यस वर्णनबाट तात्कालिक ललितपुरको राजनीतिक अवस्थाको केही झलक पाइन्छ । रत्नमल्लहरूले ने.सं. ६१५ मा रायमल्लको विरुद्ध सन्धि गरी ललितपुरमा उनको अधिकार छुटाउने प्रयत्न गरे तापनि उनीहरू ने.सं. ६२० सम्म यस कार्यमा सफल भइसकेका थिएनन् भन्ने कुरा यस वर्णनबाट थाहा पाइन्छ । यहाँ नेपाल चुडामणिको रूपमा रायमल्लको पनि वणृन गरिएको छ । यसबाट ललितपुरका जनताले रायमल्ल जीवित छउन्जेल उनलाई साविक बमोजिम राजा नै मानिरहेको स्पष्ट छ । उनको मृत्युपछि उनका सन्तानलाई चाहिँ राजा नमानी रत्नमल्लहरूलाई मात्र ललितपुरका प्रजाले राजा मानेको कुरा तात्कालिक अभिलेखबाट थाहा पाइन्छ ।

यस वर्णनमा ललितपुरका शासकका रूपमा प्रतापसिंह, अमृतसिंह, राघवसिंह, कुसुमसिंह, हर्षपालको उल्लेख परेको छ । पशुपतिको उपर्युक्त सन्धिपत्रमा भाग लिने ललितपुरका पात्रकुलमा पनि यिनै नाम परेका छन्, खालि त्यहाँ जगत्पाल एकजनाको बढी उल्लेख परेको छ । जगत्पाल हर्षपालका छोरा देखिन्छन् । पछि ललितपुरमा रत्नमल्लहरूको अधिकार जनाउनामा जगत्पालको बढी हात रहेको देखापरेको छ ।

साद्यन्तकोशसारको माथि उद्धृत वर्णनबाट कुसुमसिंह मणिकुमारका भक्त देखिन्छन् । उनी कीर्तिसिंहका छोरा हुन् भन्ने परिचय दिइएको हुनाले कीर्तिसिंहको महत्त्व रहेको देखिन्छ । मनिग्वलका (ललितपुरका राजधानीका) देवताहरूलाई मणिकुमार, मणिनाग आदि मणि शब्द जोरेर भन्ने चलन थियो । यसै गरी राजाहरूको सभा गर्ने मण्डप समेत *मणिमण्डप* कहलाएको थियो । कुसुमसिंहमा मणि कुमारका भक्त भन्ने विशेषण जोडिएको हुनाले उनीहरूको वासस्थान मङ्गलबजारकै आसपासमा थियो भन्ने संकेत पाइन्छ । हुन पनि कुसुमसिंहका प्रपितामह येंकुलि वर्माको दुइ अभिलेख भण्डारखालमा पाइएको हुनाले पनि उनीहरू यतैतिर बस्दथे भन्ने थाहा पाइन्छ । यसो हुनाले पनि पछि विष्णुसिंहले *मानिमलाधिपति* विशेषण लिई ललितपुरमा एकलौटी शासन खडा गर्न प्रेरणा मिलेको आभास पाइन्छ ।

यसरी कुसुमसिंहको त्यस बेला ललितपुरका एक शक्तिशाली संयुक्त शासक हुँदा विष्णुसिंहको यस भृङारेश्वर अभिलेखमा उनको वर्णन विशेष जोड दिई गरिएको छ । कुसुमसिंहकी पत्नी जयतलक्ष्मीको पनि यस अभिलेखमा जोड दिई वर्णन गरिएको छ । उनी विष्णुसिंहकी आमा हुँदा उनको वर्णन यहाँ पर्नु स्वाभाविक छ तापनि उनको विशेष वर्णन गर्नामा राजनीतिक कारण पनि भएको आभास पाइन्छ । विष्णुसिंहले आफ्नो शक्ति बढाउँदै लान समर्थ हुनामा आमाबाट पनि केही मद्दत पाएको अनुमान हुन्छ । जयतलक्ष्मीको वर्णन गर्दा यहाँ वैश्यकुलमा जन्मेकी भन्ने कुरा गर्वसाथ उल्लेख गरिएको छ । साथै जयतलक्ष्मी ललितपुरकै हुन् भन्ने कुरा पनि *ललितनगर पारावारसजाराजलक्ष्मी* भनी किटिएको छ ।



यसपछि यस अभिलेखमा विष्णुसिंहको वर्णन गरिएको छ । एक जन्म आदर्श राजाको बयान गर्दा शूरवीर, दानी, सुन्दर, गुणी, विद्वान् आदि भनी लेख्ने पुरानो जुन चलन छ, त्यही अनुसार यहाँ विष्णुसिंहको पनि वर्णन गरिएको छ । यस वर्णनको ऐतिहासिक महत्त्व त्यति छैन ।

यसपछि विष्णुसिंहका दुइ पत्नी पद्मावती र कमलालक्ष्मीको वर्णन गरिएको छ । साथै तीन छोराहरू नरसिंह, पुरन्दरसिंह र उद्धवसिंहको बर्णन गरिएको छ । नरसिंह र पुरन्दरसिंह एकै आमाका हुन् भन्ने देखिएको छ । उद्धवसिंह चाहिँ अर्कै आमापट्टिका हुन् । उद्धवसिंहको अभिलेखमा आफ्नी आमा श्री हृदयलक्ष्मी हुन् भन्ने वर्णन गएिको छ । यस अभिलेखमा भने हृदयलक्ष्मीको नामोल्लेख गरिएको छैन । यसमा केही रहस्य लुकेको आभास पाइन्छ ।

गोपालराजवंशावलीअनुसार नेपाल उपत्यकामा भृङ्गारेश्वर महादेवको स्थापना पशुपतिनाथ भन्दा अगाडि भएको हो भन्ने रहेको छ । भृङ्गारेश्वरस्थानमा लिच्छविकालका दुइ अभिलेख पाइएका छन् । तिनमा एक भीमार्जुनदेव र विष्णुगुप्तको हो, अर्को द्वितीय शिवदेवको हो । ती दुइ अभिलेखबाट लिच्छविकालमा भृङ्गारेश्वर महादेवको मन्दिर यहाँ थियो, यहाँका प्रसिद्ध देवता हुनाले भृङ्गारेश्वरकै नाउँमा यहाँको पञ्चायत क्षेत्र (पाञ्चाली) समेत *भृङ्गारेश्वर पाञ्चाली* कहलाएथ्यो भन्ने थाहा पाइन्छ, तर लिच्छविकालमा नेपाल उपत्यकामा पशुपति, चाँगुनारायण आदि प्रसिद्ध देवताको श्रेणीमा भृङ्गारेश्वरको स्थान थिएन भन्ने कुरा अंशुवर्माको हाँडिगाउँको अभिलेखबाट थाहा पाइन्छ । त्यस अभिलेखमा भृङ्गारेश्वरलाई विशेष भाग छुट्याइएको छैन ।

जेहोस्, लिच्छविकालमा भृङ्गारेश्वरको अस्तित्व राम्ररी कायम थियो भन्ने कुरा त्यहाँ रहेका दुइ अभिलेखबाट थाहा पाइन्छ, तर पछि मध्यकालको उत्तरार्द्धमा पुग्दा भृङ्गारेश्वर महादेव हुन् भन्ने कुरा समेत जनताले बिर्सिसकेको देखिन्छ । यो कुरा विष्णुसिंहको यस अभिलेखबाट थाहा पाइन्छ । यहाँ *यी महादेव के नाउँ भएका होलान् भनी ज्यादै आकुल मन भएका राजा विष्णुसिंहले यहाँ कूवा किन रहेको होला भनी खोज्न लाउँदा कूवाबाट अक्षरसहितका तांवाका घडाहरू बाहिर निस्के, ती घडामा 'श्रीभृङ्गारेश्वर महादेव' भनी लेखेको देखेर राजा खुशी हुनुभयो* भन्ने कुरा कुँदाइएको छ । यसबाट विष्णुसिंहको पालामा यी *श्रीभृङ्गारेश्वर महादेव* हुन् भन्ने कुरा समेत जनताले बिर्सेको देखिन्छ । एउटा कुरा– तामाको घडामा *श्रीभृङ्गारेश्वर महादेव* लेखिएको देखेर मात्र यी भृङ्गारेश्वर महादेव हुन् भन्ने थाहा भयो भन्ने यस उक्तिबाट विष्णुसिंहहरूले त्यहाँ रहेका लिच्छविकालका दुइ शिलालेख चाहिँ नपढेको बुझिन्छ । किनभने भृङ्गारेश्वरस्थानमा रहेका उपर्युक्त दुवै शिलालेखमा भृङ्गारेश्वरको उल्लेख परेको छ । ती अभिलेख पढेका भए यी *भृङ्गारेश्वर महादेव* हुने भन्ने सजिलै थाहा पाउने थिए । स्थानीय लिच्छविकालमा पञ्चायत नै *भृङ्गारेश्वर पान्चाली* कहलाएको हुनाले जनतासम्म पनि यो कुरा भिजेको हुनुपर्थ्यो । भृङ्गारेश्वर नामको ठाउँमा *सुनागुठी* नाम मध्यकालमा प्रचलित हुँदा जनताले उक्त कुरा बिर्से होलान् भनी मान्न सकिन्छ तर सामुन्ने रहेका दुइदुइ शिलालेखमा पनि दृष्टि दिन छोडेको यस घटनाले त्यस बेला बौद्धिक चेतना घटेको कुरामा चाहिँ सन्देह छैन ।

जेहोस्, विष्णुसिंहले *भृङ्गारेश्वर-महादेव*को मन्दिरको जीर्णोद्वार गरिदिएका हुँदा भृङ्गारेश्वरको प्रसिद्धिले पुनर्जन्म पायो, यो नै खुशीको कुरा छ । विष्णुसिंहले मन्दिर भव्य रूपमा बनाउन लाएको देखिन्छ । यस अभिलेखबाट उक्त कुराको संकेत पाइन्छ । मन्दिर निकै अग्लो बनेको बुझिन्छ । काव्यमय, अतिशयोक्तिपूर्ण वर्णन यस अभिलेखमा परको छ तापनि मन्दिर अग्लो बनेको थियो भन्ने कुरामा चाहिँ शङ्का छैन । *प्रासादरत्न* सुमेरुसँग दाँचो लाग्दो आदि वर्णनले मन्दिरको छाना सुनले मोलम्बा गरी बनाइएको आभास पाइन्छ ।

यो मन्दिर बनाएर भएको पुण्यफल बाबु कुसुमासलाई प्राप्त होस् भन्ने शुभकामना यस अभिलेखको अन्त्यमा गरिएको छ । यो हाम्रो प्राचीनकालदेखिको परम्परा हो । आफूले गरेको पुण्यको फल आफ्ना अभीष्टजनले पाउन् भन्ने कामना गर्ने परम्परा लिच्छविकालदेखि नै प्रचलित थियो । यो परम्परा महायानी बौद्ध समाजमा अझ बढी प्रचलित थियो । साथै शैव आदि समाजमा पनि यो परम्परा प्रचलित नै थियो ।

अन्त्यमा यस अभिलेखको साहित्य पक्षको चर्चा पनि अलिकता गर्नु परेको छ । यस अभिलेखको रचयिताको नाम यहाँ उल्लिखित छैन तर यस अभिलेखका रचयिता संस्कृत भाषामा दखल भएका पण्डित थिए भन्ने यसको लेखाइबाट थाहा पाइन्छ । वर्णन शैलीमा नवीनता छैन तापनि वाक्यरचनामा र अभिव्यक्ति, उत्प्रेक्षा आदिमा प्रभावशालीता रहेको छ । पछिका पुरन्दरसिंह, उद्धवसिंहका अभिलेखहरूमा पनि यही अभिलेखलाई आदर्श मानी अनुकरण गरिएको पाइन्छ । यसताका दक्षिण भारतका केही विद्वान्हरू नेपाल आइरहन थालेका थिए । तिनमध्ये एक जना नारायण पण्डित त पछि शिवसिंह मल्लका गुरु बन्न पुगेका थिए । उनका छोरा नाति पनि विद्वान् नै बनेको अभिलेखबाट थाहा पाइएको छ । त्यस्तै पण्डितहरूबाट यस अभिलेखका रचना भएको हुन सक्छ ।

★★★

(८)

## पाटन सानागाउँ देउननिटोलको गणेशमन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ सम्वत् ६७९ वैशाखमासे शु-
२. कपखे, तितियाम तिथ्व. केति -
३. क प्र रोहिननक्षेत्रे, साधति-
४. योगे, सोमवासरे, थ्व दि-
५. न कुन्हु श्री थानथिनाय था-
६. न्पया दिन जुरो. थ्व दयकु ज-
७. जमान छेत्थोय दवखाङ्ग भा-
८. रो दुयजु सङजु - रूपाजु
९. थ्व पेह्मन दयका जुरो व-
१०. न्त भराड ममरजु शुभ
११. थ्व पेङ्ग महम भकारेन्दे-
१२. वस निग्रह जुरो: शुभ



### अनुवाद

ने.सं. ६७९ (वि.सं. १६१६) वैशाख शुक्ल तृतीया कृत्तिका उप्रान्त रोहिनी नक्षत्र, साध्ययोग, सोमवार यस दिन श्रीस्थानगणेश स्थापना गरियो । यो बनाउने जजमान छेह्मोय दवखाङ्ग भारो, दुयजु, सङजु, रूपाजु हुन्, यी चार जनाले बनाएका हुन् । गुरुमाजु ममरजु, । शुभ होस् । गरेनन् भने देवताको निग्रह होस् ।

★★★

(९)

## पुल्चोक ठूलो चैत्यको शिलालेख

### मूलपाठ

१. नमो बुद्धाय ॥ नमो धर्म्माय ॥ नमो संघा-
२. य ॥ श्रेयोस्तु ॥ सम्वत ६८१ माघमासे कृष्णपक्ष द्वितीय-
३. या प्र तृतियायां तिथो ॥ उत्रफाल्गुणी (नक्षत्र)
४. ॥ शुक्रमानयोगे यथाकर्ण्णमुहुर्त्रे ...........
५. वासरे ॥ कुंभलासिगते सवितरी ............
६. गते चन्द्रमसि, थ्व दिन कुन्हु श्रीश्रीश्री ....
७. धर्म्मधातुवागीश्वरभट्टारका .................
८. जुको जीर्ण्णधार यतिस्था याङा दिन ........
९. दानपति जनमान साक्यभिक्षु श्रीर ..........
१०. जु प्रमुखत: अहोरात्र धर्म्मगोष्टि ............
११. स्यं जुरो चिता याक्व ? कोयुपुर श्री ......
१२. उजु: मुकजु: नाथुजु: ङयराम ...........
१३. थुते जुरो ॥ जजमानस्य जथासा (स्त्रोक्तपत्र)
१४. रसंप्राप्तमस्तु ॥ शुभ ॥

### अनुवाद

बुद्धलाई नमस्कार । धर्मलाई नमस्कार । सङ्घलाई नमस्कार । कल्याण होस् ।. ने.सं. ६८१ (वि.सं. १६१७) माघ कृष्ण द्वितीया उप्रान्त तृतीया, उत्तर फाल्गुणीनक्षत्र सुकर्मयोग पर्नुपर्ने कारण मुहूर्त

परेको बेलामा ... बार, कुम्भराशिमा सूर्य राशिमा चन्द्रमा रहेमा, यस दिन श्रीश्रीश्री धर्मधातु वागीश्वर भट्टारक ...... जीर्णोद्धार गरी प्रतिष्ठा गरियो।

दानपति जजमान शाक्यभिक्षु श्रीर ..... जु प्रमुख भएको अहोरात्र धर्म गोष्ठीले उक्त काम गरिएको हो। चिताइ गर्ने कोथुपुरका श्री उजु, मुकजु, नाथुजु, ङयराम हुन् ॥ जजमानलाई शास्त्रमा बताए अनुसारको फल प्राप्त होस्।

★★★

(१०)

## मङ्गलबजारको पुरन्दरसिंहको अभिलेख

*संस्कृत सन्देश* वर्ष १, अंक ८ को १-८ पृष्ठमा भोलानाथ पौडेल, धनवज्र वज्राचार्य, ज्ञानमणि नेपालद्वारा यो अभिलेख प्रकाशित भएको छ।

### मूलपाठ

१. ॐ नमः श्रीपंचतत्वात्मने नारायणय। यं व्रलेन्द्रमुनीन्द्रचन्द्रविवधा ध्यायन्ति हत्पङ्क-
२. जे, सर्व्वात्मानमगम्यमिन्द्रियगणैः सर्व्वज्ञमाद्यं विभुं। नित्यानन्दिमयं परात्परतरं संसार-
३. दिव्यौष्षधं, देवं नौमि हरिं त्रिलोकसुखदं पंचात्मकं केशवं ॥ पह्लादप्रणत, प्रसन्नवदन-
४. श्रीमत्त्रिलोकीपते, ब्रह्मोत्तंसमरीचिमांसलपदाम्भोजाय तुभ्यन्नमः। तुभ्यं नाथ नमो नम -
५. सुरपते लंकेत्शदर्प्पान्तिक क्षेमं संतनुतां पुरन्दरमहीपालस्य नित्यं भवान् ॥ यत्कीर्त्या विमलीकृतं त्रिभुवनं लोको
६. त्तरं राजते, यत्पादातपदप्रहारवशतो भूमिर्म्मुहुः कम्पते। यत्तेजस्तपनोदयेस्तमगमन् भूपालवृन्देन्दवः सो भूद्भू-
७. तलभूषणो विजयवान् श्रीकीर्तिसिहो नृपः ॥ अजनि कुसुमसिंहः शत्रुमत्तेमसिंहः ममरभुवि करालो मेदिनी-
८. चक्रशक्रः। अमरतरुसमानो विश्वविख्यातकीर्तिः सकल वुधजनानामाश्रयो भूमिपालः ॥ एतस्माद्धारणी-
९. न्द्रमौलिमुकुटात्सर्व्वार्थचिन्तामणे साक्ष्याच्छ्रीजगदीश्वरो नृपवपुः श्रीविष्णुसिहोऽजनि। दृष्टान्दण्डयितुं द्विषो



१०. दमयितुं त्रातुं सुहृत्सज्जनान् भूमिं भूषयितुं तमः समयितुं कर्तुं व्यवस्थां सतीं। विद्वांसो नमयन्ति भूपतिगजान्-
११. यत्कीर्तिकाव्यांकुशैर्य दीनाः कलिकर्ण्णमेत्य न दधुः कर्ण्णस्य कर्ण्णे कथा। यं नाथं प्रतिपद्य किं च धरणी श्रीरा-
१२. मशोकं जहौ, सोभूद्भूपतिमौलिपूजितपदः श्रीविष्णुसिंहः प्रभुः ॥ पुरन्दरस्य जननी, महिषी विष्णुभू-
१३. पतेः। पद्मलक्ष्मी महारानी सदा भर्तृपरायणा ॥ राजा संप्रति विष्णुसिंहनृपति क्षीरोदधेरुत्थ्यतो
१४. लक्ष्मीलक्षितभूमिमंडलधरः कान्त्या जगत्कान्तयन्। वैरिक्ष्मापतिलोककोकहृदये शोकं नितान्तं दिशन्
१५. श्रीमच्छ्रीलपुरन्दरो विजयते लोकोत्तरश्चन्द्रवत् ॥ अहंकृतवसुन्धराधिपमहेभमूर्धाकुशोमहाकुलिसपंञ्जरः
१६. शरणसंगतः क्ष्माभृतां पदच्यूतमहीपतिस्वपदरक्षणे पण्डितः पुरन्दरनेश्वरो जयति विप्रकल्पद्रुमः
१७. पुत्रोयं पुरुषोत्तमो विजयते पूर्ण्णेन्दुमुग्धाननो यस्तातस्य मुदं तनोति गिरिजेशस्येव लंवोदरः ॥ किंवुमो मधु-
१८. सुदनोर्जुनमिवारातेरणे भीषणः। शक्रस्येव जयन्त एष तनयो यो वीरभद्राकृतिः ॥ तेनाकारि मठो म-
१९. होच्चशिखरो मालायते जान्हवी। पूर्णेदुः कलशायते दिमणिश्वकायते सर्व्वदा। यत्रायं नवनील-
२०. सान्द्रजलदो नीलीनिचोलायते नक्षत्रं कुसुमायते सुखधुप्रक्षिप्तपुप्पांजलौ। वासुदेवञ्चपूर्वेषया-
२१. म्ये सङ्कर्षणं प्रभुं। प्रद्युम्नं पश्चिमद्वारि कौवेय्र्यामनिरुद्धंक ॥ मध्ये नारायण रूपं, परंव्रह्मस्वरु-
२२. पिणं। पंचतत्त्वात्मकं देवं प्रासादे स्थापितो नृप ॥। प्रासादमेनमतिभक्तिमता वितीर्य्य, नारायणाय
२३. भजतामभयंकराय श्रीमत्पुरन्दरमहीन्द्रपुरन्दरेण दत्तं फलं जनकविष्णुमहीश्वराय
२४. चतुर्व्यूहात्मको विष्णुः, प्रासादे स्थापितः स्वयम्। पुरन्दरनरेशेन पितुः सुकृतहेतवे ॥
२५. रविदिनश्रवणर्क्षे कुम्भसंस्थेशुमालौ मनसिजतिथिमाघे कृष्णापक्षेतिरम्ये ऋतुवसुरस-
२६. चिन्हे वत्सरे विष्णुहेतोः कनकरचितकुम्भं मेदिनीशो व्यधन्त ॥ शुभमस्तु सर्व्वजगतां शिवं ॥

## अनुवाद

पाँच तत्त्वस्वरूप श्रीनारायणलाई नमस्कार छ ।

सबैका आत्मास्वरूप, इन्द्रियहरूले पत्ता नपाइने, सबै कुरा जान्ने जुन आदि परमेश्वरलाई ब्रह्माजी इन्द्र ठूलठूला ऋषिमुनिहरू चन्द्रमा आदि देवताहरू मनमा ध्यान गर्दछन् । सधैं आनन्दस्वरूप रहने ठूलाभन्दा पनि ठूला, संसारको दिव्यऔषधि, तीनै लोकलाई सुख दिने, पञ्च आत्मा (वासुदेव, संकर्षण, प्रद्युम्न, अनिरुद्ध, नारायण) स्वरूप भगवान् विष्णुको स्तुति गर्दछु)

प्रह्लादले प्रणाम गरिएका, हँसिलो मुखे भएका, तीनै लोकका अधिपति हे भगवन्, ब्रह्माजीका शिरका गहनाका किरणले झलमल्लपाउ भएका हजुरलाई नमस्कार । हे देवताका अधिपति हजुरलाई नमस्कार छ । रावणको घमण्ड तोड्ने हे नारायण हजुरलाई नमस्कार छ । हे नारायण हजुरलाई नमस्कार छ । हजुरबाट राजा पुरन्दरको कल्याण सधैं होस ।

जसको कीर्तिले उज्यालो पारिएको तीनै लोक सबैभन्दा सुहाइरहेछ । जसका पैदल सिपाहीका पादप्रहारले पृथिवी वारम्वार काँप्तछिन् । जसको तेजरूपी सूर्य उदाएमा राजारूपी चन्द्रमाहरू अस्ताए । त्यस्ता विजयी पृथिवीका गहना श्रीकीर्ति सिंह राजा हुनु भयो ।

शत्रुरूपी हात्तीमा सिंहसमान, लडाईंका मैदानमा डरलाग्दा, भूमण्डलका इन्द्र, कल्पवृक्ष जस्ता, संसारमा यश फैलिएका, सबै विद्वान्हरूलाई आश्रय दिने कुसुमसिंह राजा हुनु भयो ।

सबै राजाहरूमा श्रेष्ठ, सबै कुरा दिने ती महाराजाबाट दुष्टहरूलाई दण्ड दिन शत्रुहरूको नाश गर्ने, साथी र सज्जनहरूको रक्षा गर्न पृथिवीलाई सिंगार्न अन्धकार हटाउन असल स्थिति बाँध्न साक्षात् भगवान् विष्णु राजा विष्णुसिंहको रूप लिई पैदा हुनु भयो ।

जसका कीर्तिका काव्यरूपी अंकुशले विद्वानहरू अरू राजारूपी हात्तीहरूलाई निहुर्‍याउँदै छन् । कलियुगका कर्णसमान जुन महाराज कहाँ आएर गरीबहरूले कर्णको कानमा कान दिएनन् । जुन राजालाई मालिक पाएर पृथिवीले पनि श्री रामचन्द्रको (विछोड) शोक गर्न छोडिदिइन् । राजाहरूका शिरपेच पाउ पूजिएका त्यस्ता महाराज श्रीविष्णुसिंह हुनु भयो ।

महाराज विष्णुसिंहकी पत्नी महाराज पुरन्दरकी मुमा पतिव्रता वडा महारानी पद्मलक्ष्मी हुनुहुन्छ ।

महाराज विष्णुसिंहरूपी क्षीर समुद्रबाट पैदा भएका, श्रीसम्पत्तिले युक्त पृथिवीको पालना गर्ने, आफ्नो कान्तिले संसारलाई उज्ज्वल गराउने शत्रु राजारूपी चखेवाको मनमा ज्यादा पीर पार्ने महाराज श्री पुरन्दर अहिले चन्द्रमा जस्तै बेजोडसँग सुहाइरहनु भएको छ ।

अहंकारी राजारूपी मत्ताहात्तीमा अङ्कुशे भएका, शरण पर्न आएका राजाहरूको वज्रजस्तो पिंजडा भएका (रक्षा गर्ने) राज्यच्यूत भएका राजाको राज्य थामिदिनामा सिपालु भएका, ब्रह्माण्डमा कल्पवृक्ष समान महाराज पुरन्दर हुनुहुन्छ ।

पूर्णचन्द्रजस्तै उज्यालो मुख भएका यी महाराजका छोरा पुरुषोत्तम हुनुहुन्छ । गणेशले महादेवलाई झैं जो आफ्ना पितालाई खुशी पार्नुहुन्छ । के भन्ने जो लडाईमा शत्रुहरूका डरलाग्दा भएका अर्जुनलाई कृष्णले झैं (बाबुलाई खुशी पार्नु हुन्छ) ॥ वीरभद्रको जस्तो अनुहार भएका जो इन्द्रका पुत्र जयन्तजस्तै हुनुहुन्छ ।

ती महाराज पुरन्दरले ठूलो अग्लो मन्दिर बनाउनु भयो । स्वर्गका अप्सराहरूले पुष्पाञ्जलि चढाइएको जुन मन्दिरमा सधैं आकाशगङ्गामाला जस्ती हुन्छिन्: पूर्णचन्द्र कलश (गजुर) जस्तै हुन्छन्: सूर्य चक्रजस्तै हुन्छन्, नयाँ कालो बाक्लो बादल चँदुवाजस्तै हुन्छ, ताराहरू फूलजस्तै हुन्छन् ।



पूर्व ढोकानिर वासुदेव, दक्षिण ढोकातिर संकर्षण, पश्चिम ढोकातिर प्रद्युम्न, उत्तर ढोकातिर अनिरुद्ध वीचमा परब्रह्मस्वरूप नारायण भएका पञ्चतत्त्वात्मक देवतालाई महाराज पुरन्दरले मन्दिरमा स्थापना गर्नुभयो ।

भक्तको भय हर्ने नारायणलाई भक्तिले यो मन्दिर चढाएर भएको फल पृथ्वीका इन्द्र जस्ता भएका महाराज पुरन्दरले आफ्ना पिता महाराज विष्णुसिंहलाई समर्पण गर्नु भयो ।

महाराज पुरन्दरले बाबुको पुण्यको निमित्त चतुर्व्यूहस्वरूप विष्णुलाई मन्दिरमा आफैं स्थापना गर्नु भयो ।

ने.सं. ६८६ (वि.सं. १६२२) माघ कृष्ण त्रयोदशी आदित्यबार श्रवण नक्षत्रमा, कुम्भमा सूर्य गएमा, विष्णुको निमित्त महाराज पुरन्दरले सुनको गजुर चढाउनु भयो ।

सारा संसारको शुभ होस्, कल्याण होस् ।

### व्याख्या

विष्णुसिंहको माथि भएको ने.सं. ६७४ को भृङ्गारेश्वरको अभिलेखमा उनलाई पूर्ण स्वतन्त्र राजाको रूपमा वर्णन गरे तापनि सनद रूपका सरकारी पत्रहरूमा चाहिँ त्यस्तो लेखिएको पाईदैन नैपनि विष्णुसिंहका अन्तिम समयतिरका सनदपत्रमा विष्णुसिंहमा मल्ल राजाहरूमा जस्तै दुइ श्री ठाकुर, श्रीमनिगलाधिपति आदि विशेषण जोडिएको हामी पाउँछौं । यो कुरा ने.सं. ६७७ को विष्णुसिंहले गरिदिएको ताडपत्रबाट थाहा पाइन्छ, तर त्यस ताडपत्रमा उपर्युक्त विशेषणहरू जोडिए तापनि *महापात्र* शब्द पनि प्रयोग गरिएको छ । त्यहाँ सोझै राजा शब्द प्रयोग गरिएको छैन । यो विष्णुसिंहको व्यवहार कुशलता हो । यद्यपि मल्ल राजाहरूले जस्तै *ठाकुर* शब्दको प्रयोग गरी उनले आफ्नो महत्त्वाकाङ्क्षा चाहिँ दर्शाएका थिए ।

केन्द्रमा (मल्ल राजधानीमा) चलेको संयुक्त शासकले त्यहाँ गृहकलह, कमजोरी आदि ल्याएको थियो । त्यही कमजोरी आदिबाट लाभ उठाई ललितपुरका विष्णुसिंह महापात्रले स्वतन्त्र हुने मौका पाएका थिए तर यस घटनाबाट विष्णुसिंहले शिक्षा भने लिएको देखिँदैन । उनले पनि उही भूल दोहऱ्याए । ललितपुरमा पनि उही संयुक्त शासनपद्धति लागू गरियो । तदनुसार विष्णुसिंहको शेषपछि उनका तीन छोरा नरसिंह, पुरन्दरसिंह र उद्धवसिंहको संयुक्त शासन चल्यो । मल्ल राजपरिवारमा जस्तै विष्णुसिंहका ती तीन छोराहरूमा पनि आवश्यक सहयोगी भावना रहेन । एकले अर्कालाई उछिन्ने प्रयत्न हुन थाल्यो । यसो हुँदा भित्रभित्रबाट कमजोरी बढ्न थाल्यो । पछि कान्तिपुरका शिवसिंहमल्लले सजिलैसँग ललितपुर कब्जा गर्न सक्नामा यही आन्तरिक कमजोरी प्रमुख कारण बनेको थियो । अब अगाडि बढ्नुभन्दा पहिले तीनजनाको संयुक्त शासनबारे अलिकता लेख्नु परेको छ ।

प्राचीनकालदेखि प्रचलित अनेक किसिमका शासनपद्धतिमध्ये द्वैराज्य शासनपद्धति पनि एक हो । एक राजतन्त्र पद्धतिमा गद्दीको हकदार एकजना मात्र हुन्छ, शासनाधिकार एक जनामा मात्र केन्द्रित रहन्छ । द्वैराज्य पद्धतिमा गद्दीका हकदार दुइ वा दुइभन्दा बढी पनि हुन सक्छन् अर्थात् एक किसिमको संयुक्त शासनपद्धति यो हो । द्वैराज्य पद्धतिमा बाबुछोराको संयुक्त शासन पनि चल्न सक्दथ्यो, दाजुभाइहरूको संयुक्त शासन पनि चल्न सक्दथ्यो । यसरी संयुक्त शासन चल्दा कहिलेकहीं इलाका छुट्याइएको पनि हुन्थ्यो । चाँगुनारायण स्थानमा पाइएको एक ताम्रपत्रमा भक्तपुरका संयुक्त शासकहरूले आफ्नोआफ्नो इलाकामा शासन चलाउने, अर्कोको इलाकामा हस्तक्षेप नगर्ने सन्धि गरेको कुरा परेको छ । यसो हो तापनि यस्तो संयुक्त शासनमा चतुर चाहिंले अधिकार एकलौटी पारेको उदाहरण नै बढी पाइन्छ ।

विष्णुसिंह पछि चलेको उनका तीन छोरा नरसिंह, पुरन्दरसिंह र उद्धवसिंहको संयुक्त शासनमा पनि यस्तो घटना घटेको आभास पाइन्छ। यी तीन छोराहरूमा पुरन्दरसिंह चतुर थिए। यसो हुँदा उनी भित्रभित्रबाट अधिकार एकलौटी पार्ने चेष्टा गरिरहेको संकेत पाइन्छ। आफ्नाआफ्ना अभिलेखमा आफ्नो मात्र वर्णन गराउने, दाजु वा भाइको चर्चासम्म नगर्ने नीति यिनीहरूले लिएको देखिन्छ। उदाहरणार्थ पुरन्दरसिंहको यसै अभिलेखलाई देखाउन सकिन्छ। यो अभिलेख ने.सं. ६८६ को हो। यसताका नरसिंह र उद्धवसिंह पनि संयुक्त शासनका रूपमा थिए तर पुरन्दरसिंहले आफ्नो यस अभिलेखमा दाजु र भाइको नामोल्लेख सम्म पनि गरेका छैनन्। आफूलाई मात्र ललितपुरका राजाका रुपमा वर्णन गराएका छन्। यसै गरी उद्धवसिंहको अभिलेखमा आफूलाई मात्र राजाका रूपमा वर्णन गराएका छन्, दाजुहरूको यसो चर्चासम्म पनि गराएका छैनन्। यस ताकाका सनद रूपका ताडपत्रहरूमा र अभिलेखमा पनि कहीं तीनजनाको नामोल्लेख भएको छ भने कहीं एक्ला एक्लाको मात्र नामोल्लेख भएको पाइन्छ। यसबाट यिनीहरूको संयुक्त शासन व्यवस्थित थिएन भन्ने संकेत पाइन्छ। विचारार्थ केही संक्षिप्त उद्धरण यहाँ दिइन्छन्।

ने.सं. ६७७ सम्मका ताडपत्रमा विष्णुसिंहको उल्लेख पाइन्छ। ने.सं. ६७८ देखि उनका छोराहरूका ताडपत्र पाइन्छन्। जस्तै –

"सम्वत् ६७७ मार्गशिरकृष्णद्वादस्यान्तिथौ श्री ललितभूम्यां श्रीमनिगल दक्षिणस्थ श्री ज्येष्ठविहारयंकुलि महापात्र श्रीमनिगलाधिपति श्रीश्रीविष्णु सिंहदेव ठाकुरसन प्रसादरया भाषा"

"सम्वत् ६७८ श्रावण कृष्ण पंचम्यां तिथौ श्री ललितभूम्यां श्रीमनिगल दक्षिणस्थ श्री जेष्ठविहार श्री चंकुलिमहापात्र श्रीमनिगलाधिपति श्रीश्रीजयनरसिंहदेव ठाकुरसन प्रसादारपा"

"सम्वत् ६८० माघ कृष्ण प्रतिपद्यां ..... श्रीश्री जय उद्धवसिंहदेव ठाकुरसन प्रसादरपा ........."

"सम्वत् ६८० आषाढ पूर्णामास्यां श्री ललितपुरम्यां श्रीमनिल्याधिपतय श्रीश्री जयनरसिंह देव ठाकुरसन श्रीश्रीजयपुरन्द्रसिंहदेव ठाकुरसन श्रीश्री जय उद्धवसिंहदेव ठाकुरसन प्रसादारपा"

"सम्वत् ६८४ जेष्ठ शुक्ल १ श्रीश्रीजयउद्धवसिंह ठाकुरसन प्रसादारया"

"सम्वत् ६८६ जेष्ठ वदि ........ श्रीश्रीजयनरसिंहदेव ठाकुरश श्रीश्री जयपुरन्दरसिंहदेव ठाकुरश श्रीश्रीजयउद्धवसिंहदेव ठाकुरश थ्वस त्भियस ........... प्रसादरपा भाषा"

"सम्वत् ६८६ पौषकृष्णएकादश्यां ...... श्रीमनिगलाधिपति श्रीश्री जयनरसिंहदेव ठाकुरस नाम्नेन ........

"सम्वत् ६८७ चैत्रकृष्ण ५ श्रीश्री जयपुरन्द्रसिंहदेव ठाकुरसन प्रसादारपा..."

"सम्वत् ६८९ माघ ..... श्रीश्रीनरसिंहदेव श्रीश्रीपुरन्द्रदेव श्रीश्री उधवसिंह देव ......... (खोखनाको अभिलेख)"

"सम्वत् ६९२ वैशाख शुक्ल र श्रीश्री जय नरसिंहदेव ठाकुर श्रीश्रीजयपुरन्दरसिंह देव ठाकुर श्रीश्रीजयउद्धवसिंह देव ठाकुरसन प्रसादारपा"

"सम्वत् ६९६ पौषकृष्ण नवमि ...श्रीश्री जयनरसिंहदेव ठाकुरस प्रज्याय जुरो" (तुंबहिलको अभिलेख)। यस्ता ताडपत्र, अभिलेख अरू पनि अनेक पाइएका छन्। विचारार्थ यति उदाहरण नै पर्याप्त हुने हुनाले यहाँ उद्धृत गरिएन। यी उदाहरण एक सरो यसो दृष्टि दियौं भने नरसिंह, पुरन्दरसिंह र उद्धवसिंहको संयुक्त शासन व्यवस्थित थिएन भन्ने संकेत पाइन्छ। एकातिर तीनैजनाको संयुक्त नामोल्लेख भएका ताडपत्र अभिलेख पाइन्छन् भने अर्कोतिर उही मितिका वेग्लावेग्लै ताडपत्र, अभिलेख पनि पाइन्छन्। यसबाट उपर्युक्त निष्कर्ष सजिलैसँग निकाल्न सकिन्छ। यस कुराको अरू चर्चा तल यथास्थानमा पनि गरिएको छ।



माथि उद्धृत उद्धरणबाट विष्णुसिंहको शेषपछि केही काल उनका छोराहरूले उनले जस्तै विशेषण प्रयोग गरेको देखिन्छ। शुरुमा उनीहरूले पनि *येंकुलि महापात्र* शब्द प्रयोग गरेका छन्। पछिपछि विस्तारै आफूलाई *महापात्र* भन्न छोडेका छन्। यो कुरा विचारणीय छ।

पुरन्दरको अभिलेख सुनागुठी भृङ्गारेश्वरको विष्णुसिंहकै शैलीमा लेखिएको छ। पुरन्दरसिंहको यस अभिलेखमा पनि उनीहरूको वंशवर्णन परेको छ। विष्णुसिंहको अभिलेखमा जयसिंहको वर्णन परेको छ। पुरन्दरसिंहको यस अभिलेखमा भने कीर्तिसिंहदेखि मात्र वर्णन गरिएको छ। विष्णुसिंहको पुरुषार्थले नै ललितपुरमा आफ्नो प्रभुत्व जमेको हुनाले पुरन्दरसिंहको यस अभिलेखमा विष्णुसिंहलाई निकै माथि पुऱ्याइ वर्णन गरिएको छ। साक्षात् जगदीश्वरले नै राजा विष्णुसिंहको रूपमा अवतार लिएका हुन् भन्ने भाव यस अभिलेखमा व्यक्त गरिएको छ। विष्णुसिंह उपर पुरन्दरसिंहले यो आदर भाव व्यक्त गरिएकोमा त्यति आश्चर्य भने छैन।

यस प्रसङ्गमा एउटा कुराको पनि चर्चा गर्नु उपयुक्त हुने देखिन्छ। विष्णुसिंहले ललितपुरमा सप्तकुटुम्बज तीन महापात्रहरूलाई कसरी पन्छाए ? यो कुरा स्पष्ट हुन सकेको छैन। उनले शक्ति प्रयोग गरी तीन महापात्रहरूलाई समाप्त नै पारे कि, मल्ल राजाहरूबाट ललितपुरको शासन गर्ने एकाधिकार आफूले मात्र प्राप्त गरे। यो कुरा खुल्न सकेको छैन, तर विष्णुसिंहको लगतै शेषपछिको एक ताडपत्रमा ललितपुरका अरू महापात्रको उल्लेख आएको छ। जस्तै –

"सम्वत् ६७८ चैत्र शुक्ल ॥ द्विद्वियां तिथौ। श्री ललितव्रुभायां श्री मानिगल्के दक्षिणविहारे ज्येष्ठविहार वंकुलि कुतुम्ब्वज प्रधान महापात्र श्री मेल्ववर्मनस प्रधानमहापात्र श्री हृदयसिंह वर्म्मनस प्रधान महापात्र श्री ज्ञानसिंह वर्म्मनस्य प्रधान महापात्र श्री केशव सिंह वर्म्मनस एते सहानुमतेन ....."

यसबाट विष्णुसिंहको मृत्युपछि एकपटक ललितपुरका महापात्रहरूले फेरि टाउको उठाएको आभास पाइन्छ, तर उनीहरू सफल नभएको बुझिन्छ। यस विषयमा बढी खोजी हुनु आवश्यक छ।

विष्णुसिंहको वर्णनपछि यस अभिलेखमा पुरन्दरसिंहकी आमा पद्मलक्ष्मीको वर्णन गरिएको छ। विष्णुसिंहको भृङ्गारेश्वरको अभिलेखमा उल्लिखित पद्मावतीनै पद्मलक्ष्मी हुन् भन्ने देखिन्छ।

पाटनका महापात्रहरूले गर्वसाथ लिने प्रशस्तिमा शरण पर्न आएका राजालाई शरण दिने, पदच्यूत राजालाई फेरि गद्दीमा थाप्ने अहंकारी राजाको अहंकार तोड्ने आदि भाव परेको हुन्छ। मध्यकालको पूर्वार्धमा दुइ राजकुलको अस्तित्व रहेको बेलामा पाटनका महापात्रहरूले उपर्युक्त ढंगको भूमिका खेलेका हुनाले पाटनका महापात्रहरूको प्रशस्ति त्यस्तो कुरा लेख्ने चलन जस्तै चलेको पाइन्छ। पुरन्दरसिंहको यस अभिलेखमा उनको वर्णन गर्दा पनि उस्तै भाव व्यक्त गरिएको छ।

यसपछि यस अभिलेखमा पुरन्दरसिंहका छोरा पुरुषोत्तमको वर्णन गरिएको छ। पुरन्दरसिंहको हातबाट शिवसिंहले ललितपुर खोसी कान्तिपुरमा मिलाएको हुनाले पुरुषोत्तम ललितपुरका शासक हुन पाएनन्। यस अभिलेखमा बाहेक अन्त पुरुषोत्तमको अरू उल्लेख पनि पाइएको छैन।

यसपछि यस अभिलेखमा पुरन्दरसिंहले बनाएको मन्दिरको वर्णन परेको छ। पुरन्दरसिंहले पनि विष्णुसिंहले जस्तै अग्लो मन्दिर बनाएको बुझिन्छ। विष्णुसिंहले बनाएको मन्दिर अहिले बचेको छैन। पुरन्दरसिंहले बनाएको मन्दिरचाहिँ बचेको देखिन्छ। पाटन दरवार अगाडिको वर्तमान मन्दिर नै पुरन्दरसिंहले बनाएको मन्दिर हो भन्ने देखिन्छ।

विष्णुसिंहले सुनागुठीमा बनाएको मन्दिर शिवमन्दिर हो। पुरन्दरसिंहले बनाएको यो मन्दिर भने विष्णु मन्दिर हो। यो सामान्य वैष्णव मन्दिर नभई पञ्चतत्त्वात्मक नारायणको मन्दिर हो।

यस अभिलेखको शुरुमै ॐ नमः श्री पञ्चतत्त्वात्म नै नारायणाय भनी लेखिएकोले यस कुराको संकेत गरिएको छ । पञ्चतत्त्वात्मक नारायणको परिचय पनि यस अभिलेखमा दिइएको छ । पूर्वतिर वासुदेव, दक्षिणतिर संकर्षण, पश्चिमतिर प्रद्युम्न, उत्तरतिर अनिरुद्ध र बीचमा परब्रह्मस्वरूप नारायण स्थापना गरिएका छन्, यिनैलाई पञ्चतत्त्वात्मक नारायण भनी यस अभिलेखमा भनिएको छ । साथै, चतुर्व्यूहात्मक नारायण भनेर पनि यहाँ भनिएको छ ।

विष्णुसिंहले शिवमन्दिर बनाएको पुण्यफल आफ्ना बाबु कुसुम सिंहलाई लागोस् भन्ने कामना गरेका छन् । त्यसै गरी पुरन्दरसिंहले नारायण स्थापना गरी भएको पुण्यफल बाबु विष्णुसिंहलाई लागोस् भन्ने कामना यहाँ गरेका छन् । विष्णुसिंहकै अभिलेखको अनुकरण गरी यो अभिलेख लेखिएको हुँदा धेरै कुरा उस्तै परेका छन् ।

★★★

(११)

## ल.पु. इ. खोखनागाउँभित्र गणेशमन्दिरको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ संवत् ६८९ माघ शुद्धि ष-
२. ष्टम्यां तिथौ आश्विनिनक्षत्र शुभयोग
३. आदित्यवासरे मकररासिगते
४. सवितरि मेषराशिगते चन्द्रमसि
५. ॥ थ्व कुन्हु श्रीमत् श्रीश्रीनरसिंह दे-
६. व श्रीश्रीपुरन्द्र देव श्रीश्रीउधव सि-
७. हदेव तवभ्यार जयशंख भारो थुतवं-
८. तछें पदं भारो तवर न्हे ... ... ... अमृतसिंह भा-
९. रो गुरु श्रीधमजु कमिरु गुरु भारो ज-
१०. के प्रभुषन नाथ जयरभिछदेस स-
११. मुचयन चोरवाकु नामर राछेस श्री-
१२. श्रीश्री विनायक थापन याङा दिन
१३. जुरो ॥ शुभमस्तु ॥ लहेखोजु जीवराज-
१४. नृतिराम रुद्राम लुगुसिंह म... ... ...



### अनुवाद

कल्याण होस् । ने.सं. ६८९ (वि.सं. १६२५) माघ शुक्ल षष्ठी आदित्यवार आश्विनीनक्षत्र शुभयोग, मकरराशिमा सूर्य रहेमा मेषराशिमा चन्द्रमा रहेमा, यस दिन श्रीश्रीनरसिंहदेव श्रीश्री पुरन्दरसिंहदेव श्रीश्रीउद्धवसिंह देवको (विजयराज्यमा)

तवभ्यालका जयशङ्ख भारो, थुतवंतकछेका पंडु भारो तवर न्हे ......... का अमृतसिंह भारो, गुरु श्रीधर्मजु, कर्मी लुंगु भारो, जके प्रमुख भएको नाथ जयराम आदि देशसमुच्चयले चोर वाकुनाम लाछिमा श्रीश्रीश्रीगणेश स्थापना गरियो । शुभ होस् । ल्हेखोजु जीवराज ... ... नृत्यराम रुद्रराम लुगुसिंह ..........

**व्याख्या**

नरसिंह, पुरन्दरसिंह र उद्धवसिंह तीनै शासकको उल्लेख यस अभिलेखमा परेको छ । जग्गा दान दिँदा, केनबेच गर्दा लेखिने ताडपत्रहरूमा मात्र यी तीन शासकको संयुक्त शासनको बढी उल्लेख पाइन्छ । जनताद्वारा राखिएका अभिलेखमा तीनै जनाको उल्लेख भएको यसै अभिलेखमा मात्र पाइन्छ । खोकनाका जनताले ने.सं. ६८९ मा नरसिंह, पुरन्दरसिंह र उद्धवसिंह तीनै जनालाई संयुक्त रूपमा आफ्ना राजाका रूपमा मान्यता दिएको कुराको पुष्टि यस अभिलेखले गर्छ ।

खोकना देशका प्रमुखप्रमुख मानिस मिली गणेश स्थापना गरेको कुरा यसमा परेको छ । यसरी बस्तीका सबैको तर्फबाट गरिने कामलाई त्यस बेला *देशसमुच्चय* भई गरिएको भन्ने चलन थियो । यसै हुँदा यस अभिलेखमा *देशसमुच्चयन.......विनायक स्थापना याङा* भनी लेखिएको छ । जुनसुकै शुभकार्य गर्दा पहिले गणेश पूजा गरिने चलन थियो । यसकारण हरेक बस्तीमा ठूलो बस्तीका त हरेक टोलमा भनेजस्तै *स्थान गणेश* स्थापना गरिएका हुन्थे । शुभकार्य गर्दा आफ्नाआफ्ना निर्धारित *स्थानगणेश* कहाँ गई पूजा गर्ने चलन अद्यावधि चलेकै छ । यसो हुँदा मध्यकालमा गणेश स्थापना गरी, गणेशको मन्दिर बनाई राखिएका अभिलेख बढी पाइन्छन् ।

★★★

(१२)

## उद्धवसिंहको अभिलेख

हाल यो अभिलेख कुँदिएको शिलापत्र नेपाल राष्ट्रिय सङ्ग्रहालयमा (छाउनीमा) राखिएको छ । पहिले पाटन मङ्गलबजारतिर कतै यो रहेको देखिन्छ । यसमा ने.सं. ६८९ दिइएको छ ।

संशोधन मण्डलद्वारा *अभिलेख सङ्ग्रह* १० भागको ४-६ पृष्ठमा यो छापिएको छ ।

१. ॐ नमो नारायणाय ॥ स्कन्धारुढसुपर्ण्णं त्रणित्शीर्ण्ण भवाब्धिभय-
तीर्ण्णगं । मणिमयकुण्डलकर्ण्णं परमानन्दं भजे तमालवर्ण्णम् ॥
२. ब्रह्मांण्ड सकलं चराचलमिदं यस्मात्समुज्जायते, यस्मिन् तिष्ठति संहर-

न्ति च स्वयं कल्पावशाने पुनः । यं वाचा मनसाप्यगोचरपरब्र-
३ ह्मेति संगीयते, क्षेमं संतनुतां सदोद्धवमहीपालस्य नित्यं भवान ॥ ० ॥
वन्नाम-
श्रवणेन भंगुरहृदो दूरं द्विपो विद्रुतो, यदवृष्टै : क -
४ नकाम्वुभिः प्रशमितो दारिद्रचभावः सताम्, । भूयिष्ठं भुवनं पुनाति नियतं
यत्कीर्तिभागीरथी सोभूद् भूतलभूपणो विजयवान् श्री-
५ कीर्तिसिंहो नृपः ॥ अर्जनि कुसुमसिंहो विश्वविख्यातकीर्तिर्व्वलिदधिचिसमानो-
दानशीलो वदान्यः । समरभुवि कृतान्तः श-
६ त्रुमतेभसिंहो नृपतिमकुटरत्नैरर्च्चितः पादपद्मः ॥ श्रीलक्ष्मीपतियादपद्ममधु-
पो वैदग्ध्यविश्रामभूः, रत्नं भूवलयस्य भूपनिवहप्रत्य-
७ क्षदैवत्रयी, । विद्वेपिद्विपखण्डखण्डनविधौ प्रोद्दण्डसिंहकमः पुत्रोस्य निजलीलया
समजनि श्रीविष्णुसिंहो नृपः ॥ मौलो यस्य च पुण्डलीक
८ सततं लक्ष्मी सदा लोचने गोबिन्दो हृदयाम्वुजे करतले कल्पद्रुमो वर्तते ।
पादाव्जे बहुराजलक्षणयुतः ? श्रीरामभक्तः सदा, नेपालैकशिरो-
९ मणिः समजनि श्रीविष्णुसिंहो नृपः ॥ उद्धवस्यैव जननी, महिषी विष्णु-
भूपतेः या श्रीहृदयलक्ष्मी सा, साक्षालक्ष्मीव राजते ॥ एत-
१० स्माद्धरणीन्द्रशेखरमणेः सर्व्वार्थचिन्तामणे, रुदभूतो जगदीश्वरो नृपवपुर्भूपाल-
चूडामणि । विद्वेपिक्षितिपालवारवनितावैदग्ध्य-
११ दीक्ष्यागुरुः, श्रीमदुद्धवसिंहदेव नृपतिर्ज्जीयात्सहस्त्रं समाः, ॥ साक्षात्क-
वतीर्ण्णो गुणिजनहृदये कालरूपो रिपूणां कामो वामोरुचि-
१२ त्ते हरिखनिभूजामेव रामों नरानां । हृप्यद्दुष्टक्षितीषद्विपकुलदलने प्रौढ
सिंहो नृसिहो, भूमीभाग्येकभूमिर्जगति विजयते
१३ सोद्धवो भूमिपालः ॥ विज्ञानागमधर्म्मशास्त्रनिपुणो नानापुराणास्पदं
संगीतौत्तमकामतन्त्र कवितालंकारसाारन्वितः । नानाशस्त्र-
१४ विधिप्रयोगचतुरो सन्नीतिविश्रामभूः श्रीमानुद्धवसिंहदेवनृपतिः संराजते भूतले ॥
दुष्टनृपगजाङशोयं भग्ननृपस्थापना-
१५ चार्यः । उद्धवसिंहमहीपतिः शरणागतवज्रपञ्जुरो जयति ॥ सूनुस्तस्य
त्रिविकमोतिगुणवान् रूपेण कामोपमो, विख्यातो य-
१६ शसा समस्तभूवणे दानेन कर्ण्णेपम शौर्य्य धैर्यगुणतिरेकमहिमा सर्व्वार्थचि-
न्तामणिर्यस्तातस्य मुदं तनोति सततं जीया-
१७ त्कुमारः सदा ॥ तेनाकरि मठो सुवर्ण्णशिखरो हेमाद्रिवद्राजते, यत्रोच्चै कल-
शेष्पु नाकतटिनी मालायते सर्व्वदा ॥
१८ मार्त्तण्डो भ्रमेत यदेकशिरसि नक्षत्रनाथेनच सप्तर्षिध्रुवमण्डलानिविलसम्नेरुः
सदा स्पर्द्धते । साफल्यं जनयन् सुर-



१९ स्त्रियदृशां दिग्मण्डलं द्योतयन्नाचुम्बन् शशिबिम्बमम्वरमणिं द्यामण्डलं मण्डयन् ।
सर्वेषां भजनीयतामपि भजन् कृष्णा प्र-
२० त्यर्प्पितः प्रसादोद्धवसिंहदेवनृपतेर्हेमाचलं स्पद्धते ॥ क्षोणीसोद्धवसिंहदेव-
नृपतेः साम्राज्यमेधागमे सन्तुष्टा गुणशा-
२१ लिशलिरतुलश्रीशलितामागता । उड्डीना रिपुराजहंसपरिषत्तत्कीर्ति
चन्द्रांशवो नष्टा दुर्जनपांशवः क्षितिभृतान्तेजःसहस्त्रां-
२२ शवः ॥ उत्तुङगोद्धवसिंहदेवनृपतेः प्रारम्भवत्सर्व्वतः सिद्धस्तत्फलवत्फणीन्द्र-
धरणीमेरुः स्थिरकीर्तिवत् । दोःकल्पद्रुम-
२३ वत्समस्तविवुधानन्दाय कन्दायितः प्रासादः पृथिवीभुजा मधुरिपोरुत्थापितो
राजते ॥ प्रासादरत्नविविधोपलकञ्चिनेन, नि-
२४ र्म्माय तत्र प्रतिमाञ्च निधाय विष्णोः । लक्ष्मीसरस्वतियुतां गरुडासनस्थां
नारायणस्य परमात्मकमादिमूर्तिम् ॥ मुनिगण-
२५ विनियुक्तैर्व्विष्णुधर्म्मोत्तरोक्तै, र्व्विहितश्रुयतिविधानैर्द्वादशाहं निनाय ।
द्विजगणश्रुतिपाठै र्लक्षहोमं च कृत्वा, नृप-
२६ तिकृतप्रतिष्ठामादिनारायणस्य । भूखण्डयोगाङ्गगुणाब्दयाते, शुक्रे
शुचौ विष्णुतिथौ गुरौ च । हिरण्यकुंभं
२७ च पताकया युतं, तमुद्धवो भक्तिपरश्चकार ॥ ० ॥ अतः परं देशभाषा
भविष्यति । श्रीमनिगलादि राज्य
२८ एकातपत्र याङविज्याक श्रीश्रीजयविष्णुसिंहदेव ठाकुरजु, थोस एहेया
थकुरिनिजु श्रीश्रीहृदयलक्ष्मीजु थो उ-
२९ भयस पुत्र, श्रीश्रीजयउद्धवसिंहदेव ठाकुरसन विष्णुभक्तिपूर्व्वजन थो देवल
दयकाथे,
श्रीश्रीश्रीआदि-
३० नारायणटों लक्ष्मी सरस्वती स्यकाचकं गरुडाशन याङन थापना याङ विज्या-
चका थोस प्रतिष्ठा यातङा-
३१ स्यं लक्षाहुति यज्ञ याङन सुवर्ण्णकलसारोहन याङ ॥ सम्वत् ६८९ ज्येष्ठ
मासे शुक्लपक्षे अष्टम्याया-
३२ न्तिथौ, पूर्व्वफाल्गुणीनक्षेत्रे वज्रयोगे, सोमवासरे, वेला उप्र घटि ८ विघटि
२० फेस्य घटि ११ विघटि ३५
३३ थ्वतेनन्हा लक्षाहुतिया अग्निस्थापना जुरोम् ॥ थ्वन प्यन्हुलिव एकादश्यां
तिथौ, चित्रनक्षत्रे, वीरयानयो-
३४ गे, वृहस्पतिवासरे, थो कुन्हु वेला उप्र घटि ७ थ्वते नन्हा गजुलिद्वाछा ध्वजाव
रोहन जुरोम् ॥ थ्वन गु-

३५. न्हुलिव, कृष्णपक्ष, चतुर्थीपरपंचम्यां तिथौ श्रवणपरधनेष्ठनक्षत्रे, वैधृतिपर-विस्कंभयोगे
३६. शुकवासरे वेला उप्र घटि २१ विघटि २४ फेस्यं घटि २७ थ्वतेनन्हा लक्षाहुति-या पूर्णा याङा दि-
३७. न जुरोम् ॥ थो जिमनेन्हुटो विष्णुधर्म्मोत्तर आदिन वैष्णव शास्त्रस ल्हाको परिमानन समस्तं
३८. पिकास्यं विव, कायस्थ विष्णुसिंह वावु ॥ भक्तिपूर्व्वन प्रत्याल्हादन थो आदी
३९. नारायण प्रतिष्ठा याङविज्याङ जुरोम् ॥ शुभ ॥

## अनुवाद

नारायणलाई नमस्कार । गरुडको काँधमा चढेका, दुःखीहरूको रक्षा गर्ने, भवसागरको भय नार्ने, कानमा मणिजडेको चौगडी लाएका, तमाल जस्तो रङ भएका परमानन्दस्वरूप-नारायणलाई भज्दछु ।

चल र अचल सारा ब्रह्माण्डको सृष्टि जसबाट हुन्छ, जसले स्थिति गर्दछन्, प्रलयकालमा जसले स्वयं संहार गर्छन्, जसका बारेमा बोलीले केही भन्न सकिँदैन, मनले चिताउनै सकिँदैन, परब्रह्म भनी जसको गुणगान गरिन्छ त्यस्ता परमेश्वरले राजा उद्धवसिंहको सधैं कल्याण गरुन् ॥

जसको नाउँमात्र सुन्दा पनि शत्रुहरू डराएर टाढा भागेथे । जसले दिएका सुनले सज्जनहरूको गरीबीनै हटेथ्यो । जसको असल कीर्ति संसारभरि खूप फैलिएथ्यो । पृथ्वी नलका गहनाजस्ता ती राजा कीर्तिसिंह विजयी रहनु भएथ्यो । अर्को पंक्ति उहाँबाट संसारमा नाउँ चलेका कुसुमसिंह जन्मनुभयो । उहाँ वाली र दधिचीजस्तै दानी, ठूलो विचारका, लडाईंको मैदानमा यमराज जस्ता, शत्रुरूपी मत्ताहात्तीमा सिंहजस्ता राजाहरूले पाउ ढोगिएका हुनुहुन्थ्यो ।

उहाँका छोरा राजा विष्णुसिंह हुनुभयो । उहाँ विष्णुका पाउरूपी कमलका भँवराजस्ता, पाण्डित्यले युक्त, त्रिरत्नजस्ता, राज समूहमा प्रत्यक्ष तीन देवताजस्ता, शत्रुरूपी हात्तीलाई खनम पार्ने काममा उज्जण्ड सिंहजस्ता हुनुहुन्थ्यो ।

जसको शिरपेचमा सधैं कमल, आँखामा सधैं लक्ष्मी, हृदयमा गोबिन्द हातमा कल्पवृक्ष, पाउमा राजलक्षणहरू रहेका थिए । जो सधैं रामका भक्त हुनुहुन्थ्यो, त्यस्ता राजा विष्णुसिंह नेपालका एक शिरोमणि हुनुहुन्थ्यो ।

उहाँ विष्णुसिंहकी महारानी, उद्धवसिंहकी आमा श्री हृदयलक्ष्मी साक्षात् लक्ष्मीजस्तै हुनुहुन्छ ।

राजामा शिरोमणि भएका, हरकुरा दिनामा चिन्तामणिजस्ता उहाँ विष्णुसिंहबाट राजाको रूप लिएका जगदीश्वरेजस्ता उद्धवसिंह राजा जन्मनु भयो । शत्रु राजाहरूलाई सखाप पार्ने उहाँ उद्धवसिंह हजारौं वर्षसम्म बाँचुन् ॥

गुणी जनहरूको लागि साक्षात् कर्णका अवतार भएका, शत्रुहरूको लागि कालजस्ता सुन्दरीहरुको लागि कामदेवजस्ता, राजाहरूमा सिंहजस्ता, दुनियाको लागि रामजस्ता, घमण्डी दुष्ट



राजारूपी हात्तीहरूलाई तह लाउनमा सिंहजस्ता, मानिसमा श्रेष्ठ, पृथ्वीको भाग्यले पैदा भएका उहाँ उद्धवसिंह राजा संसारका विजयी भई रहनुभएको छ ।

विज्ञान, तन्त्रशास्त्र, धर्मशास्त्रहरूमा सिपालु, अनेक थरी पुराणहरू पढेका, संगीत जान्ने कामसूत्र र कविताका अलंकारहरू बुझेका, अनेक थरी हतियार चलाउन सिपालु, असल नीति भएका श्री उद्धवसिंह राजा पृथ्वी तलमा सुहाइरहनु भएको छ । अर्को पंक्तिमा दुष्ट राजाहरूरूपी हात्तीहरूलाई अंकुश लाउने, राज्यच्यूत राजालाई गद्दीमा थाप्नामा आचार्यजस्ता भएका, शरण पर्न आएकाहरूको राम्ररी रक्षा गर्ने उद्धवसिंह राजा ठूला हुनुहुन्छ ।

उहाँका छोरा त्रिविक्रमसिंह हुनुहुन्छ । अतिगुणी रूपको कामदेवजस्ता राम्रा, संसारमा नाउमा नाउँ चलेका, दान दिनाका कर्णजस्ता, शूरा, ठूलो धैर्य भएका चिताएको हरकुरा दिने उहाँ त्रिविकम बुबालाई प्रसन्न पार्नुहुन्छ । उहाँ राजकुमार चिरायु होऊन् ।

उहाँ उद्धवसिंहले ठूलो मन्दिर बनाउनु भयो । जसको सुनको शिरोभाग सुवर्ण पर्वतजस्तै सुहाइरहेको छ । जहाँ रहेका अग्ला गजुरहरूमा आकाश गङ्गामाला जस्तो भइरहन्छ । जुन मन्दिरको टुप्पोमा सूर्य चन्द्र र सप्तर्षि आदि ताराहरू धुरिन्छन् । चम्किलो जुन मन्दिरको दाँजो सुमेरु पहाडसँग हुन्छ ।

अप्सराहरूको आँखालाई तृप्त पार्दै दिशाहरूलाई चहकिलो पार्दै, चन्द्र सूर्यको बिम्बलाई छुँला जस्तो गर्दै, आकाशलाई सुहाउने पार्दै सबैजनाको भक्तिलाई तान्दै रहेको (उद्धवसिंह राजाले) कृष्णलाई समर्पण गरिएको त्यस मन्दिरको दाँजो मान्द्रिसँग लाग्छ ।

अनेक थरी ढुंगा र सुन समेत हाली सुन्दर मन्दिर बनाई त्यहाँ लक्ष्मी र सरस्वती सहितको गरुडासन आदिनारायण परमेश्वरको प्रतिमा स्थापना गरी, विष्णु धर्मोत्तर ग्रन्थमा बताएअनुसार मुनि (असल ब्राह्मण) हरूद्वारा वैदिक विधानपूर्वक 'द्वादशाह' गरियो । ब्राह्मणहरूद्वारा गरिएको वेदपाठसाथ लक्षहोम गराइ राजाले आदिनारायणको प्रतिष्ठा गराउनु भयो ।

ने.सं. ६८९ (वि.सं. १६२६) ज्येष्ठ शुक्ल द्वादशी बृहस्पतिबारको दिन उद्धवसिंहले भक्तिपूर्वक पताकासहित सुनको कलश चढाउनु भयो ।

यसपछि देश भाषामा (नेवारीमा) लेखिएका कुराको अनुवाद । श्रीमनिगल आदि राज्यमा एकच्छत्र राज्य गर्ने श्रीश्री जयविष्णुसिंह ठाकुर, उहाँकी रानी श्रीश्रीहृदयलक्ष्मी, वहाँहरूका छोरा श्रीश्री जयउद्धवसिंह ठाकुरले विष्णुमा भक्ति राखीकन यो देवल बनाएर लक्ष्मी र सरस्वती सहितको गरुडासन श्रीश्रीश्री आदिनारायण स्थापना गर्नु भयो । यसको प्रतिष्ठा गर्दा लक्षाहुति यज्ञ गरिएको थियो । अनि सुनको गजुर चढाइएको थियो ।

ने.सं. ६८९ (वि.सं. १६२६) ज्येष्ठ शुक्ल अष्टमी पूर्वफाल्गुनी नक्षत्र वज्रयोग सोमवारको दिन ८ घडी २० पलादेखि ११ घडी ३५ पलाभित्रको शुभबेलामा लक्षाहुतिको अग्निस्थापन गरिएको हो । यसको चार दिनपछि एकादशी चित्रानक्षत्र, वरीयानयोग, बृहस्पतिबारको दिन ७ घडी को शुभ बेलामा गजुर चढाउने र ध्वजा चढाउने काम गरियो । यसको ९ दिनपछि कृष्णपक्ष चतुर्थी उप्रान्त पञ्चमी तिथि श्रवण उप्रान्त धनिष्ठानक्षत्र वैधृति उप्रान्त विष्कुम्भ योग शुक्रवार २१ घडी २४ पला उप्रान्त २७ घडीभित्रको शुभ बेलामा लक्षाहुति पूर्ण पारियो । यसको बाह्रौं दिनमा विष्णुधर्मोत्तर आदि वैष्णवशास्त्रमा बताइएअनुसारको परिमाणले सबै नै निकासी दिइयो । कायस्थ विष्णुसिंह बाबु । भक्तिपूर्वक खुशीसाथ यी आदिनारायणको प्रतिष्ठा गरियो । शुभ ।

व्याख्या
ने.सं. ६८९ (वि.सं. १६२६) मा उद्धवसिंहले आदिनारायण स्थापना गरी यो अभिलेख कुँदाएका हुन् । यस अभिलेखको पनि वर्णनशैली माथि भएका विष्णुसिंह र पुरन्दरसिंहका अभिलेखमा भाषा संस्कृत मात्र रहेको छ । उद्धवसिंहको यस अभिलेखमा भने संस्कृतका साथै नेवारी भाषाको पनि प्रयोग भएको छ ।

यो अभिलेख पढ्दा यस बेला पाटनमा उद्धवसिंह मात्र एकै राजाका रूपमा शासन गरिरहेका थिए कि भन्ने आभास पर्छ । यहाँ कीर्तिसिंह, कुसुमसिंह र विष्णुसिंहको वर्णनपछि उद्धवसिंहको मात्र वर्णन गरिएको छ । उनका दाजुहरू नरसिंह र पुरन्दरसिंहको यहाँ नामोल्लेखसम्म पनि गरिएको छैन तर यसबेला नरसिंह पुरन्दरसिंह र उद्धवसिंहको संयुक्तशासन ललितपुरमा चलिरहेको थियो भन्ने कुरा तात्कालिक अरू अभिलेख, ताडपत्र आदिबाट स्पष्ट थाहा पाइन्छ । यसरी उद्धवसिंहले आफू मात्र ललितपुरका राजा हुन् भन्ने दर्शाउने अभिप्रायले जानाजान दाजुहरूको चर्चा यस अभिलेखमा गराएका छैनन् । यसै गरी पुरन्दर सिंहले राख्न लाएको ने.सं. ६८६ को माथि भएको अभिलेखमा पुरन्दरसिंह मात्र ललितपुरको राजा हुन् भन्ने दर्शाउने चेष्टा गरेथे । आफ्नो अभिलेखमा पुरन्दरसिंहले कीर्तिसिंदेखि आफ्नो वंशवर्णन गराएका छन् तापनि दाजु र भाइको नामोल्लेखसम्म पनि गराएका छैनन् । यसबाट विष्णुसिंहका यी महत्त्वाकाङ्क्षी छोराहरूमा मेल थिएन, पाए ललितपुरमा दाजु भाइको अधिकार छुटाई एकलौटी पार्न चेष्टामा उनीहरू लागेका थिए भन्ने संकेत पाइन्छ । हुन पनि दाजु नरसिंहको मृत्युपछि पुरन्दरसिंहले भाइ उद्धवसिंहलाई पन्छाई अधिकार एकलौटी पारेथे । यस कुराको चर्चा तल गरिएको छ ।

यस अभिलेखको नेवारी भागको शुरुमै *श्रीमनिगलादि राज्य एकातपत्य याङ विज्याक श्रीश्रीजयविष्णुसिंहदेव ठाकुरजु* भन्ने महत्त्वपूर्ण वाक्य परेको छ । संस्कृत भागमा कीर्तिसिंहदेखि नै स्वतन्त्र राजा हुन् भन्ने अतिशयोक्तिपूर्ण कुरा लेखाएर पनि नेवारी भागमा चाहिँ सत्य कुरा लेखाउन लाएको छ । संस्कृत सर्वसाधारणले नबुझ्ने हुनाले त्यसमा जे लेखाए पनि हुने देखिन्छ । जनताको भाषा नेवारीमा चाहिँ जथाभावी लेखाउँदा आपत्ति हुने देखी नेवारीमा चाहिँ सत्य कुरा लेखाएको बुझिन्छ । जेहोस्, नेवारीमा लेखिएको उपर्युक्त वाक्य पाटनको इतिहासको विकासक्रम जान्न महत्त्वपूर्ण छ । हुन त तात्कालिक अभिलेख, हस्तलिखित ग्रन्थ आदि केलाई हेर्दा पहिले ललितपुरमा सप्तकुटुम्वज तीन महापात्रको संयुक्त शासन चलेको थियो । यी महापात्रहरू केन्द्रका मल्ल राजाका आज्ञा मानी शासन गर्दथे तापनि पुर्खौंनी अधिकार पाएका हुँदा यिनीहरू पनि निकै शक्तिशाली थिए । विष्णुसिंहले चाहिँ ललितपुरमा एकलौटी प्रभुत्व स्थापना गरे भन्ने कुरा थाहा नपाइने होइन तैपनि यस अभिलेखमा मनिगल आदि राज्यमा एकच्छत्र राज्य गर्ने भन्ने आशयको विशेषण विष्णुसिंहमा लाइएको हुँदा उपर्युक्त अझ स्पष्ट र प्रामाणिक हुन आएको स्पष्ट छ ।

विष्णुसिंहको सुनागुठीको अभिलेखमा उनका रानीहरूको वर्णन गर्दा उद्धवसिंहकी आमा हृदयलक्ष्मीको नामोल्लेख गरिएको छैन । त्यहाँ पद्मलक्ष्मी र कमलालक्ष्मीको मात्र वर्णन गरिएको छ । यसबाट हृदयलक्ष्मी विवाहित पत्नी होइनन् कि भन्ने प्रश्न उठ्छ, तर उद्धवसिंहको यस अभिलेखको नेवारी भागको उठानमा *श्रीश्रीजयविष्णुसिंहदेव ठाकुरजु, थोस एहेया थकुरिनिजु श्रीश्रीहृदयलक्ष्मीजु* भनी हृदयलक्ष्मी विवाहिता हुन् भन्ने दावा गरिएको छ ।

अब विष्णुसिंहका छोराहरूले आफूलाई *महापात्र* भन्ने छोडिसकेका छन् । अब उनीहरूमा राजोचित दुइश्री, जय, ठाकुर आदि विशेषण मात्र जोडिन लागेको पाइन्छ । हुन त राजोचित ठाकुर आदि विशेषण अन्तिम समयमा विष्णुसिंहले नै लिइसकेका थिए तैपनि उनले आफूलाई



*महापात्र* पनि लेख्दै थिए । शुरुमा उनका छोराहरूले पनि आफूलाई *महापात्र* लेखेको पाइन्छ नर पछि भने लेख्न छोडेथे ।

यस अभिलेखमा वर्णित विषय र विष्णुसिंह पुरन्दरसिंका अभिलेखमा वर्णित विषय निकै अंशमा उही प्रकारको छ । यस कारण माथि चर्चा गरिसकेको कुरा यहाँ दोहऱ्याउनु आवश्यक देखिँदैन । उद्धवसिंहका यस अभिलेखमा परेका उल्लेखनीय कुराको मात्र यहाँ चर्चा गरे पुग्ने देखिन्छ ।

उद्धवसिंहले यस अभिलेखमा आफूलाई शास्त्रज्ञ, विद्वान्का रूपमा वर्णन गराएका छन् । विष्णुसिंह र पुरन्दरसिंहले आफूलाई त्यस रुपमा वर्णन गराएका छैनन् । उद्धवसिंहले गराएको उक्त वर्णनबाट त्यसताका के के शास्त्र पढिँदा रहेछन् भन्ने कुराको झलक पाइन्छ । उद्धवसिंहले चर्चा गराएका शास्त्रमा विज्ञान, तन्त्रशास्त्र, धर्मशास्त्र, पुराण, संगीत, कामशास्त्र, कविता, अलंकार नीतिशास्त्र पर्दछन् । यिनमा विज्ञानको चर्चा हुनु उल्लेखनीय छ । 'विज्ञान शिल्पशास्त्रयो:' भनी अमरकोशकारले भनेजस्तै शिल्पशास्त्र आदिलाई यहाँ विज्ञान भनेको हुनुपर्छ ।

पुरन्दरसिंहले पञ्चतत्वात्मक नारायण स्थापना गरेथे । उद्धवसिंहले स्थापना गरेका विष्णुलाई चाहिँ *आदिनारायण* संज्ञा दिइएको छ । लक्ष्मी, सरस्वती साथ गएको गरुडासनरूपको विष्णुलाई यहाँ *आदिनारायण* भनी लेखिएको छ । यो अभिलेख हाल मूल ठाउँमा नरही छाउनी म्युजियममा रहेको हुँदा यहाँ उल्लिखित *आदिनारायण* मूर्ति हाल कायम छ, छैन भनी भन्न नसकिने भएको छ ।

विष्णुसिंह र पुरन्दरसिंहका अभिलेखमा संस्कृत भाषाको मात्र प्रयोग भएको छ । उद्धवसिंहको यस अभिलेखमा चाहिँ संस्कृतका साथै *अत: परं देशभाषा* भनी नेवारीमा पनि केही लेखिएको छ । यसरी देवता स्थापना गर्दा राम्ररी नित्यनैमित्तिकपूजा चलुन भनी आयस्ताको रूपमा जग्गा गुठी राख्ने चलन चलेको थियो । विष्णुसिंह, पुरन्दरसिंह र उद्धवसिंह, तीनै जनाका अभिलेखमा त्यस्तो कुनै गुठी राखिएको छैन ।

★★★

## (१३)

# पाटन तुं बहिलको अभिलेख

## मूलपाठ

१. ॐ नमो भगवते वासुदेवाय ॥ नारायण नमस्तेस्तु नर-
२. कार्णवतारण । त्रैलोक्यव्यापिता ... त्राहि मां मधुसूदन ॥
३. स्वादनन्दरसवर्षे वैशाषे ...... ॥ शुक्लपक्षे च ह-
४. स्त्यर्क्षे स्थापनं बुधवासरे ॥ ॥ श्रेयोऽस्तु ॥ सम्वत् ६९६
५. पौषकृष्ण ॥ नवमि कुन्हु, वाराणसीस, सिद्धेश्वरीया, अंङ-

६. स लिधनकं उमामहेश्वर प्रतिमा थंडाव, यज्ञ याचकं कत्वं-
७. वाहार लुंगु भारोनं काय देवभारो चलंन .... न कंयाव
८. मोकयातं नामनं थापना याङ ताथरतो ॥ लिहा वूयाव वै-
९. शाष शुक्ल ॥ त्रयोदशी ॥ हस्तनक्षत्र ॥ हर्षनयोग ॥ बुधवा-
१०. र थ्व कुन्हुं त्वंवलाछेस, स एव देव भारोयात नामनं
११. स्वत पोलोल देवल दयकं, लुं गजुडि छास्यं, विष्णुस्था-
१२. पन याङा दिन जुरो ॥ थ्व देवं तया न्हिह्नुल, तुथि लुया-
१३. व, तुंथि दयकं व.छयाङन देवल दंङाजुरो ॥ थ्व देवल-
१४. यातं देवपूजा, निश्रांव, मतयात आदिवु आय दुंतया
१५. जुरो ॥ पुरोहित मडिछे द्विजवर श्रीपयाकदेवजु, उप-
१६. देस्ता वखनिह्म श्रीदेवसिंहजु। दैवज्ञ योय का ... जि
१७. व संख भारो, आचार्ज्य छुकल हाकु भारो ॥ यजमान
१८. त्वंवाहारापत्रवंश रावुत दोय भारो, पुत्र लुंगु भारो
१९. हाकु भारो ॥ अनेन पुन्येन पौत्र देवभारो- वैकुण्ठ
२०. प्राप्ति रस्तु ॥ देवज्या याक कमि १ लुगुडु भारो ॥
२१. थ्वते कर्म्म याङा श्रीजयेष्ठविहाल यंकुलि श्रीज-
२२. यनरसिंहदेव ठाकुरस प्रज्याय जुरो ॥ शुभम ॥

## अनुवाद

ॐ भगवान् वासुदेवलाई नमस्कार। नरकरूपी समुद्रबाट तार्ने, तीनै लोकमा व्यापक भएका, मधुसूदन हे नारायण, हजुरलाई नमस्कार छ। मलाई रक्षा गर्नुहोस्।

ने.सं. ६९६ (वि.सं. १६३३) वैशाख शुक्ल (त्रयोदशी) बुधवार, हस्तनक्षत्रमा।

कल्याण होस्। ने.सं. ६९६ (१६३२) पौष कृष्ण नवमीको दिन, वाराणसीमा सिद्धेश्वरीको भित्तामा अडेस लगाई उमामहेश्वरको मूर्ति राखियो, यज्ञ गरीकन त्वंबहालका लुंगु भारोले नाति देव भारो ..... रोग लागी मरेका हुनाले उनको नामबाट उक्त मूर्ति स्थापना गरिएको हो। वाराणसीबाट फर्केर आई वैशाखशुक्ल त्रयोदशी बुधवार हस्तनक्षत्र हर्षणयोगको दिन त्वंबुलाछेमा उनै देवभारोको नामले तीनतले देवल बनाई सुनको गजुर चढाई विष्णुको स्थापना गरियो। यी देवता राख्न खन्दा इनार भेट्टाइएको हुँदा इनार बनाई 'वंछ' गरीकन देवल बनाइएको हो।

यस देवलका देवताको पूजाको लागि निश्राव र बत्ती बाल्नाको लागि तथा अरू कुराको लागि *आदिवु* खेत गुठी राखियो। पुरोहित मडिछेंका असल ब्राह्मण श्रीपयाकुदेवजु, उपदेष्टा बखनिह्मंका श्रीदेवसिंहजु। जोशी .... का जीवशङ्ख भारो, आचार्य छुकल हाकु भारो। जजमान त्वंवहालका पात्रवंश रावुत दोय भारो। छोराहरू लुगुभारो र हाकु भारो।

यस पुण्यले नाति देवभारोलाई वैकुण्ठ प्राप्त होस्। देवकार्य गर्ने शिल्पकार लुगुदु भारो।

श्री ज्येष्ठविहारका यंकुलि श्री जयनरसिंहदेव ठाकुरको राज्यकालमा यो काम गरिएको हो। शुभ।



व्याख्या

यस अभिलेखमा विशेष राजनीतिक कुरा परेको छैन। खाली तात्कालिक एक शासकको नामोल्लेख मात्र यसमा परेको छ, तर यसबाट पनि पाटनको तात्कालिक राजनीनिक अवस्थाको अलिकता संकेत भने पाइन्छ। ने.सं. ६९६ (वि.सं. १६३३) मा श्रीजयनरसिंहदेव ठाकुरको शासन यो शिलालेख रहेको इलाकामा चलेको थियो भन्ने यस अभिलेखबाट थाहा पाइन्छ। नरसिंहदेव ठाकुर विष्णुसिंहका छोरा हुन्। विष्णु सिंहको मृत्यु भएपछि उनका तीन छोरा नरसिंह, पुरन्दर सिंह र उद्धवसिंहको संयुक्त शासन ललितपुरमा कायम भएथ्यो। तात्कालिक ऐतिहासिक सामग्रीहरू मध्ये केहीमा तीनै जनाको नामोल्लेख भएका छन्। केहीमा भने एकएक जनाको मात्र नामोल्लेख भएको पनि पाइन्छ। तीन जवानको संयुक्त शासन चले तापनि इलाका विभाजन भएको स्पष्ट उल्लेख पाइँदैन तर इलाकाको विभाजन पनि केही अंशमा हुन्थ्यो कि भन्ने अनुमान यताबाट गर्न सकिन्छ। तुंबहिल भेक नरसिंहको इलाकामा परेको हुँदा पुरन्दर र उद्धवको नामोल्लेख नगरी शासकका रूपमा नरसिंहको मात्र उल्लेख गरिएको हो कि ? अथवा यो अभिलेख राख्न लाउने लुंगु भारोको नरसिंहदेव उपर विशेष आस्था हुँदा अरू दुइजना शासकको नामोल्लेख नगरी नरसिंहको मात्र नामोल्लेख गरेको पनि हुन सक्छ।

तात्कालिक सामाजिक अवस्थाको अलिकता झलक पनि यस अभिलेखबाट पाइन्छ। पाटन तुंबहिलका एक जना भारादार लुंगुका नाति देवभारोको असामयिक मृत्यु हुँदा लुंगुभारो र अरू परिवारलाई ठूलो मानसिक चोट पर्‍यो। अनि देवभारोको इहलोक बिग्रे पनि परलोक चाहिं सप्रोस् भन्ने कामनाले लुंगु भारोहरूले आफ्नो गच्छेअनुसार धर्मकर्म गर्ने निधो गरे। मल्लकालका नेपालीहरूमा पनि काशीको ठूलो महिमा फैलिएको थियो। यसो हुँदा पुण्यभूमि काशीमा पहिले धर्मकर्म गर्ने विचार गरियो। तदनुसार लुंगुभारोहरू काशी पुगे। त्यहाँ भिन्नै देवल बनाई देवता स्थापना गर्नु बढी खर्चिलो हुने हुनाले प्रसिद्ध सिद्धेश्वरी मन्दिरको भित्तामा अडेस लगाई उमामहेश्वरको स्थापना गरियो। यज्ञ पनि गरियो। त्यताबाट नेपाल फर्की आफ्नो जन्मभूमिमा पनि केही कीर्ति स्थापना गर्ने विचार लुंगु भारोलाई भयो। यसो हुँदा तुंबहालमा एक तीनतले मन्दिर समेत बनाउन लगाई विष्णु स्थापना गरियो।

विश्वेश्वर क्षेत्र हुनाले होला, काशीमा चाहिँ उमामहेश्वर स्थापना गरिएको थियो। पाटनमा भने विष्णु स्थापना गरियो। यसरी विविध धार्मिक सम्प्रदायमा प्रायः समान आस्था राख्ने नेपालीहरूको पुरानो परम्पराको अनुसरण लुंगु भारोले पनि गरे।

देवमन्दिर बनाउन जग खन्दा पुरानो इनार पत्ता लाग्यो र सो इनारको जीर्णोद्धार गर्ने काम पहिले गरी अनिमात्र देवल बनाउने काम पूरा गरियो। देवमन्दिर बनाई देवता मात्र स्थापना गर्दैमा अनिष्ट सिद्धि नहुने हुनाले नित्यपूजा आदिको लागि आयस्ताको यहाँ बन्दोबस्त गरिएको छ। पुजारी आदिको पनि बन्दोबस्त गरिएको छ। पुजारी आदिको बन्दोबस्त गर्दा तात्कालिक चलनलाई पछ्याइएको छ। त्यस बेला कति पूजाआजामा विशेष गरेर तान्त्रिक पद्धतिले गरिने पूजाआजामा ब्राह्मणका साथै जोशी, आचार्यहरू पनि सम्मिलित गराइन्थे। यहाँ पनि ब्राह्मणका साथै जोशी र आचार्यहरू पनि सम्मिलित गराइएका छन्।

यस अभिलेखमा देवमन्दिर बनाउँदा काम गर्ने शिल्पकारको समेत नामोल्लेख भएको छ। शिल्पकारको यस्तो नामोल्लेख कम मात्र भएको हामी पाउँछौं। यसरी यस अभिलेखका संस्थापक मात्र वंश राउत लुंगु भारो उदार प्रकृतिका थिए भन्ने झल्किन्छ।

★★★

## (१४)

# भण्डारखाल देवीस्थानको पुरन्दरसिंहको अभिलेख

## मूलपाठ

१. ॐ नमः श्रियै । भृगो ख्यात्या समुत्पन्न, श्रीदेवी विष्णुवल्लभा । द्रुतचमीक-
२. रः कान्त्या सर्व्वाभरणभूषिता ॥ प्रणम्य देवदेवेशिम्, लक्ष्मी भूवनपूजितां ॥
३. अभूच्छ्रीविष्णुसिंहोसौ, राजा विष्णुपरायणः । सर्वराजगुणैर्युक्तो राजराजो-
४. पमः श्रियः ॥ तस्यात्मजो महाराज ... भुवि राजते । वीरनारायणे वी-
५. रो, विपक्षदलनक्षमः ॥ श्रीपुरन्दरसिंहेति युधिष्ठिर इवापरः । तस्य
६. पुत्रोतितेजस्वी युवराजगुणाकरः । पुरुषोत्तमसिंहेति, धनंजय इवाप-
७. रः । तस्य पाणीगृहीता या, पत्नी भर्तृपरायणाः । ललितालक्ष्मिविख्याता सा
८. तु कालवशं गता ॥ तस्याः स्वर्लोकसंस्थायाः प्रासादे दिव्यसुन्दरे । प्रतिमां कमलादे-
९. व्यास्तत्र संस्थाप्य भूपतिः । लक्ष्मीपूजादिकं सर्व्वम्, .... पर्यकल्पयत् ॥ ॥
१०. अतः परं देशभाषा ॥ यो सत्रयात दुंता ..... वुरो .......
११. भेरुचल रोव .... स्त पि १४ संख्यवोशने वो, यं थ्वते चलन चल जुरो ॥
१२. थ्वते बुया वरिसानन प्रतिदिन अविच्छिन्नन जाके कुडछि १ फलके
१३. कुडछि १ धरिपाट छि १ मतं बिययात चेकन-अस्ता धारे थो
१४. सत्रस चोङ ब्राह्मणीस्त न्हिथं बिय जुरो । विशेषन बुगंयात इन्द्रयात-
१५. न रङनयात मनिग्लयातन मत घ्न विङ प्वाठ ५० धारे छोयके माल
१६. रङनयात कुन्हु दान बिय, सियाफलके फं ४ जिव थ्वं फ ४ ला दन ४
१७. धरिपाट १२, थ्वते चाछि फलके, पा-चयि भुति........
१८. कलगुडि फोया, थ्वते दान बियमाल ॥ थ्वतेया चिन्ता याङा गोष्ठी
१९. मानिग्ल कोविछें केशव भारो त्वंबाहार रूपकेश भारो तनिह्न
२०. हनूमन्तछें हाक्वनायक हतखानिह्न माधवभारो थ्व पेह्न
२१. लवह्लाया जुरो, थ्वते चोस्यं तको हनि यातसा पंचमहापातक
२२. जुरो ॥ सम्वत् ७०९ मार्ग्गशिरकृष्ण ९ जुरो । शुभमस्तु ॥ ॥

### अनुवाद

लक्ष्मीलाई नमस्कार । भृगुबाट पैदा भएकी (?) विष्णुकी प्यारी, पग्लेको सुन जस्तो चहकिलो भएकी, सबै गहना लाएकी श्री देवी लक्ष्मी हुनुहुन्छ । देवताकी पनि देवता भएकी, संसारले पुजिएकी त्यस्ती लक्ष्मीलाई नमस्कार ।



विष्णुको भक्ति गर्ने, राजामा हुनु पर्ने सबै गुणहरू भएका, कुवेरजस्ता धनी श्रीविष्णुसिंह हुनु भयो ।

उहाँका छोरा महाराज पुरन्दरसिंह पृथ्वीमा सुहाइरहनु भएको छ । वीर, शत्रुलाई सखाप पार्ने वीर नारायण श्रीपुरन्दरसिंह अर्का युधिष्ठिरजस्ता हुनुहुन्छ ।

उहाँका छोरा, अति तेजस्वी, युवराजमा हुनुपर्ने गुणहरू भएका पुरुषोत्तमसिंह हुनुहुन्छ, उहाँ अर्का कुवेरजस्ता हुनुहुन्छ ।

उहाँकी पतिब्रता व्याइते पत्नी, ललितलक्ष्मी अकस्मात् परलोक हुनु भयो । स्वर्गवासी उहाँको लागि सुन्दर मन्दिरमा लक्ष्मीको प्रतिमा स्थापना गरी राजा पुरन्दरसिंहले उक्त लक्ष्मीको पूजा आदि सबै कुराको वन्दोबस्त गरिदिनु भयो ।

यसपछि देश भाषाको अनुवाद- यो सत्रको लागि ... जम्मा गुठी राखियो ।.. भेरु चलुको जग्गा १४ रोपनी ... यतिको चलनचल्ती गर्नु । यी जग्गाको वर्षभरि गर्नुपर्ने कुरा- प्रतिदिन अटूट गरी चामल १ कुरुवा, चिउरा १ कुरुवा, १ कहतारो दही, बत्ती बालन तेल ... अस्ता, यति कुरा यो सत्रमा बस्ने ब्राह्मणीलाई दिनका दिन दिनुपर्छ ।

विशेष गरी बुंगयात्रा (राता मछिन्द्रनाथको जात्रा) लगन जात्रा, मानिगल जात्राको दिन र इन्द्रजात्राको दिन, ५० बत्ती बाल्नु । लगनजात्राको दिन सियाफलके (भुटेको च्यूरा) ४ पाथी, जिव जाँड चार पाथी, मासु ... चार, १२ कहतारा दही, यतिलाई चाहिने जति च्यूरा .... वोरी, भिजाएको केराउ यति दान दिनु ।

यसको हेरविचार गर्ने गुठियार-मानिगलका विछेका केशव भारो, त्वंबहालका रूपकेश भारो, तनिन्हा हनूमन्तछेंका हाकुनायक, हतखानिहका माधव भारो यी चार जनालाई यो सुम्पिएको छ । यहाँ लेखेको कुरामा केही घटाएमा पंच-महापातक लागोस् ।

ने.सं. ७०९ (वि.सं. १६४५) मार्गकृष्ण नवमी होस् ।

### व्याख्या

विष्णुसिंहले ललितपुरमा कसरी आफ्नो एकच्छत्र प्रभुत्व कायम गरे, उनी पछि कसरी उनका तीन छोराहरूको संयुक्त शासन चल्यो भन्ने कुरा माथि लेखिसकेको छ । विष्णुसिंहका तीन छोरोमा पुरन्दरसिंह चलाक थिए । यसो हुँदा ललितपुरमा आफ्नो एकलौटी शासन कायम गर्ने सपना देखेका थिए । ने.सं. ७०९ तिर पुग्दा उनको सपना पुरा भएको देखिन्छ । यस अभिलेखको वर्णनबाट उक्त कुराको संकेत पाइन्छ ।

त्यसताका प्रत्येक शासकहरूले आफ्नो प्रशस्तिमा असुरनारायण, दैत्यनारायण वीरनारायण आदि नारायण अन्त्यमा जोडिएको पद प्रशस्तिमा जोड्ने चलन थियो । विष्णुसिंह, पुरन्दरसिंहहरूले श्रीश्री, जय, देव, ठाकुर आदि राजोचित प्रशस्ति लिइसकेका थिए तापनि *वीरनारायण* आदि प्रशस्ति जोडेका थिएनन् । यस अभिलेखमा पुरन्दरसिंहले आफूलाई महाराजको साथ वीरनारायण पनि लेखाई त्यो कमी पनि पूरा गरे । साथै, यस अभिलेखमा पुरन्दरसिंहले आफ्ना छोरा पुरुषोत्तमलाई *युवराज* भनी लेखिएको पनि चाखलाग्दो छ ।

पुरन्दरसिंहकी बुहारी ललितालक्ष्मीको मृत्यु हुँदा तिनको नाममा लक्ष्मीको मूर्ति स्थापना गरी मन्दिर बनाई यो अभिलेख कुँदाइएको हो । अभिलेख पाटन भण्डारखाल देवीस्थानमा रहेको हुनाले पुरन्दरसिंहको दरबार हालको पाटन दरबारमै रहेको संकेत पाइन्छ ।

पुरन्दरसिंहले पंचतत्त्वात्मक विष्णु स्थापना गरी राखेको अभिलेखमा कुनै गुठी राखेको उल्लेख परेको छैन । यस अभिलेखमा भने गुठी राखेको कुरा परेको छ । यहाँ सत्तलमा एकजना

ब्राह्मणी राख्ने बन्दोवस्त भएको रहेछ, ती ब्राह्मणीलाई प्रतिदिन एक कुरुवा चामल एक कुरुवा चिउरा, एक कहतारो दही आदि दान दिने व्यवस्था यहाँ गरिएको छ । साथै, मच्छिन्द्रनाथको जात्राको विशिष्ट दिनमा इन्द्रजात्रा आदिमा दान दिने, बत्ती बाल्ने आदि व्यवस्था पनि यहाँ गरिएको छ । यो गुठी चलाउने गुठियारहरू पनि यहाँ किटिएका छन् ।

★★★

## (१५)

## मंगलबजार नरसिंहमन्दिरको पुरन्दरसिंहको अभिलेख

### मूलपाठ

१. ॐ नमो नरसिंहाय ॥ ॥ क्रोधादालोलजिह्वं विवृतनिजमुखं सोमसूर्य्याग्निने-
२. ........ निशितं भिन्नदैत्येन्द्रगात्रं । चक्रं सपाशां कुलिशगदां
३. ........ मणिमयविविधाकल्पमीडे नृसिंहं ॥ नृसिंह पातु दैत्यारे
४. ........ कोटीनां निपातैरकृतव्रणः ॥ अभूपभूमिः प्रतिपक्षभीतिः
५. ........ सदा समाससादितभूरिकीर्त्तिः । चिरं कृतार्थीकृतभूमिदेव (:) स्फुरत्प्रतापो नृपविष्णुसिंहः ॥
६. तस्माद् भूपशिरोमणेः समजनि श्रीवीरनारायणे धर्म्मज्ञानविवेकनिर्म्मलधियः स-
७. .......... धिकदो दान्तः सदा धर्म्मवाक् श्रीमान् धीरपुर-
८. न्दरो निजगुणै ... ... सर्व्वदा । तस्याग्रजोसौ नरसिंहदेवस्त्यक्त्वा धरित्रीं वररा-
९. ज्यलक्ष्मीम् ॥ ... ... ... तस्यैव हेतोश्च मठं चकार । नृसिंहदेवार्थ-
१०. नृसिंहरूपं, नारायणस्य प्रतिमां चकार । नृसिंहरूपं च विधाय भ्रातुः पुरन्दरो भूप-
११. ... .... ॥ ॥ अतः परं देशभाषा श्रीश्रीजयपुरन्दरसिंहदेव ठाकुरसनं
१२. ददा नरसिंहजु परलोक विज्याङा, थोसते निमित्तनं देवल गंथकूट दयक
१३. नरसिंहमूर्ति प्रतिमा स्थापन याङ ... के वं धुरिको खलंबु रोव डा ५ ममीखा
१४. बुरोव डा ५ वेलखव बुरोव ४ थ्वते बुया वर्षानन नित्यपूजा जोछि धरि
१५. क्वे फं १ फलके कुड १ ... ग्वल ... ... स्थान मत ह्निथं वियमाल ॥
१६. ... ... ... कुह्न ... ... लन यायमाल
१७. ... ... ... ...धनपूजा, धरिपाट ४ दुदुपाट ४ घेर .... दंम १ ...



१८. दम्म १ दक्षिणा दम्म १ ॥ बुयात ४ ... यात नमतोछे पुनप्वाय १
१९. थ्वतेया गोष्ठी कोनिह्म ... कुशल बाबु ओटा बाबु ... गो पार दति
२०. प्ल जिता ... ... पूजा दुदु प्ल दं २ घेर ... ...
२१. सापहनया थ्वते सेह्लातक्व ... ... ... मनिस्तरपं का-
२२. ले पंचपातक जुरो ॥ सम्वत् ७१० कार्त्ति (क) शुक्ल २ ज्येष्ठानक्षेत्र शुक्र-
२३. मानयोग शुक्रवार विच्छसंक्रान्ति कुन्हु तया जुरो ॥ शुभ ॥

### अनुवाद

नरसिंहलाई नमस्कार । रीसले जिब्रो चलाइरहेको, मुख बाएका, चन्द्र, सूर्य र अग्निसमान आँखा भएका, तीखो (नङ्ग्रा भएका), दैत्यको जीउ चिरेका, शङ्ख, चक्र, गदा, वज्र र पाश लिएका मणि जडेका अनेक गहा नागुरिया लाएका नृसिंहको स्तुति गर्दछु । दैत्यहरूका शत्रु, करोडौं हनाइले पनि घाइते पार्न नसकिएका हे नृसिंह हामीलाई रक्षा गर्नुहोस् ।

अरू राजाजस्ता नभएका, शत्रुहरूलाई तर्साउने, सधैं थुप्रा कीर्ति कमाएका, ब्राह्मणहरूलाई खूप सन्तुष्ट पारेका, प्रतापी राजा विष्णुसिंह हुनु भयो ।

राजामा शिरोमणि धर्मात्मा, ज्ञानी, विवेकी, सफा बुद्धि भएका उहाँबाट वीरनारायण श्रीपुरन्दरसिंह जन्मनुभयो । उहाँ ... खूप दान दिने, इन्द्रियलाई वशमा पारेका, सधैं काइदाको कुरा गर्ने, धैर्यशाली, आफ्ना गुणहरूले सधैं ... पार्ने हुनुहुन्छ ।

उहाँका दाजु नरसिंहदेव यो पृथ्वी, असल राज्य छोडी स्वर्ग जानु भयो । .... उहाँकै लागि मन्दिर बनाइयो । नरसिंहदेवको लागि नृसिंहरूपका नारायणको मूर्ति निर्माण गराउनु भयो । राजा पुरन्दरसिंहले दाजुको नृसिंहरूपको मूर्ति बनाउनु लगाई ..... (यस मन्दिरमा स्थापना गर्नु भयो ।)

यसपछि देश भाषामा लेखिएको कुराको अनुवाद – श्रीश्रीजयपुरन्दरसिंहदेव ठाकुरले दाज्यू नरसिंहज्यू परलोक हुनु भएको हुनाले उहाँको निमित्त गन्धकूट देवल बनाई नरसिंह मूर्तिको स्थापना गर्नु भयो ।

..... धुरिको खलंबु ५ रोपनी, ममीखाबु ५ रोपनी, वेलखबु ४ रोपनी । यति खेतको आयस्ताले नित्यपूजाको लागि चाहिने सामग्री .... १ पाथी चामल, १ कुरुवा चिउरा ..... दिनका दिन बत्ती बाल्नुपर्छ । ... दिन ... गर्नुपर्छ । वषबन्धन पूजामा ४ कहतारा दही, ४ कहतारा दूध, घिउ ... १ दामको दक्षिणा, १ दम्म, १ ॥ द्रम्म ... को लागि ... ...

यसका गुठियार कोनिह्मका ... कुशलबाबु, ओटा बाबु ... ..... पूजामा दूध पलको, २ दम्मको घिउ सखर ... यति लेखिए अनुसार गरेनन् भने .... पञ्चमहापाप लागून् ।

ने.सं. ७१० (वि.सं. १६४६) कार्तिक शुक्ल द्वितीया शुक्रवार ज्येष्ठानक्षत्र, सुकर्मायोग, वृष संक्रान्ति । शुभ होस् ।

व्याख्या

ने.सं ७१० (वि.सं. १६४६) मा दिवङ्गत दाजु नरसिंहको सम्झनामा नरसिंह रूपका विष्णु स्थापना गरी, मन्दिर बनाई पुरन्दरसिंहले यो अभिलेख कुँदन लाएका हुन् । यस बेलासम्म पुग्दा पुरन्दरसिंह आर्थिक दृष्टिले पनि पहिलेभन्दा बढी सप्रेका देखिन्छन् । यसभन्दा केही महीना अघिमात्र पुरन्दरसिंहले आफ्नी बुहारी ललितालक्ष्मीको नाममा लक्ष्मीमूर्ति स्थापना गरी मन्दिर बनाइदिएका

थिए । साथै दानधर्मको लागि गुठी पनि राखेका थिए । त्यसको केही समयपछि दाजु नरसिंहको सम्झनाको नरसिंह मूर्ति स्थापना गरी यो अभिलेख कुँद्न लाएका छन् । यहाँ नित्यनैमित्तिक पूजाको लागि गुठी पनि राखेका छन् । यसबाट पुरन्दरसिंहको राजनीतिक अवस्थाका साथै आर्थिक अवस्था पनि सप्रेको लक्षण देखापर्छ ।

राजनीतिक दृष्टिले पनि पुरन्दरसिंहको अवस्था पहिले भन्दा दृढ बनेको संकेत यस अभिलेखबाट पाइन्छ । दाजु नरसिंहदेवको मृत्युपछि पुरन्दरसिंहले ललितपुरमा संयुक्त शासनको ठाउँमा आफ्नो एकलौटी शासन स्थापना गर्ने अवसर पाए । नरसिंह र पुरन्दरसिंह एक आमा तर्फका दाजुभाइ हुन् भन्ने अनुमान हुन्छ । यद्यपि यो कुरा तात्कालिक प्रमाणबाट सिद्ध भएको छैन तैपनि नरसिंहको मृत्यु हुँदा उनको नाउँमा नरसिंहमूर्ति स्थापना गरी गन्धकूट देवल बनाईदइएको हुँदा उक्त कुराको अनुमान गर्न सकिन्छ ।

ने.सं. ७१७ (वि.सं. १६५४) सम्म पुरन्दरसिंहले ललितपुरमा शासन गरिरहेको प्रमाण पाइन्छ । 'सप्तशती' नामक एक हस्तलिखित ग्रन्थमा 'राजाधिराज श्री पुरण्डलसिंहदेवस्य विजयराज्ये ॥ श्रेयोऽस्तु सम्वत् ७१७ ज्येष्ठमास्य शुक्लपक्षे दशम्यां' भन्ने उल्लेख पाइएको हुनाले उक्त कुरा थाहा पाइन्छ । यसको दुइ वर्षपछिको एक ताडपत्रमा मनिगलाधिपतिका रूपमा शिवसिंहको उल्लेख आइसकेको छ । त्यस ताडपत्रमा 'सम्वत् ७१९, भाद्रपद कृष्ण एकादस्यांतिथौ श्रीमानिगलाधिपति श्रीश्रीजयशिवसिंहदेव प्रभु ठाकुर' स्पष्ट उल्लेख परेको छ । यसबाट वि.सं. १६५६ मा शिवसिंहले ललितपुर जितिसकेको स्पष्ट थाहा पाइन्छ । यस विषयमा तल यथास्थानमा खुलाएर लेखिएको छ ।

★★★

(१६)

## पाटन खोकना गाउँ देलाटोलको चैत्यको शिलालेख

### मूलपाठ

१. ॐ स्वस्ति ॥ सम्वत् ७१० आश्विन शुक्ल द्वितीया तिथौ ॥ -
२. त्रनक्षत्रे ॥ आदित्यवासरे ॥ --- दिनस श्रीश्रीजयपु-
३. रन्द्ररसिंह देव ठाकुरस विजयराज्य ..... तवदेवर
४. - र ..... मा ..... ...... रस किर्त्त
५. दक ................................... गुण भावो
६. गुणि भावो नाथु भावो दोय ....... भारो थ्व-
७. नेस्यं थ्व फले दोयका दिन जुरो शुभमस्तु सर्वदा



### अनुवाद

कल्याण होस् । ने.सं. ७१० (वि.सं. १६४७) आश्विन शुक्ल द्वितीया आदित्यवार ... नक्षत्र, यस दिन श्रीश्रीजयपुरन्दरसिंहदेव ठाकुरको विजय राज्यमा ठूलो देवल ... .... गुण भावो गुणी भावो नाथु भावो दोय... भारो यिनीहरूले यो पाटी बनाइएको हो । सधैँ शुभ होस् ।

व्याख्या

खोकनाको माथि गएको ने.सं. ६८९ को अभिलेखमा तात्कालिक शासकका रूपमा नरसिंह, पुरन्दरसिंह, उद्धवसिंह तीनै जनाको उल्लेख परेको छ । ने.सं. ७१० को यस अभिलेखमा भने पुरन्दरसिंह मात्र उल्लेख परेको छ । यसबाट यस बेलासम्म ललितपुरमा पुरन्दरसिंहको एकलौटी शासन चलिसक्यो भन्ने संकेत पाइन्छ । यसभन्दा केही अघि नै नरसिंहको त मृत्यु भइसकेको थियो । यसकारण पुरन्दरसिंहले भाइ उद्धवसिंहलाई मात्र पन्छाए पुग्ने भइसकेको थियो । उद्धवसिंहसँग पुरन्दरसिंहको अघिदेखि नै त्यति मेल थिएन । यसकारण दाजु नरसिंहको मृत्युपछि पुरन्दरसिंहले उक्त कदम उठाएको अनुमान हुन्छ ।

यस अभिलेखको केही भाग खण्डित छ । यसकारण कुरा खुलस्त छैन तापनि देवल र पाटी बनाई यो अभिलेख राखिएको हो भन्ने बुझिन्छ । केही दाताहरूका नाम अस्पष्ट भइसकेका छन् तापनि तात्कालिक चलन अनुसार केही मानिस मिली सामूहिक रूपमा कृति राखेका हो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ ।

(१७)

## पाटन नकबहिल अथकननि बहालभित्र क्वापाल देवताका घरमा रहेको अभिलेख

### मूलपाठ

१. ॐ नमः बुधाय ॥ श्रीयोस्तु सम्वत् ७१६ माघ
२. मास्य, शुक्पक्षे अनमतिथ्व अशुभ ... जुते
३. साधि जोग्य जथाकनमते आदित वासरे
४. मकरो सविति थ्व कुन्हु दिन श्री अथकवाहारस
५. शासन वुध भतारस्य शुवन इना द्धहरपा
६. ... ... सिंहजु प्रमुखन पंच मुनकाव
७. दयका जुरो साकेवंस श्रीभिसिंह
८. साकेवंस गुनजु कासिराम
९. भारो मनिसिंह भारो सत्य भारो

१०. ... ... हान ताव विजयराङ भाव ध-
११. भाव रोदेव भाव चिकिधि
१२. ....... भाव द्वरसिंह भाव मासिं-
१३. .... ..... सि भाव न्कवङ भाव
१४. ... .... यूव सियाफ भाव

### अनुवाद

बुद्धलाई नमस्कार । कल्याण होस् । ने.सं. ७१६ माघ शुक्ल अष्टमी आदित्यवार अश्विनीनक्षत्र साध्ययोग पर्नुपर्ने कारण मुर्हूत परेको बेलामा मकरराशीमा सूर्य रहेमा, यसदिन श्री अथकवहाल (ननी) मा शासन बुद्धभट्टारकलाई सुनको चँदुवा चढाइयो ।
.... सिंह प्रमुख पंचहरू जम्मा पारी उक्त काम गरिएको हो । शाक्यवंश श्रीभिसिंह शाक्यवंश गुणजु काशीराम भारो मणिसिंह भारो सत्य भारो .... विजयराङ भावो ... देवभावो चिकिधि ... भावो द्वरसिंह भाग मासिं ... सिं भाव ह्नवङभावो ... यूव सियाक्व भाव ...

★★★

(१८)

## पाटन बुलुगाउँ गणेशका पाटीको शिलालेख

### मूलपाठ

१. ॐ श्रेयोऽस्तु ॥ सम्वत् ७१९ णी शुक्ल ॥ नवमी
२. .................................. ॥ थ्व कुन्हु
३. श्रीमन् श्री ........ भट्टारक सुवर्ण्ण मुख
४. प्रतिस्था याङ

### अनुवाद

कल्याण होस् । नैं.सं. ७१९ (वि.सं. १६५६) .... शुक्ल नवमी .... यस दिन श्रीश्री (गणेश) भट्टारकको सुनको मुखको प्रतिष्ठा गरियो ।

★★★



(१९)

## पाटन थेचोगाउँ बालकुमारी मन्दिरनिरको पाटीको शिलालेख

### मूलपाठ

१. ॐ स्वस्ति ॥ सम्वत् ७१९ ज्येष्ठ शु-
२. क्ल ॥ अष्टंम्यां तिथौ । अश्लेष
३. नक्षत्र ॥ व्याघाटयोगे ॥ आ-
४. दित्यवासरे ॥ थ्व कुन्हु शुलुं-
५. थिग्राम जिकसिंह भावो, भार्ज्या
६. मचा ...................... नामन
७. दिवंगत .................... श्री-
८. यात नामन, थ्व दिन कुन्हु प्र-
९. तिष्ठा याङन, थ्व फले दो-
१०. यका जुरो ॥ थ्व फलेस
११. प्रतिमा हाथ्वं हायके थिं
१२. शला ... इन्द्र प्ला पू-
१३. निसि वो - - -पेघाट ल्हाय-
१४. के यंजमाल जुरो ॥ शुभं ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७१९ (वि.सं. १६५६) ज्येष्ठ शुक्ल अष्टमी आदित्यवार अश्लेषानक्षत्र व्याघातयोग, यसदिन शुलुंथिग्रामका जिकसिंह भावो, पत्नी मचा - - - - - - - नामले दिवङ्गत ..... को नामले यस दिन प्रतिष्ठा गरी यो पाटी बनाइएको हो ।
यस पाटीमा ... हाथ्वं (आकाश भैरव) लाई जाँडविशेष चढाउनू । मंसिर ..... इन्द्रजात्राको पूर्णिमाको दिन ......... चारपटक जाँडविशेष चढाउनु । शुभ होस् ।

★★★

## (२०)

# पाटन च्यासलटोल धाराका खाल्डोको शिलालेख

## मूलपाठ

१. ॐ नमो: विश्वनाथाय ॥ कण्ठे यस्य रणत्कलाखदशं गंगा ज-
२. लं मस्तके वामाङ्गे गिरिराजराजतनया जाया भवानी सती
३. नन्दिकन्दगणाधिराजसहित श्रीविश्वनाथ प्रभु: काशीमंदिर-
४. संस्थिता सुलगुरु देयात् सदा मंगलं ॥ ॥ स्वस्ति ॥ नेपालिक ॥ श्रेयोस्तु
५. सम्वत् ७३१ चैत्र कृष्ण ॥ चतुथ्यान्तिथौ ॥ अनुराढनक्षेत्रे ॥ सु-
६. द्धियोगे ॥ शुक्वाल ॥ थ्व कुन्हु ॥ श्रीच्याशहितिया लिगम पुखुलि-
७. श धोनक्षलन लंख छोडा जुरो, थ्वतेया चिता याक स यव-
८. च्याशरोहोगनछें पात्र रावत्त रूपसिंङ व्रह्मारछें जिवरा-
९. ज कितछें रूपसिंह व्रह्मार छें हेडा .... गनछें वदेवह्मा
१०. रछें लुंगु रोहोगरे ञविलसिंहयतछे गजराज व-
११. ह्मारछें जिवनराज व्रह्मारछे वेखानायक रथन
१२. सिंङ व्रह्मारछें धालयंसि व्रह्मारछें चक व्रह्मार-
१३. छेंस्यं जित्रसिंङ थ्व जिमप्यम्हं श्रीवुंगमकान्ति गुथिन
१४. लंस्यंयने यात धलन दयका जुरो पतकोलाछे अ-
१५. मेताजु भारो छम्हं संशर्ग्गन ज्या यात वव नाय-
१६. हिति चंताछे ह्मुकनस्यडवे म्हालन धोनमा-
१७. लंको ज्या याडाव विवाजुरो ॥ शुभमस्तु ॥ शुभ ॥

## अनुवाद

विश्वनाथलाई नमस्कार । जसको घाँटीमा आवाज गर्ने ..... छ, शिरमा गंगाजल छ, बायाँपट्टि काखमा पत्नी पर्वतराजकी छोरी भवानी सती हुनुहुन्छ, नन्दी स्वामिकार्तिक गणेश सहितका काशीको मन्दिरमा रहेका देवताका पनि गुरु श्रीविश्वनाथले सधैं मंगल गरुन् ।

कल्याण होस् । ने.सं. ७३१ (वि.सं. १७१०) चैत्र कृष्ण चतुर्थी शुकबार अनुराधानक्षत्र शुद्धियोग, यस दिन श्रीच्यासलहिटीको लिगमपोखरीमा धोनखेलबाट पानीको निकास खोलियो । यसको चिताई गर्ने सोही च्यासटोल गनछेंका पात्ररावत्त रूपसिंह व्रह्मारछेंका जीवराज । कतिछेंका रूपसिंह, व्रह्मारछेंका ... गनछेंका वदे, ह्मनछेंका लुंगु ... विलसिंह, यतछेंका गजराज, व्रह्मारछेंका जीवनराज, व्रह्मारछेंका वेखानायक रथनसिं, व्रह्मारछेंका धालयंसि, व्रह्मारछेंका चके,



व्रह्मारछेंका जित्रसिंह, यी चौध जनाले श्रीवुंग संकान्ति गुठी मार्फत् पानीको लागि कुलो वनाइयो । पतको लाछिका अमेताजु भारो एक जनापति संगतले काम गर्न आएका थिए । नायहिटी चंताछेंका ....... ले पर्याप्त काम गरेका थिए । शुभ होस् ।

★★★

## (२१)

# पाटन चोबहाल जलविनायक गणेशको देवलको शिलालेख

## मूलपाठ

१. ॐ नम: गणपतये नम: । गणानां गणपति - म-
२. जवक्त्रां त्रैलोचन: प्रसनो भवतु मे नित्यं, वल्दाता
३. विनायक ॥ एकदन्त महाविज्य, नमस्तु फलदायकं सि-
४. द्धि सर्व्वकार्यानि भव प्रसाद विनायक, तेरमूपर
५. सदेव, कार्जे सिद्धि विनायक सो भने रूपसंपन्न दे-
६. हि मे सुखसंपद ॥ राजाधिराज परमेश्वर, परम-
७. भट्टारक श्रीश्रीजयशिवसिंहदेव प्रभु ठाकुरस
८. श्रीश्री हरिहरसिंहदेव, उभय ठाकुरस विजयरा-
९. जे श्रेयोस्तु, सम्वत् ७२३ मार्ग्गशिरमासे शुक्रपक्ष
१०. पंचम्याया तिथो श्रवणनक्षत्र व्याघातजोगे, जथा-
११. करण मुहुत्ते सोमवासरे विछरासिगते सवितेरी-
१२. मकरासिगते चंद्रमसि, थ्व कुन्हु श्री ३ क्वयनाय भ-
१३. रोस्के स्वर्ण्ण कलस ध्वजारोहन याङ यज्ञ सपूर्ण्ण याङ ग-
१४. जुडि, छाया जुरो - - साल श्रीमे - कुमार्या - - - - - -
१५. लैगमा - - - यन्तोरके मिख्वलह्न थंकाडि - - - - -
१६. माध्यां मुकुल मयि, पुत्र उदय, घुरन किरण थ्वते
१७. प्रमुख जिन्हु गोष्ठि समूहचयसन थव देव प्री-
१८. ति कामनार्थेन देवसछे ह्लोङन गलतुक --
१९. ... थं छास्यं गजुडि छास्य सपूर्ण्ण याङा सिर्द्धयका, म-
२०. खनबहार जखसिंहजु गुरभलाडन जज्ञ
२१. याचका । तत् पुन्यार्थेन जजमानस आयु
२२. आरोग्य ऐहस्वर्य जनधनलक्ष्मी संत्-

२३. तिसंतान बृद्धिरस्तु, शुभमंगल भव-
२४. तु ॥ शुभ ॥

## अनुवाद

गणेशलाई नमस्कार । गणहरूका अधिपति ... हात्तीको जस्तो मुख भएका, तीन आँखा भएका, बल दिने गणेशजी मउपर सधैं प्रसन्न हुनुहोस् । एउटा मात्र दाँत भएका, ठूलो पराक्रम भएका, फल दिने, सबै कार्य सिद्ध गर्ने गणेशजी प्रसन्न हुनुहोस् । ... सधैं कार्य सिद्ध गर्ने, सुन्दर रूप भएका गणेशजीले मलाई सुख सम्पत्ति देऊन् ।

राजाधिराज परमेश्वर परमभट्टारक श्रीश्री जयशिवसिंहदेव प्रभु ठाकुर र श्रीश्रीहरिहरसिंहदेव दुवै ठाकुरको विजयराज्यमा ।

कल्याण होस् । ने.सं. ७२३ (वि.सं. १६५९) मार्ग शुक्ल पंचमी सोमवार श्रवणनक्षत्र व्याघातयोग पर्नुपर्ने करणमुहूर्त परेको बेलामा, वृश्चिक राशिमा सूर्य, मकरराशिमा चन्द्रमा रहेमा, यस दिन श्री ३ वकथनाय गणेशलाई सुनको कलश चढाई ध्वजारोहण गरी यज्ञ सम्पूर्ण गरियो, गजुर चढाइयो ।

......... टोलका थकाली मिख्वलह्व, .... पत्नी मुकुल मयी, छोरा उदय थुरन किरण, यति प्रमुख भएको ..... गोष्ठी समुच्चयले आफ्ना देवतालाई प्रसन्न पार्ने इच्छाले देवताको देवलको जीर्णोद्धार गरी .... चढाई गजुर चढाई सम्पूर्ण पारी तयार पारियो । मखनबहालका जख्वसिंहजु गुरुभाजुद्वारा यज्ञ गराइयो ।

त्यस पुण्यले जजमानको आयु आरोग्य ऐश्वर्य जनधन लक्ष्मी सन्तानको वृद्धि होस् । शुभ मंगल होस् ।

**व्याख्या**

ने.सं. ७२३ (वि.सं. १६५९) मार्गमा चोभारका जलविनायकको देवलको जीर्णोद्धार गरी सुनको गजुर चढाई, ध्वजारोहण गरी यो अभिलेख कुँदाइएको हो । यहाँ मानिगलका अधिपतिका रूपमा राजाधिराज परमेश्वर परमभट्टारक श्रीश्रीजयशिवसिंहदेव र श्रीश्रीहरिहरसिंहदेवको उल्लेख परेको छ । हरिहरसिंहदेव शिवसिंहका छोरा हुन् । मल्ल राजाहरू बाबुछोराको संयुक्त शासन चलाउने पद्धति साधारण रूपमा प्रचलित रहेको पाइन्छ तर ललितपुरमा शिवसिंह र हरहरिसिंह, यी दुइ बाबुछोराको संयुक्त शासन चल्नमा केही विशिष्टिता रहेको देखापर्छ ।

ने.सं. ७१७ सम्म त ललितपुरमा पुरन्दरसिंहकै शासन चलेको थियो भन्ने कुरा 'सप्तशती' नामक एक हस्तलिखित ग्रन्थबाट थाहा पाइन्छ । स्वयम्भुको शिवसिंहको पालाको अभिलेखबाट त्यस कुराको पुष्टि हुन्छ । स्वयम्भूको वि.सं. १६६१ को अभिलेखमा 'ने.सं. ७१५ मा राजा शिवसिंहले स्वयम्भूको स्तूपको प्रतिष्ठा गरेको पुण्यको फलस्वरूप शिवसिंहले ललितपुर विजय गर्न सकेका हुन् भन्ने कुरा 'तस्य प्रसादवलितः शिवसिंहराजा राज्यें जयी ललितपत्तन नामधेये' भनी कुँदाइएको छ । यसबाट ने.सं. ७१५ पछि मात्र शिवसिंहले ललितपुर विजय गरेका हुन् भन्ने संकेत पाइन्छ । शिवसिंहले ललितपुर विजय गरेको निश्चित मिति अझै प्राप्त हुन सकेको छैन । ने.सं. ७१५ पछि नै शविसिंहले आफ्नो राज्यविस्तार गर्ने अभियान शुरु गरेको देखापरेको छ । एक ठ्यासफूमा ने.सं. ७१५ मा शिवसिंहले दोलखाभेक, लिस्ति केरुङतिर अधिकार फैलाएको र सिंधुली कब्जा गरेको चर्चा यसरी गरिएको पाइन्छ ।

"सम्वत् ७१५ वैशाष शुक्ल अष्टमी ... थ्ववेरस राजा श्री रजयसिवसिंह राज्य याङा दोखात्वं क्वनेन, यहास्यं लिसति किरोत्वं योहास्यं गण्डपारन जुरो, पिहास्य चोव, मुकानपुर शिंधरित्वं गज्य याक जुरो ।"

यसबाट ने.सं. ७१५ तिर शिवसिंहले राज्यविस्तार गर्न थालेको संकेत पाइन्छ । तर यहाँ ललितपुर जितेको चर्चा परेको छैन । यसबाट पनि ने.सं. ७१५ सम्म शिवसिंहले ललितपुर जिनिनसकेको कुरा स्पष्ट हुन्छ । अहिलेसम्म सामग्री अनुसार ने.सं. ७१९ को एक ताडपत्रमा शिवसिहलाई *मानिगलधिपति* भनिएको छ । त्यस ताडपत्रमा शिवसिंहको मात्र उल्लेख परेको छ । उनका छोरा हरिहरसिंहको उल्लेख त्यस ताडपत्रमा परेको छैन । यसबाट शुरुमा शिवसिंह एक्लैले ललितपुरमा पनि शासन चलाए, अलि पछि त्यहाँ आफ्नो प्रभुत्व राम्ररी जमेपछि छोरा हरिहरसिंहलाई ललितपुरको शासक नियुक्त गरी आफू चाहिँ (शिवसिंह) कान्तिपुरको गद्दीमा वसी शासन गरे भन्ने कुरा तात्कालिक अभिलेखबाट थाहा पाइन्छ । एउटा कुरा कान्तिपुरका अभिलेखमा शिवसिंहको मात्र उल्लेख पाइन्छ । छोरा हरिहरसिंहको उल्लेख कान्तिपुरका अभिलेखमा संयुक्त शासकका रूपमा आएको छैन । पाटनका यस ताकाका अभिलेखमा भने शिवसिंहका साथै हरिहरसिंहको पनि उल्लेख पाइन्छ । यसबाट ललितपुरको शासनको भार शिवसिंहले हरिहरसिंहलाई सुम्पेको कुराको पुष्टि हुन्छ ।

★★★

## (२२)

# पाटन ख्वाबहिल ठूलो चिबहालको भित्र भुइँमा गाडिएको अभिलेख

## मूलपाठ

१. ॐ नमो बुद्धायः ॐ नमो धर्म्माय । ॐ नमो सः
२. घाय ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७३४ ज्येष्ठशुक्ल ॥ द्वा-
३. दशी प्र त्रयोदस्यायां ॥ विसाख प्र अनुराढनक्षत्रे
४. साध्य जोगे ॥ बृहस्पतिवासरे ॥ थ्व कुन्हु कामूक
५. - मनमहाविहालिः डुलितनाग राजास्थेः
६. द्वारस्थापितः जरमासन, पंचवुधत्रय चैत्र छा-
७. या थापन कृताः स यव विहालि भिक्षु श्रीजितदेव-
८. जुत्वं थरकालि, शाक्यवंश श्रीविजयदेवजुत्वं
९. कमि ॥ त्वारस चितांप्रमानः वला चलपुनी था-
१० मछेः अमार्त्ते लुंगुडो, भारोस भार्ज्या जयमयिनो

११. सहानुमतेण त्रयचैच जीर्णेधारः अको-
१२. रात्रजज्ञे याचकाः गुरुमलाल, वोयावास-
१३. र व-छे वजाचार्ज्य श्रीजित्रदेवजुत्वं पा-
१४. ... ... वोधिजुत्वं जुरो ॥ मानीग्ला-
१५. धिपति ... ... शिवसिंहदेव प्रभु थाकु
१६. ... ... स जुरो ॥
१७. ... ... ... निस्प्रपञ्चगु (णाश्रयः) .
१८. ... ... ... तस्मै स्तूपत्मने
१९. क .... .... ..... वृधिरस्तु शुभं

## अनुवाद

बुद्धलाई नमस्कार । धर्मलाई नमस्कार । संघलाई नमस्कार । कल्याण होस् । ने.सं. ७३४ (वि.सं. १६७१) ज्येष्ठ शुक्ल द्वादशी उप्रान्त त्रयोदशी बृहस्पतिवार विशाखा उप्रान्त अनुराधानक्षत्र, साध्ययोग, यसदिन .......... महाविहारीमा ... नागराजा, द्वारमा स्थापना गरिएका ... पंच वुद्धसहित तीन चैत्य बनाई स्थापना गरिए । सोही विहारीका भिक्षु श्री जितदेव थकाली श्रीविजयदेव शाक्यवंश कर्मी, टोलका चिताई गर्ने प्रमान वला चलखुनी थामछेंका अमात्य लुंगुडो भारोले, पत्नी जयमयिको समेत सल्लाहले तीन चैत्यका जीर्णोद्धार अहोरात्र यज्ञ गराई गुरुभाजु बोयावाहार-छेंका वज्राचार्य श्रीजित्रदेव जुनेद्वारा गराइएको थियो । .........

मानीग्लकाअधिपति .... शिवसिंहदेव प्रभु ठाकुरको विजयराज्यमा उक्त काम गरिएको हो ।

... प्रपञ्चरहित गुणी ... स्तूपरूप ती वुद्ध भगवानलाई नमस्कार । ......... को वृद्धि होस् । शुभ होस् ।

**व्याख्या**

ने.सं. ७३४ (वि.सं. १६७१) ज्येष्ठमा तीन चैत्य बनाई यो अभिलेख राख्न लाएको हो । चैत्य बनाउने काममा विहारीका थकाली बाहेक उक्त टोलका प्रमान आदिले पनि सहयोग गरेको कुरा यसमा परेको छ । यसरी यसवेला सम्म नयाँनयाँ वौद्ध चैत्य बनाउने परम्परा चलि नै रहेको थियो भन्ने कुरा यतावाट थाहा पाइन्छ ।

यस अभिलेखमा ललितपुरका राजा (मानिग्लाधिपति) का रूपमा शिवसिंहको उल्लेख परेको छ । यहाँ हरिहरसिंहको उल्लेख परेको छैन । यसपछिका ललितपुरका अरू अभिलेखमा पनि हरिहरसिंहको उल्लेख पाइँदैन । शिवसिंहको मात्र उल्लेख पाइन्छ । यसबाट हरिहरसिंह संयुक्त शासनबाट हटेको तथा शिवसिंहले ललितपुरमा पनि स्वयं शासन गरेको देखापर्छ । यसबीच हरिहरसिंह संयुक्त शासनवाट हटेको तथा शिवसिंहले ललितपुरमा पनि स्वयं शासन गरेको देखापर्छ । यसबीच हरिहरसिंहको मृत्यु भएको बुझिन्छ । यद्यपि यस विषयको स्पष्ट उल्लेख भने पाइएको छैन ।





(२३)

# पाटन कपिदोटोल कालभैरव मन्दिरको शिलालेख

## मूलपाठ

१. श्रेयोस्तु ॥ संवत ७३५ वैशाखमासे शुक्लपक्ष ॥ एकादशी पर द्वाद-
२. श्यान्तिथौ ॥ उत्तरफाल्गुणी पर हस्तानक्षेत्रे ॥ हर्षन पर वजयोगे
३. जथाकरण मुहूर्त्ते ॥ वुधवासरे ॥ मेषरासिगते शवितरि ॥ कन्यारा-
४. सिगते चन्द्रमासे ॥ थ्व कुन्हु थंव समोहंजुया ओखपिछे राछि लविकन रा-
५. यवं-याया प्रतिष्ठा याङा दिन जुरो ॥ थ्व रायव ग्वह्मसेन सेनकर ओ-
६. ह्मसयात न्वकुतिङासा च्यापिं पुसा पञ्चमाहापातक राक जुरो ॥ थ्व
७. ग्वोह्मसेन विचव यात ओह्मसयात उत्तम धर्म्म राक जुरा ॥ शुभमस्तु
८. ...... काराया गुरु ॥ ङ्याविसंख प्रजावति ॥ शुर-
९. काछा प्रजापति ॥ चपा अद्यचीकजि भावो ....
१०. चकसिंह चीता याक प्रजापति ॥ शैहर यार .... सिं भावो
११. चिषिढ गु ॥ रतनसिं भावो । विखसिं भावो ॥
१२. मछिन्द्र प्रजापति, पुनसि भावो ॥ क्वछय प्रजापति ॥ धन-
१३. सुध भावो ॥ जुनर भावो ॥ लछमिसंख प्रजापति ॥
१४. त्यापगालतं भावो ॥ भागीदोंत भावो ॥ धसख प्रजाप-
१५. ति ॥ सुध भावो ॥ चनसि भावो ॥ धजु धंगु ॥ सिधु सिध
१६. गु ॥ भाअसि भावोः तधि प्रजापति ॥ सिवनस - -
१७. भावो ॥ विसमासि भावो । विखत सिं भरी ।
१८. तग्नि भावो ॥ ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ७३५ (वि.सं. १६७२) वैशाख शुक्ल एकादशी उप्रान्त द्वादशी वुधवार उत्तरफाल्गुनी उप्रान्त हस्तनक्षत्र, हर्षण उप्रान्त वज्रयोग, पर्नुपर्ने मुहुर्त करण परेको वेलामा, मेषराशिमा सूर्य, कन्याराशिमा चन्द्रमा रहेमा, यस दिन यो समूहले प्रत्येक ... लाछि लविमा रायवं (?) बनाई प्रतिष्ठा गरियो । यो रायवं जसले बिगार्ला, .... च्यापिले बढार्ला, त्यसलाई पञ्चमहापाप लागोस् । शुभ होस् ।

..... गुरु ङ्याविशंस प्रजापति, शुरकांछा प्रजापति, चखाअद्य कजी भावो चकंसि चिताइ गर्ने प्रजापति । ... ... भावो चिखिढगु । रत्नसिं भावो, विखतसिं भावो, मछिन्द्र प्रजापति, पुनसिं भावो, क्वछय प्रजापति, धनसुध भावो, जुनर भावो, लक्ष्मीशङ्ख प्रजापति, त्यापगालतं भावो,

भागीदोंन भावो धसख प्रजापति, सुध भावो, चेजसिं भावो, धजु धंगु, सिधु सिधगु भार्आस भावो र्नाध प्रजापति शिव भावो, विसमासिं भावो, विखर्नासिं भरी, तगिन भावो ॥

★★★

(२४)

## पाटन सुनागुठी भृङ्गारेश्वर महादेव मन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ नमः शिवाय ॥ ब्रह्मादयः सुरगणाः श्रीमङ्ग्रमररुपिणः । भृंगेश्वरस्य देवस्य
२. श्रीमत्पादसरोरुहं ॥ भजन्ते भोगमोक्षार्थ मुनिसिद्धगणादयः । तत्पादकमलं नित्यं हृ-
३. दिस्थं भावयाम्यहं ॥ साक्षिणं सर्व्वभूतानां ब्रह्म विष्णवादिसेवितं । सर्व्वेश्वर विधातारं भृंगे-
४. स्वरमहं भजे ॥ अपयर्यकोदवनाम्नः पुण्यक्षेत्राच्छियः पतेः । कावेरीतीरनिलयात्तू
५. दीशः कुलदैवतः ॥ तत्रोत्पन्नो महाविद्वान् श्रीमान् द्विजवरेश्वरः । यज्ञनारा-यणः शर्म्मा-
६. नेपालं प्राप्तवान् स्वयं ॥ स एव शिवसिंहस्य श्रीभद्राज्ञो गुरुंगतः भृंगे-श्वराय सद्भक्त्या त्रिशूलं
७. दत्तवानिदं ॥ नैवेद्यार्थ च सत् क्षेत्रं, पुष्पार्थ पुष्पवाटिका ॥ कार्त्तिक्यां हेमशूलस्य रोहणार्थ च-
८. कृता ॥ कात्तिक्यां दीपदानार्थ दत्तं क्षेत्रञ्चभक्तितः । गणे (श) स्य. कुमारस्य महेशस्यापि साद-
९. रं ॥ यात्रार्थ भूमिका दत्ता ध्वजारोहणपूर्व्वकं । एततसर्व्व समालोक्य उत्सवं कारयेन्मु.
१०. दा ॥ ॥ कावेरीसरिताम्वरांकितमहद्रालाख्य देशश्रितो, वेदाद्युत्तमशास्त्रसा-रनिपु-
११. णः पुण्यास्पदोऽनाल्पदः । तस्मोदत्य नितान्तमंगलमये श्री कन्तिसंज्ञेपुरे .... श्रीशि-
१२. वसिंहभूपतिगुरुर्व्विप्रः स नारायणः ॥ तत्पुत्र श्रीमहादेवो महादेवार्पित क्रियः ।



१३. धर्म्म वितनुते सोपि पितेव परमार्थवित् ॥ नेपालाब्दे वेदवन्हि लोकेभाद्रसि-
१४. ते तथा । तिथौ दशम्यां नक्षत्रे ह्युन्तराषाढसंज्ञके । योगेथ ज्ञोभने सौरिवासरे
१५. दत्तवानिदं । त्रिशूल शंभवे भक्त्या श्रीमन्नारायणो द्विजः ॥ शररामतुरंगस्थे ने-
१६. पालाब्येथ वत्सरे । चैत्राकातिथौ चित्रानक्षत्रे शुद्धियोगके । सोमवारे
१७. महादेव, कुमारगणनायकान् । भृंगेश्वरन्तिके ह्येतान् स्थापयामास
१८. स द्विजः ॥ दिव प्रयाते जनके पुत्रेणाथ सुधीमता । साक्षरेयं शिला द-
१९. ता महादेवेन भक्तितः ॥ ॥ यत्पादाम्वुजमद्भुतं सुवेरै संसेवितं
२०. सर्व्वदा, संसाराण्णवघोरभीतिहरणं संपत्पद सत्पदं । सान्द्रानन्दवि-
२१. धायकं परतरं, त्रैलोक्यसारं शिवं, भृंगेशं शरणप्रदं पुररिपुं नि-
२२. त्यं तमाद्यं भजे ॥ ॥ कर्पूरगौरं करुणावतारं संसारसारं भुजगेन्द्र-
२३. हारं सदा रमन्तं हृदयारविन्दे, भवं भवानीसहितं नमामि ॥ शुभं ॥

### अनुवाद

महादेवलाई नमस्कार । भ्रमरारूपी श्रीभृङ्गारेश्वर महादेवको चरणकमललाई ब्रह्मा आदि देवताहरू पनि भज्दछन्, मुनि सिद्धगणहरू पनि भोग र मोक्षको लागि भज्दछन् । तिनको चरणकमललाई सधैँ हृदयमा राखी म ध्यान गर्दछु ।

ब्रह्मा विष्णु आदि देवताहरूले सेवा गरिएका सारा प्राणीहरूको साक्षीजस्ता भएको, सर्वेश्वर प्रभु भृङ्गारेश्वरलाई म भज्दछु ।

कावेरीको तीरमा रहेको अपयर्पकोदव नाउँ भएको वैष्णव पुण्यक्षेत्रबाट तडीशकुलदेवता भएका, त्यहाँ जन्मेका, ठूला विद्वान् असल ब्राह्मण भट्ट नारायण शर्मा आफै नेपाल आइपुगे । उनी श्रीमान् राजा शिवसिंहका गुरु बन्न पुगे । अनि उनले भृङ्गारेश्वरलाई शुद्ध भक्तिले त्रिशूल चढाए । नैवैद्य चढाउनाको लागि असल खेत र फूलको लागि फूलबारी चढाए । कार्तिकमा सुनको त्रिशूल चढाउनाको लागि पनि .... प्रबन्ध गरियो । कार्तिकमा बत्ती दिन पनि भक्तिपूर्वक खेत चढाए । गणेश, कुमार र महादेवको ध्वजारोहण गरी यात्रा गर्नाको लागि खेत गुठी राखियो । यो सबैको हेरविचार गरी सहर्ष उत्सव गर्नू ।

कावेरी नदीको तीरमा रहेको महावाला भन्ने ठाउँमा बस्ने, वेद आदि उत्तम शास्त्रहरूमा सिपालु, धर्मात्मा, दानी ब्राह्मण ती नारायण त्यहाँबाट अत्यन्त मंगलमय कान्तिपुरमा आई श्रीशिवसिंह राजाका गुरु बने, अनि यहीँ बसे ।

उनका छोरा महादेवमा क्रिया अर्पण गरेका श्रीमहादेव भए । परमार्थ जान्ने उनी पनि बाबुजस्तै धर्म गर्दैछन् ।

ने.सं. ७३४ (वि.सं. १६७१) भाद्र शुक्ल दशमी उत्तराषाढानक्षत्र शोभन योग शनिवारको दिन ब्राह्मण श्रीनारायणले महादेवलाई भक्तिपूर्वक यो त्रिशूल चढाए ।

ने.सं. ७३५ ( वि.सं. १६७२) चैत्र शुक्ल पूर्णिमा सोमवार चित्रानक्षत्र शुद्धि योगमती ब्राह्मण महादेवले भृङ्गारेश्वरको नजिकै यी कुमारगणेशलाई स्थापना गर्नुभयो ।

पिताजीको स्वर्गवास भएपछि बुद्धिमान् छोरा महादेवले भक्तिपूर्वक यो शिलालेख कुँदाएका हुन् ।

जसको अद्भुत चरणकमल ठूल्ठूला देवताहरूले सधैं सेवा गरिएको छ। संसाररूपी सागरको ठूलो भय हर्ने, सम्पत्तिको स्थान भएका, सत्पद भएका गहिरो आनन्द दिने, ठूला तीनै लोकका सार भएका, शरण दिने ती पुरारि आध परमेश्वर भृङ्गारेश्वरको आराधना गर्दछु।

कपूरजस्तै गोरा, दयाका अवतार भएका, संसारका सार भएका, नागराज नै हार भएका, सधैं हृदयकमलमा रमाएर रहेका, पार्वतीसहित महादेवलाई नमस्कार गर्दछु। शुभ होस्।

**व्याख्या**

दक्षिण भारतका नारायण शर्मा नेपालमा आई शिवसिंहका गुरु भन्न पुगी यहीँ बसोबास गरेको चाखलाग्दो वर्णन यस अभिलेखमा परेको छ। नेपालको प्रख्याति दक्षिण भारतमा निकै अगाडि नै फैलिएको थियो तापनि नेपालको बढी सम्बन्ध उत्तर भारतसँगै बढी रह्यो, तर मध्यकालमा उत्तरभारतमा मुसलमानी राज्य कायम भएपछि हिन्दूधर्मको संरक्षण, संवर्द्धन गर्ने काम दक्षिण भारतले गर्न थालेपछि नेपालको दक्षिण भारतसँग पनि सम्बन्ध रहन लाग्यो। दक्षिण भारतका विद्वान्हरूको सन्मान यहाँ हुन थाल्यो। पछि त पशुपतिनाथका मूल पुजारी नै दक्षिणका विद्वान् भट्टब्राह्मणलाई बनाउने प्रथा हाम्रो यहाँ चल्यो। यो प्रकिया निकै अगाडि सुरु भइसकेको थियो। यसै हुँदा दक्षिणभारत कावेरीतिरका विद्वान् ब्राह्मण नारायण शर्मा शिवसिंहका गुरु बन्न पुगेथे।

नारायण शर्माको विद्धत्ताबाट प्रभावित भएर मात्र शिवसिंहले उनलाई आफ्ना गुरु बनाएका होइनन्, ललितपुरमा शिवसिंहको प्रभुत्व कायम गराउनामा समेत ती विद्वान्ले महत्त्वपूर्ण भूमिका खेलेको बुझिन्छ। नारायण शर्माको सन्तानको एक अभिलेखमा यस कुराको चर्चा परेको छ। त्यस अभिलेखमा नारायण शर्माको वर्णन यसरी गरिएको छ–

**"येन श्रीशिवसिंह नाम नृपते न्नेपाल देशाखिला-**
**धीशत्वं परिकल्प्य भूतिरतुला स्वस्यापि संपादिता"**

यसबाट नारायण भट्टले ललितपुर जित्न शिवसिंहलाई मद्दत गरेको आभास पाइन्छ। नारायणभट्ट पहिले शायद विष्णुसिंहको आश्रयमा रहेको अनुमान हुन्छ। पछि शिवसिंहसँग मिल्न गएको हुन सक्छ। विष्णुसिंहले जीर्णोद्धार गरेपछि मात्र फेरि प्रसिद्धिमा आएको भृङ्गारेश्वर महादेव स्थानमा नारायण भट्टले त्रिशूल चढाएको हुनाले उक्त कुराको अनुमान गर्ने आधार पाइन्छ।

यो अभिलेख नारायण शर्माका छोरा महादेवले कुँद्न लाएका हुन्। महादेवले पनि भृङ्गारेश्वर स्थानमा कुमार र गणेशको मूर्ति स्थापना गरेका थिए। साथै, पूजाआजाको पनि बन्दोबस्त मिलाएका थिए। यो अभिलेख कुँदाउँदा अर्थात् ने.सं. ७३५ मा नारायण शर्माको मृत्यु भइसकेको थियो। यसो हुँदा उनका छोरा महादेवले बाबुको कृतिको समेत उल्लेख गरी यो अभिलेख कुँदन लाएका हुन्। ने.सं. ७३४ मा त्रिशूल चढाउँदा भने नारायण शर्मा जीवित थिए।

यस अभिलेखको रचना शायद महादेवले आफैँले गरेको हुनुपर्छ। लेखनशैली केही प्रौढ नै छ। मल्लकालमा यति शुद्ध संस्कृतमा लेखिएका अभिलेख पनि कम पाइन्छ। यसकारण रचनाको दृष्टिले पनि यस अभिलेखको केही महत्त्व रहेको छ।

★★★



(२५)

# पाटन यंपिस्थुर चैत्यको शिलालेख

## मूलपाठ

१. स्वस्ति ॥ नैपारिकाब्दे शरन्हि नाके मासे
२. शिते ज्येष्ठक दानवर्क्षे। तिथौ फणेरे-
३. इनदुवारे चकार संस्थापन कृ-
४. ष्णरामः ॥ जीर्णद्वारण कृतं नृपं, य-
५. ज्ञपूजाव्रतादिभिः। श्रीमता शिवसिं-
६. हेन पारिते पट्टणे शुभे ॥ श्रेयोस्तु
७. सम्वत ७३५ ज्येष्ठमासे कृष्णपक्षे चतु-
८. र्थिः ५ पंचम्यां तिथौ, श्रवणघटि ५ धने-
९. ष्ट नक्षेत्रे वैधृतिघति ७ विस्कम्भयोगे ॥
१०. यथाकर्ण मूहुर्त्रे सोमवासरे ॥ मैथु-
११. नराशिगते सवितरि मकराशि ग-
१२. ते चन्द्रमासे ॥ थ्व कुन्हु कोनिम्हघर-
१३. रवाछे कृष्णराम भारोसन, श्रीयंपि-
१४. नूप समीपे चैत्र भराड जीर्णोद्धार-
१५. ण याङन प्रतिस्था याङा दिन जुरो
१६. श्रीमानीग्लाधिपति श्रीश्रीजयशि-
१७. वसिंहवेस्य तद्विजयराज्य ॥
१८. नमस्ते सर्व्वतूपानां जिनधातुकमन्त-
१९. क। सर्व्ववुद्धारयं चैत्य धर्मधातुन्नमो
२०. स्तुते ..... ... ... ....

## अनुवाद

कल्याण होस्। ने.सं. ७३५ (वि.सं. १६७२) ज्येष्ठकृष्ण पंचमी सोमवार ....को दिन कृष्ण रामले स्तूपको जीर्णोद्धार गरी यज्ञ पूजा व्रत आदि गरी प्रतिष्ठा गरे।

त्यस बेला असल ललितपुरमा श्रीमान् शिवसिंहको विजयराज्य थियो।

कल्याण होस्। ने.सं. ७३५ (वि.सं. १६७२) ज्येष्ठ कृष्ण चतुर्थी ५ घडी उप्रान्त पंचमी तिथि, श्रवण ५ घडी उप्रान्त घनिष्ठानक्षत्र, वैधृति ७ घडी उप्रान्त विष्कम्भयोग, सोमवार, पर्नुपर्ने करण

मुहूर्त परेको बेलामा, मिथुन राशिमा सूर्य, मकर राशिमा चन्द्रमा रहेमा, यस दिन कोनिह्म घरखाछेंका कृष्णराम भारोले श्रीयंपिस्तूपको नजिकै चैत्यभट्टारकको जीर्णोद्धार गरी प्रतिष्ठा गरे ।

श्री मानिगलका अधिपति श्रीश्रीजयशिवसिंहदेवका विजयराज्यमा ।

सबै स्तूपलाई नमस्कार । जिनधातु .... सबै बुद्धका निवास भएको चैत्य धर्मधातुलाई नमस्कार ।

★★★

(२६)

## सुनागुठी भृङ्गारेश्वरको अभिलेख

### मूलपाठ

१. ॐ नमः शिवाय ॥ नित्यानन्दवपुन्निरन्तरगलत्पञ्चा-
२. शदर्ण्णैः कमाद् व्याप्तं येन चराचरात्मकमिदं शव्दार्थ-
३. रूपं जगत् ॥ शव्दब्रह्म यदूचिरे सुकृतिनश्चैतन्यमन्तर्ग्ग-
४. तं तशेव्यादनिशं शशाङ्कसदनं वाचामधीशं महः ॥
५. अतःपरं देशभाषया कथ्यते ॥ श्रेयोऽस्तु ॥ सम्वत्
६. ७३९ माघेमासि कृष्णपक्षे पन्चम्यां तिथौ हस्तन-
७. क्षेत्रे धृतियोगे आदित्यवासरे कुम्भराशिगते स-
८. वितरि कन्याराशिगते चन्द्रमसि ॥ एतस्मित् दिवसे
९. श्रीयेथवाहार आगमननि योकुलिछेंगृहनिवा-
१०. सिणी कृष्णदेव ब्राह्मण थवतं पुण्यार्थहेतुन परमे-
११. स्वरप्रीत्यर्थ श्रीश्रीश्रीभृंगेश्वर सदाशिवस्के स्व-
१२. र्ण्णनिम्मित छत्र दयकं प्रतिष्ठा याङन श्रीश्रीसिद्धि-
१३. नरसिंहमल्ल प्रभु थाकुलसनं एकछत्रन राज्य या-
१४. ले लुं छत्र दुंताजुलो ॥ शुभमस्तु सर्व्वदा ॥ ० ॥

### अनुवाद

महादेवलाई नमस्कार । सधैं आनन्दस्वरूप शरीर भएका, जसले हरबखत झरिरहेको पचास .... ले शब्दार्थस्वरूप चर अचर सारा संसारलाई ढाकेको छ, विद्वान्हरूले जसलाई शब्दब्रह्म भन्दथे, चैतन्यस्वरूप .... चन्द्रमाङ्कित त्यो वागीश तेजको सधैं सेवा गर्दछु ।



यसपछि देशभाषाले भनिन्छ । कल्याण होस् । ने.सं. ७३९ (वि.सं. १६७५) माघ कृष्ण पंचमी हस्तनक्षत्र धृतियोग आदित्यवारमा, कुम्भराशिमा सूर्य कन्याराशिमा चन्द्रमा भएमा, यस दिन श्रीयेथबहाल आगमननि योकुलिछें भन्ने घरमा बस्ने कृष्णदेव ब्राह्मणले आफूलाई पुण्य होस् भनी परमेश्वरलाई प्रसन्न पार्न श्रीश्रीश्रीभृङ्गारेश्वर सदाशिवलाई सुनको छत्र बनाई प्रतिष्ठा गरियो ।

श्रीश्रीसिद्धिनरसिंहमल्ल प्रभु ठाकुरले एकच्छत्र राज्य गरिरहनु भएको बेलामा सुनको छत्र चढाइएको हो । सधैं शुभ होस् ।

**व्याख्या**

ललितपुरका एक जना ब्राह्मणले भृङ्गारेश्वर महादेवलाई सुनको छाता चढाई यो अभिलेख कुँद्न लाएका हुन् । विष्णुसिंहको पालामा यी के नामका महादेव हुन् भन्ने कुरा पनि जनताले बिर्सिसकेका थिए । विष्णुसिंहले यी भृङ्गारेश्वर महादेव हुन् भन्ने पत्ता लाई भव्य मन्दिर बनाइदिएपछि भृङ्गारेश्वर महादेवको महिमा फेरि बढ्न लागेको संकेत भृङ्गारेश्वर स्थानमा रहेका यो र अरू अभिलेखले गर्छन् ।

यस अभिलेखमा *श्रीश्रीसिद्धिसिंह मल्ल प्रभु थाकुलसनं एकछत्र राज्य याले लुंछत्र दुता* भन्ने उल्लेख परेको छ । यसपछिका अरू अभिलेखमा पनि ललितपुरका राजाका रुपमा सिद्धिनरसिंहमल्लको उल्लेख आएको छ । यसबाट यस बेला सिद्धिनरसिंह पाटनका राजा बनिसकेको स्पष्ट छ । सिद्धिनरसिंह शिवसिंहका नाति हुन् । यस बेलासम्म शिवसिंह जीवित नै थिए । शिवसिंहका अर्का नाति अर्थात् सिद्धिनरसिंहका दाजु लक्ष्मीनरसिंह यस बेला बाजेका साथ कान्तिपुरमा थिए । भाइ सिद्धिनरसिंह चाहिँ ललितपुरका स्वतन्त्र राजा हुन पुगे भन्ने यताबाट थाहा पाइन्छ ।

सिद्धिनरसिंह यसबेला बाह्र वर्षका मात्र थिए । उनको जन्म वि.सं. १६६३ मा भएको थियो । यो कुरा उनको टिप्पनबाट थाहा पाइन्छ । त्यसमा 'सं ७२६ आषाढकृष्ण अ.प्र. नवमी... श्री २ हरिहरसिंह वर्म्मणस विवाहिनी भार्य्यायां श्रीश्रीसिद्धिनरसिंह मल्लदेव जातः' भनी लेखिएको छ । यसकारण ललितपुरमा आफ्नो स्वतन्त्र राज्य कायम गर्ने काममा सिद्धिनरसिंहमल्लले आमा लालमतीबाट सहायता पाएको अनुमान हुन्छ ।

★★★

(२७)

## पाटन यलमुटोलको सिद्धिनरसिंहमल्लको पालाको अभिलेख

### मूलपाठ

१. ॐ नमः बुधाय ॥ बुधं त्रैलोकनाथं सुरवनमितं पारसंसारधीरं धीरंगं
२. भिर्जिवन्तं सकलगुणनिधिं धर्म्मराजामि (षिक्तं) तृष्णामोहोन्धकालं कलि
३. कुलकहलो कामरोभाजिवन्तं तम्वन्दे (शाक्यसिंह प्रणमित) शिलसा सर्व्वकारं

४. नमामी । ह्विकालसंभोनाथं करुणासनि (ग्धमानंसं अमोघपाश) नामानं
५. लोकनाथं नमामि वलधकमरविशालाक्षं (त्रैलोक्या) धिपति प्रभु रक्त-
६. वर्णमाहासान्तें श्रीलोकनाथं नमामिंह ॥ ० ॥ अद्य श्वेतवाराह (क) ल्पे
७. वैवसुतमन्वतरे, कलियुगे भर्ट्टखण्डे जाम्बूदीपो हेमवत्पादे वासुकीक्षत्रे
८. पशुपतिसन्निधान्य, वाग्वत्या दक्षिणकुलै श्रीमत्ललीतपत्तने आयर्यावर्त्त-
९. देशे पुण्यभूमौ एवस्थाने ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७३९ वैशाख कृष्ण ॥ एकादशी
१०. प्र द्वादश्यान्तिथौ । उत्रभाद्रनक्षेत्र ॥ विस्कंभ प्र प्रितियोगे ॥ शुक्रवासरे ।
११. वृषराशिगते सवितरि मीनराशिगते चन्द्रमशी ॥ तत्दिने । श्रीमल्ल
१२. लीतापूरिनगरे मानिग्लके पूर्व्वस्थ, श्रीयम्वलमगुडि, तवननिस्यि-
१३. त श्रीमत्श्रीश्रीचैत्रभराउ जिण्णोधालन प्रतिष्ठा याडा दिन जुरो ॥ श्रीश्री-
१४. जयसिद्धिनरसिंहमलदेव प्रभु थाकुलस्य विजयराज्ये । गुरुभाडा-
१५. ड श्रीविष्णुछें वाहाल श्रीदेवसिंहजुसे, श्रीगुणदेवजु, छेकभ्फेत, कृष्णरा-
१६. ज भारोस, नाथसिंह भारोस, श्रीतक्षकाल विषम भारोस चकर भारो-
१७. स भरि भारोस, चन्द्रसिंह भारोस, रामदेव भारोस, हलिराम भारोस ....
१८. भारोस, विजया भारोस वितुसिंह भारोस, धर्म्मसिंह भावोत । थ्वते सड ...
१९. सेन प्रतिस्था अहोरात्र ज्या याडा जुरो ॥ तस्य सास्त्रोक्तफलसंप्राप्तो भ
२०. वति ॥ थ्वतेया पुन्यफलन पुत्राम भवन्ति लक्ष्मीराभो भवन्ति ॥ शुभमस्तु सर्व्वदा शुभं ।

### अनुवाद

बुद्धलाई नमस्कार । तीनै लोकका मालिक, ठूल्ठूला देवताले ढोगिएका, संसारबाट पार गराउने, धैर्यशाली .... सारागुणको खानी भएका, धर्मराजाको अभिषेक पाएका, तृष्णा मोहअन्धकार कलिकलह काम लोभलाई जित्ने शाक्यसिंहलाई सधैं शिर भिकाइकन ढोंग्दछु ।

.... करुणाले मन भिजेका, अमोघपाश नाम भएका लोकनाथलाई नमस्कार गर्दछु ।

वर दिने कमलजस्तो ठूला आँखा भएका, तीनै लोकका अधिपति, रक्त वर्ण भएका, ज्यादा शान्त भएका श्रीलोकनाथलाई (राता मच्छिन्द्रनाथलाई) नमस्कार गर्दछु ।

आज श्वेतवराहकल्प, वैवस्वत मन्वन्तर, कलियुगमा, आर्यावर्त भरतखण्ड जम्बूद्वीपमा, हिमालको फेदीमा वासुकीक्षेत्रमा पशुपतीको नजिकै वाग्वतीको दक्षिण किनारमा श्रीललितपत्तन पुण्यभूमिमा,

कल्याण होस् । ने.सं. ७३९ (वि.सं. १६७६) वैशाखकृष्ण एकादशी उपान्त द्वादशी शुक्रवार उत्तर भाद्रनक्षत्र विष्कुम्भ उप्रान्त प्रतियोगमा, वृष्यराशिमा सूर्य मीनराशिमा चन्द्रमा रहेको बेलामा, त्यसदिन श्रीललितपुर शहरमा, मानिगलको पूर्वतिर रहेको श्रीयम्वलमगुडि तवननीमा रहेका श्रीश्रीश्रीचैत्यभट्टारकको जीर्णोद्वार गरीकन प्रतिष्ठा गरियो । श्रीश्रीजयसिद्धिनरसिंहमल्लदेव प्रभु ठाकुरको विजयराज्यमा । गुरुभाजु श्रीविष्णुछें वहालका श्रीदेवसिंहजु, श्रीगुणदेवजु, छेकभ्फेत



कृष्णराज भारो नाथसिंह भारो श्रीतक्षकार विषम भारो चक भारो भरी भारो चन्द्रसिंह भारो रामदेवभारो हरिराम भारो ... भारो विजय भारो वितुसिंह भारो धर्म्मसिंह भावो । यिनीहरूले अहोरात्र विधि गरीकन प्रतिष्ठा गरे । त्यसको शास्त्रले बताए अनुसार फल प्राप्ति होस् । यस पुण्यको फलले पुत्रलाभ, लक्ष्मी लाभ होस् । सधैं शुभ होस् ।

★★★

(२८)

## पाटन चापागाउँ इखाटोल वाबहिल भित्र चिबहालको सिँढीको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय, नमो धर्म्माय, नमः सं-
२. घाय, श्रीमत् श्रीश्रीश्रीशाक्यमुनये
३. प्रिति ... पारा ... ...
४. - - सागर ......... विष्णुजु .......
५. - - चन्द्र ... ... ... ... ... ...
६. शुक्रयोगे च संज्ञे ..... चन्द्रवासरे
७. प्रतिष्ठा कारय ... ... ... ... ...
८. १६ रे ॥ श्रेयोऽस्तु संवत् ७३९ वैशाख
९. मास्य कृष्णापक्षे सप्तम्यां तिथौ श्रवणनक्षत्रे
१०. शुक्रयोगे सोमवासरे ॥ थ्व कुन्हु श्रीश्रीसि-
११. द्धिनरसिंहमल्ल प्रभुथाकुलस, विजयरा-
१२. ज्य --------------घुस र याङ तं-
१३. या ---------------------श्रीश्रीश्री-
१४. शाक्यमुनि पतिस्था याङा दिन जुरो, सा-
१५. --- श्रीकितसिंदेव भार्या छेकनमा-
१६. जेष्ठ पुत्र वावुदेव, जिदेव, जित्रदेव, ---
१७. .... देव, जयदेव, थ्वते न्हसह्म समूह
१८. सेन दयका जुरो ॥ शुभ ॥

### अनुवाद

बुद्धलाई नमस्कार, धर्मलाई नमस्कार, सङ्घलाई नमस्कार । श्रीश्रीश्रीशाक्य-मुनिलाई प्रसन्न पार्न ................................................ सुकर्मयोग सोमवारको दिन प्रतिष्ठा गरियो ।

कल्याण होस् । ने.सं. ७३९ (वि.सं. १६७६) वैशाख कृष्ण सप्तमी सोमवार श्रवणानक्षत्र सुकर्मायोग, यस दिन श्रीश्रीसिद्धिनरसिंहमल्ल प्रभु ठाकुरको विजय राज्यमा ...... श्रीश्रीश्री शाक्यमुनिको प्रतिष्ठा गरियो ।

... श्रीकिसिदेव, पत्नी छेकनमा – जेठा, छोरा वावुदेव, छोरा जिदेव, जित्रदेव ... जयदेव, यी सात जनाको समूहले बनाइएको हो । शुभ ।

★★★

## (२९)

## पाटन त्यागल टोल कटुजननिको चैत्यको शिलालेख

### मूलपाठ

१. ॐ नमः वुधाय ॥ पैयो्स्तु ॥ सम्वत् ७४१
२. फाल्गुणशुक्ल ॥ तृतियान्तिथौः अश्विव (नी)-
३. नक्षत्रे ॥ व्रह्मयोगे ॥ वृहस्पतिवासरे
४. थ्व कुन्हु यगिरिननि जयकेश प्र (मुख)
५. न रक्षचैत धर्म्म समूहसन श्री ३ ---
६. वाहार चैत्र भराड जिन्नोउधार याङा
७. प्रतिस्था याङा दिन जुरो ॥ शुभ ॥
८. पुनभा (षा) थ्व भु श्रीश्रीराजस फोङा-
९. न दोयका जुरो ॥ श्रीश्रीराज्ञादि-
१०. सर्व्वलोकस्य शुभं कल्यानम-
११. स्तु ॥ शुभ ॥

### अनुवाद

बुद्धलाई नमस्कार । कल्याण होस् । ने.सं. ७४१ (वि.सं. १६७७) फाल्गुन शुक्ल तृतीया अश्विनीनक्षत्र ब्रह्मयोग बृहस्पतिवार यस दिन भगिरीननीका जयकेश प्रमुखले लक्षचैत्य धर्म्म समूहले श्री ३ .... बहालका चैत्य भट्टारकको जीर्णोद्धार गरी प्रतिष्ठा गरियो । शुभ होस् ।



अर्को बेहोरा- जग्गा श्री ३ राजासँग मागेर यो बनाइएको हो । श्रीश्री राजाआदि सबैलोकको शुभ, कल्याण होस् । शुभ होस् ।

व्याख्या
सानो यस अभिलेखले मल्लकालमा राजा र प्रजाको बीचमा रहेको नजिकको सम्बन्धलाई देखाउँछ । आफ्ना-आफ्ना धर्ममा लागेका जनताप्रति राजाको उदार नीति रहन्थ्यो भन्ने कुरा यस अभिलेखले देखाउँछ । यस अभिलेखमा *लाख चैत्य* बनाउने धर्म गर्ने एकवर्गले यो धर्म पूरा गरेको उपलक्ष्यमा एक बहालको पुरानो चैत्यको जीर्णोद्धार गर्ने काम पनि गऱ्यो । यसको लागि जग्गाको आवश्यकता भएछ र सो कुरा राजामा जाहेर गरियो, अनि राजाबाट पनि जग्गा बकस भएछ । यस अभिलेखमा यो कुरा *थ्व भु श्रीश्रीराजस फोङान दोयका* भनी यस अभिलेखमा स्पष्ट रूपमा उल्लेख गरिएको छ । साथै राजा आदि सारा लोकको शुभ, कल्याण होस् भन्ने कामना पनि यस अभिलेखमा गरिएको छ ।

यो कुरा हेर्दा साधारण जस्तो देखिन्छ तापनि मल्लकालमा राजा र प्रजाको सम्बन्ध कति सरल र नजिकको रहेको थियो, मल्ल राजाहरूको विविध धार्मिक सम्प्रदायमा उदार नीति रहेको थियो भन्ने कुरालाई यस सानो उल्लेखले पनि राम्ररी झल्काएको छ ।

★★★

## (३०)

## पाटन लुभुं यगलाछी टोल गणेश मन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ नमः विघ्नेश्वराया । विघ्नेश्वराय विराय विश्वरूपा-
२. य ते नम सर्व्वविघ्नहरं देव सर्व्वशान्तिं नमोस्तु ते
३. ॥ लंह्मुदेश थंथ्वलाछे क्वाथ-श देयके ॥ श्री वु-
४. धजु, कृष्णसिंहजु, धरमसिंहजु, कल्याणजु ना-
५. रायणसिंहजु विश्वनाथजु, नेशुजु तुरसिरा-
६. मजु विश्वदेवजु वासिंहजु, शिवहरिजु राम–
७. जु, थ्वतेस्यन थानयिनाय् दयकं प्रतिस्था याङा चैत्र
८. कृष्ण ॥ सप्तमी, उत्तराषाढानक्षत्र ॥ साध्ययोग
९. ॥ बृहस्पतिबार ॥ थ्व कुन्हु प्रतिष्ठा याङा जुरो ॥ थ्व-
१०. ते चिन्ता याङाया छेथाय श्रीदेवसिंहजुया-
११. क जुरो ॥ सम्वत् ७४१ चैत्रकृष्ण ॥ प्रतिपद्या ति-

१२. थौ ॥ भृगुवारे ॥ शुभमस्तु ॥ सर्व्वदा ॥ शुभ
१३. पुनभाखा अंगावाल सिवान द-
१४. यका जुलो-

### अनुवाद

गणेशलाई नमस्कार । विघ्नका मालिक, वीर, विश्वरूप, म्बै विघ्न हर्ने, सबैलाई शान्ति दिने देवतालाई नमस्कार ।

लुभू देश थंथ्वलोछे क्वाथमा गणेश स्थापना गरियो । श्रीबुधजु कृष्णसिंहजु, धर्मसिंहजु, कल्याणजु, नारायणसिंहजु, विश्वनाथज, नेशुजु, तुलमिराम जु, विश्वदेव I, वासिंहजु, शिवहरिजु, रामजु, यिनीहरूले स्थानगणेश वनाई प्रगिष्ठा गरेका हुन् । चैत्र कृष्ण सप्तमी उत्त ाषाढानक्षत्र साध्ययोग बृहस्पतिबार यस दिन प्रनिष्ठा गरिएको हो । यमको हे चाह गर्ने प्रमुख श्रीदे सिंह हुन् ।

ने.सं. ७४१ (वि.सं. १६७८) चैत्र कृष्ण प्रतिपदा मंगलवार । सधैं शुभ होस् ।

अर्को व्यहोरा मङ्गलवार सेवाखलकले यो बनाइएको हो

★★★

### (३१)

## पाटन भिंछेटोलको गणेश मन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीगणेशाय नमः ॥ विघ्नेश्वराय वीराय विश्वरूपा-
२. य ते नमः ॥ सर्व्वविघ्नहरंदेव मतशान्ति नमोस्तु ते ॥ ॥
३. सम्वत् ७४४ -- -- मासे कृष्णपक्ष ॥ दशम्यान्तिथौ ॥ धनेष्ठा-
४. नक्षत्रे ॥ शुभयोगे ॥ वृहस्पतिवासरे ॥ मीनराशिगते
५. सवितरि ॥ मकराशिगते चन्द्रमशि ॥ तस्मिन्दिने ॥
६. त्वलया प्रमान दथलाह्म जोतिचा भाजुसन वेस-
७. जुया वो दयका ॥ --क्वपाठ ॥ सनाथ गुथि
८. मुनेयात दयका जुरो ॥ शुभ ॥ माहन ह-
९. दयचर, जिवराज, वदेचान चितायाक प्र-
१०. रमुखन क्षयन जिवराज, रगुराज
११. रुगुसिंङ, सुषुरि, स्वह्म पामि, प-
१२. प्रमुषन, पुन्ययात, तरेजुको



१३. जुरो ॥ शुभ ॥ ० ॥ चिता मया-
१४. तसा पचमहापातकि राक जुरो
१५. --------- सनाथ गुथिन ल्होन्यमार ---------

### अनुवाद

श्रीगणेशलाई नमस्कार । बिघ्नेश्वर, वीर, विश्वरूप,सबै विघ्न हर्ने देवतालाई (गणेशलाई) नमस्कार ।

ने.सं. ७४४ (वि.सं. १६८१) ... महिना कृष्णपक्ष दशमी, घनिष्ठा नक्षत्र शुभयोग बृहस्पतिबार, मीनराशिमा सूर्य गएमा, मकर राशिमा चन्द्रमा गएमा, त्यसदिन, टोलका प्रमान दथलाह्म ज्योति भाजुले ...... बनाइएको हो । .... सनाथ गुठी भेला हुन बनाइएको हो ।

महान हृदयत्तर जीवराज वदेचाले यसको हेरचाह गर्नू । .... जीवराज रगुराज रुगुसिंह सुखरी ..... प्रमुखले पुण्यले लागि ..... । हेरचाह गरेनन् भने पञ्चमहापातक लागोस् ।

..... सनाथ गुठी चलाउनू । ......

★★★

### (३२)

## पाटन सुबहाल गणेशमन्दिर अगाडि पाटीको शिलालेख

### मूलपाठ

१. शुभ ॥ सं ७४६ माघ शुक्ल ॥ दुराख
२. वृहस्पतिवाल कुन्हु ॥ यंछु राछ यौता-
३. गृह ॥ पात्रवंश रापुर्त्त शिवराम भारो
४. प्रमुखन इलकोवाहार लंयोता चपाड ल्हो-
५. ङन, दामटंका ६ पुवा फं २० दुं तस्यं गुथि
६. चिनका, श्रीवुगंयात नोग्लत कुन्हु फरस म-
७. त प्वाथ १४ पियायेस्त प्वाठ १ छोयके दानवि-
८. य शियाफके फं २ थ्व क्ये फं ३ देवथ्यं, रा दं ४
९. कगुरि दं १ हप पा ६ धरि, कु ३ वजि, म्वात
१०. थ्वते दान विय, चितांयाक गुथि राय छे वेखा
११. हाकुराम ओयचन्द, जसिंराज, थ्वते जुरो
१२. रोपयातसनं, थ्व चपारस, कुसित्या जुगी

१३. तग्मन पञ्चमाहापातक राक जुरो ॥
१४ थ्व चपाल ल्होडाया चितायाक खदुतुह्मा-
१५. रित्वार मोक्र रथनवन्द माहान ॥ शुभ ॥
१६. जुगीयान वो छवो यां
१७. वियमार ॥

अनुवाद

शुभ होस् । ने.सं. ७४६ (वि.सं. १६८२) माघ शुक्ल द्वितीया बृहस्पतिबारको दिन यंछु लाछि यौतागृहका पात्रवंश रावुत्त शिवराम भारो प्रमुख भई श्लकोवहाल लंयोता चपाद्द (चपली) को जीर्णोद्धार गरी ६ रुपियाँ २० पाथी पुवा (खेत) राखी गुठी बनाइयो । श्रीबुंगजात्रा नोग्लयाको दिन पाटीमा १४ वटा बत्ती बाल्नू, गणेशलाई बत्ती १ बाल्नू, भुटेको चिउरा २ पाथी जाँड तीनपाथी देवतालाई, चार दम्मको मासु, एक दम्मको केराऊ, ६ कहतारा दही, तीन कुरुवा चिउरा, भटमास यति दान दिनू ।

हेरचाह गर्ने गुठियार रायछेंका वेखा, ह्वाकुराम ओयचन्द्र जसिंराम यी हुन् । लोप गरे भने, यस चपाद्द (चपली) मा कुसले, जोगी राखे भने पञ्चमहापाप लागोस् । यो चपली जीर्णोद्धार गर्दा हेरचाह गर्ने खदुतुह्मारिटोलका मोक रत्नचन्द्र माहान हुन् । शुभ होस् ।

जोगीलाई एक भाग भोज दिनुपर्छ ।

★★★

(३३)

## पाटन गाबहालटोल नबाहालको चैत्यको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय ॥ श्रेयोस्तु सम्वत् ७४६ ज्येष्ठमासे शुक्लपक्ष
२. पूर्ण्णमावास्यायान्तिथौ ज्येष्ठनक्षत्रे ॥ थो दिनस ॥ भगवान्
३. श्रीमत् श्रीश्रीधर्म्मधातु वागीश्वरभट्टारकस्य ॥ जीर्ण्णोधार-
४. न याङ, अहोरात जज्ञ याङा ॥ दानपति श्रीजसकितजु
५. प्रमुखन ॥ श्रीविजयसिंजु ॥ श्रीअंमृत्रसिंजु ॥ श्रीजिकि-
६. तजु ॥ थुत्रिसेन ॥ श्रीमत् श्रीश्रीधम्मधातु वागीश्वर
७. जिर्ण्णोधारन याङन थ्व सम्व्छरन्निस्य ॥ वोसाधन
८ याङ तया ॥ जथातरथ्यं दिन जज्ञ जुको: संप्वारन



९. यायमार ॥ दंस नेपरघात ॥ कथिन पुन्हिशि कुन्हु
१०. संषारन पाय दिवा छ प्वात छोयकं मारक तया जु-
११. रो ॥ भाषा ॥ श्रीश्रीधर्म्मधातु वागीश्वरया फरसमार
१२. थनेमदु ॥ छु जुरसनो पाय डोय मदु: चुरे मदु:
१३. रसुतसं मदु ॥ देव थोर वाहिकन: ग्वह्मनं
१४. रथ - - उचातन यातसा: पञ्चमहापा-
१५. - - ति ॥ ॥ भग्नभादेकरंजेन : निर्व्वि
१६. निर्व्वीर्ण - - बुद्धं - - -

अनुवाद

बुद्धलाई नमस्कार । कल्याण होस् । ने.सं. ७४६ (वि.सं. १६८३) ज्येष्ठ शुक्ल पूर्णिमा, ज्येष्ठानक्षत्र, यस दिन भगवान् श्रीश्रीश्रीधर्मधातु वागीश्वर भट्टारकको जीर्णोद्धार गरियो, अहोरात्र यज्ञ गरियो ।

दानपति श्रीजसकीतजु प्रमुख भई श्रीविजयसिंजु श्रीअमृतसिंजु श्रीजिकितजु यति जनाले श्रीश्रीश्रीधर्मधातु वागीश्वरको जीर्णोद्धार गरेका हुन् । यस सालदेखि बोसाधन गर्नु, निश्चित दिन सामग्री पुऱ्याई यज्ञ गर्नु, वर्षको दुइपटक चून लाउनू । कार्तिक पूर्णिमाको दिन पनि चून लाउनु । बत्ती बाल्नू ।

वेहोरा - श्रीश्रीध[illegible]तु वागीश्वरको पेटीमा फोहर गर्नु हुँदैन, अरू कुनै लिपपोत गर्नू हुँदैन, अरू केही घोट्नु हुँदैन ---- राख्न हुँदैन । देवताका पुजारीबाहेक अरूले .. गर्नु हुँदैन, उच्चाटन गरे भने पञ्चमहापाप [illegible]गोस् ।

जसले ...... .... गरी निर्वाण प्राप्त गर्नुभयो, ..... ती बुद्धलाई नमस्कार ।

★★★

## (३४)

# पाटन क्वालखुटोल क्वावुटबहालको शिलालेख

## मूलपाठ

१. ॐ नमः ॥ श्रेयोऽस्तु ॥ संवत् ७४७ माघशुक्ल ॥ पंचम्यान्तिथौ ॥ उत्तरभद्र नक्षत्रे
२. सिद्धियोगे ॥ शुक्रवार ॥ थ्व कुन्हु श्रीमत् श्रीश्रीक्वाथभोंत क्वाचपार भट्टार-
३. कासके नकविहारि लिविछेया पुर्णिमासेवागुथिया योग्वारभो
४. समूहन दयका एते भावो, प्वदेयकीत भावो नज्याभादिताडा रूपारा-
५. ज भावो छेम्होय रुकेश गुण उल्हासिंह ग्यानचन्द्र अमृतराज पा-
६. मि जेवणसिंह श्रीपुरुषन क्वाभदी तव साहासन ताडा जसकल्याण
७. जमतसिंह जुंगुराम जयचन्द्र जिवेराम अमिसिंह स्वफुड, गोपिराम
८. हाउजोगि ॥ थ्वते जिमच्याम्ह भोमुडाव जिर्ण्णोद्धार याडन आवनचिडा
९. गुजुरि छोकास्यं प्रतिस्था याडा जुरो, गजुरी छास्यं धुंग्व जुरो ॥ थ्ववेरस
१०. महाराजाधिराज श्रीश्रीनरसिंहमल्लदेव प्रभु थाकुललंजुरो, च-
११. केश्वरि डाखाचोकया श्रीजिदेवजु जुरो ॥ शुभ ॥ भूयं कोकास्वान हाने छि १
१२. श्रेयोस्तु सम्वत् ७६८ फाल्गुण शुक्ल ॥ रोहिणीनक्षत्रे विष्कम्भयोगे शुक्र-
१३. वासरे ॥ थ्व कुन्हु प्रतिस्था याडा दिन जुरो थ्थ्वअगड ल्होडाया श्रीश्रीपरमे-
१४. श्वर आग्यत जुथा ... विज्याडासल्होडा जुरो नक विहारिं लिवि-
१५. छेया थंकाडि समो समूहन याडा जुरो ॥ पुर्णिमासि सचो .... ....
१६. ... ... ... ... ... ... ... ... ... .... ... ... ... ....
१७. मिसलद्वारन याडा .... .... ... ... रन ...
१८. वय दिन जुरो ... ... ... ... जुरो .... मुनिज
१९. ...
२०. ...
२१. ... ... ... ... वास यास दुहलो श्री ३ जोगम्वल याने ..........
२२. याति वुसा ...... हरो अध्यल वनयातलदयका थामवाहर रसतार ... ता
२३. यो वुन्ता तर ..... याना लमस्यन कथसिमादरा वल्हाडा जुरो थ्वतेया छेम्ह
२४. यलपति ........................ सिंह जयन ............................
२५. ...........................................................................



२६. ...........................................................................
२७. ...........................................................................

★★★

## (३५)

# मंगलबजार विश्वेश्वर-मन्दिरको सिद्धिनरसिंहको अभिलेख

*अभिलेख-संग्रह* ६ भागको ९ पृष्ठमा संशोधन-मण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ नमः श्री विश्वेश्वराय ॥ यदुत्तमाङ्गसङ्गिनी दिवौकसस्तरङ्गिनी यदर्धदे-
२. हसङ्गिनी तुग्ग (षा) रशैलनन्दिनी। यदंघ्रिपद्मवन्दिनी सुरासुरादिमो-दनी यद-
३. ङ्गभूषणं फर्ण जयत्यसौ सुरागंणी (:) ॥ संजातो हरसिंहदेवनृपति ष्प्रोधत्प्रतापो :-
४. तिर्व्वशे चण्डरुचेरचिन्त्यमहिमा श्रीमैथिलक्ष्माहरिः। ज्ञात्वा दुर्ज्जवनात्कलेखि नि-
५. जे राज्ये स्वधर्म्मक्षतिं, नेपालं वरपीठमेत्य सुचिरं राज्यञ्चकार प्रभुः। अस्यान्वयेऽ
६. तिभद्रे क्षीरसमुद्रे कलानाथः ॥ समजनि महीन्द्रमल्लो रिपुहृदि मल्लो महीपालः ॥
७. अस्याभूत्तनयो नयोदितविधिः प्रत्यग्रतेजीनिधिवैर्य्याधि शिवसिंहदेवनृपतिः
८. प्रोद्यद्गुणाम्भोनिधि। देवीपूजनतत्परेण निखिलक्ष्माभृत्कुले येन तत्सा भाज्य-
९. ञ्चिरभारचयय धनदेनेवोत्तरा पालिता ॥ असयभून्नरकरिपोरिवात्मजन्मा
१०. प्रद्युम्नो हरिहरसिंहराजजसिंह। प्रत्यर्थिक्षितिपतिद..भिक्षुकालीदारिद्रय-
११. द्विपदलनैकदृस्तसिंह ॥ हरिहरसिंहनृपतेस्त्रिलोचनात्कार्त्तिकेय इव।
१२. उमयेव लालामत्यासावि श्रीसिद्धिनरसिंह ॥ चिद्वापीसदृशीम्विधाय सुजलां
१३. स्वर्ण्णप्रणालीन्तो वारुण्यापरितोष्य होमनियु.तेनास्थाप्य विश्वेश्वरं। कैलाशा-

१४. मगृहे तदा स नृपति (:) सन्तर्प्य सर्वान् यतीन् काश्यां -- वासिनां विरहज-
१५. ------------- नेपालक्षोणिपति --- हर्षेण गृहम-
१६. ------------- पञ्चम्यां गुरौ -------------
१७. --------------- अत: परं देशभाषा लिख्य-
१८. ते सम्वत् ७४७ माघ शुक्लपञ्चम्यां तिथौ --- महाराजाधिराज जयसिद्धिन-
१९. रसिंहमल्ल प्रभु ठाकुरसन श्री ----------- थ्व देवलदय-
२०. -------------------- ---------

## अनुवाद

श्रीविश्वेश्वरलाई नमस्कार । जसको शिरमा आकाशगङ्गा रहन्छिन्, जसको आधा जिउमा पार्वती टाँसिएर रहेकी छिन्, जसको चरणकमलमा देवता, दैत्यहरू सहर्ष ढोग्दछन्, जसको अंगका गहना सर्प छन्, त्यस्ता महादेव ठूला छन् ।

सूर्यवंशमा ठूला प्रतापी, ठूलो महिमा भएका, मिथिलाप्रदेशका राजा हरसिंहदेव हुनुभयो । कलिबाट जस्तै खराब यवंन (मुसलमान) बाट आफ्नो राज्यमा धर्मको हानि हुने थाहा पाएर उहाँ राजा हरसिंहदेवले उत्तम पीठ नेपालमा आएर धेरै कालसम्म राज्य गर्नु भयो ।

समुद्रमा चन्द्रमा उत्पन्न भएजस्तै उहाँको उत्तम कुलमा शत्रुहरूलाई तर्साउने राजा महेन्द्रमल्ल हुनु भयो ।

उहाँका छोरा राजा शिवसिंह हुनु भयो । उहाँ नीतिमा कहे अनुसार काम गर्ने, अत्यन्त तेजिला, वीर गुणी हुनुहुन्छ । देवीको पूजामा तत्पर रहने जसले कुवेरले उत्तर दिशाको पालना गरे जस्तै राजाहरूलाई अधीनमा पारेर ठूलो राज्यको पालना गर्नु भएको थियो ।

कृष्णका प्रद्युम्नजस्तै उहाँका छोरा राजा हरिहरसिंह हुनु भयो । उहाँ शत्रु राजाहरूको घमण्डँ तोड्ने कुरामा र माग्नेहरूको गरिबी हटाउनामा श्रेष्ठ हुनुहुन्थ्यो ।

पार्वतीले महादेवबाट स्वामी कार्तिका जन्माएजस्तै लालमतीले उहाँ हरिहरसिंह राजाबाट श्रीसिद्धिनरसिंहलाई जन्माउनु भयो ।

उहाँ राजा सिद्धिनरसिंहमल्लले कैलाश जस्तो मन्दिर बनाउन लाएर होम गरीकन त्यहाँ विश्वेश्वर स्थापना गर्नु भयो । त्यसको पश्चिमपट्टि ज्ञानवापी जस्तो, राम्रो पानी आउने सुनधारा बनाउन लाउनु भयो । सारा जोगीहरूलाई भोजन गराउन भयो । काशीमा ---- बस्नेहरूको विरहबाट भएको ------ नेपालका राजा खुशीसाथ घर ------ पञ्चमी, बृहस्पतिबारमा ।

यसपछि देशभाषामा लेखिएको कुरा ने.स. ७४७ (वि.सं. १६८३) माघ शुक्ल पञ्चमीको दिन महाराजाधिराज जयसिद्धिनरसिंहमल्ल प्रभु ठाकुरले श्री ---- यो देवल बनाउन लाउन भयो । ---

**व्याख्या**

शिवसिंहले ललितपुर जिती कान्तिपुरमा मिलाएका थिए तर ललितपुर शहर *गढ* को रूपमा रहेको र यहाँका प्रधानहरू केही संगठित हुनाले कान्तिपुर, ललितपुर प्रशासनको दृष्टिले एक हुन सकेन । ललितपुरको प्रशासनको लागि शिवसिंले आफ्ना छोरा हरिहरसिंहलाई नियुक्त गरे । यही कुराले पछि ललितपुर फेरि स्वतन्त्र हुने वातावरण खडा गर्‍यो ।



बाबुको प्रतिनिधिध भई हरिहरसिंहले संयुक्त रूपमा ललितपुरमा केही काल शासन गरे । उनको शेषपछि शिवसिंहले नै ललितपुरमा सोभै आफैंले राज्य गरे । हरिहरसिंहका लक्ष्मीनरसिंह र सिद्धिनरसिंह दुइ छोरा थिए । जेठा छोरा लक्ष्मीनरसिंह पहिलेदेखि नै बाजे शिवसिंहसँगै कान्तिपुरमा बस्तथे । सिद्धिनरसिंह प्राय: आमासाथ ललितपुरमा बस्दथे । यसो हुँदा शिवसिंहको अन्तिम समयमा उनी जीवित छँदै सिद्धिनरसिंह सानै उमेरमा पाटनको गद्दीमा बसे । यो कुरा तात्कालिक ठ्यासफू, अभिलेख आदि केलाई हेर्‍यौं भने स्पष्ट थाहा पाइन्छ । माथि भएका ने.सं. ७३९ का अभिलेखहरूमा ललितपुरका राजाका रूपमा सिद्धिनरसिंहको उल्लेख आइसकेको छ । शिवसिंहको मृत्यु ने.सं. ७४० मा मात्र भएको थियो । एक ठ्यासफूमा *सम्वत् ७४० वैशाख कृ. पष्ठि कुन्हु शुक्लवारे थ्व कुन्हु श्री २ शिवसिंहमल्लदेव अभाग जुव दिन जुरो* भनी उक्त कुरा लेखिएको छ । त्यस ठ्यासफूमा ७३९ मा नै शिवसिंहका दुइ नातिहरूले शासन चलाउन थालेको कुरा पनि स्पष्ट लेखिएको छ । यसरी शिवसिंह रोगी भई अशक्त हुँदा उनका नातिहरूलाई गद्दीमा बस्न हतार भइसकेको स्पष्ट थाहा पाइन्छ । शिवसिंहको मृत्युपछि त ललितपुरले भक्तपुरसँग मिली कान्तिपुरको बिरुद्ध मोर्चा बाँध्न थालेको उल्लेख पनि त्यस ठ्यासफूमा गरिएको छ । तर ने.सं. ७४१ (वि.सं. १६७७) माघमा दुइ दाजुभाइ लक्ष्मीनरसिंहमल्ल र सिद्धिनरसिंहमल्लले परस्परमा सन्धि गरी विधिवत् ललितपुर र कान्तिपुरलाई पृथक् स्वतन्त्र राज्यमा परिणत गरे । यसरी केही काल कान्तिपुर अन्तर्गत रही फेरि ललितपुर स्वतन्त्र भयो ।

सिद्धिनरसिंह योग्य शासक थिए । ललितपुरलाई उनले पृथक् राज्य मात्र पारेका होइनन् । ललितपुरलाई राजनीतिक, आर्थिक, सांस्कृतिक दृष्टिले समृद्ध पार्ने काम पनि उनले गरेका थिए । यस कुरालाई सम्भाउने उनका अनेक कृति ललितपुरमा छरिएर रहेका छन् । तिनमध्ये मंगलबजारको यो विश्वेश्वर मन्दिर पनि एक हो । सिद्धिनरसिंहका प्रमुख कृतिमध्ये यो विश्वेश्वर मन्दिर अहिलेलाई पहिलो देखिएको छ । आफू पाटनको गद्दीमा बसेको आठ वर्ष जति पछि ने.सं. ७४७ (वि.सं. १६८३) श्रीपंन्चमीको दिन सिद्धिनरसिंहले विश्वेश्वर मन्दिर बनाई यो अभिलेख कुँदन लाएका हुन् ।

यस अभिलेखमा सिद्धिनरसिंहले अलिकता आफ्नो वंशवर्णन पनि गराएका छन् । आफ्नो वंशवर्णन गराउँदा यस अभिलेखको सुरुमा हरसिंहदेव नेपाल पसेको कुरा लेखाएका छन् । यो अभिलेख मात्र पढ्ने हो भने हरसिंहदेवले मिथिलाबाट यहाँ आई धेरैकाल राज्य गरे कि भन्ने भ्रम पर्छ । यसताका भक्तपुरका र कान्तिपुरका जगज्ज्योतिर्मल्ल, प्रतापमल्लहरूले पनि *सिम्रौनगढबाट यहाँ आई हरसिंहदेवले धेरैकाल राज्य गरे । उनैका सन्तान हामी हौं* भन्ने आशयको कुराको प्रख्यापन गराएको पाउँछौं । यसरी भक्तपुर, कान्तिपुर र ललितपुर तीनै राज्यका सिद्धिनरसिंह आदि राजाहरूले एकै मुखले हरसिंहदेव यहाँ आएको कुरा लेखाएका हुँदा यसबाट इतिहासकारहरूलाई समेत भ्रम पर्न गएको पाइन्छ, तर गोपालवंशावली आदि तात्कालिक ऐतिहासिक सामग्रीहरूबाट उक्त कुरा सत्य होइन भन्ने प्रमाणित भइसकेको छ । वि.सं. १३८१ मा दिल्लीका बादशाह गयासुद्दीन तुगलक बंगालको विद्रोह दबाई प्रशस्त फौजसाथ तिरहुत नजिकैको बाटोबाट दिल्ली फर्कंदै थिए । तुगलकको फौज बढ्दै आइरहेको समाचार आएपछि हरसिंहदेवले आफूमाथि आक्रमण हुन लाग्यो भन्ने सम्भे । यसकारण सारा रैतीहरू उठाई लड्न तयार भई उनी गढबाट बाहिर निस्के तर गयासुद्दीन् तुगलकको विशाल सैन्यसँग मुकाबिला गर्ने क्षमता तिरहुते सैन्यमा थिएन । यसकारण लडाई जोरिंदा टिक्न नसकी हरसिंहदेवको सेना *वनदुर्ग* भित्र पस्यो । यसपछि गयासुद्दीनको फौजले सिम्रौनगढ ध्वस्त पारिदियो । अनि सपरिवार हरसिंहदेवले त्यताबाट भागी ज्यान जोगाए । केही काल यताउति लागी उनी नेपालको पहाडी भागमा पसे ।

दोलखातिर आउँदा तीन पाटन भन्ने ठाउँमा वि.सं. १३८२ माघमा उनको मृत्यु भयो । उनका जहानछोरा मन्त्री आदि कैद गरिए तर उनीहरूले भक्तपुरका शक्तिशाली शासक रुद्रमल्लसँग शरण मागेका हुनाले हरसिंहदेवकी रानी देवलदेवी, छोरा जगतसिंह कुम्हरहरूले रुद्रमल्लको दरबार *युथुनिमम्* मा प्रवेश पाए । यसै सम्बन्धले गर्दा पछि रुद्रमल्लकी छोरी नायकदेवीसँग जगतसिंहको विवाह भयो । तिनबाट राजल्लदेवीको जन्म भयो । पछि राजल्लदेवीको विवाह स्थितिमल्लसँग भयो । स्थितिमल्लका सन्तान सिद्धिनरसिंहहरू हुन् । यसरी राजल्लदेवी तर्फबाट यी मल्लहरूको सम्बन्ध हरसिंहदेवसँग रहेको थियो । त्यसै हुँदा उनीहरूले कुरा अलि लुकाई आफ्नो वंश हरसिंहदेवसँग जोड्न पुगेका हुन् ।

हरसिंहदेवको उल्लेखपछि तिनको वंशमा महेन्द्रमल्ल भए भनी यहाँ लेखिएको छ । कान्तिपुरलाई आर्थिक दृष्टिले समृद्ध पार्नको साथै स्थितिरीति बाँधी सुशासनको नमूनाको रूपमा प्रस्तुत गरेका हुँदा उनका वंशजहरूले महेन्द्रमल्ललाई आदरसाथ सम्झना गर्नु स्वाभाविक छ ।

त्यसपछि यस अभिलेखमा बाजे शिवसिंहको वर्णन सिद्धिनरसिंहले गराएका छन् । शिवसिंहले कान्तिपुर राज्यको निकै विस्तार गरेका थिए । पश्चिममा त्रिशूली गण्डकी पारिसम्म, उत्तरमा लिस्ति केरुङसम्म, पूर्वमा दोलखा सिन्धुलीसम्म उनले आफ्नो प्रभुत्व फैलाएथे । शिवसिंहले मोरंगसम्म प्रभाव फैलाएको दावा पनि उनका वंशज गर्दछन् । ललितपुरलाई पनि कान्तिपुरमा मिलाएथे । यसरी कान्तिपुरको राज्यक्षेत्र शिवसिंहले निकै बढाएका हुन् । यसै कुरालाई बढीचढी गरी शिवसिंहले *साम्राज्य* नै कायम गरे भन्ने फूर्ति यहाँ सिद्धिनरसिंहले गरेका छन् ।

वंशवर्णनको सिलसिलामा यहाँ सिद्धिनरसिंहले आफ्ना दाजु लक्ष्मीनरसिंहको नामोल्लेख सम्म पनि गराएका छैनन् । हरिहरसिंहका लालमती तर्फबाट सिद्धिनरसिंह जन्मे भन्ने मात्र यहाँ लेखिएको छ । सिद्धिनरसिंहको उदय हुनामा आमा लालमतीको प्रमुख हात रहेको थियो । यसकारण लालमतीको उल्लेख गरिनु स्वाभाविक थियो ।

राम्रो मन्दिर बनाई विश्वेश्वर स्थापना गर्नाको साथै सिद्धिनरसिंहले सुनधारा पनि बनाएको उल्लेख यस अभिलेखमा परेको छ । साथै, त्यस अवसरमा उनले जोगीहरूलाई पनि भोजन गराएका थिए । सिद्धिनरसिंह बराबर जोगी सन्यासीहरूलाई भोजन गराइरहन्थ्ये । यो अभिलेख राखेको चार वर्षपछि पनि उनले नेपाल उपत्यकाभरका सन्यासीहरूलाई भोजन गराएथे । एक टिपोटे कागतमा *सं. ७५१ श्रावण कृष्ण पञ्चमी चांक्वाठस श्रीश्रीसिद्धिनर सिंहमल्लन नेपाछिया सन्यासी भोजनका दिन जुरो* भनी टिपोट गरिएको छ ।

★★★

(३६)

## वलखु टोल वंबहालभित्रको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय ॥ श्रेयोस्तु ॥ सम्वत् ७४८



२. आषाढमासे कृष्णपक्षे ॥ अमावास्यां तिथौ
३. सोमवासरे ॥ अस्मिन्दिने ॥ वकनवाहार
४. स्थापना वंतवाहार, लिविछेननिचा यतागृह
५. वास्तव्य कायष्ठ माधवसिंहस्य पुत्रः न (र)
६. सिंह भारो, भार्य्या कमलालक्ष्मी मयी थ्वते नेम्ह
७. श्रीपुरुषन, थ्व वंतवाहार श्री ३ देवया द्वा-
८. रस झयाल ध्येकन थङन विलंपति पि-
९. तया वजाचार्य्य श्रीदेवरथन वन्देजु थम-
१०. राया पर्य्यायस जुरो ॥ यथाशास्त्रोक्त फलमस्तु
११. गजुरिस सुवर्ण्ण छत्र जुक्व ॥ सुर
१२. सिंह भारो ॥ [illegible]न्ता शुभ ॥

### अनुवाद

बुद्धलाई नमस्कार । कल्याण होस् । ने.सं. ७४८ (वि.सं. १६८५) आषाढ कृष्ण अमावास्या सोमवार, यस दिन, वकनवहालस्थान, वंतवहाल, लिविछेंननी येता गृहमा बस्ने कायस्थ माधवसिंहका छोरा नरसिंह [illegible]रो, पत्नी कमलालक्ष्मी मयी यी दुइ स्त्रीपुरुषले यस वंतबहालका श्री ३ देवताको द्वारमा भ्यालढो[illegible] राखी बिलंपति ------ चढाए ।

श्रीदेवरत्न वज्राचार्य [illegible]-रा बन्देजुको पालामा उक्त काम गरिएको हो । शास्त्रमा बताए अनुसारको फल लागोस् । [illegible]रमा सुवर्ण छत्रचाहिँ सुरसिंह भारोले चढाएका हुन् । शुभ होस् ।

★★★

(३७)

## पाटन क्वाछेटोल बालकुमारीका देवलदेखि पूर्व्वपट्टि पर्खालको शिलालेख

### मूलपाठ

१. ? ॐ नमः श्रीबालकोभार्य्यै ॥ यस्याः प्रसादान्समवाप्य, सर्व्वलोकं समन्ता-
२. त्सृजतीहेधाता । मातेव पुष्णाति हरिहरश्व, हरत्यथो तां प्रणमामि देवीं
३. ॥ अथ देश भाषया देव्याः कृत्यपरिपाटी लिख्यते ॥ स्वस्ति ॥ श्रीमल्ल-
४. लितापुरी नगराधिपति महाराजाधिराज श्रीश्रीजयसिद्धिनर-
५. सिंह देवस विजयराज्यस धवाखावाहार गृह निवासि दयार भा-

६. रोसन थ्व इष्टदेवता श्री ३ वालकौमारी देवीस प्रासाद ल्होङा दि-
७. न ॥ संवैत्नैपालिक ७४२ वैशाषकृष्ण द्वितीयायां तिथौ अनुराधान-
८. क्षत्रे वलियानयोगे वुधवासरे थ्व कुन्हु घटि १- डेस्य घटि १५ थ्वते
९. नन्हा न्हव छास्यं तया गजुरिया न्यास पिंकास्यं गजुरि कोकायाव प्रा-
१०. माद पेया ॥ थ्वन लिन्हु ३२ ज्येष्ट कृष्ण चतुर्थ्यां तिथौ उत्तराषाढनक्षेत्रे
११. शुकयोगे, शनैश्वरवासरे थ्व कुन्हु घटि १३ फस्य घटि १८ नन्हा प्रासाद
१२. सिधयकं अहोरात्र यज्ञ याङन कोकास्यं तया गजुरि छाया दिन ।
१३. भूय थ्व सवत्सलसं श्री ३ क्वाथछेंस मण्डल जात्रा दयका फागुणि कृष्णचतु-
१४. र्दशी कुन्हु श्रीश्रीश्रीवालकौमारी देवी भट्टारकासके दुगुम्ह २ पोसोक
१५. दयकं पूजा याङन चाकमतं प्वाथ १२० छोयके हाथ्वं हायेके माल थ्वन
१६. सन्ति मत कोकायस दुगु म्हं १ पोसोक दयकं पूजा द्योङ प्रताय पु १ धुकु-
१७. ३ हाकयं छास्यं मंटे लुयमाल थ्वतेयातं वरमाल दुंता वमदोल वु रोव ३
१८. थ्वतेया वरसानन चाकमत छोयके, भूय वंमदोल वु रोव ३ थ्वतेया व-
१९. रसानन हाथ्वं हायके भूय अफल वु रोव १ पयि ३ थ्वतेया वरसानन
२०. गुथिन पूजा सामग्रीस हने भूय वदल वु रोव १ पयि २ देवलया स्यल्हो
२१. यातं भूय थ थ्व सम्वत्सरन जिदंलिव सम्वत् ७५२ माघ शुक दशम्याति-
२२. थो रोहिणी नक्षत्रे इन्द्रयोगे, शनेश्वरवासरे थ्व कुन्हु दयार भारोस-
२३. न अहोरात्र यज्ञ याङन पु २ गजुरि छया श्रीश्रीवालकौमारी देवी
२४. पूजा याङ मेश म्हं सुयाच्या ३८ दुगु म्हं नीयपिं २४ ॥ श्रीश्रीजयसिद्धिनर-
२५. सिंहमल्ल देवजु श्रीश्रीजयश्रीनिवालमल्ल देवजु उभयत्वं काधाव विज्याच
२६. कं श्रीव्राह्मणजु पनि वु दान थः जोसिः आचार्य्य सकलें खप्वंया थव इष्ट
२७. भावजुको पूजा वोङा थव देशनीय पेपाल वलिसं मेशम्हं छि १ धारे
२८. विस्यं देशनका फसपिया पागंया कोसन पानगामया छुग्रामयाः थ्व डात्य-
२९. या देशछि धारे नका जुरो ॥ भूय संम्वत् (७) ५४ माघशक पन्चम्याः श्री ३ प-
३०. रमेश्वरी प्रीतिन क्वाथछे देवीया लिक्ने पुषुरि दयका. थ्व पुषुरिस लंखथने
३१. वाहार, अफलया महाराजन कृष्ण पक्षया चतुर्द्धशीप्रति लंख थनेमाल
३२. चतर्द्धशी गुथिन लंख थड म्हंयात थम थम पाथ्यं वो छवो ---
३३. -------- कुन्हु धारे दंम --- ह्मोयन पुषुरि श्यमाल । थ्वते ----
३४. ----------------

## अनुवाद

श्रीबालकुमारीलाई नमस्कार । जसको निगाहा पाएर ब्रह्माजीले सारा लोकको सृष्टि गर्छन्, विष्णुले आमालेजस्तै पालन गर्छन्, महादेवले संहार गर्छन्, ती देवीलाई प्रणाम गर्दछु ।



अब देशभाषा (नेवारीभाषा) मा लेखिएको देवीको विधिविधानका कुरा अनुवाद लेखिन्छ । कल्याण होस् । श्रीललितपुर शहरका अधिपति महाराजाधिराज श्रीश्रीजयसिद्धिनरसिंहदेवको विजयराज्यमा, ध्वाकाबहालको घरमा बस्ने दयार भारोले आफ्ना इष्टदेवता श्री ३ बालकौमारी देवीको मन्दिरको जीर्णोद्धार गरियो ।

ने.सं. ७४२ (वि.सं. १६७८) वैशाख कृष्ण द्वितीया बुधवार अनुराधानक्षत्र वरीयानयोग, यस दिन १ -- देखि १५ घडीभित्र पहिले--चढाई राखेको गजुरको न्यास झिकी मन्दिर भत्काइयो । यसको ३२ दिनपछि ज्येष्ठ कृष्ण चतुर्थी शनिवार उत्तराषाढनक्षत्र सुकर्मयोग, यस दिन १३ घडीदेखि १८ घडीभित्र मन्दिर बनाई सिध्याई अहोरात्र यज्ञ गरी अघि झिकी राखेको गजुर चढाइयो ।

फेरि संवत्सरमा श्री ३ क्वाथछेंमा मण्डल जात्रा गरी फाल्गुन कृष्ण चतुर्दशीको दिन श्रीश्रीश्रीबालकौमारी देवी भट्टारिकालाई दुइटा बोका बलि दिई पूजा गर्नु, चाकमत १२० वटा बाल्नू, 'हाथ्व हायके' गर्नू । यसको भोलिपल्ट बत्ती लिने बेला एउटा बोका बलि दिई पूजा गरी 'प्रताप' एक धुकु तीन चढाई 'रोटी' - वर्षा' गर्नू ।

यसको लागि आयस्ता चढाइयो-- वमडोलको तीन रोपनी । यस खेतको आयस्ताले *चाकमत* बाल्नू । फेरि वंमडोकलो तीन रोपनी खेतको आयस्ताले *हाथ्वं हायके* गर्नू । फेरि अफल खेत तीन रोपनी तीन पयीको आयस्ताले गुठीले पूजा सामग्री जोर्नू । फेरि बदल खेत एक रोपनी २ पयीले देवलको जीर्णोद्धार गर्नू ।

फेरि यस सालको (७४२ को) दश वर्षपछि ने.सं. ७५२ (वि.सं. १६८८) माघ शुक्ल दशमी शनिवार रोहिणी नक्षत्र इन्द्रयोग, यस दिन दयार भारोले अहोरात्र यज्ञ गरी दुइटा गजुर चढाए, श्री ३ बालकौमारीदेवीको पूजाको लागि राँगा ३८, बोका २४ चढाइए ।

श्रीश्रीजयसिद्धिनरसिंहमल्लदेवज्यू र श्रीश्रीजयश्रीनिवासमल्लदेवज्यू दुवै जना आउनु भएको थियो, श्री ब्राह्मणहरूलाई जग्गादान दिई जोशी आचार्य सबैलाई भक्तपुरका पनि आफूले चितारु जतिलाई बोलाई पूजा गरी आफ्नो देशको चारकुनामा एकएकवटा राँगो बलि दिई फर्पिङ पाँगाकोसनपान ग्राम र छुग्राम यी पाँच देशकालाई भोज खुवाइयो ।

फेरि ने.सं. ७५४ (वि.सं. १९६०) माघ शुक्ल पञ्चमीको दिन श्री ३ परमेश्वरीलाई प्रसन्न पार्न क्वाठछें देवीको पछाडि पोखरी बनाइयो । यस पोखरीमा वाहार अफलका महाराजले प्रत्येक कृष्णपक्षको चतुर्दशीको दिन पानी भर्नु पर्छ । चतुर्दशी गुठीले पानी भर्नेलाई आफूआफूले सक्दो --दिनू । ----- दिन धारे दम्म ------ मोहीले पोखरी सफा पार्नु पर्छ । यति -----

★★★

(३८)

## पाटन थेचो गाउँ लाछीटोल ब्रह्मायणी मन्दिरको शिलालेख

### मूलपाठ

१. स्वस्ति ॥ सम्वत् ७५६ कार्त्तिक कृष्ण ॥ चतु-
२. र्थ्यो तिथौ ॥ अनुराधनक्षत्रे ॥ धृतीयोगे
३. शनिश्चरवासरे ॥ थ्व कुन्हु स्वत छेङ कु-
४. सिंह पमुषन मिरावपनि दोयग्वा-
५. लुंगुराम जितलसिंह केशवचा ॥ ते-
६. छि, कृष्ण थ्वनिम्हं चिता याक, रा-
७. मसिंह ॥ माधव, देवसिंह,
८. थ्वतेस्यन, नृत्यस्छर दोयका-
९. जुरो ॥ थचोया ॥ शुभ मंग-
१०. ल भवतु ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७५६ (वि.सं. १६९२) कार्तिक कृष्ण चतुर्थी शनिवार अनुराधानक्षत्र धृतियोग यस दिन स्वतछेका कुसिंह प्रमुख भई --- बनाइयो । लुगुराम जितलसिंह केशब तेछि कृष्ण यिनीहरूले चिताइ गरेका हुन्, रामसिंह माधव, देवसिंह यिनीहरूले ठेचोका नृत्येश्वर बनाएका हुन्। शुभ मंगल होस् ।

★★★

(३९)

## ललितपुर मंगलबजार कृष्णमन्दिरको अभिलेख

### मूलपाठ

१. ॐ नमो गोपालाय ॥ व्रम्हत्त्वे सृजते विश्व. स्थितौ पालयते हरि । रूद्ररूपाय कल्पान्ते नमस्तुभ्यं त्रिमूर्त्तये ॥ प्रावीन्यप्रथित प्रतापम-



२. थितप्रत्यर्थिपृथ्वीपति प्रोछामप्रमदौघलोचनपयः प्रारब्धवारांनिधिः । जातः श्रीहरसिंहदेव नृपतिर्दातावदातान्वये संप्राप्तः पृ-
३. थुना परेण समतां यो वृत्तिदातास्सताम् ॥ यस्यान्ववायजलधावुदियाय राज चन्द्रो महेन्द्र तत्र महेन्द्रमल्लः । येतार्थिकल्पत-
४. रुणा गुणसागरेण राजन्ती वसुमती महती बभूव ॥ यत्प्रौढप्रसरत्प्रतापतपिताः प्राकम्पिताः शत्रवो भेजुः शैलदरीं विहाय न-
५. गरीं त्यक्त्वा पुरे सुन्दरां । यस्याचारविचार पौरुषखव्यग्रास्समस्ता गिर-स्तस्य क्षोणिपतेः प्रसिद्धमहसः केनोपमेयं यसः ॥ अस्या-
६. त्मजोजनि महीतलकल्पवृक्षो राजा विराजजितयशाः शिवसिंहदेवः । भूमीभुजा समरसीम्मि महाभुजेन क्षेमं क्षणेन रिपवो वह-
७. वो निविष्टाः ॥ येन क्षोणिभुजा प्रयाणसमये पादात सैन्योच्छलद्धूरी जालसमुस्थितेन तमसा व्योमान्धकारीकृतम् । कूर्मो म-
८. र्म्मणि चूर्णितोऽपि नितरान्धत्ते कथंचिद् धराम् शेषः शेषदशां जगाम सहसा सर्वंसहा निस्साहा ॥ तनयोस्य विनयपूर्णाबभूव कर्णो-
९. पमो भूमो हरिहरसिंह नरेन्द्रो वसुधाचन्द्रो बभूवाथ । अरीणां निहन्ता यशः पोरगन्ता सुशीलः समन्ताज्जयन्ताधिक-
१०. श्रीः । (स्व) तातानूरूपोतिनेजःसुरूपो बभूवाननीमण्डले चण्डरोचिः ॥ इन्द्राणी- व सुरेश्वरस्य दयिता पद्मेव पद्मापतेर्वैदेही-
११. व सधूद्धहस्य गृहिणी गौरीव गौरीपतेः । तस्य क्षोणिमणेर्बभूव महिषी भव्या भवानीसमा राज्ञी लालमती सती गुणवती
१२. प्रायो रतिर्भारती ॥ पौरन्दरी दिगिव नूतमानुविम्वं सौन्दर्यकाननगजानन-मम्बिकेव । पुत्रं पवित्रमथ सिद्धिनृसिंहमल्लं
१३. सा राजपुत्रतनया जनयाम्बभूव ॥ येनाकारि विपक्षपक्षमलद्दशां दृग्वारिभि र्वारिधिर्येनाधारि जगत्त्रयोपरि शरच्चन्द्रावदा-
१४. तं यशः । बाल्योपक्रम एव विकमवतस्तस्याधुना पौरुषं श्रीमत्सिद्धिनृसिंहमल्ल नृपतेर्योद्धुं समर्थोहकिः ॥ यद्भूमीपालग-
१५. ङ्गाजलमिलयशः पूरकर्प्पूर पूरै ब्रह्माण्डे पाण्डरेऽस्मिन् समजनि रजनीनायको निः कलङ्क । तत्कि भूसिवको ऽभून्मु-
१६. खकमलमिषादेप यस्यामृतांशुः सोयं दीर्घायुरास्तामधिधरणिवणी सिद्धि-पूर्वो नृसिंहः ॥ दानाल्पीकृतकल्पवृ-
१७. क्षगरिमा सीमा च तेजस्विनां श्रीमानद्भुतकीर्तियुक्तमहिमा मीमानुजःसाहसे । दोर्द्दण्डद्वयचण्डिमान्तगलितप्रत्यर्क्षिपृथ्वी-
१८. पतिः श्रीमत्सिद्धिनृसिंहमल्लनृपति र्व्वर्वन्ति सर्वोपरि ॥ प्रातिष्ठा च युधिष्ठिरा-धिकतरं निष्ठा वशिष्ठाधिका कीर्तिः कार्त्तिक–

१९. कृत्तिकापति मतिस्तस्याधिका वर्तते । वाणीव्याससमा रमा स्थिरतमा रामा
भिरामाकृतिः श्रीमत्सिद्धिनृसिंहमल्लनृपतेः किं-
२०. न्नाम यन्नाद्भुतम् । कदाचिदेतेन महोन्नतेन मठःकृतःकोपि धनैरनेकैः ।
श्रीबालगोपालविलासभूमिर्व्वैकुण्ठतामेति धरा ज-
२१. गत्याम् ॥ यो मेरुमन्दरमहेन्द्रमाद्रि विन्ध्यकैलाशशैलशिखरभ्रममातनोति ।
किञ्चास्य हेमकलशानवलोक्य देवै सन्दि-
२२. ह्यते कनकधामनि पर्वतेन्द्रे ॥ हर्षान्नेपालवर्षे स्वरशरतुगैरङ्किते फाल्गुणीये
पक्षे प्राप्तेऽवलक्षेऽमरगुरुदिवसे शङ्करर्क्षे
२३. दशम्यां चक्रे जाम्बूनदीयेग्गुरुतकलशैर्मास्वरैरेकविंशे नेपालक्षोणिपालः प्र-
थितभुजवलो भूषणं तत्मठस्य ॥ यु-
२४. द्धारम्भः कृतोऽस्मिन्नपि शुभदिवसे शत्रुभियुर्युद्धशौण्डैदंष्टैः कोटोवरुद्धः
कुटिलनृपमटैरद्भुतैः कोटिसंख्यै ॥ लीलामात्रेण श-
२५. त्रुनपनयत तदा पार्थिवः पार्थतुल्यः कोटंनिर्मोचयित्वा नमुचिरिपुरिवानन्द
सन्दोहमापः ॥ राजसूय शवारब्धो मध्यस्थेन
२६. महाभूजा । विशिष्य शेषनागोपि नशक्तो यस्यवर्णने ॥ आचार्यो यत्र म-
र्यादा धैर्योदार्य्यमहोदधिः विश्वनाथ उपाध्या-
२७. यो विश्वनाथ इवाभवत् ॥ यो मेरुमन्दर इवातिगुर्ग्गरिम्ना योसो महा
र्णव इवातिमहामहिम्ना । यो व्यासवद्विविध-
२८. वैदिकमन्त्रपाठै योनिष्ठया भुवि वशिष्ठमहर्षिकल्पः ॥ यत्रायाता यञ्ज
यूकाः कियन्तः
२९-३०. नानादिग्भ्यः पण्डितैरभ्युपेतं सत्रे तस्मिन् मण्डपं मण्डिपतं यैः । द्वाः
स्थातारो कल्पितो तत्र सत्रे द्वौ द्वौ द्वारिदेवर्षितुल्यौ । भूषाभू
तो विद्विषान्दर्पहन्तानेतातेषां विश्वनाथो मनीषी ॥ आरब्धे
शिविना नृपेण विधिना सत्रे पुरा गौरवाद-
३१. ग्नेः खाण्डव खण्डनं समतनोद्गाण्डीवकोदण्डवान् । अस्मिन् सिद्धिनृ
सिंहमल्लनृपतेः सत्रेधृताजीर्णतः किम्भूयासमिती-
३२. व मुन्वति शिखी वाष्पानि धूमच्छलात् ॥ चत्वारिंशछिनान्यासीन्महा
होममहोत्सवः । श्रीमत्सिद्धिनृसिंहेन कलिकर्णेन कारि-
३३. तः सम्भारः सर्ववस्तूनां राजसूये यथाश्रुत । तथेव तत्र सत्रेऽपि जातं
तदधिकोपिवा । रत्ने स्वर्णे गवादौ करितुरगधने
३४. भूषणे दिव्यवस्त्रे दासीदासे निवासे विविधरसमये भक्षमात्रे पवित्रे ॥
चत्वारिंशद् दिनानि क्षितिपकुलमणेरास्यपद्मे प्रसन्ने
३५. वाणी तत्रोल्ललास प्रतिपलमधिका देहिदेहीति मात्रा ॥ पामरी वल
यकुण्डलादिकं दृष्टपूर्वमपि येन न क्वचित् । तेन तत्र नृपतेः



३६. प्रसादतो भिक्षुणा निजतनौ समर्पितम् ॥ दिव्यान्येव गृहाणि दिव्यवसु-
धा रत्नानिदिव्याम्वरं दिव्यान्येव विभूषणानि सदयो
३७. दिव्यानि रत्नानि च । नेपाले प्रचरन्ति यानि वसुधावस्तूनि दिव्यान्य
सौ श्रीमत्सिसिद्धनृसिंहमल्लनृपतिः सर्व्वाणितान्यर्पयत् ॥ या
३८. नि दृष्टानि वस्तूनि न श्रुतानि कदाचन । तानिदत्तानि सर्वाणि तत्र
सत्रे महीभुजायेनाकारि जगत्त्रयोपरि मठो होमोपि कोट्या-
३९. हुतिर्द्दत्ता स्वर्णशतद्वयी प्रतिदिनं किं किं न दत्तंधनम् । दत्तस्तण्डुलपर्व्वतेपि
विधिना कल्पद्रुमोप्यद्भुतः । श्रीमत्सिसिद्धनृसिंह मल्ल-
४०. नृपतिः कर्णावतारो ध्रुवम् ॥ विद्यावनतः कयिन्तो विविधिगुणमृतःकेपि
विद्याविहीना नानादिग्भ्यः समेताः श्रुतनृपतिगुणाः
४१. भिक्षवो लक्षसङ्ख्याः । तेषामन्नेः सुवर्णैः सुललितवसनैर्भूषणाद्यैर्द्वारिधं
वारयित्वा नृग इवमुमुदे देवकल्पोव-
४२. नीन्द्रः ॥ कर्णः कन्यातनूजो वलिरपि विदितः किन्तु दैतेयजन्मा पाषाणां
देवतानांमणिरजनि महादारुदेवद्रुमोपि । भ्रान्तो
४३. राजा नृगोपि प्रथितभुजवलो भार्गवो भातृहन्ता कोन्यो धन्यो वदान्यो
जगति विजयते सिद्धिपूर्वो नृसिंहात् ॥ नृत्यानि गीता-
४४. नि मनोहराणि वाद्यानि हृद्यानि च कोतुकानि । अन्नानि वस्त्राणि विभू-
षणानि सर्व्वाणि जातानि च तत्र सत्रे ॥ यावच्चन्द्रदिवाक-
४५. रावुदयतो यावन्महीमण्डलं यावत्पर्व्वत नन्दिनी पशुपतेरर्धाङ्गमालिङ्गति ।
यावज्जन्हुकलिन्दयोरपिसुते तावद्वरीव-
४६. र्त्ततां श्रीमत्सिद्धिनृसिंहमल्लनृपतेरेषा यशोवल्लरी ॥ अथ नेपालभाषा
लिख्यते ॥ स्वस्ति ॥ सम्वत् ७५७ फाल्गुनमासे शु-
४७. क्लपक्षे दशम्यान्तिथौ आर्द्रापर पुनर्व्वसनुनक्षत्रे आयुष्मान्योगे वृहस्पति
वासरे थ्व कुन्हु कोट्याहुति यज्ञ याङन देवस्थापन याङ
४८. न नीय छपु गजुरी छास्यं देव दयकाव आय प्रत्याय दुन्ता रोव न्हस ७
पोविवु रोव न्हस ७ पैयि स्व ३ खोपा गारवु रोव श्रंपि १४ तवध-
४९. रवकर्ष छि १ थंथछें वाटिका थ्वतेया वरसानन नित्यपूजा निश्राव होम
याङन बुसाधन वुगंयातन इन्द्रयातन मतं छ्युकेखुनुतो धा-
५०. रे कार्त्तिक लछि धेर प्रछि धारेण जलदिवा छवयके कृष्णाष्टमी कुन्हु
चाकमतं छवयके थ्वते छवयतके जुरो, भूय रोव गु ९ यंप्याको वु
५१. रोव च्या ८ काका पलि रोव श्लनंसि १२ गुस्तर वो को वुरोव न्हस
खोमोरवु थ्वतेवुया वरसानन फाल्गुन शुक्लपूर्णमासी प्रतिपत्संन्धि
५२. दोहोलयात्रा ज्येष्ठशुक्लपूर्णिमास कुन्हु स्नानयात्रा आषाढशुक्ल द्वादशी
कुन्हु शयनपूजा देवशयन याचके श्रावण शुक्ल द्वादशी कुन्हु प-

५३. चित्रारोहण श्रावण कृष्णाष्टमी कुन्हु जन्माष्टमीपूजा चाकलमत
छ्वयके कार्तिक शुक्ल द्वादशी कुन्हु उत्थान पूजा पूजावारि ब्रा-
५४. म्हणयातयसंगुदफ ९० जाक्य विय थ्वछेपतक जुरो। भूय रोव श्लंखु १६
थांवु रोव स्वं ३ थ्वंवु थ्वतेया वरसानन कार्तिक लछि
५५. चेकन कुलषु ६ श्लछिनीयप्वात १२० चाकमतं छ्वयकेमाल भूयनिश्राव
दक्षिणायात मंगाडाव तङारोव ङा ५ हर रोवु थ्वते ६
५६. दत के जुरो ॥ शुभं भवतु सर्वेषां ॥

★★★

(४०)

## पाटन महादेव गाउँ चंडपाटेश्वर महादेवका निरको शिलालेख

### मूलपाठ

१. स्वस्ति ॥ शिव --- तलं शान्तं शिवा-
२. शिवोत्तमः। शिवमेकं परशान्त प्रण-
३. मामि शदाशिवं ॥ श्रेयोस्तु ॥ सम्वत् ७५८ आ
४. षाढमासे कृष्ण पक्षे ॥ अमावाश्यान्तिथौ,
५. पुनर्व्वसुनक्षत्रे ॥ हर्षनयोगे आदित्यवास
६. रे ॥ थ्व कुन्हु श्रीथंव्काठस्थाने नवुग्वाठ श्रीम-
७. त् श्रीश्रीश्रीमहारुद्र भट्टारकाश अग्र----
८. ----- साम्हं ------ श्रीश्रीपरमेश्वर पूज --- म्हं
९. रावरजुश ---- दान यायव यंजमाल जुरो, थ्व
१०. थ्व श्रीपरमेश्वर ---- थंव्काठ या --- था ---
११. --- लंथाता ---- सास्त्रया --- रोने जुरो ॥ पुन मा-
१२. षा थो मादेव --- पि --- न ---- पर ---
१३. मेश्वरस निग्रह जुरो ॥ जतो धर्म्म ततो जय ॥
१४. शुभमस्तु ॥ सर्व्वदा कल्याणस्तु ॥

अनुवाद

कल्याण होस्। कल्याण गर्ने ----- शान्तस्वरूप, सदाशिव महादेवलाई प्रणाम गर्दछु।



कल्याण होस्। ने.सं. ७५८ (वि.सं. १६९५) आषाढ कृष्ण अमावास्या आदित्यवार पुनर्वसुनक्षत्र हर्षणयोग, यस दिन श्रीथंव्काठ स्थान नवुग्वाठका श्रीमान् श्रीश्रीश्रीमहारुद्र भट्टारकको सामुन्ने ---- गाईवटा ----- श्रीश्रीपरमेश्वरको पूजा ---- रावरलाई (पुजारीलाई) ---------- दान दिनु पर्छ। यी परमेश्वर ----- थंवकाठका ----- शास्त्र ----- जीर्णोद्धार गर्नू।
फेरि वेहोरा ----- यी महादेव ---- गरे भने परमेश्वरको निग्रह होस्। जहाँ धर्म छ, त्यहाँ जय हुन्छ। शुभ होस्। सधैँ कल्याण होस्।

★★★

(४१)

## पाटन यवुटोल गुह्य बहालभित्र क्वापालदेवताका घरको भित्तामा रहेको शिलालेख

### मूलपाठ

१. स्वस्ति ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७५९ वै-
२. शाख शुक्ल ॥ एकादश्यां तिथौः ॥
३. हस्तनक्षत्रे ॥ वज्रयोगे ॥ शुक्रवार
४. थ्व कुन्हु श्रीवैश्रवर्ण्ण माहाविहार ये-
५. ता श्रीमत् श्री ३ साक्येमुणि भर्टार-
६. काशके पृष्टस आलंकाल सूव-
७. ण्णरिपित याङन पञ्च तथागतः व-
८. ज्रपाणि पद्मपाणि थ्वते प्रतिमा द-
९. यकं, सूवर्ण्ण तोरण द्वहरपा जुरो
१०. थ्वनयंता श्रीदिगिशं स्वण्णरिपि-
११. त अग्निज्वारा तोरण द्वहरपा
१२. दिन जुरो ॥ थ्वतेया यजमान स-
१३. येव महाविहार खण्डचोक येता-
१४. गृह शाक्यवंश श्रीदेवजुत्व भ्रा
१५. त्य श्रीदेवज्योतिजु स्वपुत्र श्रीअ-
१६. मृत्तजोतिजु थ्व सक त्रयभञ्जनं-
१७. द्वहोरपा जुरो ॥ शुभं मंगल भवतु ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ७५९ (वि.सं. १७१६) वैशाख शुक्ल एकादशी शुकवार हस्तनक्षत्र वज्रयोग, यस दिन श्रीवैश्रवण महाविहार येतां ( ) श्री ३ शाक्यमुनि भट्टारकको पछाडि अलंकार सुनले मोलम्वा लाई पञ्चतथागत वज्रपाणि पद्मपाणि यति प्रतिमा बनाई सुनको तोरण चढाइयो । यसको यंता ( ) श्रीदिगिमा सुनको मोलम्वालाई अग्निज्वाला तोरण चढाइयो ।

यसका यजमान सोही महाविहार खण्डचोक येतागृहका शाक्यवंश श्रीदेवजु, भाइ श्रीदेवज्योतिजु, आफ्ना छोरा श्रीअमृतज्योतिजु, यी सबै तीनजनाले चढाइएको हो । शुभ मंगल होस् ।

★★★

(४२)

# नासलचोकको सिद्धिनरसिंहमल्लको शिलालेख

ललितपुर-दरबारको नासलचोकको पश्चिमपट्टि भित्तामा यो शिलापत्र टाँसी राखिएको छ । यहाँ ने.सं.७६१ दिइएको छ ।

संशोधनमण्डलद्वारा *अभिलेख-संग्रह* ६ भागको १० पृष्ठमा यो छापिएको छ ।

१. ॐ नमः श्रीभवान्यै ॥ भक्तस्वष्पददायिनी भवनवकीडाकलासाक्षिणी दै-
२. त्यासृरजलपायिनी स्वनृयशोधराधराशोभिनी । पाषण्डाशयखण्डिनी धरणि-
३. भृच्छङ्गाटवीमण्डिनी मोहध्वान्तविनाशिनी सुरभयच्छेदोत्सवोद्वासिनी ॥ दृष्य-
४. द्दानवदारिणी परिलसत्परीन्द्रसञ्चारिणी प्रोद्यत्पन्नगधारिणी विधुकला-
५. भाला जगत्कारिणी । संसाराम्वुधितारिणी निजपदासक्तधिसंहारिणी शम्भुकोड-
६. विहारिणी विजयते शैलाधिराजात्मजा ॥ तत्पादाम्वुजनिः सृनामृतरसप्राय प्रभाक्षा-
७. लितप्रोद्यन्मोहधनान्धकार पटलप्रव्यक्तबोधोदयः । शान्तक्लान्तपराभवायतधरा-
८. पौरेयचूडामणी राधाकान्तनितान्तचिन्तनंचमत्कारी विचारी सतां । दानै
ष्कर्ण्णसमो गु-



९. णैरनुपमो रूपै रतीवल्लभो धेय्यैर्दाशरथिष्प्रतापततिमिश्चण्डः प्रचण्डा०शुकः। गाम्भीर्य्यें-
१०. र्ज्जलधिर्व्विचारनिचयैर्गीर्वाणगोष्ठीगुरुः श्रीमत्सिद्धिनृसिंहमल्लजगती जानिस्स-
११. मुज्जृम्भते ॥ येनादायि मुरारयेऽश्मसदनं सर्व्वाय वापीद्वयं पुत्राया वनिपालता हुतवह-
१२. ज्वालाय कोट्याहुतिः । विप्रायाथ धरागजाश्चसदनस्वर्ण्णान्निकल्पद्रुमा लक्षप्रस्थमिता-
१३. क्षताष्पटचया हैमाश्च सप्ताब्धयः ॥ तारानाथपदार्थसप्तवलिते नेपाल सम्वत्सरे
१४. स्फुर्ज्जत्फाल्गुनकृष्णपक्षविषये हृद्यद्वितीयातिथौ । हस्ते चन्द्रसुते शुभे शुभपले दे-
१५. वीपदप्रीतये तेन स्वर्ण्णविभूषितं गृहमिदं भव्यास्पदं कारितं ॥ सम्वत् ७६१ फाल्गुन
१६. कृष्ण द्वितीया हस्तानक्षेत्र, शुभयोग वुधवार कुन्हु श्रीश्रीश्रीइष्टदेवता प्रीतिन
१७. श्रीश्रीजयसिद्धिनरसिंहमल्ल देव ठाकुरसन डातंपोलल देवर दोयकं सुवर्ण्ण कल-
१८. शध्वजावरोहन याङन प्रतिष्ठा याङा दिन जुरो ॥ शुभमस्तु ॥ सर्व्वदा ॥

## अनुवाद

श्री भवानीलाई नमस्कार । भक्तपुरहरूलाई स्वर्ग प्राप्ति गराउने, संसारका नयाँ क्रीडा कलाका साक्षी भएकी, दैत्यहरूको रगतलाई पानीजस्तै पिउने भएकी, आफ्ना पतिका कीर्तिरूपी धारा धर्नाले सुहाएकी, नास्तिकहरूको खराब मनसायलाई हटाउने, हिमालको टाकुराको वनको शोभा बढाउने, अज्ञानरूपी अन्धकार नाश गर्ने देवाहरूको भय हटाउनाले मराएकी, घमण्डी दानवहरूलाई नष्ट पार्ने, राम्रो --- चढ्ने भएकी, सलबलाउँदा नागहरू लिने भएकी, निधारमा चन्द्रमाको कला भएकी, संसारको सृष्टि गर्ने, संसाररूपी समुद्र तार्ने भएकी, आफ्नो पाउ पर्न आएकाहरूको मनको संताप हर्ने भएकी महादेवको काखमा रमाउने पार्वती ठूला हुनुहुन्छ ।

पार्वतीको पाउरूपी कमलबाट निस्केको अमृतरसले भरिएको ज्योतिले अज्ञानरूपी बाक्लो अन्धकार हट्नाले ज्ञानको उदय भएका, शान्त भएकी थाकेको, हेलाले दवाइएको पृथ्वीको भारी बोक्ने (राजा) हरूमा शिरोमणि भएका, श्रीकृष्णको अत्यन्त भक्तिले गर्दा चमत्कारपूर्ण भएका, सज्जनहरूको हेरविचार गर्ने भएका, दान दिनामा कर्णजस्ता, गुणहरूले बेजोड भएका, रुपमा कामदेवजस्ता, धैर्यमा रामचन्द्रजस्ता, प्रतापमा सूर्यजस्ता, गम्भीरतामा समुद्रजस्ता, विचारमा वृहस्पतिजस्ता श्रीसिद्धिनरसिंहमल्ल राजा ठूला हुनुहुन्छ ।

जसले कृष्णलाई ढुंगाको मन्दिर चढाउनु भयो । महादेवलाई दुइटा पोखरी चढाउनु भयो, छोरालाई राज्याधिकार दिनुभयो । अग्निलाई कोटिहोमले तृप्त पार्नु भयो, ब्राम्मणलाई जग्गा, घर, हात्ती, घोडा, सुनका अन्नका कल्पवृक्ष, लाख पाथी चामल, कपडाको थुप्रो र सुनका सात समुद्र दान दिनु भयो ।

ने.सं. ७६१ (वि.सं. १६९७) फाल्गुन कृष्ण द्वितीया बुधबार हस्तनक्षत्र शुभयोगमा उहाँले देवीलाई प्रसन्न पार्न सुनले सिँगारिएको यो भव्य मन्दिर बनाउन लाउनु भयो ।

ने.सं. ७६१ (वि.सं. १६९७) फाल्गुन कृष्ण द्वितीया बुधबार हस्तनक्षत्र, शुभयोग बुधबारको दिन श्री ३ इष्टदेवतालाई प्रसन्न पार्न श्रीश्रीजयसिद्धिनरसिंहमल्लदेव ठाकुरले पाँचतले देवल बनाउन लगाई सुनका गजुर र ध्वजा चढाइकन प्रतिष्ठा गर्नु भयो । सधैँ शुभ होस् ।

व्याख्या

सिद्धिनरसिंहको शासनकालमा ललितपुरको विकास जसरी हुँदै गयो, त्यो निकै उल्लेखनीय छ । उनले ललितपुर राज्यको रक्षाव्यवस्था मजबुत पार्नुको साथै वैदेशिक सम्बन्ध बढाए । विशेष गरेर गोरखासँग ललितपुरले बलियो सम्बन्ध जोड्यो । आर्थिक र सांस्कृतिक दृष्टिले पनि यस बेला ललितपुरको निकै उन्नति भएथ्यो ।

सिद्धिनरसिंह धार्मिक प्रकृतिका थिए । यसो हुँदा उनले विश्वेश्वर मन्दिर कृष्ण मन्दिर आदि अनेक देवमन्दिर बनाउन थालेथे । यसरी राजकाजका साथै धार्मिक कियाकलापतिर पनि उनको मन उत्तिकै लहसिएको थियो । आफ्नी इष्टदेवता भवानीलाई पाँचतले देवल बनाई राख्न लाएको यस अभिलेखले पनि उक्त कुराको पुष्टि गर्छ ।

यो अभिलेख राखिएको ताका सिद्धिनरसिंह बूढा भइसकेका थिएनन् ३४ वर्षका मात्र थिए तर उनको मन यसबेला राजकाजभन्दा धार्मिक गतिविधितिर ढल्किन थालेको संकेत यस अभिलेखबाट पाइन्छ । यहाँ सिद्धिनरसिंहमल्लले आफ्ना छोरा श्रीनिवासमल्ललाई राजकाजको भार केही सुम्पिसकेको उल्लेख छ । यस बेला श्रीनिवासमल्ल कच्चै उमेरका थिए । श्रीनिवासमल्ल यसबेला १३ वर्षका मात्र थिए, तैपनि यस अभिलेखमा *येन पुत्रायावनिपालता अदायि* भनी लेखाइएको छ । छोराले पनि राजकाजको अनुभव पाउँदै जाओस् भन्ने अभिप्रायले मल्लराजाहरू आफूसँगै छोरालाई पनि संयुक्त शासक घोषित गर्ने गर्दथे । यस्तो चलन हुँदा सिद्धिनरसिंहमल्लले पनि आफ्नो छोरालाई राजकाजको अधिकार सुम्पेका हुन् । साथै, सिद्धिनरसिंहले राजकाजबाट हटी धार्मिक कियाकलापमा संलग्न हुने विचार केही मात्रामा यसताका लिइसकेको संकेत यस अभिलेखबाट थाहा पाइन्छ ।

★★★



(४३)

## पाटन क्वबहालटोल इटुंबहालको शिलालेख

### मूलपाठ

१. ? श्रेयोऽस्तु ॥ सम्वत् ७६१ आषाढ शु-
२. ल्क ॥ षस्टयान्तिथो ॥ हस्तनक्षत्रे ॥
३. शिवयोगे ॥ आदित्यवासरे ॥ थ्व कुन्हु
४. श्रीकोवाहार थोथ्व विहार वचाचार्य्यः
५. श्रीजयराजसिंहजुसः भायृया देवकि मयि
६. माताजुस उभयसन स यव विहारया
७. यंतासखे धर्म्मसारा वो लंछेदि येंतास
८. फले द्वयक पतिस्था याङा दिन जुरो ॥
९. फले जुको स यवो देवकि मयि मा-
१०. त्राजुस विस्ययकं थव पुत्र कु-
११. रिन द्वयका जुरो ॥ शुभमस्तु ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७६१ (वि.सं. १६९८) आषाढ शुक्लषष्ठी आदित्यवार हस्तनक्षत्र शिवयोग, यसदिन श्रीकोबहाल, थोथ्वविहारका वज्राचार्य श्रीजराजसिंहजु पत्नी देवकी मयी माताजु दुवैले सोही विहारको पश्चिमपट्टि धर्मशाला र ----पश्चिमपट्टि पाटी बनाई प्रतिष्ठा गरियो । पाटी जनि सोही देवकी मयी माताजुका ---- आफ्ना छोरा कु -- रीले बनाइएको हो ।

शुभ होस् ।

★★★

(४४)

## पाटन नबहिलटोल यताबहालभित्र क्वापालदेवताको शिलालेख

### मूलपाठ

१ ? श्रीयस्तु सम्वत् ७६१ वैसाष मासे
२. कृष्णपक्ष: चतुदस्या तिथ्व, असुनि-
३. नक्षते. आयुमान् प्र सोभागे जो-
४. ग्य बुद्धवासरे : थ्व कुन्हु ॥
५. श्रीश्रीदेवताल बुद्ध भतार-
६. सके ॥ दानपति: यंतावहा-
७. ल येताछे हाकुसिंह भारो
८. सेन: चिकनअतन चिङा
९. दिन जुरो: शुभ: साक्ष-
१०. वंस श्रीचन्द्रजु. थ्वलयाया
११. बेरस ॥ मेसरासिगते
१२. सवितेलि ॥ स पव (राशि)
१३. गते चन्द्रमसि -----

### अनुवाद

कल्याण होस् । ने.सं. ७६१ (वि.सं. १६९८) वैशाख कृष्ण चतुर्दशी बुधवार, अश्विनी नक्षत्र, आयुष्मान् उप्रान्त सौभाग्ययोग, यस दिन श्रीश्री देवताल बुद्ध भट्टारक कहाँ दानपति यंताबहाल येताछेका हाकुसिंह भारो तेलिया ईंटले छाउने काम गरे । शुभ । शाक्यवंश श्रीचन्द्र थरपाको बेलामा । मेषराशिमा सूर्य रहेमा सोही राशिमा चन्द्रमा रहेमा

★★★

(४५)

## चोभारको सिद्धिनरसिंहमल्लको पालाको अभिलेख

१. ॐ नमोलोकेश्वराय ॥ दयया परिपूर्णाङ्ग धर्मकायप्र-
२. भास्वरं । अनेकजिनसंघानां देवं लोकेश्वरं भजे । स देव:



३. निजसंघेशो हरिशंकरमन्त्रिणं । देवभक्तिकरं पाया-
४. त्वपरमार्थप्रदर्शनं ॥ अब्देस्मिन्छशिषणमुनां सति गते मासे
५. सिते ज्येष्ठके हस्ते मे दशमितिथो बुधदिने देवालये सु-
६. न्दरे । मन्त्री भूमिमुजो गुणी सुजिरणो देवस्य प्रीत्याकरो-
७. द्धामेनैव समं सुवर्ण्णकलशस्यारोहणं सध्वजं ॥ वंशे वरे
८. समभवज्जिरणस्य तस्य सूनुर्द्धनी समरजिद्धरिकृष्णनामा
९. वंशीधरो गुणनिधिस्तनयोस्य जातस्तस्यैव वैरिमथनो हरि-
१०. शंकरोभूत् ॥ ॥ सम्वत् ७६१ ज्येष्ठ शुक्ल दशमी हस्तन-
११. क्षत्र बुधवार थ्व कुन्हु जिरण प्रमाणन स्वत पोलल
१२. देवर दयकं लुं गजुरि छाया अहोरात्र होम याङ श्री २
१३. सिद्धिनरसिंहमल्ल श्री ३ निवासमल्ल उभय विजय ाचकाव
१४. ॥ ॥ दशमी कुन्हु बोसाधन यायमार ॥ न्हवन कुन्हु
१५. पूजा जो १ लंडपात १ धरि दं ४ घेर कस्ति साख-
१६. र दं ४ ॥ भेरो दंह बु स्वाधिकार जुको ॥ जव ३ मु-
१७. सानद्धको वु ॥ पोशति बु, स्वादिकाल जुको सेल्होयात जुरो
१८. थसिववने वसुजुया हितिकोवु स्वाधिकार जु-
१९. को ॥ नरसिंहजु, पुनरामजु, विश्वसिंह जु
२०. धनदेवजु बदे, थ्वतेसेन चोस्यं तको निस्तर-
२१. पंचिन्ता यायमार, देवरस मारण थनसा-
२२. पंच महापातक । गोम्हनं निदान या-
२३. तसा माहापुण्य राक जुरो ॥ शुभमस्तु ॥

### अनुवाद

लोकेश्वरलाई नमस्कार । करुणाले सारा अंग परिपूर्ण भएका (करुणामय) धर्मकार्यले गर्दा चहकिला भएका अनेक बुद्धहरूमा प्रमुख भएका लोकेश्वरको सेवा गर्दछु ।

बुद्ध संघका प्रमुख ती देवता लोकेश्वरले देवताको भक्ति गर्ने, वास्तव कुरा देख्ने हरिशंकर मन्त्रीलाई रक्षा गरुन् ।

ने.सं. ७६१ (वि.सं.१६९८) ज्येष्ठ शुक्ल दशमी बुधवार हस्तनक्षत्रको दिन, राजाका मन्त्री, गुणी जिरणले होम गरीकन सुन्दर देवालयमा सुनको गजुर, ध्वजा चढाउने काम गर्नु भयो ।

उहाँ जिरणको असल कुलमा उहाँका छोरा धनी लडाईं जित्ने हरिकृष्ण हुनुभयो । उहाँका छोरा गुणी वंशीधर हुनुभयो, उहाँका छोरा, शत्रुको मथन गर्ने हरिशंकर हुनु भयो ।

ने.सं. ७६१ (वि.सं. १६९८) ज्येष्ठ शुक्ल दशमी बुधवार हस्तनक्षत्र, यसदिन जिरण प्रमानले तीन छाने मन्दिर बनाउन लगाई अहोरात्र होम गरीकन सुनको गजुर चढाउनु भयो । श्रीश्रीसिद्धिनरसिंहमल्ल र श्रीश्रीश्रीनिवासमल्ल दुवै जना पाल्नु भएको थियो ।

दशमीको दिन *बुसाधन* गर्नुपर्छ । न्हवन, (महास्थान) को दिन पूजा सामग्री १, लुगा १. ४ दम्मको दही, ६ दम्मको घिउ मह सखर चढाउनु पर्छ । मेरादंह खेतको इलाका जति, जब मुसानद्वको खेत पोश्ति खेतको इलाका जति मरम्मत जीर्णोद्धारको लागि राखिए । थसिव वनेवसुजुको हितिको खेत पनि गुठी राखियो ।

नरसिंहजु पुनरामजु, विश्वसिंहजु, धन देवजु बाँडा, यति जनाले माथि लेखे अनुसार गर्नुपर्छ, हेरविचार गर्नु पर्छ । देवलमा तलमाथि परे भने पन्च महापात लागून् । कसेले हेरविचार गरे भने उनलाई ठूलो पुण्य होस् । शुभ होस् ।

व्याख्या

काठमाडौँ उपत्यकामा प्रमुख देवताको गणना गर्दा चार नारायण, चार भगवती, चार गणेश आदि चार सङ्ख्यालाई प्रमुखता दिने प्रचलन छ । यसै परिपाटी अनुसार उपत्यका र आसपासका चार प्रख्यात आर्यावलोकितेश्वरहरूमा एक चोभारका आदिनाथ लोकेश्वर पनि हुन् । यस अभिलेखमा ललितपुरका जिरण प्रमानले ने.सं. ७६१ (वि.सं. १६९८) मा चोभारका लोकेश्वरको तीन तले मन्दिर बनाई सुनको गजुर चढाएको कुरा परेको छ । यस अभिलेखमा नी मन्त्री खलकको केही वंश वर्णन पनि गरिएको छ ।

उक्त मन्दिरको गजुर चढाई पूर्ण गरेको अवसरमा ललितपुरका राजा श्रीश्रीसिद्धिनरसिंह र श्री २ श्रीनिवासमल्ल उपस्थित भएको वर्णन यस अभिलेखमा गरिएको छ । यसबाट ने.सं. ७६१ ( वि.सं.१६९८) मा ललितपुरमा बाबुछोराको संयुक्त शासन चलिरहेको थियो भन्ने कुराको पुष्टि हुन्छ । ने.सं. ७६१ को माथि भएको सिद्धिनरसिंहको अभिलेखमा उनले छोरालाई राजकाजको भार सुम्पेको कुरा *येनादायि ---- पुत्राया वनिपालता* भनी लेखाइएको छ । उक्त कुराको पुष्टि यस अभिलेखबाट पनि भएको छ । यस बेला सिद्धिनरसिंह ३५ वर्षका र श्रीनिवासमल्ल १४ वर्षका मात्र थिए, तैपनि सिद्धिनरसिंहले छोरालाई राजकाजको भार सुम्पिसकेका थिए ।

★★★

(४६)

## पाटन थवुटोल पाटीको शिलालेख

### मूलपाठ

१. स्वस्ति ॥ सम्वन्नेपालिक ७६२ माघमासे शुक्लपक्षे प्रतिप-
२. दि तिथौ धनिष्ठानक्षत्रे वलियानयोगे शुक्रवासरे थ्व कुन्हु
३. थंवु तुथिलखु तोलस न्हव दयाव चोङ फलेसङाव थंवु-
४. वखनिम्हं श्रीमधुसूदनदेव प्रमुखन उंथि वन्ताया ब्राम्हण-
५. पनि तुथिखा छेंया मडिछेंया ब्राम्हणजु प्रमुखन वंधु छेंया



६. गोबिन्द भारो प्रमुखन श्रेष्ठ भारोपनि त्वालया पिंश प्र-
७. मुखन संमतन फले ल्होङा संतोषन जुरो ॥ लहवस फचा-
८. ग्निया मर्ज्जातन त्वालन विचार याय दयकं तयास त्वा-
९. लकतक मछालाव कचंगल दङ आव थ्व संवत्सर-
१०. पालिया ---- त्वालं कतकन विचार याङन श्रीश्रीराजस-
११. इनाप याययमाल कंत याङायाथे तुथि मखवमखु-
१२. न 'थिस्यं' सने मदु तुथिमुलस 'घ' तया तेमदु वाकछि
१३. अतयाम 'लंख' साल तुति सीय मदु लाछस फले-
१४. नकेछित स 'वा' याय दु 'कक ऋमुलै' मदु सो आ-
१५. दिनध्य स्मर पाय मदुक, चित्पासमलंस्य
१६. श्रीश्रीराजदण्ड मोहर टंका ४ त्वालकतक-
१७. न यनाप यात्र वन्नेमाल इनापयात मो-
१८. वनसा ब्रम्हहत्यादि पञ्चमहापातक
१९. लाक ख्वाततयमदु जुरो ॥ शुभ ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७६२ (वि.सं. १६९८) माघ शुक्ल प्रतिपदा शुक्रवार धनिष्ठानक्षत्र वरीयानयोग, यस दिन थंवु तुंथिलखु टोलमा अघिको पाटी बिग्रिएको हुँदा थंबुबखनिम्हंका श्रीमधुसूदनदेव प्रमुख भई, बंधु छेंका गोबिन्द भारो प्रमुख भई टोलका प्रमुख श्रेष्ट भारोहरूको सम्मतिले पाटीको सन्तोषसाथ जीर्णोद्धार गरियो ।

पहिले पञ्चाग्निको मर्यादा अनुसार टोलले नै विचार गर्न पाउने भएकोमा टोलका प्रमुखहरूमा कचिंगल उठेको हुनाले अब यस सालदेखि टोलका प्रमुखहरूले विचार गरी श्रीश्रीराजामा बिन्ती चढाउनु । नियमअनुसार इनारमा छुन नहुनेहरूले छुन हुँदैन । बाटोमा पाटीको इलाकामा धान सुकाउन पाइन्छ, ----- गर्न भने पाइँदैन । ----- सुकाउनु हुँदैन । --- यी नियमको पालना गरिएन भने चार रुपियाँ श्रीश्रीराजदण्ड लाग्नेछ । टोलका प्रमुखहरूले विन्ति गर्न जान्नु पर्छ, विन्ति गर्न गएनन् भने ब्रह्महत्या आदि पन्चमहापाप लागोस् । ---- शुभ होस् ।

★★★

(४७)

## पाटन पुंचलिटोलको महादेवको जीर्ण्णमन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीकृष्णाय ॥ अवाप्य योऽसो वसुदेवसूनुतां, विलासिनी वृन्दविलासलाल-
२. सः । महीमहाभारमजीहरूमहान् शिवं स विष्णुर्व्वितनोतु नोऽतुलम् ॥ कुर्व्वन्नभू
३. द्दिगवला धवलाः स्वकीर्त्या तोयीवराज इति नाम स विप्रराजः । नृत्यक्रिया कुमुदि
४. नीविकचप्रवीण आत्मीयवंशतटिनीशनिशीथिनीशः ॥ श्रीविष्णुशर्म्मा त नयस्स तस्मा
५. दजीजनत्पाधवधर्म्मधारी । जगत्तटिन्यां विललास यस्याऽमलायशोराज मरालराजि-
६. : ॥ येनाऽशिक्षि नटेश्वरातृतनुत्कारुण्यरागं मुदा ॥ प्राणायामवशीकृता कृति मरुनृ-
७. त्यक्रियाकौशलः । यो नन्दीव मृदङ्गवादनपटुर्ग्गाने स विद्याधरो विष्णो स्तस्य वभूव भू-
८. रियशसः श्रीवैद्यनाथः सुतः श्रीवैद्यनाथस्य च तस्य पत्नी, गङ्गेतिनाम्नेक-
९. विवाहिता ऽ भूत् । सदा सदाचारविचार चिन्ता, लज्जाभियुक्ता धवधर्म्मरक्ता ॥ धीराद्योगविधि-
१०. प्रकारचतुराच्छ्रीवैद्यनाथादसो शान्तोऽसावि तया तृतीयातनयः श्रीनाथ शर्म्मासुधीकृत्वा
११. तत्तनुमोटनं नरतनुस्थायीति खे खेलनदक्षक्षेमवरं वरं गुणवतां यस्मै नटेशो
१२. ददौ । नानाश्चर्य्यजनानामनयदतितरां मीनरूपस्य नृत्येर्ग्गम्भीरस्वर्ग गङ्गाकम-
१३. लविमलउत्ताण्डवे ताण्डवेशः । शालिग्रामे स चक्रे यजनरतमनाः स्वस्थ स्वप्ने न लव्वेस
१४. श्रीश्रीनाथसर्म्मा गुणिगणगणना ऽ ग्रीयगो भूसुरो ऽ भूत् ॥ गोपालदेवतनया क्नियाल-
१५. याख्या धारावतीति गुणिनो ऽ भवदस्य पत्नी । लज्जावती गुणवती महती कुलश्रीः प्रज्ञावती द्युतिम-
१६. ती सुदती सती सा । यो विज्ञो विविधप्रकारविलसन्नृत्यक्रियाचातुरो गीतज्ञो मुरजाहताधि-
१७. कपटुः श्रीनाथसेवापरः । श्रीश्रीनाथ उपेन्द्रगेहगतये निर्म्मापयामास स, श्रीकृष्ण-
१८. स्य मठम्मनोहरम्मुं वेश्मान्तरे विस्तरे ॥ विमानो दिवं प्राप्तये स्थापित ष्किं यशः-शीत-
१९. रश्मे रथो मठोयम अहो मेरुकूटष्किमेवं विलेक्य वियङ्गमिविद्याधराद्यैर्व्य
२०. तर्क्कि ॥ अब्दे नेपालजाते ड नलर सतुरगाङ्के व पक्षे ऽ वलक्षे ऋषे पुष्ये तृतीयति-
२१. थिगत उहनोर्धर्म्म आषाढमासे । श्रीश्रीनाथो मखे ऽ न्नातिधनवसनदा नानि कृ-
२२. त्वा मठे ऽ स्मिन् रम्यां श्रीकृष्णमूर्त्तिन्तदतु च कलशं स्थापयामास हेन्मः ॥ अनन्त-
२३. कान्तः कलशेन चारुणा -रुणेन चाग्रे विनतासुतेन यः । तदाऽमुनाऽ सो ह-
२४. रिणा ऽ सितात्विषा मठो रथो ऽ मन्दिरवेखितरः ॥ श्रीनाथभ्रातृपोत्रेण श्रीगङ्गा-
२५. धरशर्म्यणा । वंशालिवर्ण्णनश्लोकाः क्रियन्ते सुधियो धिया ॥ ० ॥ ॥ ० ॥
२६. अतष्परं देशभाषा लिख्यते ॥ श्रेयोऽस्तु सम्वत् ७६३ आषाढमासे शुक्लप-
२७. क्षे तृतीयायां तिथौ पुष्यनक्षत्रे व्याघातयोगे शुक्रवारे खो मिथुनगते
२८. थ्व कुन्हु दिनस श्रीश्रीनाथन प्रासाद निर्म्मान याङान श्री ३ वंशगोपाल मूर्त्ति
२९. प्रतिष्ठा याङा सुवर्ण्ण कलशावरोहन याङा जुरो ॥ ० ॥ वु रोव ३ पे ३ सरिख्वा
३०. त थ्व वुया वरसान बछिन नित्यया नैवेद्य छाय, बछिन सेल्होयात ॥ क्वथरि वुया क्ये फ ४०
३१. कासन ----- कुन्हु --------------- मयातसा पाप लाक जुरो ॥

### अनुवाद

श्रीकृष्णलाई नमस्कार । विलासिनीहरूको थुप्रैसँग रासलीला गर्न मन पराउने जसले वसुदेवका छोरा भई जन्मी पृथ्वीको महाभारलाई नै हरे, ती महान् विष्णुले हामीहरूलाई ठूलो कल्याण दिऊन् ।

आफ्नो कीर्तिले सारा दिशा सफा पारेका, तोयीवराज भन्ने ब्राह्मण भए । उनी नृत्यकलाको विकासमा सिपालु थिए, उनले आफ्नो कुलको इज्जत बढाएका थिए ।

उनका छोरा, -वैष्णवधर्मका अनुयायी श्रीविष्णुशर्मा भए । उनको पनि संसारमा कीर्ति फैलिएको थियो ।

जसले नटेश्वरबाट मानिसको -- हर्न कारुण्यराग खुशीसाथ सिको जसले प्राणायामद्वारा वायुलाई वश पारेका थिए । जो नृत्यकलामा कुशल थिए, नन्दीभैँ मृदङ्ग बजाउन सिपालु थिए । विद्याधरभैँ गाना गाउनामा निपुण थिए, कीर्ति फैलिएका ती विष्णुका छोरा श्रीवैद्यनाथ भए ।

ती श्रीवैद्यनाथकी सधैँ असल आचारविचारमा लागेकी, लज्जाशील, पतिव्रता, गंगा भन्ने विवाहिता पत्नी भइन् । धीर, योगविधिमा चतुर ती श्री वैद्यनाथबाट ती गंगाले तेस्रा छोरा शान्त विद्वान श्रीनाथ शर्मालाई जन्माइन् । गुणी जसलाई नटेश्वरले ---- मनुष्य जुनी नै स्थायी हो भनी नृत्य गर्न सक्ने वरदान दिए ।

जसले मनिरूपको नृत्यले मानिसहरूलाई चकित पारे, आकासगंगाको कमलजस्तो ताण्डवनृत्यमा जो महादेवजस्तै नै छन् । गुणीहरूमा अग्रगण्य भएका ती ब्राह्मणले सपनामा देखे अनुसार शालिग्राममा यज्ञ गरी धर्मकर्म गरे ।

गुणी ती श्रीनाथशर्माकी गोपालदेवकी छोरी, विनयको घर भएकी धारावती भन्ने पत्नी भइन् । उनी लज्जालु, गुणी, ठूलो कुलमा जन्मेकी, बुद्धिमती, चहक भएकी, राम्रो दाँत भएकी र पतिव्रता थिइन् ।

अनेक किसिमका नृत्यकलामा सिपालु, गीत गाउन जान्ने, मुरज (बाजा विशेष) बजाउन कुशल, श्रीनाथ (विष्णु) को सेवामा लागेका श्रीमान् श्रीनाथले विष्णुलोकमा जानको लागि ठूलो घरभित्र श्रीकृष्णको सुन्दर मठ बनाउन लाए ।

यो मठ स्वर्ग जान विमानको रूपमा स्थापना गरिएको हो कि ? अथवा यो मठ कीर्तिरूपी चन्द्रमाको रथ पो हो कि ? अहो सुमेरुको टाकुरो पो यो हो कि ? यसरी आकाशबाट गइरहेका विद्याधरहरूले यो मठलाई देखेर अनेक प्रकारले तर्कना गरे ।

ने.सं. ७६३ (वि.सं. १७००) आषाढ शुक्ल तृतीया शुक्रवार पुष्यनक्षत्रको दिन श्रीश्रीनाथले यज्ञ गरी अन्न धन वस्त्र दानहरू गरी यस मठमा राम्रो कृष्णमूर्ति स्थापना गरे । सुनको कलश पनि चढाए ।

अत्यन्त राम्रो कलशले, अगाडितिर रहेका राता गरुडले र नीला कृष्ण मूर्तिले गर्दा यो मन्दिर ज्यादै सुहाएको छ ।

श्रीनाथका भतिजा विद्वान् श्री गंगाधर शर्माले आफ्नो बुद्धिले वंशावलीको वर्णन परेका यी श्लोक बनाएका हुन् ।

**यसपछि देशभाषामा लेखिएको कुराको अनुवाद ---**

कल्याण होस् । ने.सं. ७६३ (वि.सं. १७००) आषाढ शुक्ल तृतीया शुक्रवार पुष्यनक्षत्र व्याघातयोग, सूर्य मिथुनराशिमा रहेको बेलामा यस दिन श्रीश्रीनाथले मन्दिर बनाई श्री ३ वंशगोपाल मूर्तिको प्रतिष्ठा गरियो, सुनको गजुर चढाइयो । सरिख्वात खेत तीन रोपनी तीन पै गुठी राखियो । यसको आयस्ताको आधाले नित्य नैवेद्य चढाउनु, आधाले हेरचाह मर्मत गर्नू । क्वथरि खेतको ४० पाथी चामलले ---- दिन --- गर्नू । गरेन भने पाप लागोस् ।

★★★



(४८)

## पाटन यखाछेंटोल पिंथबहालको शिलापत्र

### मूलपाठ

१. ॐ नमः बुद्धायः ॥ नमामि पञ्चवुद्धानां-
२. अक्षोभ्यादीकवभव मध्ये वैरोचनो नाथं
३. पञ्चवुद्ध नमोस्तु ते ॥ श्रेयोस्तु ॥ सम्वत् ७६४
४. फाल्गुणकृष्ण ॥ अष्टमी प्र सप्तम्यान्तिथौ अ-
५. नुराधनक्षेत्र ---- नयोगे ॥ सोमवासरे
६. थ्व कुन्हु योषाछे लवन्ता गृह गोपि भारो वलि-
७. राम भारो भात्य सहसन श्रीमत श्रीश्रीसाक्य मु-
८. णि भट्टलकास जिन्नाधालन याङ प्रतिष्ठा याङा
९. दिन जुरो ॥ भायर्या लक्ष्मीमयियां भायर्या मन-
१०. कर्णिका मयियां दिवंगत पुत्री मधना म-
११. यिया नामनं दिवंगत हलिराम भारोयातं
१२. नामनं देव म्हं पि ४ द्वयका जुरो ॥ देव डोय
१३. ल पंने मतेव वहिलिस साल दाते मातेव डो
१४. य ल पनसा साल दोतवम्हयात पञ्चमाहा-
१५. पातक राक जुरो ॥ भिनकेमाल जुरो ॥ शुभ ॥

### अनुवाद

बुद्धलाई नमस्कार । अक्षोभ्य आदि पञ्च बुद्धलाई नमस्कार गर्दछु । बीचमा रहेका वैरोचनलाई पनि नमस्कार ।

कल्याण होस् । ने.सं. ७६४ (वि.सं. १७००) फाल्गुन कृष्ण षष्ठी उप्रान्त सप्तमी अनुराधानक्षत्र ----योग सोमवार, यस दिन योखाछें लवन्तागृहका गोपि भारो, वलिराम भारोले भाइहरू समेत भई श्री ३ शाक्यमुनि भट्टारकको जीर्णोद्धार गरी प्रतिष्ठा गरे । पत्नी लक्ष्मीमयी, पत्नी मणिकर्णिका मयी, दिवंगत छोरी मधनामयी दिवंगत हरिराम भारो यी चारजनाको नाउँले चार देवता स्थापना गरिए । देवता बिगार्न हुँदैन, बहिलमा --- हुँदैन । उक्त कुरा गरे भने पञ्चमहापाप लागोस् । असल गर्नु पर्छ । शुभ होस् ।

★★★

(४९)

## पाटन क्वबहाल टोल चोवुननिको शिलालेख

### मूलपाठ

१. ? ॐ नम श्रीधर्म्मधातवे ॥ आकाशनिर्म्मलोभूत्वा नि-
२. ष्प्रपन्चगुणाश्रये ॥ पन्चस्कन्धसिर सान्तन्तस्मै रूपात्म-
३. ने नमः ॥ नेपार सम्वत् ७६४ माघमास्य कृष्णपक्षे
४. सप्तम्यान्तिथौ ॥ स्वातिनक्षेत्रे --- योगे यथाक-
५. रण मुहूत्तके ॥ आदित्यवासरे ॥ मकरसासि ग-
६. ते सवितरि ॥ कन्यारासिगते चन्द्रमसि ॥ थ्व कु-
७. न्हु प्रतिस्था याङा दिन जुरो श्रीमाणिगराधिप-
८. ति श्रीश्रीसिद्धिनरसिंह मल्ल देव प्रभु थाकुलस
९. पर्यायसं श्री ---- विहार थथोयाक ----
१०. भिक्षु श्रीदेव निजुस पुत्र दानपति वम्हच-
११. र्य्य भीक्षु श्रीनेन्द्रदेव व श्रीमत् श्रीश्री
१२. धर्म्मधातु वागीश्वर नव किर्त्ति थापना
१३. याङ प्रतिष्ठा याङा दिन जुरो ॥ शुभ ॥
१४. नमस्ते सर्व्व ---- रानां जिनधातु कर
१५. त्तम ॥ सयंवुद्धार यं चैत्य ॥ धर्म्म-
१६. धातु नमोस्तु ते ॥ शुभमस्तु सर्व्वदा ॥

### अनुवाद

श्रीधर्मधातुलाई नमस्कार । आकाशजस्तै सफा, प्रपञ्च नभएका, गुणी, पञ्चस्कन्धस्वरूपशान्त, स्तूपरूपका ती धर्मधातुलाई नमस्कार ।

ने.सं. ७६४ (वि.सं. १७००) माघ कृष्ण सप्तमी स्वाति नक्षत्र ---- योग, पर्नुपर्ने करण मुहूर्त परेको बेलामा, आदित्यवारमा, सूर्य मकर राशिमा गएमा चन्द्रमा कन्याराशिमा गएमा, यस दिन प्रतिष्ठा गरियो ।

श्रीमाणिगलका अधिपति श्रीश्रीसिद्धिनरसिंहमल्लदेव प्रभु ठाकुरको पालामा, श्री ----- विहारका भिक्षु श्रीदेव, उनका छोरा दानपति ब्रह्मचर्य भिक्षु श्रीनरेन्द्रदेवले श्री ३ धर्मधातु वागीश्वर नवकीर्ति स्थापना गरी प्रतिष्ठा गरियो । शुभ होस् ।

---- सबै बुद्धहरूको बासस्थान भएको चैत्यरूप धर्मधातुलाई नमस्कार । सधैं शुभ होस् ।

★★★



(५०)

## पाटन ज्याठाटोल गणेशमन्दिरको शिलालेख

### मूलपाठ

१. स्वस्ति ॥ श्रेयास्तु ॥ सम्वत् ७६४ वैशा-
२. ष कृष्ण ॥ थ्व दन श्रीथंयात वंकुचान्त
३. लंयेतो --- थारि विप्येतास यं स्वस्य
४. चोग्व श्रीमत् श्री ३ विश्वकर्म्मा भट्टर-
५. काश जिर्ण्ण याङान चोग्ल छें उधा-
६. र याङन दयका जुरो ॥ थ्वतेया चिता
७. याक प्रजापति अ --- तेजजिर्वभ-
८. सिङ जकेराज अभक शिराम जि-
९. देज्ञ गोपि रूपवल जुगि गोराम-
१०. फल शुगचेल जेवचराज विजयास
११. गोपिराम कृष्ण राम, विजराम जय-
१२. नसिंङ काशि उमा सतेराम शुभ
१३. राज कृष्णसिंघ हाकुदेव ----
१४. ----- प्रज्यायश जिर्णउद्धार या-
१५. ङन चिकन अतन थकारि ---
१६. भट्टारिकाश -----
१७. त्रम ॥ स्थापम याङा म------
१८. रो ॥ शुभमस्तु ॥ सर्वदा कारे ---
१९. ---- प्रजा जिवसा -----
२०. ----- दयका ----

### अनुवाद

कल्याण होस् । ने.सं. ७६४ (वि.सं. १७०१) वैशाख कृष्ण । यस वर्ष श्रीथंयात वंकुचान्तलं येता --- रहेका श्री ३ विश्वकर्मा भट्टारकको जीर्ण भइरहेको घरको जीर्णोद्धार गरी बनाइयो ।

यसको चिताई गर्ने प्रजापति --- तेजजीव मसिंह जकेराज अभकशिराम जिन्देश, गोपी, रूपवल जुगी गोपाम-फल शुगचेल जेवचराज विजयास गोपिराम, कृष्णराम, बीजराम जयनसिङ काशी उमा सत्यराम शुभराज कृष्णसिंह हाकुदेव --- यिनीहरूको पालामा जीर्ण उद्धार गरी तेलिया ईंटले छाइयो । थंकाली ---- भट्टा ---- स्थापना गरियो ।

सधैं शुभ होस् । ---- प्रजा ---- बनाइयो ।

★★★

(५१)

## पाटन चापागाउँ थपाछे भंसाटोलको चैत्यको शिलालेख

### मूलपाठ

१. ? श्रेयोस्तु ॥ सम्वत् ७६६ मार्ग्गशिर कृष्णपक्षे पञ्चाम्या-
२. यान्तिथौ ॥ पुष्यणक्षेत्रे इन्द्रयोगे बृहस्पतिवासरे
३. थ्व कुन्हु फरे दयका ॥ दिवंगत वबु नुंगु भावो पुत्र काय
४. द्रण्डराज छय विश्वराज माम हरखन मयि थ्व प-
५. नि पेम्हस्त नाम्न नाय मगुलंयन्ता फरे दयका
६. थ्व स यव फरेस विमान इन्द्रराजा म्हं २ वोय थ्व
७. स यत फरे सेल्हो --- भारडास हाथ्व गुथिन ल्होने मा-
८. र थ्वज्ञ यव विमान ल्हाया हाथ्वगुथि स दु फस्यं चि-
९. नका थ्व फरे सेल्हो मयातसा ग्वहथ्या वम्हं हर्थ्या
१०. पंचमाहापातक राका थ्व चोस्यं तको निसत्रपयं-
११. कारे अनेग्रह उतोत्र जुरो, जजमानस्य जतो
१२. सास्त्र ततो फर सम्प्राप्तमस्तु ॥ थ्व फरे विखालि
१३. भावोसन शुहस्तेन सोविर्दिमानेन दयका जुरो
१४. थ्वया पुन्नेन लक्ष्मी सन्ति सन्तान वृद्धिरस्तु ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७६६ मार्ग कृष्ण पञ्चमी बृहस्पतिबार पुष्यनक्षत्र इन्द्रयोग, यस दिन पाटी बनाइयो । दिवंगत बाबु नुंगु भावो, छोरा दण्डराज । नाति विश्वराज, आमा हर्षण मयी, यी चार जनाको नामले नायमगुलंयन्ता पाटी बनाइयो ।

यही पाटीमा विमान इन्द्र राजा २ प्रदर्शन गर्नू । यस पाटीको जीर्णोद्धार गर्नु पऱ्यो भने हाथ्वं गुठीले जीर्णोद्धार गर्नू । यो विमान पहिले हाथ्वं गुठी भित्र पारी बनाइएको हो ।

यस पाटीको जीर्णोद्धार गरेन भने गोहत्या ब्रह्महत्या आदि पञ्चमहापाप लागोस् । यहाँ लेखिए अनुसार चलाए भने अनिग्रह होस्, उत्तरोत्तर असल होस् । जजमानलाई शास्त्रमा बताए अनुसार फल प्राप्त होस् ।



यो पाटी विखालि भावाले आफ्नै हातले आफू अगाडि रही बनाएका हुन् । यसको पुण्यले लक्ष्मी, सन्तानको वृद्धि होस् ।

★★★

(५२)

## पाटन थंबहालटोल चन्द्रधारानिर महादेव मन्दिरको शिलालेख

### मूलपाठ

१. ? स्वस्ति ॥ वदैविश्वेश्वरेशं त्रयनयनधरं ----
२. पून्येन्दुकात्तिं पाणौ शूलं --- च वरममय
३. ----- चन्द्रे ललाटे । देवैर्न्नानामुतीन्द्रे :
४. कमले ----------- संसारस्यैकंनाथं
५. वणमिव ------- तीतं महेशं ॥ श्रेयोस्तु ॥
६. सम्वत् ७६७ कात्तिक शुक्ल ॥ एकादशि पर द्वादश्या
७. तिथौ ॥ रेवतीनक्षत्रे ॥ सुद्धियोगे ॥ जथाकर्ण्ण मुहूर्त्ते ॥
८. सोमवासरे । विछरा सिगते सवितरि ॥ मीनरासि
९. गते चंद्रमशि ॥ थ्व कुन्हु श्री ३ विश्वनाथ देव प्रति-
१०. स्था याङा दिन जुरो ॥ यज्ञायक व्रलानिम्हं द्विज-
११. वर श्रीदामोद्र शर्म्मणसन जजमान थंतु तुथि
१२. वंतागृह ॥ विप्राश्री विश्वनाथ उभान प्रासाद दे-
१३. वल दयकं श्री ३ महादेव थावना याङान प्र-
१४. तिस्था याङा जुरो ॥ शुभमस्तु ॥ सर्व्वदा शुभं
१५. यंगवाहार त्वर श्री ३ विश्वेश्वर प्रीत्यर्थ थंवु-
१६. श्रीविश्वनाथ उभान पूजा याक ह्मंयात दु-
१७. ता मनमगुलं वु रो १ पयि २ थ्वतेसा-
१८. क्षि वंलानिह्म द्विजवर श्रीदामोददेव
१९. ------- शर्म्मण ---- शुभ ॥ ।

### अनुवाद

कल्याण होस् । तीन आँखा भएका, पूर्ण चन्द्रमाको जस्तो कान्ति भएका, हातमा शूल, वर, अभय --- मुद्रा भएका, निधारमा चन्द्रमा भएका, देवताहरूले अनेक ठूला मुनिहरूले पूजिएका ---- संसारका मुख्य मालिक ---- महेश्वरलाई ढोग्दछु ।

कल्याण होस् । ने.सं. ७६७ (वि.सं. १७०३) कार्तिक शुक्ल एकादशी उप्रान्त द्वादशी रेवतीनक्षत्र शुद्धियोग, पर्नुपर्ने करण मुहूर्त परेको बेलामा, सोमवारमा, वृश्चिक राशिमा सूर्य, मीन राशिमा चन्द्रमा रहेमा, यस दिन, यज्ञ गर्ने वंलानिह्मं द्विजवर श्रीदामोदर शर्मा र जजमान थंतुतुंयी वंतागृहका ब्राम्हण श्रीविश्वनाथ उभाले देवल बनाई श्री ३ महादेव स्थापना गरी प्रतिष्ठा गरियो । सधैं शुभ होस् ।

यंग बहालटोलका श्री ३ विश्वेश्वरलाई प्रसन्न पार्न थंबुका श्रीविश्वनाथ उभाले पुजारीको लागि मनमगुलं खेत एक रोपनी, दुइ पयी गुठी राखे । यसका साक्षी वंलानिम्हका असल ब्राम्हण श्रीदामोदरदेव --- शर्मा । शुभ होस् ।

★★★

## (५३)

## पाटन भण्डारखालको सिद्धिनरसिंहमल्लको अभिलेख

१. ॐ नमो भवान्यै ॥ यद्भूषा चन्द्रलेखा सुरनगरनदी वैजयन्ती फ-
२. णीन्द्रः केयूरं व्याघ्रकृत्तिर्व्वसनमतिलसन्मुण्डमालाब्जहारः
३. सिन्दूरं नेत्रवन्हिस्त्रिभुवनरचनाचारुणीयां कटाक्षा मुक्तिर्दा-
४. सीसदृक्षा हरहृदि सततं सा भवानी विभाति । तस्याः पादस-
५. रोजचिन्तनपयः पूराच्छि दूरीभवन्मुक्तिर्द्धैतविशालसंशयम-
६. नोजम्बात्मजालस्थितिः ॥ नेपालचलनाकपृष्ठदिविषद्वृक्षः स-
७. दृक्षार्ण्णवैः सिद्धः सिद्धिनृसिंह एष रघुना तुल्योधुना वर्त्तते ॥
८. वर्षे सप्तपदार्थसप्तवलिते वैशाखपक्षे सिते पन्चम्यां गुरु-
९. वासरे वृषतनो शुक्रो ---- दये तेनाकारि मुरारिचित्तम-
१०. धुपश्रेणी विलासाब्जिनी ----- न्या पुष्करिणी मुदे च मनसो देवीय-
११. देव्यार्पिता ॥ ---- पदाम्भोजमकरन्दमधुव्रतः । अकरो-
१२. त्त्रीणि पद्यानि शूलपाणिन्नृपाज्ञया । सम्वन्नैपालिक
१३. ७६७ वैशाखकृष्णपक्षे पन्चम्यां तिथौ वृहस्पतिवासरे थ्व कुन्हु पु-
१४. खुडि यिति पुष्पवाटिका प्रतिष्ठा याङन जयश्रीश्रीसिद्धि-
१५. नरसिंहमल्लदेव प्रभु ठाकुरसन श्रीश्रीश्रीथवइष्टदेवता, प्री-
१६. तिन श्री ३ इष्टदेवतास समर्प्पण याङा दिन जुरो ॥ शुभम्भूयात् ॥



### अनुवाद

ॐ पार्वतीलाई नमस्कार । चन्द्रलेखा, जसको गहना रहेको छ, आकाशगंगा जसको ध्वजा जस्तो भइरहेको छ, सर्पराज जसको बाजू रहेको छ, बाघको छाला जसको लुगा छ, मुण्डमाला जसको हार बनेको छ, सिन्दूर आँखाको ज्वाला बनेको छ, तीनै भुवनको रचना जसको कटाक्षमात्रले हुन्छ, मुक्ति त जसको दासीजस्तो भइरहेको छ, महादेवको हृदयमा सधैं वास गर्ने र त्यस्ती पार्वती सुहाइरहेकी छिन् ।

ती देवीको चरणकमलको ध्यानरूपी पानीको प्रवाहले मुक्ति द्वैतभाव, ठूलो सन्देह, मनको जञ्जाल हटेका, नेपाल पर्वतका इन्द्र जस्ता, समुद्रजस्ता गम्भीर रघुजस्ता, सिद्ध सिद्धिनरसिंह राजा हुनुहुन्छ ।

ने.सं. ७६७ (वि.सं. १७०४) वैशाख कृष्ण पञ्चमी बृहस्पतिबार ----को दिन, कृष्णजीमा चित्त लाएका उहाँ सिद्धिनरसिंहमल्लले पोखरी बनाई मनको शान्तिको लागि आज देवीको चरणमा चढाउनु भयो ।

---- चरण कमलका भक्त शूलपाणिले राजाको आज्ञाले तीन पद्य बनाएका हुन् ।

ने.सं. ७६७ वैशाख कृष्ण पञ्चमी वृहस्पतिको दिन पोखरी, धारा र फूलवारीको प्रतिष्ठा गरी जय श्रीश्रीसिद्धिनरसिंहमल्लदेव प्रभु ठाकुरले आफ्ना श्री ३ इष्ट देवतालाई प्रसन्न पार्न श्री ३ इष्टदेवतालाई समर्पण गर्नु भयो ।
शुभ होस् ।

व्याख्या
ललितपुर राज्यलाई राजनीतिक, धार्मिक, सांस्कृतिक आदि अनेक दृष्टिले समृद्ध पार्ने काम सिद्धिनरसिंहले गरेथे भन्ने कुरा माथि लेखिसकेको छ । उक्त कुराको पुष्टि यस अभिलेखले पनि गरेको छ । यस अभिलेखमा सिद्धिनरसिंहले आफ्नी इष्टदेवीलाई प्रसन्न पार्न ढुंगेधारा पोखरी, फूलवारी बनाएको वर्णन परेको छ । पाटन भण्डारखालमा सिद्धिनरसिंहका जुन कृतिहरू अहिले पनि रहेका छन् । सिद्धिनरसिंहका जुन कृतिले पाटन राजदरबारको शोभा बढाउनको साथै त्यहाँका धार्मिक कृत्यलाई चालू राखी काम पनि केही मात्रामा गरिरहेका छन् । पाटन राजदरबारमा सिद्धिनरसिंहलाई सम्झाउने कृति अरू पनि अनेक छन् । तिनमा सानो भएपनि सुन्दरचोक निकै आकर्षक रहेको छ । त्यहाँ सिद्धिनरसिंहले स्नान गर्ने धारा, ढुंगे खाट आदि दर्शनीय छन् ।

यस अभिलेखमा अभिलेखका तीन पद्यको रचना गर्ने पण्डित शूलपाणिको नामोल्लेख भएको छ । प्रायः यस्ता अभिलेखका रचयिताको नामोल्लेख गर्ने उदारता लिइएको काम पाइन्छ । यस अभिलेखमा चाहिं शूलपाणिको चर्चा गरिएको छ ।

★★★

९. इदमदिवसे श्रीधर्म्मधातु वागीश्वर प्रतिष्ठा याङा दि-
१०. न जुरो, दानपति श्रीडाकु - - यौकुलिगृह श्रीवज्रा-
११. चार्य्य श्रीखेतिनाम - - - ॥ ॥ पुन भाषा वोसाध-
१२. न यात आय न्हिवु जव २ तोकेधुमर ओम छोयके मा-
१३. र पंचामृस्नान निश्राव जु २ दक्षिना दं ४ थ्वते
१४. वर्षप्रति जुरो ॥ थ्व देवया निस्त्रपं श्रीचकवा-
१५. हार श्रीवजाचाय्य श्री मंजुदेवजु यात साप्वा प्रसा
१६. द जुरो थ्वयात २ नामयवु जुरो ॥
१७. थ्व वेलस श्रीमाणिल्गाधिपति श्री २ श्री निवास
१८. मल्ल प्रभु थाकुरस विजय राज्ये ॥ - प्रमान
१९. - - - ज श्री धर्म्म - - - - -
२०. - - - - - - - - - - - -

शिरोभागमा थपेको
१. ॐ नमः शाक्य मुणये सदवुद्धं पुण्डरीकाक्ष्यं
२. रुणात्मकं समन्तभदं शास्तारं शाक्यसिंह नमाम्यहं

★★★

(९७)

## पाटन वलखुटोल ओमवहालभित्रको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय ॥ दानव राजनिदेशित धर्म्म पु-
२. रत्नविशेषविशीत ॥ नाशित मोहविशेषसहस्रं श्री
३. - - पद्मकर प्रणमामि ॥ ॥ श्रेयोऽसतु ॥ सम्वत् ७८५ ज्येष्ठ
४. शुक्ल ॥ तृतीया ॥ मृगशिरानक्षत्र ॥ धृतीयोग ॥ आदित्यवार
५. थ्व कुन्हु श्रीसूर्य्यवर्ण्ण महाविहारसः श्री ३ शाक्यमुनि भट्टारक
६. स देवल थंकास्यं : पूरद्वयकं : आवन चेङन ॥ सूवर्ण्ण गजुरि
७. छास्यं ॥ दिन यज्ञ याङन ॥ प्रतिष्ठा याङा दिन जुरो ॥ थ्वतेया
८. प्रमुखः स एव : बिहारियाः स्वंछुन : थ्व ध्वजा वरोहन याङा जुरो
९. ॥ थवरपा श्री भासिंदेवजु : ? श्रीदेवरथनजु ॥ श्री चन्द्रसिंहजु



१०. श्रीमंजुसिहजु ॥ श्रीमंजुदेवजु ॥ थ्वते याङाया ॥ छे थाय ॥
११. स एव श्रीमंजुसिंहजुयाके जुरो ॥ शुभमस्तु ॥ ॥ पुन भाषा
१२. थ्वनन्हा : सम्वत् ७७८ वैशाषकृष्ण ॥ तृतीया कुन्हु ॥ श्री ३ शाक्य
१३. मुनिभट्टारकास ॥ सर्व्वाङ्कशरीरं ॥ लुनसिस्यं : प्रतिष्ठा याङा
१४. दिन जुरो : थ्व बिहारियाः सर्व्वसंघ समूहन दयका जुरो
१५. पूनभाषाः थ्व बिहारिया स्वंहारियाः स्वंछुयात : स्ववोङतिं याङन ॥
१६. श्री ३ शाक्यमुनि भट्टारकासे ॥. थव छे जुवत ॥ थ्व स्वछुनं ॥
१७. संदर पे मदयकं ॥ सर्व्वसंघ समूहन ॥ श्री ३ देवयात
१८. द्वक तोलतं तया जुरो ॥ थ्व देवल लुन सियाया, छेखा
१९. श्रीमंजुसिंहजु याके जुरो ॥ ॥ थ्व सम्बछल ॥ तया या
२०. वयपा. श्रीदेवरथनजु प्रमुखन : नायक ङाहमसृन
२१. जुरो ॥ हामतओस ॥ लिपतस तया जुरो : भूय
२२. लासिग्वड छि १ ओहोसि धलि माल पु १ आमो -
२३. स्वान फोल २ थ्वते ॥ थ्व ङाहम प्रमुखन : देवया दान
२४. नं। दयका जुरो ॥ शुभं ॥ श्री गुलुजु नायक
२५. समोहोन दयका ॥

★★★

(९८)

## पाटन पिंछेटोल धारानिरको पाटीको शिलालेख

### मूलपाठ

१. ॐ श्रेयोऽस्तु ॥ सम्वत ७८५ । म-
२. चैत्र वद्धि १२ पिंथछे ॥ ज्रके भा-
३. व थंकाडि याङ ॥ अभराज भावो
४. हाकुदेव भावो, लुतेराम भावो, लुगुसिं -
५. ह भावो, जसराम भावो, जयराम
६. भावो, जुगराम भावो, जतेया भू-
७. समोहन, श्वकु तोरता, माधव-
८. राम भावो छेम्हया याङ, स. ए-

९. वों पिंथछे लाछेस येव सो चक
१०. श्रीमत श्रीश्री वुंग भट्टारकासके
११. पूर्णमी सेवा दयकं थ्वफले स्वंक-
१२. वल दयका जुरो, थ्व फले सुनान जु-
१३. लसन सेनकरसा पञ्चमाहापा-
१४. तक लाक, मिनकरसा उतोत्र-
१५. जुरो ॥ शुभ ॥

★★★

(९९)

## पाटन सतुंगल देउननि टोल वैष्णवी मन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ नमश्चण्डिकायै ॥ गारुत्मती द्युतिनिभा गरुडासनस्था-
२. मुद्भिन्नषंकजमुखीं नवयौवनाढ्या । शंखाशिचकगढ-
३. दयांकितचारुहस्ता, श्रीवैष्णवी सरणतो स्मिसदा प्रसंना
४. श्रेयोऽस्तु ॥ सम्वत् ७८५ कात्तिकमासे कृष्णपक्षे ॥
५. षष्ठ्यान्तिथौ ॥ पुष्यानक्षेत्र ॥ शुभ प्र शुक्ल योग ॥
६. आदित्यवार ॥ थ्व कुन्हु यलं देश क्व वाहार वकनि-
७. ह्म ॥ पात्रवंशराउत भवानीशंकर वावु, भ्रात्रे
८. शिवशंकरवावु उभयसन, सतुंगरया श्रीवैष्ण-
९. वीदेवी भटालकासके देवर द्वयकं, स्वर्ण्ण कर-
१०. स ध्वजाव लोहन याङा दिन जुरो ॥ थ्व गजुलि छा-
११. या बुशाधन कुन्हुयात आय दुन्ता जाक्य फं ३० थ्व
१२. तेया वरसानन दुथ्य, थ्वदिन कुन्हु स एव देव - पू-
१३. जा याङन बुशाधन ङायकं यंजमाल्व ॥ थ्वतेया
१४. चिन्ता याक गोष्ठि स एव सतुंगर देश, सिराम
१५. भारो, जयनराज भारो, मकुण्ड राजभारो, गो -
१६. पीनाथ भारो, वैकुण्ठ भारो, थ्वहमसन वर्ष,
१७. प्रतिं अविछिनी याङन ङयकं यंजमाल्व, रो,
१८. पयाकारे, परमेश्वरस निग्रह जुरो ॥ शुभ



### अनुवाद

चण्डिकालाई नमस्कार । पन्नाजस्तो वर्ण भएकी, गरुडको आसनमा बसेकी, फुलेको कमलजस्तो मुख भएकी, भर्खरकी तरुनी, शङ्खचक गदा खड्ग हातमा लिएकी, सधैं प्रसन्न रहने श्रीवैष्णवी देवीको शरण परेको छु ।

कल्याण होस् । ने.सं. ७८५ (वि.सं. १७२१) कार्तिक कृष्ण षष्ठी आदित्यवार पुष्यनक्षत्र शुभ उप्रान्त शुक्लयोग, यस दिन ललितपुरदेश कोबहाल कोनिह्मका पात्रवंश राउत्त भवानीशङ्कर बाबु, भाइ शिवशङ्कर बाबु, दुवै जनाले संतुगलकी श्री वैष्णवी देवी भट्टारिकाको मन्दिर बनाई सुनको गजुर चढाउने ध्वजारोहण गर्ने काम गरे । यो गजुर चढाएको *बुसाधन* को दिनको लागि आयस्ता चढाइयो - चामल तीस पाथी, यस आयस्ताले भ्याउने जति यस दिन ती देवताको पूजा गरी *बुसाधन* गर्दै लानुपर्छ ।

यसको चिताई गर्ने गुठियार सोही सतुंगल देशका सिराम भारो जयनराज भारो, मकुन्दराज भारो, गोपीनाथ भारो, वैकुण्ठ भारो हुन् । यी पाँच जनाले प्रतिवर्ष अटूटरूपमा काम चलाउनु पर्छ । लोप गरे भने परमेश्वरीको कुदृष्टि परोस् ।

शुभ होस् ।

★★★

(१००)

## पाटन नकबहिलटोल न्यापाचोकको शिलालेख

### मूलपाठ

१. ॐ नमः बुद्धाय सर्व - - - - नाद्वि द्विज
२. जनै, नैधातुकं महाराज वैरोचनं नमाम्य-
३. हं ॥ नमः श्रीवज्रसत्त्वाय वज्ररत्नाय ते नमः ॥ नम-
४. स्ते वज्रधर्म्माय वज्रकर्माय ते नमः ॥ सम्वत ७-
५. ८५ ज्येष्ठमास्ये शुक्रपक्षे पंचम्यायां तिथौ
६. पुष्यनक्षत्रे व्याघातयोगे बृहस्पति बासरे
७. वृषरासिगते सवितरी कुम्भरासिगते चन्द्रम-
८. सि ॥ थ्व कुन्हु प्रतिस्था दिन जुरो ॥ दिवंगत र-
९. क्ष मवार जुयात दयका - - - न्तदा दं, थ्वते ना-
१०. त दि इवया वलनिपित्या २ X ङ जया वंसा-

११. न दुथे कतिनीयात जुरो ङ जुयान न्हिकं-
१२. - - - - - - - -

★★★

(१०१)

## पाटन इखाछेंटोल इथबहिल भित्र क्वापाल देवताका सिँढीको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीमञ्जुनाथाय श्री ३
२. गन्धुरिमयि त्रिवोधिसतो भट्टालकास
३. शिरस शुवर्ण्णकांचन थ्व द्वोयकं
४. स्वत छवः थ्वतेस दोरलसं शुवर्ण्ण
५. रूपा चैत्र वाहार गजुलि छास्यं थव पे -
६. वया न्हवने न्हादस्यं चोग्व चैत्र वाहार ल्हो -
७. ङत्व शुवर्ण्णरपा शिरमून स्वंतं छत्र-
८. न कोयकं दिन जज्ञ याङ प्रतिस्था याङ
९. स्वस्ति ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८६ ज्येष्ठ शुक्ल
१०. नवम्यायान्तिथौ । हस्तानक्षत्रे, व्यतिपा-
११. तयोगे ॥ शुकवासरे ॥ अस्मिंन् दिवस ॥
१२. दोहरपा योखाछें युंता बिहारि ब्रह्मचर्य
१३. श्रीहाकुजुस पुत्र श्रीदेवचन्दजु वाकस -
१४. रान्ने सयवो स्वगृह देवस्तं पुन्यार्थं
१५. जतो सास्त्र ततो फल लाक जुरो सर्व्वदा म-
१६. ङ्गल - - - - शुभ ॥

### अनुवाद

श्री मञ्जुनाथलाई नमस्कार । श्री ३ गन्धुरी मयी त्रिबोधिसत्त्व भट्टारकको शिरमा सुनको मुकुट बनाई तीन तह भएको छत्र, यसमा पनि सुवर्णलेप गरी चैत्यभट्टारकलाई चढाइयो । यी देवताका



सामुन्ने अघिदेखि रहेको चैत्यभट्टारकको जीर्णोद्धार गरी सुवर्णलेप गरेको मुकुट र तीनतह भएको छत्र चढाई प्रतिष्ठा गरिएको दिन यज्ञ गरियो ।

कल्याण होस् । ने.सं. ७८६ (वि.सं. १७२३) ज्येष्ठ शुक्ल नवमी शुक्रबार हस्तनक्षत्र व्यतिपातयोग, यस दिन चढाइएको हो । योखाछें युताविहारीका ब्रह्मचारी श्री हाकुजु र छोरा श्री देवचन्द्रजुलाई - - - - शास्त्रमा बताए अनुसारको फल लागोस् । सधैं मङ्गलशुभ होस् ।

★★★

(१०२)

## ल.पु.ई. हरसिद्धिगाउँ उपिटोल कुसलेको घरको शिलालेख

### मूलपाठ

१. ॐ नमो बरुणाय ॥ शंखे - - - स्फटिक - दा-
२. नं. कान्तं किरीतमुकुट - - - शोभमातं श्री - - -
३. बली - - - - मूर्ति नागाधिपं - वरु -
४. णराजमहं नमामि ॥ जन्तलं देशया - - -
५. नसिंह भावो गोबिदराम भावो दरसिंह
६. भावो गोपीराम भावो गोबिन्द सिंह भा-
७. वो हरिराम भावो, मालासिंह छेकशीत थ्व-
८. ते याङन ज्यावाल यत कुन्हु ज्याकलस
९. श्रीलोकेश्वर - - - दंस प्रति देवपूजा भ
१०. क्षभोजन दयका जुरो ॥ थ्वते (स) मुहन ज-
११. न्तल देश दथोवालराछेस जिर्ण्ण याङ-
१२. चोङ तुंथिया - तुंथिगल जुक्व ल्होहन तुंथि-
१३. गलजुक्व दंह म- स्त्रि ॥ संम्वत ७८६ - -
१४. मासे कृष्णपक्षे चतुर्द्दश्यान्तिथौ धनिष्ठा
१५. पर शतभिषानक्षत्रे सिद्धि योगे -
१६. वासर थ्वकुन्हु थ्वनुं थिगल जि-
१७. र्ण्णउद्धार याङ हन प्रतिष्ठा याङा दिन
१८. - - - जुरो - - - सर्वदा - - - शुभं भुयात् ॥
१९. - - - - - - - - - - - - -

★★★

(१०३)

## मूलचोकको श्रीनिवासमल्लको अभिलेख

ललितपुर राजदरबारको मूलचोकको पूर्वपट्टिको लङमा दलानको निदालमा यो सुवर्णपत्राभिलेख टाँसी राखिएको छ । यहाँ ने.सं. ७८६ दिइएको छ ।

संशोधन-मण्डलद्वारा *अभिलेख-सग्रह* छ भागको ११ -१२ पृष्ठमा यो अभिलेख छापिएको छ ।

१. ॐ स्वस्ति ॥ श्री भवान्यै नमः । महारणादृहासिनीं प्रचण्डचंद्रहासिनीं समुण्ड-चण्डघातिनीं बिहालमुण्डमालिनीं । मदान्धदैत्यदारिणीं प्रचण्डरूपधारिणी युगान्तमेघ-

२. नदिनीं नमामि रुद्रकामिनीम् ॥ ॥ श्रीरत्नमल्लो नृपतिर्ब्बभूव त्रिशक्तित : प्राप्तवर प्रसाद : । मार्त्तण्डवेशेऽभवदस्य सूनु : श्रीसूर्यमल्लो ऽ नलसूर्यतेजा : तदीयपु-

३. त्रो ऽ मरमल्लभूपो बभूव भूमीधनदोर्ज्जितश्रीः । तदात्मजोऽभूद् भुवि भूरिकीर्त्ति-म्महेन्द्रमल्लो हि महीमहेन्द्र : ॥ अभवदतुलतेजास्तत्सुत : सुप्रतापी नृपमणि-

४. शिवसिंहःशत्रुनागेन्द्रसिंहः । विसमशरसमश्रीरात्मजस्तस्य राज्ञो भुविहरिहरसिंहो राजते राजसिंह : । विसमशरसमश्रीरात्मजस्तस्य राज्ञो भुविहरिहरसिंहो राजते राजसिंह : । अजीजनत्सिद्धिनृसिंहभूपस्तस्मान्नरेन्द्रात्किल-

५. लालमत्यां । श्री कृष्णपादाम्बुरुहैक भृङ्गो महद्यशोमण्डलमण्डिताश : । महोजसा भूसुरसात्कृतश्रिया नृपेण येनाहुतिकोटिसंख्यया विधाय होमं

६. विधिना महाधिया प्रतिष्ठिता सप्रतिमा रमापते : राजर्षितोऽस्माद् भुवि भानुमत्यां श्रीश्रीनिवासो नरवासवोऽभूत् । दातृत्वशक्त्याल्पितकल्पबृक्षे, ज्वल-

७. त्प्रतापाल्पितसूर्यतेजा : ॥ देवेन्द्रो भगभूषितो मनसिजो नङ्गगो मृगेन्द्र : पशु : श्रीदःकिंपुरुषेश्वरो जलपतिःपशि यमःप्रेतराट राहुप्राप्तपराभ-

८. वो दिनमणिशचन्द्रः कलङ्की यतःतुल्यःकोपि निवासभूमिपतिनातेनास्ति नो पिष्टपे ॥ असूत सूनुं वसुधाधिपात्ततो मृगावती पुण्यवती प्रतिव्रता । श्रीयोगमल्लं

९. वसुधासुधाकरं श्रीव्यादवचोभिः स च पूर्वभूभुजां ॥ ॥ नैपालिकाब्दे रसकुन्जरा- ब्धौ दुर्गापदाम्भोरुहपूजनार्थम् । अबीकरद् गेहमिमं मनोज्ञं स श्रीनि-

१०. वासश्चतुरस्त्रशोभं ॥ तदगेहाङ्गनमध्येसौ श्रीनिवासो नृवासव : । स्वर्णप्रासाद मकरोत्स रोजकलिकोपमं ॥ ॥ अतष्परं नेपालभाषया लिख्यते ॥ ॥



११. श्रेयो स्तु ॥ संवत् ७८६ आश्विनशुक्लप्रतिपद्यां तिथौ ॥ श्रीसूर्यवंशोदभवरघुकुल तिलक श्रीमणिल्गाधिपति महाराजधिराज श्रीश्रीजयश्रीनिवासमल्ल

१२. देवप्रभु ठाकुरसन महानवमी कुन्हु श्री ३ परमेश्वरी पूजायात निमित्तन ख्व मूल चौक दोयका जुरो ॥ ख्व मूलचौकया दथुस श्री ३ इष्टदेवता श्रीयन्ताजु-

१३. सके, सुवर्ण्णया देवल दोयकं प्रतिष्ठा याङा जुरो ॥ ॥ पुनभाषा वर्षे प्रति महानवमी कुन्हु श्री ३ परमेश्वरी पूजायात निमित्तन कुचुपोया जगातया दाम दक्वन

१४. मसमालक्व दयकं श्री ३ परमेश्वरीसके दोहलपेमालकं दुन्ताजुरो ॥ भाषा ग्वह्मनमेसस चिन्तायाक जुर, ओह्मन कुचुपोया जगातस चिन्ता यायजुरो ॥ शुभ

### अनुवाद

कल्याण होस् । श्री भवानीलाई नमस्कार । ठूला लडाईंमा अट्टहास गर्ने भएकी, भयङ्कर खड्ग लिने भएकी, चण्डमुण्ड दैत्यलाई मार्ने भएकी, लामो मुण्डमाला लाउने भएकी, मातिएका दैत्यहरूलाई नष्ट पार्ने भएकी, डरलाग्दो रूप धर्ने भएकी, पलयकालको मेघजस्तै गर्जने भएकी पार्वतीलाई नमस्कार गर्छु ।

परमेश्वरीबाट १२ प्रसाद पाएका राजा श्री रायमल्ल हुनुभयो । सूर्यवंशी उहाँका छोरा अग्नि र सूर्यजस्ता तेजिला श्री सूर्यमल्ल हुनुभयो । उहाँका छोरा पृथ्वीका कुबेरजस्ता सम्पत्ति भएका अमरमल्ल राजा हुनुभयो । उहाँका छोरा पृथ्वीमा ठूलो कीर्ति फैलिएका पृथ्वीका इन्द्र जस्ता महेन्द्रमल्ल हुनु भयो । उहाँका छोरा अति तेजिला प्रतापी, राज्यहरूमा श्रेष्ठ भएका, शत्रुरूपी हातीमा सिंहजस्ता शिवसिंह हुनुभयो । उहाँ राजाका छोरा कामदेवजस्तै राम्रा, राजाहरूमा श्रेष्ठ हरिहरसिंह हुनुभयो ।

उहाँ राजाबाट लालमती तर्फबाट सिद्धिनरसिंह मल्ल राजा जन्मनुभयो । उहाँ श्री कृष्णका पाएका ठूला भक्त पृथ्वीमा नाउँ चलेका हुनुहुन्छ । ठूलो तेज भएका, ब्राह्मणहरूलाई धनसम्पत्ति दान दिएका बुद्धिमान् जुन राजाले कोटिहोम गरीकन विधिपूर्वक श्री कृष्णको प्रतिमाको प्रतिष्ठा गर्नुभयो ।

उहाँ राजर्षिबाट भानुमती तर्फबाट राजा श्री निवासमल्ल जन्मनु भयो । उहाँ दान दिने शक्तिले कल्पवृक्षलाई माथ गरेका, बल्दो प्रतापले सूर्यको तेजलाई माथ गर्ने हुनुहुन्छ ।

देवराज (इन्द्र) योनिले सिँगारिएका छन् । कामदेव अङ्ग नै नभएका छन् । मृगराज (सिंह) चाहिँ पशु हो । कुबेर किंपुरुषहरूका मालिक हुन् । वरुणले पाश लिएका छन् । यमराज चाहिँ प्रेतहरूका राजा हुन् । सूर्य राहुबाट ग्रस्त छन् । चन्द्रमामा दाग लागेको छ । यसकारण राजा श्री निवासमल्लसँग दाँजो लाग्ने संसारमा कोही छैनन् ।

उहाँ श्री निवासमल्लबाट धर्मात्मा पतिव्रता मृगवतीले श्री योगमल्ललाई जन्माउनु भयो । पहिलेका राजाहरूको वचन अनुसार उहाँ चिरायु होउन् ।

ने.सं. ७८६ (वि.सं. १७२३) मा राजा श्री निवासमल्लले भवानीको चरणकमलको पूजाको लागि राम्रो यो चोधरा (मूलचोक) बनाउनु भयो । श्री निवासमल्ल राजाले त्यस मूलचोकको बीचमा कमलको कोपिला जस्तो सुनको मन्दिर बनाउनु भयो ।

## यसपछि नेवारी भाषामा लेखिएका कुराको अनुवाद

कल्याण होस् । ने.सं. ७८६ (वि.सं. १७२३) आश्विन शुक्ल प्रतिपदाको दिन श्री सूर्यवंशमा जन्मेका रघुकलका टीका जस्ता श्रीमणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवास मल्लदेव प्रभु ठाकुरले महानवमीको दिन श्री ३ परमेश्वरीको पुण्यगर्नाको लागि यो मूलचोक बनाउन लाउनु भयो । यस मूलचोक बीच भागमा श्री ३ इष्टदेवता श्रीयन्ताजुको लागि सुनको देवल बनाउन लाई प्रतिष्ठा गरियो ।

अर्को बेहोरा - प्रतिवर्ष महानवमीको दिन श्री ३ परमेश्वरीको पूजाको लागि *कुचुपों* को जमात जम्मै पैसाले चाहिने जति राँगा तयार राखी श्री ३ परमेश्वरीलाई चढाइयो । बेहोरा - जसले राँगाको प्रबन्ध गर्ने भारा लिएका छन्, उनले नै कुचुपो जमातको अभिमारा लिनू । शुभ ।

### व्याख्या

आफ्ना बाबु सिद्धिनरसिंहको धार्मिक प्रकृतिबाट लाभ उठाई श्रीनिवासमल्लले विद्रोही सरकार गठन गरेथे । त्यस सरकारलाई सर्वप्रथम मान्यता दिने कान्तिपुरका राजा प्रतापमल्ल थिए । तदनुसार वि.सं. १७१५ मा ती दुइको बीच सन्धि भएथ्यो । सो सन्धिबाट भक्तपुर, गोरखा मकवानपुर आदि राज्यले त्यस बेला श्रीनिवास मल्लको साथ दिएका थिएनन् भन्ने बुझिन्छ । यसो भए तापनि सिद्धिनरसिंहले छोरालाई दबाउनतिर लाग्नु त्यति श्रेयस्कर सम्झेनन् । यसकारण वि.सं. १७१७ मा सिद्धिनरसिंहले श्री निवासमल्ललाई राजपाट विधिवत् सुम्पिदिए । अनि सिद्धिनरसिंह राजर्षिका रूपमा रहन लागे भन्ने कुरा माथि लेखिसकेको छ ।

आफू विधिवत् राजा बनेपछि श्री निवासमल्लले राख्न लाएको यो पहिलो अभिलेख हो भन्न सकिन्छ । यस अभिलेखमा उनले दशैंको महानवमी धूमधामसँग मनाउन मूलचोक बनाएको कुरा परेको छ । सो मूलचोकको बीचमा इष्टदेवता श्रीयन्त्रजुलाई सुनको देवल बनाई प्रतिष्ठा गरेको कुरा पनि यस अभिलेखमा वर्णन गरिएको छ । यसरी कान्तिपुर, भक्तपुरमा जस्तै ललितपुर राजदरबारभित्र पनि मूलचोकले जन्म लियो । मल्लकालमा दशैं मुख्य गरी महानवमी धूमधामसँग मनाइन्थ्यो । मूलचोक यसको प्रमुखस्थल हुन्थ्यो । यसो हुँदा श्रीनिवासमल्ल राजाले ललितपुरको गौरव बढाउनाको लागि यस अभावको पनि पूर्ति गरेको देखिन्छ । महानवमीको दिन बलि दिन निकै राँगाहरूको आवश्यकता हुन्छ । त्यस आवश्यकताको पूर्ति गर्ने प्रबन्ध पनि यस अभिलेखमा गरिएको छ । कुचुपो नामक एक जगातबाट उठ्ने रकम जति राँगा किन्नको लागि यहाँ छुट्याइएको छ । प्रायः यस्ता *जगात* उठाउने भारा ठेकदारलाई सुम्पिने चलन थियो । यसो हुँदा जगातबाट उठेको रकम नगद रूपमा नबुझाई राँगाका रूपमा बुझाउने व्यवस्था श्रीनिवासमल्लले यहाँ गरेका हुन् ।

आफू शक्तिमा आएपछि आफ्नो गुणगान गराउन आफ्ना पुर्खाको समेत वंशावली लेखाई राख्न लाउने यस बेला चलनजस्तै चलेको थियो । यसै हुँदा श्री निवासमल्लले पनि यस अभिलेखमा आफ्नो साथै आफ्ना पुर्खाहरूको पनि वर्णन गराएका छन् । आफ्ना पुर्खाहरूको चर्चा गराउँदा यहाँ रत्नमल्लदेखि गराइएको छ । हुन पनि ललितपुरभेकमा भक्तपुरको अधिकार छुटाई



रत्नमल्लका खलकको अधिकार जमाउनामा प्रमुख भूमिका रत्नमल्लले नै खेलेका हुँदा श्री निवासमल्लले यो कुरा बुझेर नै उनीदेखिको आफ्नो वंशवर्णन गराएको देखिन्छ । रत्नमल्लपछि सूर्यमल्ल, अनि अमरमल्लको वर्णन यहाँ गरिएको छ । अमरमल्लको अर्को नाम नरेन्द्रमल्ल थियो । तात्कालिक अभिलेख आदिमा नरेन्द्रमल्ल नाम नै बढी प्रचलित रहेको पाइन्छ, तर प्रतापमल्ल आदिले भने नरेन्द्रमल्ल नलेखी अमरमल्ल लेखेको पाइन्छ । श्री निवासमल्लको यस अभिलेखमा पनि त्यही परम्पराको अनुसरण गरिएको छ । अमरमल्लपछि क्रमशः महेन्द्रमल्ल शिवसिंह, हरिहरसिंहको वर्णन यहाँ गरिएको छ । त्यसपछि लक्ष्मीनरसिंहको नामोल्लेखसम्म नगरी सिद्धिनरसिंहको वर्णन यसमा गरिएको छ । सिद्धिनरसिंहको वर्णन गर्दा यहाँ उनको श्री कृष्णउपरको भक्तिकोटीहोम गरेको, ब्राह्मणहरूलाई दान दिएको, राजर्षि बनेको चर्चा परेको छ । यस बेलासम्म सिद्धिनरसिंह पाटनमै थिए । ने.सं. ७९६ को भण्डारखालको उनको अभिलेखबाट यो कुरा थाहा पाइन्छ । यस बेला उनी राजकाजतिर नलागी धर्मकर्मतिर लागेका थिए । त्यसपछि यस अभिलेखमा श्री निवासमल्लको वर्णन गरिएको छ ।

यसरी तात्कालिक केही कुरा बुझ्न यो अभिलेख उपयोगी रहेको छ ।

★★★

(१०४)

## बलम्बू महालक्ष्मी मन्दिरको श्रीनिवासमल्लको पालाको अभिलेख

१. श्रेयो स्तु १ सम्वत् ७८७ चैत्रशुक्ल : नवम्यायान्तिथौ पुष्य-
२. नक्षत्रे धृतियोगे आदित्यवासरे मीनराशिगते सवित्रि क-
३. र्व्वकटरासिगते चन्द्रमसि, स्वस्ति अद्य स्वतवाराहकल्पे वैवसुक-
४. मन्त्ररे, कलिजुगे भर्त्तखण्डे जम्बुलुप्य, हेमव्रत्पारे वासु-
५. किक्षेत्रे पसुपतिसंनिधाने वाकमत्यायां, दखिनकुरुरे श्री-
६. मत् श्री ३ भारत्ये पुरिनगरे, थ्व देशस श्रीमत श्री ३ मांहालक्ष्मी-
७. देवतासके, श्री ३ निवासमल्ल थाकुलस शुभ पुनसिंह ह्म १ गु-
८. नसिंङ भारोसन रचअयितन दयका पुन भाषा सिंह ह्मं १ संकान्ति
९. गुथि समूहसन दयका जुरो प्रमान लघुनाथ भारोया वेरस ॥
१०. भाषा थ्वतेस्यन सिंह दयका जुरो - - - - भुय स यव देशया
११. गुनसिंह भारो सर्व्वसिंङ भारो हाकुख्वार भारो तुलसिभारो ॥
१२. धर्म्मराज भारो वयकुंठराम भारो ॥ नानसिंङ भारो ॥ वेखा
१३. भारो ॥ थ्वतेस्य ॥ स्वहस्तेन ॥ स्ववाचाना ॥ प्रतिपनेन । भुत्यन
१४. चिन्ता यास्य दवका जुरो ॥ माधरजित्यधगुरि ॥ लिखित देवज्ञ
१५. हरिकृष्णान ॥ शिल्पकार मुकुण्डराज भारो - - - डा जुरो ॥ शुभ ॥

अनुवाद

कल्याण होस् । ने.सं. ७८७ (वि.सं. १७१२४) चैत्र शुक्ल नवमी आदित्यवार पुष्य नक्षत्र धृतियोगमा, मीन राशिमा सूर्य गएमा, कर्कट राशिमा चन्द्रमा रहेमा, स्वस्ति, आज श्वेतवराहकल्प, वैवस्वत मन्वन्तर, कलियुगमा, जम्बूद्वीप भरत खण्डमा, हिमालयको फेदी वासुकि क्षेत्रमा, पशुपतिको नजिकै वाग्वतीको दक्षिण किनारमा श्रीश्रीश्री भारत्येपुरी शहरमा, यो शहरमा श्रीश्रीश्री महालक्ष्मी देवतालाई श्रीश्रीश्री निवासमल्ल ठाकुरको विजय राज्यमा गुणसिंह भारोले एउटा सिंह बनाउन लगाई चढाए । अर्को बेहोरा एउटा सिंह संक्रान्ति गुठी समूहले बनाइयो । प्रमान लघुनाथ भारोको कार्यकालमा यिनीहरूले सिंह बनाउन लाएको हो । - - - फेरि सोही देशका गुनसिंह भारो, सर्वसिंह भारो, हाकुख्वार भारो तुलसी भारो, धर्मराज भारो वैकुण्ठराम भारो, नानसिंह भारो, बेखा भारो यिनीहरू आफ्नै हातले आफ्नो वचनले - - - हेरविचार गरी बनाइएको हो । .......... यो लेख्ने दैवज्ञ हरिकृष्ण हुन् । शिल्पकार मुकुन्दराज भारो - - - - छन् । शुभ होस् ।

★★★

(१०५)

## बुङ्गमती कोलाखुटोल आगमघरको शिलालेख

### मूलपाठ

१. श्रीर्वतु ॥ संम्वत् ७८७ माघ कृन्ह, दंमि ॥ वसु-
२. वासरे, रोहिनिनक्षत्रे, ऐन्द्रजोगे, श्री श्री
३. हेर्वजयाके आवन चिययात, स्विछिय
४. मारको, पुन्हि गुथिया, थकाय जुको
५. भोया, श्रीवजाचाय्य श्रीगुनसागर-
६. जु, श्री मानसिंदेवजु, ज्येत, श्रीहना-
७. देवजु, श्रीकमचंद्रजु, श्रीजयचंद्र-
८. जु, श्रीनिरंजनजु, श्रीदैवज्ञ,
९. श्रीरन्हजु श्रीजित्रसिंजु, किरा-
१०. म भालोजुवार, थुति समोहन
११. पुनिह गुथिन सिं तया जुलो,
१२. थिथितोर वितन याङा जुरो
१३. दमि कुन्हु तया जुरो सुभ ॥



अनुवाद

कल्याण होस् । ने.सं. ७८७ (वि.सं.१७२३) माघ कृष्ण दशमी बृहस्पतिबार रोहिणी नक्षत्र ऐन्द्रयोगमा श्रीश्रीहेवज्रकहाँ तेलियाईंट छाउनाको लागि - - - चाहिने जति पूर्णिमा गुठीले बेहोरियो । वज्राचार्य श्रीगुणसागर श्रीमजिसिंदेव ज्येत श्रीहनादेव श्रीकर्मचन्द्र श्रीजयचन्द्र श्रीनिरन्जन श्रीदैवज्ञ श्रीरहन् श्री जिचसिं, किराम भारो जुवार, यति समूहको पूर्णिमा गुठीले काठ जति राखियो । - - - दशमीको दिन राखियो । शुभ होस् ।

★★★

(१०६)

## पाटन मातातीर्थ शिव मन्दिरको शिलालेख

### मूलपाठ

१. श्रेयोस्तु सम्वत् ७८७ आषाढमास्ये कृष्णपक्ष : ॥ अ-
२. मावास्यां तिथौ ॥ प्वक्षनक्षत्रे ॥ व्यतिपात जो -
३. गे ॥ अंगारवासरे । थ्व कुन्हु श्रीसूजग्रास महा-
४. पर्व्वदिने ॥ थ्व कुन्हु ग्वरज्रव्देशया श्रीसं -
५. ज्यानांथ जोगीया नाम्नेन स्वहस्तन ॥ चन्दन भ-
६. रारग्रापिवने, श्रीमत् श्री ३ ग्वरोखपादुका दे -
७. वर दयकं धुगा जुरो ॥ थ्व देवयात आय दुता
८. देव क्षलक्व वुंरो ५ एते क्षेत्र, थव नामन, कि-
९. सप्येदेया जिराम भावो मनिक भावो, जयन-
१०. सिंह भावो पडा भारो उजत भारो थ्व डाहम-
११. स्यनं देवपुजा यायमार जुरो ॥ शुभ ॥

अनुवाद

कल्याण होस् । ने.सं. ७८७ (१७२४) आषाढकृष्ण आमावास्या मङ्गलवार पुष्यनक्षत्र व्यतिपातयोग, यस दिन श्रीसूर्यग्रहणको महापर्व दिनमा, ग्वरज्रवुदेशका श्रीसंज्ञानाथ जोगीले आफ्नै हातले चन्दन भट्टारकको आसपासमा श्री ३ गोरखापादुका देवल बनाई सिध्याए ।

यी देवतालाई आयस्ता चढाए - देवखेलक्व खेत पाँच रोपनी आफ्नो नामले चढाए । किसिपिँडीका जिराम भावो, मणिक भावो, जय नसिंह भावो, पैंडा भारो उजत भारो यी पाँच जनाले देवताको पूजा गर्नू ।

शुभ होस् ।

★★★

(१०७)

## पाटन हरसिद्धि गाउँ इष्टदेव मन्दिरको शिलालेख

### मूलपाठ

१. श्रीवत संम्वत् ७८७ वैशाष शुक ८ उ-
२. दवाशरे ॥ भरुनिनक्षत्र ॥ आक्षम-
३. - - - - जोग ॥ मेषलासि ॥ चितायाक - -
४. भाव, र्यत - - वरां भाव । गोमिराज
५. म्र ॥ यदुसिंङ भावोः हाकुसिङ भावो
६. देव भावो : मारसिङ भावो ॥ हाकुसिं -
७. ङ भाव ॥ छे कजित ॥ अमिरहिम
८. थुति प्रमुखन मुडाव ॥ श्री श्री-
९. इत देवतासके ॥ लोहो तोरन दो -
१०. होरोपा जुरो देवारि सहजुरो
११. केतकि स्वान पात १ -
१२. - - - - - -

### अनुवाद

ने.सं. ७८७ (वि.सं. १७२४) वैशाख शुक्ल अष्टमी - - - वार भरणी नक्षत्र - - - योग, मेष राशिमा सूर्य गएमा, चिताइ गर्ने - - - गोमिराज यदुसिंङ भावो, हाकुसिंङ भावो देव भावो मारसिंङ भावो हाकुसिंङ भाव छेकशी अमिलक्ष्मी यति प्रमुख मिली श्री श्री इष्टदेवतालाई ढुङ्गे तोरण चढाइयो । - - - केतकी फूल एक पनि चढाइयो ।

★★★



(१०८)

## पाटन बलम्बु देवलाछीटोल महालक्ष्मी मन्दिरको शिलालेख

### मूलपाठ

१. श्रेयोस्तु, सम्वत् ७८७ चैत्र शुक्ल : ॥ नवम्यायान्तिथौ, पुष्य
२. नक्षत्रे, धृतियोगे आदित्यवासरे, मीनरासिगते सवित्री, क
३. र्क्कटरासिगते चन्द्रमसि स्वस्ति अद्य स्यतवाराहकल्पे, वैवसुक
४. मन्तरे, कलिजुगे, भर्त्तखण्डे जाम्बुलुप्य, हेमवत्पारे, वासु-
५. किक्षेत्रे, पसुपति संनिधाने वाकमत्यायां, दखिनकुरुरे, श्री-
६. मत् श्री ३ भ्रार्त्यपुरिनगरे, थ्वदेशन्स, श्रीमत् श्री ३ माहालक्ष्मी
७. देवतासके, श्री ३ निवासमल्ल थाकुलस शुभ, पुन सिंह म्ह १ गु-
८. नसिंङ भारोसन स्वआयितन दयका पुनभाषा, सिंह म्ह १, संकान्ति
९. गुथि समुहसन दयका जुरो, प्रमान लघुनाथ भारोया वेरस ॥
१०. भाषा, थ्वते स्यन सिंह दयका जुरो, भुय स यव देशया ॥
११. गुनसिंह भारो, सर्व्वसिंङ भारो, हाकुरव्वार भारो, तुलसि भारो
१२. धर्म्मराज भारो, वयकुण्ठराम भारो ॥ नानसिंङ भारो ॥ वेखा
१३. भारो ॥ थ्वतेस्यन ॥ स्वहस्तेन ॥ स्ववाचात ॥ प्रतिप्रनेन ॥ भुथन ॥
१४. चिन्ता यास्यां दयका जुरो ॥ माधरजित्य धं गुरि ॥ लिखित देवज्ञ
१५. हलिकृष्णन ॥ शिल्पकार मुकुण्डराज भारोन याङ्ग जुरो ॥ शुभ

### अनुवाद

कल्याण होस् । ने.सं. ७८७ (वि.सं. १७२४ चैत्रशुक्ल नवमी आदित्यवार पुष्यनक्षत्र धृतियोग मीनराशिमा सूर्य, कर्कटराशिमा चन्द्रमा रहेको बेलामा,

कल्याण होस् । आज श्वेतवराहकल्प वैवस्वत मन्वन्तर कलियुगमा, भारत खण्ड, जम्बूद्वीप, हिमालयको फेदी, वासुकिक्षेत्र, पशुपतिको नजिकै, वाग्मतिको दक्षिण किनारमा, श्री ३ भ्रार्त्यपुरी १ नगर, यस देशमा श्री ३ महालक्ष्मी देवतालाई श्री २ श्री निवासमल्ल ठाकुरको शुभराज्यमा, गुणसिंङ भारोले सिंह एक आफ्नो तर्फबाट बनाउन लगाई चढाए, फेरि सिंह एक संकान्ति गुठीका समूहले बनाउन लगायो । प्रमान (बडाहाकिम) लघुनाथ भारोको कार्यकालमा यिनीहरूले सिंह बनाउन लाएका हुन् ।

फेरि सोही देशका गुणसिंह भारो, सर्वसिंह भारो, हाकुरख्वाल भारो तुलसी भारो, धर्मराज भारो वैकुण्ठराम भारो, नानसिंङ भारो, वेखाभारो यिनीहरूले आफ्नै हातले, आफ्नो वचन दिई सक्दो

हेरचाह गरी बनाउन लाएका हुन् । माधरजित्य धँगुरी । यो लेख्ने दैवज्ञ हरिकृष्ण हुन् । कालिगढ मुकुन्दराज भारो हुन् ।

शुभ होस् ।

★★★

(१०९)

## पुलचोक गणेश मन्दिरको शिलालेख

### मूलपाठ

१. नमः श्रीगणेशाय नमः ॥ बिघ्नेश्वराय विराम वि-
२. श्वरूपाय ते नमः सर्व्वबिघ्निहरं देवं सन्नेशान्ति नमो -
३. स्तुते ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८७ आषाढ कृष्णः ॥ द्वादश्या-
४. न्तिथौ ॥ रोहिणी नक्षेत्रे ॥ वृद्धियोगे ॥ आदित्यवास -
५. रे ॥ थ्व कुन्हु पुरद्वस दयका यिनाय भराद प्रतिस्था
६. याङा दिन जुरो ॥ थ्वतेया गुथि श्रीरत्नमुनीजु जे -
७. वनसिंह, गुसिंह हृदयसिंह, शुषुरिदेव हृद-
८. यचन्द्र मनिसिंह माधवसिंह कृष्णसिंह हरसिंह
९. थ्वते प्रमुख पुरद्वस श्री ३ यिनाय भराद दयकं
१०. प्रतिस्था याङन सिधयका जुरो ॥ थ्वतेया दय-
११. काया छेथाय जेवनसिह याके मारकोवसपं -धु-
१२. नका जुरो ॥ थ्वते श्रीपरमेश्वर थापरपाया पुने -
१३. न थ्वते गुथि भारोपनिस पुत्र पौत्र वृद्धिरस्तु ॥ - - - शुभ
१४. थ्व देव सुनान तु जुरसनो धाधाधिधि याङन
१५. सुनान तुजुरसनो सेनकलसा पन्चमाहापा-
१६. तक राक जुरो ॥ ॥ शुभं ॥
१७. ॐ पुनभाषा थ्वदेशया नाम वानागिरि ॥ थ्व देवह-
१८. र दयका वार शिवान जुरो ॥ शुभ ॥

★★★



(११०)

## सिंहासनको श्रीनिवासमल्लको पालाको अभिलेख

ललितपुर मङ्गलबजारको प्रसिद्ध कृष्णमन्दिरमा प्रतिवर्ष ज्येष्ठपूर्णिमाको दिन एउटा सुनौला सिंहासन प्रदर्शनको लागि राखिन्छ । त्यसैमा यो अभिलेख कुँदिएको छ । यहाँ ने.सं. ७८७ दिइएको छ ।

संशोधन मण्डलद्वारा *अभिलेख संग्रह* ६ भागको १२ पृष्ठमा यो छापिएको छ ।

१. श्रेयोऽस्तु ॥ सम्वत् ७८७ श्रावणमास शुकलपक्षे अष्टमयान्तिथौ गुरुदिने ॥ थो कोन्हु श्रीश्रीजयश्रीनिवासमल्ल प्रभु ठाकुरयात, वछुवाहार महाबोधिगृह- ॥ साक्यवंश श्रीजोधाजुसन पिण्डपात्र दान याङन सुवर्णरचित सिंहासन, कदम्बवृक्षसहित छुंता ॥ सुनानों थ्व सिंहासन ङरसा न्हविद्यवाल बियाव काय दो ॥ शुभं
२. पुन भाषा सिजकमि, सिंकमि, ने षरकयात बियमार मो टं २

### अनुवाद

कल्याण होस् । ने.सं. ७८७ (वि.सं. १७२४) श्रावण शुक्ल अष्टमी बृहस्पतिबारको दिन श्री श्री जयश्रीनिवासमल्ल प्रभु ठाकुरलाई ओकुबहाल महाबोधिगृहका शाक्यवंशी श्री जोधाजुले पिण्डपात्र दान गरीकन कदम्ववृक्षसहितको सुनको सिंहासन चढाए कसैले यो सिंहासन घारोका लिने चाहे भने जमानीराखी लिन पाइन्छ । शुभ ॥ अर्को बेहोरा सिजकर्मि सिंकमी दुवै थरीलाई दुइ रुपिया दिनु पर्छ ।

**व्याख्या**

दुइ पङ्क्तिको सानो अभिलेख भए पनि यसको महत्त्व निकै रहेको छ । यसले नेपालमा प्राचीन कालदेखि चलेर आएको राजा प्रजाको सुमधुर सम्बन्धलाई औंल्याईरहेको छ । हाम्रो नेपालमा रहेको धार्मिक उदारतालाई पनि यस अभिलेखले निकै मात्रामा प्रकट गरिरहेको छ । साथै श्रीनिवासमल्लको राज्यकामला ललितपुरमा कायम भएको सुशासन, आर्थिक उन्नतिलाई पनि प्रकारान्तरले यस अभिलेखले देखाएको छ ।

लिच्छविकालदेखि नै नेपाल उपत्यकामा अझ विशेष गरेर ललितपुरमा अनेक बौद्ध विहारहरू कायम भएका थिए । ती विहारहरूमा भिक्षुसङ्घ रहन्थे । ती भिक्षुहरू श्रद्धालु राजा र प्रजाबाट प्राप्त भिक्षा, आर्थिक अनुदानको भरमा धर्मदेशना, जनहित हुने शिक्षाप्रसार आदि कार्य गर्दथे । धनी दानपतिहरू बराबर सारा दीपङ्कर बुद्धमूर्तिहरूको भेला गराई सारा भिक्षु बज्राचार्यहरूलाई उपस्थित गराई पिण्डपात्र दान गर्दथे, सम्यभोजन गराउँथे । यस्ता सम्यक् पूजा सम्यक् भोजन आदिमा खुद राजा पनि निमन्त्रित गरिन्थे । राजालाई पनि अर्ध्य पात्रादि पूजाद्वारा देवतालाई जस्तै सत्कार गरिन्थ्यो । राजाको पनि उपस्थितिमा हुने यस्ता सम्यक्पूजा, सम्यभोजनको महत्त्व

बौद्धमार्गी समाजमा बढी हुनु स्वाभाविक छ। राजाको सवारी हुँदा राजालाई सुनको सिंहासनमा राख्ने चलन थियो। यसै चलन अनुसार ने.सं. ७८७ (वि.सं. १७२४) मा पाटन बकुबहालका शाक्यवंश श्री जोधाजुले सम्यकपूजा मनाई राजा श्री निवासमल्लको सवारी चलाई राजालाई सुनको सिंहासन नै चढाएको उल्लेख यस अभिलेखमा परेको छ। राजाप्रतिको भक्तिको यो राम्रो उदाहरण हो भनी मान्न सकिन्छ।

हर सम्यकपूजामा राजाको लागि नयाँ सुनको सिंहासन बनाउन गाह्रो हुनु स्वाभाविक छ। यसकारण सम्यकपूजा गर्दा सुनको सिंहासनको खाँचो नपरोस् भनी यो सिंहासन बालगिरीमा दिने व्यवस्थाको उल्लेख यसमा परेको छ। त्यसको लागि दुइ रुपियाँ रकम बुझाउनु पर्थ्यो। त्यो रकम राजकोषमा जाने नभई सिंहासन बनाउन सिंजकर्मी, सिकर्मीले पाउने उल्लेख यसमा परेको छ। यसको अभिप्राय सो सिंहासन बिग्रिन नपाओस्, यसको आवश्यक मरम्मत पनि हुँदै रहोस् भन्ने हो भन्ने देखिन्छ।

मङ्गलबजारको प्रसिद्ध कृष्णमन्दिरमा प्रतिवर्ष ज्येष्ठपूर्णिमाको दिन यो सिंहासन प्रदर्शनको लागि राखिन्छ। यस सिंहासनमा दुइटा हात्तीमाथि बसेका सिंहको मूर्ति दुइतिर राखिएका छन्। तोरणको रूपको पाटामा उभिएको गरुडको मूर्ति अङ्कित छ तथा त्यसमाथि दुइटा नाग बेरिएर रहेको दृश्य अङ्कित छ। पछाडि अडेस लिने ठाउँमा ९ वटा नागको शरीर बेरिएर रहेको दृश्य देखाइएको छ। त्यसको वरिपरि कदम्बवृक्ष राखिएका छन्। यसरी यो सिंहासन दर्शनीय छ।

★★★

(१११)

## पाटन न्हुफले टोल उकुबहिलको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु संवत् ७८८ आषाढ शुक्ल प-
२. चम्या तिथौ अनुराढनक्षत्र, शुक्रमानयोगे
३. वृहस्पतिवासरे कर्कटरासिगते सवीति-
४. ------------राशिगते चन्द्रमसि ॥ इन्द्रमूर्ति वन
५. --------- पूर्व्वक जीर्णोद्धार -----------दानप-
६. ---------श्रीधनपति ------- सिंह
७. नायक भडार थ्वपनि नेह्म फुकिंज
८. -------- स्यं श्री ३ नकुवाहार ----- दय ---
९. का जुरो थ्वते ------------------
१० परत्रस मुक्ति जयमार



### अनुवाद

कल्याण होस्। ने.सं. ७८८ (वि.सं. १७२५) आषाढ शुक्ल पञ्चमी बृहस्पतिबार अनुराधानक्षत्र सुकर्मायोग कर्कटराशिमा सूर्य रहेमा, ------- राशिमा चन्द्रमा रहेमा, इन्द्रमूर्ति ----- पूर्वक जीर्णोद्धार गरियो। ------- श्रीदानपति -------सिंह नायक भँडार यी दुइ जना दाजुभाइले ------- श्री ३ नववहालमा ------- बनाए। यसको पुण्यले -------- परलोकमा मुक्ति प्राप्त होस्।

★★★

(११२)

## ल.पु.ई. वलखु सरस्वतीस्थान वैष्णवीको अभिलेख

### मूलपाठ

१. स्वस्ति ॥ श्रेयोऽस्तु: सम्वत् ७८८ मार्गशिरमास कृष्ण पक्ष ॥ त्रयोदश्यां
२. प्र चतुर्द्दश्याया तिथौ- विसाष प्र- अनुराढ नक्षत्रे धृतिजोगे, अंगा-
३. ल वासरे; थ्व कुन्हु, श्रीश्रीवैष्णवि भट्टारिकासके सिरानिर्म्मित ग-
४. रुडध्वज; सिखल व १ रोहो - लनरसिंह वाहार म्ह २ तुलसिराम
५. भारो, भार्य्या दमना भार्ज्या भारिका पुत्रि सुनावति न्दरूपुजा नकाव
६. तया; थ्वष्टि रोहोन प्रतिमा दयकं ॥ श्रीवैष्णविभट्टारिकासके दुन्तया
७. जुरो ॥ थ्वपिसमन। साहुति यज्ञ याडे पतिस्ठा याङा जुरो ॥ गोष्ठिस थं-
८. करिनानसिंह भारो, थर्व्वकारि नकिनी मयना गोर्मित भारो तुरसी-
९. राम भारो गोपिदेव भारो, कासिदेव भारो, सिवराम भारो; पूर्ण्ण
१०. सिंह भारो, लामकृष्ण भारो ङकुरिसिंह भारो; थ्वति गोष्ठि न चिन्ता या-
११. यमाल जुरो; सतेपुरी देवर ननिदक्षिन गृह तुरसिराम भा-
१२. रोन दयका जुरो ॥ ॥ संम्वत् ७८६ जेष्ठ मास्य शुक्ल पक्षे-
१३. द्वितीयान्तिथौ ........ षुत्या ........ दयका जुरो ॥ ॥ सम्वत् ७८८ काति
१४. क मास्य शुक्लपक्षे नौमियांतिथौ ........ श्रीगणपतिया देवर ल्हो-
१५. डा जुरो ॥ ॥ सम्वत् ७८० .... माघमास्य शुक पक्षे प्रतिपद्या-
१६. यान्तिथौ, थ्वसंम्वछरस जल धेनु द्वयका दिन जुरो ॥ शुभ ॥
१७. थ्वति तुरसिराम भारो नि ........ न्दयका जुरो थ्वतिया क-
१८. मि यलया श्रीरायम भारोजु; इति वैष्णविभत सम्यक .............

## अनुवाद

कल्याण होस् । ने.सं. ७८८ (वि.सं.१७२४) मार्ग कृष्ण त्रयोदशी उप्रान्त चतुर्दशी, विशाखा उप्रान्त अनुराधा नक्षत्र, धृतियोग, मंगलवार, यस दिन श्रीश्रीश्रीवैष्णवी भट्टारिकालाई ढुंगाको गरुडध्वज, श्रृङ्खला एका ढुंगाका ..... नरसिंह वाहन दुइ, तुलसीराम भारो, पत्नी दमना, पत्नी मालिका, छोरी सुनावतीले दरूपूजा गरी ढुंगे प्रतिमा बनाई चढाइए । यिनीहरूले सल्लाह-साहुति गरी यज्ञ गरी प्रतिष्ठा गरिएको हो ।

गोष्ठीका थकाली नानसिंह भारो, थकालिनी नकिनी मयना, गोर्मित भारो तुलसीराम भारो, गोपिदेव भारो काशीदेव भारो, शिवराम भारो, पूर्णसिंह भारो, रामकृष्ण भारो, ङकुर्रिसिंह भारो; यतिको गोष्ठीले हेरचाह गर्नु पर्छ । सत्यपुरीको देवल ननीको दक्षिणपट्टिको घरमा बस्ने तुलसीराम भारोले बनाएका हुन् ।

ने.सं. ७८६ (वि.सं. १७२३) ज्येष्ठ शुक्ल द्वितीयाको दिन ...... बनाइयो । ने.सं. ७८८ (वि.सं. १७२४) कार्तिक शुक्ल नवमीको दिन ........ श्रीगणेशको देवलको जीर्णोद्धार गरियो । ने.सं. ........... माघ शुक्ल प्रतिपदाको दिन यस साल जलद्रोणी बनाइयो । यति तुलसीराम भारो र ........ ले बनाइएका हुन् । यी बनाउने कर्मी पाटनका श्रीरायव भारो हुन् । .........

★★★

(११३)

# पाटन ज्याबहाल बहिल बाहिर पाटीको शिलालेख

## मूलपाठ

१. ॐ स्वस्ति श्रेयोऽस्तु ॥ सम्वत् ७८८ वैशाष शु-
२. क्लतृतीयायां तिथौ, कृत्तिका प्र रोहिनि
३. नक्षत्रे सोभागेयोगे शनिश्चरवासरे ॥
४. ज्याथवाहार विहारि वंतारिपिछे । ननि
५. वंतागृह ॥ हरिराम मावोसन थ्वता-
६. नामन तिरि धवंति उभयस्त नामन थ्व
७. फरे द्रयका श्री ३ रोक्यश्वर सक्तिसहि-
८. तन थ्व फरेस थापना याङा दिन जु-
९. रो ॥ थ्व फरेस, इन्द्रजात्रा स्वानछा कुन्हु
१०. श्रीरोकेश्वर तारा पूजा याङन दानपिते
११. थुते प्र १ चेक्न, मत छोयके फ २ सियाफके डे
१२. १ जिप थ्व कुड १ रा पारु, स्वात, सन्हान, पात २ ध



१३. रि कुड १ वजि कुड १ कगुरि थुते दयकेमार
१४. थुते चिन्ता याक ग्वहस्ति गुनसिंह भावो, सं-
१५. दु राम भावो, दथराछे मधु भावो जजमान पु-
१६. त्र सिवराम भावो थुतेसेन रोप मयास्य
१७. चिन्ता यायमार रोपया कारे पंचमा-
१८. हापातक राक जुरो ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ७८८ (वि.सं. १७२५) वैशाख शुक्ल तृतीया कृत्तिका उप्रान्त रोहिणीनक्षत्र सौभाग्ययोग शनैश्चरवार ज्याथवहाल विहारी वंतालिविछे ननी वंतागृहका हरिराम भावोले आफ्नो नामले तथा पत्नी धवंतीको नामले यो पाटी बनाई शक्तिसहित लोकेश्वर यस पाटीमा स्थापना गरे । यस पाटीमा इन्द्रजात्रा स्वानछाको दिन श्रीलोकेश्वर र ताराको पूजा गर्नु; यति दान दिनू ........ एक प्र तेलले बत्ती बाल्नू; दुइ पाथी भुटेको चिउरा, जिपथ्वं (जाँड विशेष) एक घडा ( ) एक कुरुवा मासु अदुवा भटमास सन्हाघासा, दुइ कहतारा दही, एक कुरुवा चिउरा, केराऊ, यति पारी दान दिनू ।

यसको चिताइ गर्ने गोष्ठी .... गुणसिंह भावो, संदुराम भावो, दथराछेंका मधुभावो, जज्मान छोरा शिवराम भावो, यतिले लोप नगरीकन हेरचाह गर्नू । लोप गरे भने पञ्चमहापाप लागोस् ।

★★★

(११४)

# थानकोट शिखछेटोल आदिनारायणको शिलालेख

## मूलपाठ

१. ॐ नमो नारायणाय ॥ ........
२. सर्व्व ........ वतिवसुमति कंपिते ........
३. ........ दिवज्वलितं ........ सदाहं वन्दे श्रीतेनतेयवि-
४. हग ..... पति नाग ..... कारे ॥ ॥ स्वस्ति ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७-
५. ८८ ज्येष्ठमासे कृष्णपक्षे ॥ प्रतिपदा परा द्वितीयात्थौ ॥ ..... प्र मूलन-
६. क्षत्रे ॥ साध्ययोगे ॥ आदित्यवासरे ॥ थ्व कुन्हु थं क्वाठदेश .....
७. लयुयता गृह, शिवराम दुवार भारो थ्वम ज्येष्ठ पुत्र मोति राज
८. भारो द्वय ........

९. सन थांकलया ........ याथ वैकण्ठ सिवासार्थ श्री ३ नारायण प्रीति
१०. ........ थ्व लोहो खम्म ...... जुरो ॥ शुभं भूयात् ॥ ॥

### अनुवाद

नारायणलाई नमस्कार। ........ गरुडवाहन नारायणलाई म सधैं ढोग्दछु।

कल्याण होस्। ने.सं. ७८८ (वि.सं. १७२५) ज्येष्ठ कृष्ण प्रतिपदा उप्रान्त द्वितीया, आदित्यवार ..... उप्रान्त मूलनक्षत्र साध्ययोग यस दिन थंक्वाठ (थानकोट) देश, लयंगागृहका शिवराम दुवार भारो, यिनका जेठा छोरा मोतिराज भारो दुवै जनाले ........ वैकुण्ठ बास होस् भनी श्री ३ नारायणलाई प्रसन्न पार्न यो ढुंगाको स्तम्भ राख्न लाएका हुन्।

शुभ होस्।

★★★

## (११५)

## ल.पु.इ. सतुंमोल गणेश मन्दिरको तोरणमा रहेको अभिलेख

### मूलपाठ

१. सम्वत् ७८८
२. काटिक शुक्रपक्ष नवमि
३. कुन्हु दुंटा, तुसिराम भारोन
४. दुंता जुरो
५. ....... थान

### अनुवाद

ने.सं. ७८८ (वि.सं. १७२४) कार्तिक शुक्ल नवमीको दिन तुलसीराम भारोले यो तोरण चढाएका हुन्।

★★★



## (११६)

## पाटन चापागाउँ सवाटोल टीकाभैरव मन्दिरको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु सम्वत् ७८९ चैत्र शुक्र पूर्ण्णमा-
२. वास्या। तिथौ ॥ हष्टनक्षत्र ॥ हर्षन
३. जोग्य ॥ सोमवासरे ॥ थ्व कुन्हु ॥ ॥
४. श्रीश्रीश्री यरखामहाभैलव पर-
५. मेश्वरसके ॥ श्रीववा। यरखा त्वार ना-
६. यमगुलं पाख चोछे ॥ धर्मसिंह भा-
७. वो प्रमोखन ॥ ॥ वाहादिपधर्म्म स-
८. मूर्चयन ॥ सिँग थापन याङ
९. तया जुरो ॥ शुभ ॥ कल्यान गु-
१०. रु कृष्णसिंन्ह भाव, अमिराम
११. भाव , वशु भाव, वशुराज भाव
१२. नकराज धंलमकीत
१३. शुभ

### अनुवाद

कल्याण होस्। ने.सं. ७८९ (वि.सं. १७२६) चैत्र शुक्ल पूर्णिमा सोमवार हस्त नक्षत्र हर्षणयोग, यस दिन श्रीश्रीश्रीयरखामहाभैरव परमेश्वरलाई श्रीववा (चाँपागाउँ) यरखाटोल नायमगुलं पाखचाछेंका धर्मसिंह भावो प्रमुख भएको - दीपधर्म समुच्चयले सिंह स्थापना गरियो।

शुभ कल्याण होस्। गुरु कृष्णसिंह भावो, अमिराम भावो, वसु भाव, वुरराज भाव, नकराज, धंलमकीत ( ? )। शुभ।

★★★

## (११७)

# पाटन ॐबहाल टोलको मीननारायण मन्दिरको शिलालेख

## मूलपाठ

१. ॐ नमः श्रीकृष्णाय ॥ वारंवार मुदा रसस्मितमुखः सिक्यारिस्थापित
२. हारंहारमु दुःखरोपरिगत देहेगवीण न्यहयाता आयान्ति पुरतो विलोक्यज-
३. ननी । यष्टिकरे संधृतं वावन्धावमिह प्रकारितमुयपायात्समायार्मकः ॥
४. श्रेयोऽस्तु ॥ सम्वत् ७८९ फाल्गुणमासे शुक्लपक्षे । प्रतिपद्यान्तिथौ ॥ उ-
५. तराभाद्रनक्षेत्रे । शुभयोगे ॥ आदित्यवासरे । थ्व कुन्हु ध्वप्वगाउँ लयता-
६. गृह अमात्ते हरिराम भारोसन थ्वव छेया लिविस, लोहास ग्रन्थकुथ
७. देवल द्वदयका न्हव द्वयक तया श्री ३ गोपाल मूर्त्ति ... कन्या नेम्ह वो स्व-
८. र्ण्ण कलस ध्वजारोहन याङन महाधिराज श्री ३ श्रीनिवासमल्ल प्रभु-
९. राजत्वं ... विज्याचक ... दिन जज्ञ याङन प्रतिस्था याङा दिन जुरो ॥
१०. भाषा थ्व दिन कुन्हु .... यात ..... जात्रा यात पवित्रावरोहन ......
११. ष्टमि थ्व प्यं घातयात श्री ३ गोपाल प्रीतिन दुन्ता वेलस ....
१२. डा ५ वुगखल वु रोव २ ....... दुगार वु रोव छि १ थ्व ....
१३. नसि २ थ्वते वुया वलसानन .... एव दिन कुन्हु होम .... कुर ...
१४. देवपूजा यायन वुशाधन डायके माल । थ्वनलि फाल्गुण शुक्ल पुर्ण्ण मासि .....
१५. कुन्हु पूजाभर जो १ पन्चामृत ............
१६. ......... यात्रा यायमाल ॥ थ्वतेलि शाश्वत श्रावण शुक्ल । द्वादशी
१७. ......... पुजा याङन ..... मत दयकं .....
१८. न याय माल थ्वनलि श्रावण कृष्ण द्वादसि कुन्हु पूजा ...... पं-
१९. चामृत .......... दयकं श्री ...........
२०. .....................
२१. .....................
२२. .....................
२३. .....................
२४. .....................
२५. .....................
२६. .....................
२७. .....................



## अनुवाद

श्रीकृष्णलाई नमस्कार । सधैं खुसीले मुसुमुसु हाँसिरहने, सीकमाथि राखेको गाईको नौनी दुःख साथ बढी लिन कोशिश गर्ने, आमालाई लट्ठी लिई अगाडि आएको देखेर ...... ती माया गर्ने बालकृष्णले रक्षा गरोस् ॥

कल्याण होस् । ने.सं. ७८९ (वि.सं. १७२५) फाल्गुन शुक्ल प्रतिपदा आदित्यवार उत्तरभाद्र नक्षत्र शुभयोग, यस दिन ध्वप्वगाउ लयन्ता गृहका अमात्य हरिराम भारोले आफ्नो घरको आँगनमा ढुंगाको ग्रन्थकूट देवल बनाई अगाडि बनाई राखेको श्री ३ गोपालमूर्ति ..... स्थापना गरियो; ....... सुनको कलश चढाउने र ध्वजारोहण गर्ने काम गरियो; महाराजाधिराज श्रीश्रीश्रीनिवासमल्ल प्रभु ठाकुरको सवारी भएको थियो । ....... यज्ञ गरी प्रतिष्ठा गरियो ।

वेहोरा ........ यस दिन ....... जात्राको लागि पवित्रारोहन ...... अष्टमीको दिन चार पटक श्री ३ गोपाललाई प्रसन्न पार्न चढाएको ........ खेत पाँच रोपनी, वुंग खल खेत दुइ रोपनी, ........ दुगार खेत एक रोपनी, ........ दुइ रोपनी, यी खेतको आयस्ताले ....... दिन होम गर्नु, देवपूजा गरीकन बुसाधन गर्नु पर्छ । यसपछि फाल्गुन शुक्ल पूर्णिमाको दिन ......... पूजा सामग्री एक, पञ्चामृत ........ यात्रा गर्नु पर्छ । यसपछि श्रावण शुक्ल द्वादशीको दिन ...... पूजा गरी ....... बत्ती राखी ......... गर्नु पर्छ । यसपछि श्रावण कृष्ण द्वादशीको दिन पूजा ....... पञ्चामृत ....... राखी .........

★★★

## (११८)

# पाटन लाछीटोल भीमसेनको मन्दिरको शिलालेख

## मूलपाठ

१. ? नमःश्रीभीमसेनाय ॥ कौलराजनिहन्ता-
२. र द्रोपत्यानन्दकारकः ॥ माननिभयज-
३. विहं वन्देहं पवनात्मजम् ॥ ॥ ? श्रेयोऽस्तु ॥
४. सम्वत् ७८९ वैशाषमासे कृष्णपक्षे ॥ द्वितीया-
५. यान्तिथौ ॥ ज्येष्ठानक्षेत्र ॥ सिद्वियोगे ॥ शुक्रवास-
६. रे ॥ थ्वक कुन्हु पटको । लाछेया, श्रीमत् श्री ३ भीम-
७. सेन भट्टालकासके, स्वर्ण्णकलश ध्वजावलोहन दि-
८. न जुरो ॥ थ्व गजुरि छावपनि थ्वते चिकुधिक प्र-
९. जापति, विजयसिंह प्रजापति, विष्णुराम प्रजापति
१०. माधवराम प्रजापति छेहृभो गोविन्दराज प्रजापति

११. देवसिंह प्रजापति परु प्रजापति, मदनसिंह प्रजा
१२. मालसिंह प्रजापति विश्वप्रजापति, लुसिंह प्रजा-
१३. पति, ग्याणसिंह प्रजाति, मानसिंह प्रजापति, थ्व जि-
१४. म स्वम्हसेन चवदश गुथि न छपो छाया जुरो सुखुरि
१५. प्रजापति, भल प्रजापति छेहभो वावुराज प्रजापति जित्र, सिं-
१६. ह प्रजापति कित्तिसिंह प्रजापति, कृष्णसिंह प्रजापति
१७. जिवन केश प्रजापति, कुतुसिंह प्रजापति, ककु प्रजा-
१८. पति, भालसिं प्रजापति, थ्व जिम्हसेन चव-
१९. दश गुथिन छपो छाया जुरो ॥ भूय थ्वते समू-
२०. हन स्वतं छत्र २ दोहोरपा जुरो ॥ सर्व्वदा शुभं ॥

### अनुवाद

श्रीभीमसेनलाई नमस्कार । कौरवहरूलाई नाश पार्ने द्रौपदीलाई आनन्द दिने, ........ भीमसेनलाई म ढोग्दछु ।

कल्याण होस् । ने.सं. ७८९ (वि.सं. १७२६) वैशाख कृष्ण द्वितीया शुक्रवार ज्येष्ठानक्षेत्र सिद्धियोग, यस दिन पटको लाछिका श्रीश्रीश्री भीमसेन भट्टारकलाई प्रसन्न पार्न सुनको गजुर चढाउने, ध्वजारोहरन गर्ने काम गरियो । यो गजुर चढाउनेहरू यी हुन् ...... चिकुधिक प्रजापति, विजयसिंह प्रजापति विष्णुराम प्रजापति माधवराम प्रजापति छेह्मो गोविन्दराज प्रजापति देवसिंह प्रजापति परु प्रजापति मदनसिंह प्रजापति मालसिंह प्रजापति विश्व प्रजापति लुसिंह प्रजापति ज्ञानसिंह प्रजापति मानसिंह प्रजापति यी तेन्ह जनाको चतुर्दशीको गुठी ले एउटा गजुर चढाइएको हो । सुखुरी प्रजापति, भल प्रजापति, छेहमो बाबु राज प्रजापति, जिथसिंह प्रजापति, कीतिसिंह, कृष्णसिंह प्रजापति, जीवनकेश प्रजापति, कुतुसिंह प्रजापति, ककुप्रजापति, मालसिंह प्रजापति, यी दश जनाको चतुदशी गुठीले एउटा गजुर चढाइएको हो । फेरि यस समूहले तीन तह भएको छत्र दुइटा चढाइए । सधैं शुभ होस् ।

★★★

## (११९)

## पाटन सतुंगल देउननिटोल वैष्णवी मन्दिरको शिलालेख

### मूलपाठ

१. ? ॐ नमः श्रीविष्णुवै नमः ॥ अतसी पुष्पसंकाशां, शंखचक-



२. गदाधरां । खगराजगतां वन्दे वैष्णवीं विष्णुवल्लभांनन्द-
३. नागनगवर्षे, माघे मासिवुधे दिने । तिथौ कामे सिते पक्षे
४. हाकुनादः कृतं तदा ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८९ माघमासे शु-
५. ल्कपक्षे त्रयोदश्यान्तिथौ पुषानक्षेत्रे सौभाग्ययोगे ॥ वुधवा-
६. सरे ॥ आस्मिंदिवसे सतंगल देश पाघदि लंवन्ता तवखाछे
७. हाकु भा क्वाठनायक भारोन श्री ३ वैष्णवी देवीस्त गजुर भ-
८. गिर सुद्धा लुनं सियकं ॥ गरुडः धवलन्हसिम्हं २ सिधयकं दु-
९. न्ता दिन जुरो ॥ जदिथमछायान्हं थ्व गजुररिसं कोयकं-
१०. लुं स्वतं छत्र जुरो ॥ जतो धर्म्म ततो फल सर्व्वदा शुभ ॥

### अनुवाद

श्रीवैष्णवी देवीलाई नमस्कार । आलसको फूलजस्ती शङ्ख चक गदा हातमा लिएकी, विष्णुकी प्यारी, गरुड चढेकी वैष्णवीदेवीलाई ढोग्दछु ।

ने.सं. ७८९ (वि.सं. १७२५) माघ शुक्ल त्रयोदशी बुधवार पुष्यनक्षत्र सौभाग्ययोग, यस दिन सतुंगल देश पाघडी लंवन्ता तवखाछेंका हाकु भाव्काठनायक भारोले श्री ३ वैष्णवी देवीलाई प्रसन्न पार्न गजुर भगिर ( ) समेतमा सुवर्ण लेप गराए; गरुड र ढलौटे सिंह दुइटा वनाउनलाई चढाए ।

जहाँ धर्म हुन्छ; त्यहाँ फल फल्छ । सधैं शुभ होस् ।

★★★

## (१२०)

## थानकोट सिम्हछेंटोल नारायणस्थानको शिलालेख

### मूलपाठ

१. ॐ नमो नारायणाय ॥ विष्णु माघ गुणा ..........
२. दिविषया ......... नारायणं नमस्यामि प्रभापुरिसंस्थितं
३. नन्दनागनगे वर्षे वैशाखसित पक्षके । तृतीयायां कवे-
४. र्व्वारि, जीर्णोद्धारं कृसं तदा ॥ प्रसाद पूर्णरचित नारायण
५. परायणः । श्रीनिलमाधवेन ........ स्वपितामहकारितः ॥
६. अथ नेपालभाषा ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८९ पौख शुक्ल ॥
७. द्वादश्यान्तिथौ ॥ न्हा अधयसिंह दुवाल भारो, अजानं

८. दयका देवर श्रीमत् ३ श्रीश्रीनारायणमूर्त्ति परमे-
९. श्वर पतिमा द्वेयकं सूवर्ण्ण गजुलि ध्वजारोहन दिनस
१०. स्यपन जज्ञं याङनो दयकं अजा अभयसिंह भारोन
११. न्ह दयंका सथन छय जुगि भारोन रोहोन फल चिनकं
१२. लिथें छुतु जुलसेनोमालको सेल्हो चिन्ता गुथिस ग्वार का
१३. सन जुरो ॥ ॥ थ्व परमेश्वर पूजा नित्य कर्म्म श्रीव्राम्हनजु
१४. सन पूजादि वु रोवाषु ६ जुरो सलिङा दुलिसि कुन्हुं वो-
१५. साधनया वु दीप दोल वु रो वो न्ह सत्या ७ व्यावसह
१६. थ्व क्षेत्रया वरसानन वर्षप्रति व्राह्मन पूजा विधि विधान द-
१७. को याङ दानधरि वजि म्वाच दकलि दको नां पदार्थ याङ
१८. नों इन्द्रजात्रा दुलिसि कुन्हु प्वात स्वं ३ मतं ४ पुनिसि कुन्हु
१९. घेलदीवा प्वात छि १ थ्वते चिन्ता निस्त्रपं जजमान जुगि
२०. भारो प्रमुखन, चोछें गोपालिक मानसिंह, सूर्य्यराम
२१ राम ......... भागिराम थ्वतेसन्त पापमयस्य-
२२. गुथिसन चिन्ता याय मार ॥ सर्व्वदा कल्याणम-
२३. स्तु ॥ शुभं ॥ गोपारि ............ ॥

★★★

(१२१)

## पाटन कुलिम्हटोल चिबहाल भित्रको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय ॥ जयः सिद्धि सुरासुरलोक-
२. गुरुं कमलासन संस्थित पादपे - दशपार-
३. मिता दिगन्त ....... ........ सदा वर का-
४. रकं । श्रेयोऽस्तु ॥ सम्वत् ७८९ कार्तिकमासे
५. शुक्लपक्षे ॥ द्वादश्यान्तिथौ ॥ रेवतीनक्षत्रे
६. सिद्धियोगे वृहस्वतिवासर ॥ थ्व कुन्हु को-
७. निम्ह लंवन्तागृह .......... जकेसिंह ..........
८. .......... भावो कृष्णसिंह भावो कृष्णराम क-
९. मि ॥ थ्व स्वह्म फुकिंज ॥ समूच्चयन ॥ थ्व श्री ३ चै-



१०. त्र भराड देव दयकं ॥ यज्ञ याङन प्रतिष्ठा
११. याङा दिन जुरो ॥ ॥ शुभमस्तु ॥

### अनुवाद

बुद्धलाई नमस्कार । ........ देव, दानव र मनुष्यहरूका गुरु भएका, पद्मासनमा रहेका ........ दशपारमिताले दिशा छेउछेउसम्म ........ वर दिने देवतालाई प्रणाम गर्दछु ।

कल्याण होस् ने.सं. ७८९ (वि.सं. १७२५) कार्तिक शुक्ल द्वादशी बृहस्पतिबार रेवतीनक्षत्र सिद्धियोग, यस दिन कोनिम्ह लंवन्ता गृहका ........ जकेसिंह भावो कृष्णसिंह भावो कृष्णराम ........ यी तीन जना दाजुभाइ मिली यी श्री ३ चैत्य भट्टारक देवता बनाउन लाए यज्ञ गरी प्रतिष्ठा गरियो । शुभ होस् ।

★★★

(१२२)

## पाटन यवुटोल गुह्यबहालभित्रको अभिलेख

### मूलपाठ

१. ॐ नमः श्रीपरमेश्वरस्त्रैलोक्यवीजयायै । नमस्ते कोधराजाय-
२. सर्व्व दुष्ट निवारणं । त्रैलोक्यवीजयादीनां सर्व्वकोधं नमोस्तु ते ॥
३. श्रीयोऽस्तु सम्वत् ७८९ श्रावण शुक्ल सप्तम्यायां प्र, अष्टम्या-
४. यां तिथौ, स्वातिनक्षेत्र, शुभयोगे, आदित्यवासरे, थ्व कुन्हु
५. श्रीग्वाछेवाहार मूरचोक इष्टदेवता त्रैलोक्यवीजया भढार-
६. कास गृहद्वार, विचित्रालंकार, काष्ठतोरण सकर समोह-
७. न द्वहरपा जुरो, दानपति श्रीसाक्यभिक्षु श्रीमनिसिंह दे-
८. वजु जेष्ठपुत्र श्रीमंजुराजुजु, द्वितीय पुत्र श्रीमंजुसिंहजु, श्री
९. देवमुनिजु, श्रीगुणदेवजु, श्रीहाकुजु थ्वते प्रमुखन, थ्व
१०. इष्टदेवता त्रैलोक्यवीजया भढारकासस्के क्ववशेया-
११. दुहाय दुवारस तोरण कुट तया जुरो ॥ ॥ थ्वतेया वयमा
१२. राक्व सकरे मनिसिंह देवजुया टुटु करमियात ज्यारा जुक्व
१३. हाकुजुया सिकमियात जुक्व मतकारण विया जुरो ॥ ॥
१४. श्रीक्वाचपारजुजुयात मुसिरी ल्यागा पु १ दुन्ता जुरो । गर

१५. तान जुक्व देवङ गुणदेवया जुरो ॥ थ्व-या पुण्यन सिद्धि
१६. फल रायुव जुरो ॥ शुभ ॥ ॥ नाम सँगीतिसेवाया जुरो
१७. थ्व वेलस खपो याकात यके यर वउ राङ श्रीश्री
१८. श्रीनिवासमल्ल प्रभु थाकुलस्य राज्य याङ बिज्याङा जुरो ।

### अनुवाद

श्रीपरमेश्वर त्रैलोक्य विजयलाई नमस्कार । सबै दुष्टहरूलाई नाश पार्ने त्रैलोक्य विजय कोधराज़लाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७८९ (वि.सं. १७२६) श्रावण शुक्ल सप्तमी उप्रान्त अष्टमी आदित्यवार स्वातिनक्षत्र शुभयोग यस दिन, श्रीग्वाछे बहाल मूलचोकमा इष्टदेवता त्रैलोक्यविजय भट्टारकलाई घर ढोका विचित्र अलंकार काठको तोरण आदि सम्पूर्ण समूह चढाइयो ।

दानपति श्रीशाक्यभिक्षु श्रीमणिसिंहदेव, जेठा छोरा श्रीञ्जुराज, माहिला छोरा श्रीमन्जुसिंह, श्रीदेवभूति, श्रीगुणदेव, श्रीहाकु यति जना प्रमुख भई आफ्ना इष्टदेवता त्रैलोक्यविजय भट्टारकलाई ..... भित्र पट्टिको द्वारमा तोरण चढाइयो । यी सबै आउनु पर्छ । कर्मीलाई ज्याला जति मणिसिंहदेवले दिएका हुन् । सिकर्मीलाई ज्याला जति हाकुजुले दिएका हुन् । श्री क्वाचपाल देवतालाई भुसिरी, ल्हागा एक चढाइयो । तरतान जति ........ गुणदेवले दिएका हुन् । यसको पुण्यले सिद्धिफल प्राप्त होस् । शुभ होस् । नामसँगीति सेवाले गरेको हो ।

यसवेला भक्तपुर एक्लो परेको थियो । ........ ललितपुरमा आकमण गर्न आउने पर्किए । यसबेला श्रीश्रीश्रीनिवासमल्ल प्रभु ठाकुरले राज्य गरिरहनु भएको थियो ।

★★★

### (१२३)

## पाटन दुपाटोल गणेश मन्दिरनिरको नाट्येश्वरको मन्दिरमा रहेको शिलालेख

### मूलपाठ

१. ? ॐ नमो ॥ श्रीगणेश्वराय: दुपातत्वारसइनाय
२. वाहाल: देवहिराव ॥ दयका जुलो: सम्वत्
३. ७९० चैतमास्य: कृष्णपक्ष: दसम्यां । तिथौ: श्रवम
४. प्र: धनेस्तनक्षेत्रे: श्रीद्धियोग्य: श्वमवार कुन्हु: द-



५. यका जुलो ॥ श्रीवजाचाय्य विजराज गुरु वाहा-
६. लन: थिनाय सिवा दयका जुलो: थकारि ग्वमिरा-
७. ज: विजसिङ ॥ जगराम: यन्द्ररा गुमिसिङ ॥ असिङ ॥
८. ज्ञोकित ॥ तेथा ॥ मनिसिङ ॥ गुमिराम ॥ हाकुसिङ ॥
९. सुषुदेव ॥ सुषुचा ॥ सिलाम ॥ मालसिङ ॥ माधसिङ
१०. किहिमसिङ ॥ अमिराज: जिगीसिङ ग्वमिराज प्रभुष-
११. न ॥ चपारालिवि ॥ यन्द्ररछेह्मोज जुस्यं ॥ थुति पंच उ-
१२. राचकं ॥ थिनाय मत कारन दयका जुरो ॥ शुभ ॥ पुन-
१३. वार ॥ थुति समोहनं रोहो तोरन: डदु कुन्हु तया-
१४. जुरो शुभ ॥

### अनुवाद

श्रीगणेशलाई नमस्कार । दुपाटटोलका बहालका गणेश देवता फेरि अर्को बनाइए ।

नेसं. ७९० (वि.सं. १९२७) चैत्र कृष्ण दशमी सोमवार श्रावण उप्रान्त घनिष्ठा नक्षत्र सिद्धियोग, यस दिन बनाइएको हो । श्रीबज्राचार्य बीजराज गुरुबहालले गणेश-सेवा खलक बनाएका थिए । थकाली गोभिराज, बीजसिंह जगराम यन्द्रा गुमिसिङ असिङ ज्ञोकित तेथा मणिसिंह गुमिराम, हाकुसिङ सुखदेव सुखुचा श्रीराम, मालसिंह, माधसिंह किम्हिसिङ अभिराज विगिसिङ गोभिराज प्रमुख चपान्ह लिवि यन्द्ररछेह्मोज भई यति पन्चहरू मिली विनाय-मत (गणेश दीप) लिने खलक बनाइयो । शुभ ।

फेरि यति समूहले ढुंगाको तोरण दरु (अर्को वर्ष) को दिन चढाइयो ।

★★★

### (१२४)

## पाटन थेचोगाउँ चिलाछीटोल बालकुमारी देवलको शिलालेख

### मूलपाठ

१. ॐ श्रीश्रीश्रीकुमारि देवी ........ तया दिन सम्वत् ७९०
२. मार्ग्गशिल शुक्ल पूर्णमाशि: रोहिणिणक्षत्र ........ ह
३. य: मृग ........ धयोग शणिचलवाल श्री ३ कु-

४. मारि देवि सके लुतोलण दुन्तोलण दुन्ताः सतेलाम कभ्किः मालसिंह
५. आदिरामः शुजः लमेसिंङः थ्वतेप्रमुखण ॥ वादाद्रे गुनि द-
६. यकाः थकाली ग्वमेराजः मनिसिङ : देवलातः अनामः
७. अस्तिः ग्वपिरामः पलिखः मनिसिङ सोकुवदेवः कम-
८. रामः मारसिंङः जयदेवः पन्दवः सतेराम यलपाः का-
९. सिरामः किन्हसिङः रुसिङः जुगिदेवः रामसिङः देव
१०. सिंङः कासिरामः किन्हसिङ कासिराम जुगि चपाको
११. श्रीदुंथलि शुलुथि देसयाः तव नणि चैकुलिछे सतराम छेह्मोय
१२. शुभमस्तु शवदा शुभः थ्व तोरन चवदश गुथिन णि-
१३. दान याय माल शुभ ॥

★★★

## (१२५)

## पाटन थेचोगाउँ चिलाछीटोल बालकुमारी देवलको शिलालेख

### मूलपाठ

१. ? ॐ श्रीश्रीश्रीकुमारिदेवि ........ तया दिन, सम्वत् ७९०
२. मार्ग्गशिल शुक्ल, पूर्ण्णमासिशः रोहिणिषक्षत्र ........ ह-
३. यः मृग ........ धयोग शणिचलवाल श्री ३ कु -
४. मारि देवि सके लुतोलण दुताः सतेलामकभ्किः मालसिंह-
५. आदिरामः शुजः लमेसिङः थ्वतेप्रमुखण ॥ वादाद्रेगुनि द-
६. यकाः थकालि ग्वमेराजः मनिसिङः देवलातः अनामः
७. अस्तिः ग्वपिरामः पालिखः मनिसिङः सोकुवदेः कम-
८. रामः मारसिंङः जयदेवः पन्दवः सतेराम लययाः का-
९. सिरामः किन्हसिङः रुसिङः जुगिदेवः रामसिङः देव
१०. सिङः कासिरामः किन्हसिङ, कासिरामः जुगिचपाको
११. श्रीदुंथलि शुलुथिदेसयाः तवनणि यैकुलिछे सतराम छेह्मोय
१२. शुभमस्तु शवदा शुभः थ्व तारेन चवदश गुथिन णि-
१३. दान याय माल शुभ ॥

★★★



## (१२६)

## पाटन मत्स्यगाउँ वैष्णवी मन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ शुभ ॥ सम्वत् ७९० फागुन कृ-
२. न्ह २ श्री ३ परमेश्वरी विन्हुवि दे-
३. वी श्री ३ परमेश्वरी, यीद्रायनि
४. देवी, थो। सिंह नीम्ह दोहरपा दु-
५. वार, सतेराम जु भार्ज्या विम्म-
६. राजु, प्ररभुषन दोहरपा
७. ॥ शुभ ॥ ॥ मछेन्द्रपुंली ॥

### अनुवाद

शुभ होस्। ने.सं. ७९० (वि.सं. १७२६) फाल्गुण कृष्ण द्वितीया, मत्स्येन्द्रपुरीका श्री ३ परमेश्वरी वैष्णवीदेवी र श्री ३ परमेश्वरी इन्द्रायणीदेवीलाई द्वारे सत्यरामजु र पत्नी विमलाजु प्रमुख भई दुइटा सिंह चढाइए।

शुभ होस्।

★★★

## (१२७)

## यंपिबहिलभित्र क्वापाल देवताको घरको शिलालेख

### मूलपाठ

१. ॐ नमोरत्नत्रयाय ॥ ॐ नमो धर्म्मधातुवागीश्वराय ॥ आकाशो निर्म-
२. रो भुतो निष्प्रपञ्च गुणाश्रयः पन्चस्कन्धात्मकः शान्तस्तस्मै तूपा-
३. त्मने नमः ॥ ॥ थित इत्यादि पुत जुलो ॥ ॥ तेन, पुत्रेणानुमते-
४. न च ॥ अतो यज्यायते पुण्यं कैवल्यवन्मदेशकं ॥ तेन पुण्यानुभावेन

५. प्रयान्तु ते सुखावतिं ॥ तेन पुण्यानुभावने श्रीनिवासो नृपः प्रभुः ॥ सु-
६. चिरं हि सुखं भुत्वा, प्रयान्तु हि पुरं शिवं ॥ अतः परन्नेपार भाषया लिखितः ॥
सम्वत् ७९२
७. माघशुक्ल त्रयोदश्यां तिथौ, पुनर्व्वसुनक्षेत्रे शाध्य यो
८. गो वृहस्पतिवासरे, थ्व कुन्हु मानिगराके, अधिपति महाराजा-
९. धिराज परमेश्वर परमभट्टारक श्री श्रीनिवासमल्ल प्रभु थाकुलस म-
१०. र्यायस, स एव मानिग्रया उत्तरस, ब्रह्मचर्य्य भिक्षि श्रीशुनश्रीमित्र-
११. न दयका श्रीयंपिविहारिस ब्रह्मचर्य्यभिक्षु श्रीशुन श्रीमित्र स वंशभि-
१२. क्षु श्रीनाथसिंह थ्वया पुत्र श्रीनुगुसिंह थ्वया पुत्र श्रीभानुदेव जुलो ॥ पु
१३. नर्भाषा थ्वगुलि दिनस स एव यंपि विहारिस श्री ३ बुद्धधर्म्मसंघ प्र-
१४. तिमा दयः स्थापना याङा दिन जुलो ॥ दानपति स एव भानुदेव-
१५. या पुत्र ब्रह्मचर्य्यभिक्षु श्रीदिनकर थ्वया स्त्री विजया थ्वया पुत्र भिक्षु
१६. श्रीदिनजोति थ्वते समूहन थ्व स्वम्हस थनथक्यत नामन दयका जुलो ॥
१७. मुयभुरचोकस म्ह ३ बुद्ध धर्म्मसंघ दयकं स्थापना याङा जुलो ॥
१८. शुभमस्तु सर्व्वजगता मिति ॥ ॥ सदा सर्व्वदा कल्याणमस्तु ॥
१९. पुनर्भाषा थ्व देवयाक, थ्व सं वछर सेहो आदिन
२०. समस्त ग्वम्हन कचंगर थन सेनकल वम्हयात
२१. पञ्च महापान.प राके जुलो ॥ ग्वम्हन थ्व दव्क सक-
२२. रसन निस्तपलमितक निदान याङ थ्वदेवया वतु
२३. ओल्मयात यथोवत शास्त्रफलराक जुलो

★★★

(१२८)

## पाटन टंगलवहाल मीननाथको अगाडिको चिबहालको शिलालेख

### मूलपाठ

१. ॐ नमो । धर्म्मधातु वागेश्वराय । नमस्ते पं-
२. चवुद्धानां अक्षोभ्यादिकुलत्रय ।मध्ये वैरो-
३. चननथं पंचवुद्धं नमोस्तु ते ॥ ॥ ॥
४. ? श्रीयोऽस्तु सम्वत् ७९३ फाल्गुण शुक्ल द-
५. शम्यायान्तिथां, आदानक्षत्रे, आयुष्मान-



६. योगे आदितवारसरे, थ्व कुन्हु प्रतिष्ठा
७. याङा दिन जुरो ॥ ॥ श्रीता निग्लवाहार
८. श्रीमत श्रीश्रीश्रीलोकेश्वर प्रीति पूर्व्वन
९. न्हवन दवुरिल्होङा, धर्म्मधातु चैवाहार
१०. ल्होङाव प्रतिष्ठा याङा दिन जुरो
११. थ्व वेलस मानिलाधिपति श्री २ श्री नि-
१२. वासमल्ल राजाया समयस जुरो ॥ थ्व
१३. तेयाक, श्रीतानिग्ल वाहार फंरचो को-
१४. णया, दानपति जजमान, सत्यरा-
१५. म भावो स्त्री गोपीनि. पुत्र मनहो-
१६. रसिंह भावो स्त्री पुना. त्रि मनमोह-
१७. न मोहनसिंह, थ्वते प्रमुखन
१८. चिकं अतवन चिङाः थुवतिया प्र-
१९. मान जुरो ॥ आयु आरोग्य शुभं ॥

### अनुवाद

धर्मधातु वागीश्वरलाई नमस्कार । अक्षोभ्य आदि कुलत्रय र बीचमा रहेका वैरोचन सहित पञ्चबुद्धलाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७९३ (वि.सं.१७२९) फाल्गुन शुक्ल दशमी आदित्यवार आर्द्रानक्षत्र आयुष्मान्योग, यस दिन प्रतिष्ठा गरियो ।

श्रीतानिग्ल बहालका श्रीश्रीश्रीलोकेश्वरलाई प्रसन्न पार्न, न्हवनडवली (महास्नान गराउने डबुली) जीर्णोद्धार गरी, धर्मधातु चैत्यवहालको जीर्णोद्धार गरी प्रतिष्ठा गरियो ।

यसबेला मानिग्लका अधिपति श्री २ श्रीनिवासमल्ल राजाको विजय राज्य चलिरहेको थियो ।

यो काम गर्ने श्री तानिग्ल बहाल फरचोकोणका दानपति जजमान सत्यराम भावो स्त्री गोपिनी, छोरा मनहरसिंह स्त्री पुना, छोरा मनमोहन मोहनसिंह यति प्रमुख भई तेलिया ईंटले छाउने काम गरियो; यति प्रमाणले उक्त काम गरियो । आयु आरोग्य बढोस् । शुभ होस् ।

★★★

## (१२९)

# राता मत्स्येन्द्रको देवलको श्रीनिवासमल्लको अभिलेख

ललितपुर रातामत्स्येन्द्रको देवलको पूर्वढोकाबाट मन्दिरभित्र पस्दा भित्तामा टाँसी राखिएको ठूलो शिलापत्र देखिन्छ। त्यसैमा यो अभिलेख कुँदिएको छ।

संशोधन - मण्डलद्वारा अभिलेख- संग्रह १० भागका ७-११ पृष्ठमा यो अभिलेख छापिएको छ।

१. ॐ स्वस्ति ॥ श्रीश्रीश्रीमदार्य्यावलोकितेश्वर भट्टारकाय नमः ॥
श्रीमून्माणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्लदेव
प्रभु ठाकुरसन थ्व देशया मर्ज्जा-
२. दा व्हार थम स्यको थ्व संक्छललोव्हस चोस्यं तथा जुरो ॥ थवने
श्लोक चोस्यं तया अर्थ सेवदयु, मसेवदयु, थ्वतिया अर्थन भाषान
चोस्यं तया जुरो ॥ श्री ३ बुंग इष्ट-
३. देवतासके माणिग्लया राजापनिस्यन निस्त्रपेयात भाषा थ्वति ॥
श्री ३ त्रैलोक्यनाथ बुंग इष्टदेवताया स्नानजात्रा रथजात्रा आदिन
बुंग बिज्याचकेस, तववाहार बिज्याच-
४. केस राजापनिस्यन समस्त ज्या तोडतावं न्हथ्यातक बिज्यायमाल ॥
थुति जात्रास राजापनिस्यं शोक कष्ट जुरसां वाद्य बाजन मदयके मदो,
थति भाषा जुवराज श्री-
५. श्रीजोगनरसिंह साक्षी तयाव, भगीरथ भयीयाव साहुतिन तया जुरो ॥
रथयामारको थ्वन लुंपतिस चोस्यतको प्रमान यायमार जुरो ॥ पुन
भाषा वेसत
६. पनिस्यंन निस्त्रपे थ्यय, क्ये सेवासे शस्य आदिन वेलस दुकायाव
निदान यायमार, थव थवस मर्ज्जादाथ्व वाहीकन कचंगल यङन
सन्नेमदो श्री ३ बुंग इष्टदेव-
७. याके मीङक निस्त्रयेमार, रथयात्रा स्नानजात्रास, राजापनिस्के,
न्हकास्यं निमन्त्रन वयमार, थव थवस भारा जुक्व न्हकास्यं तारलाच
केमार, रथयातसिं साहार पखि
८. ओलत आदिन तोरलाचक तयभार, छातथ्यं बालहितो, घरकोतो चोयकं
हयमांर थुति थ्व थवस भारास चेत मतरसा, मयातसा श्री ३ बुंग
इष्टदेवया कुद-
९. ष्टि श्रीश्रीथाकुरया गुणाहागार जुरो, थ्वति भाषा जुवराज श्रीश्री



जोगनरसिंह साक्षी तयाव, भगीरथ भयीयाव साहुतिन तया जुरो ॥
वालाहीपनिस्यन निस्त्र-
१०. पे थ्यय थव थवस न्हपाया गथ्य छात जुर अथ्य यायमार सलतयक धक,
लिव्वातके धक चोनेमदो, थाकुरपनीस्यन जुरसां पर्य्याय पर्य्याययाथ्वं न्हा-
११. या व्यवहार तिन याङ बिज्यायमार, थुति भाषा जुवराज श्रीश्री
जोगनरसिंह साक्षी तयाव भगीरथ भयीयाव साहुतिन तया जुरो ॥
थ्व थ्यं घलकोपनिस्यन
१२. निस्त्रपें थथ्य न्हाया मर्ज्जाथय्यं बेहरपेमार, पुरान ओलत खेलेमदो,
महालायपनिओलत पुरान यायमदो, लिव्वातकेमदो, थ्वगुर पहरन
निस्त्रपेमार
१३. यथ्व मयातसा श्री ३ बुंग इष्टदेवता कुदृष्टि श्रीश्रीथाकुरया गुणाहागार
जुरो, थ्वति भाषा जुवराज श्रीश्रीजोगनरसिंह साक्षि तयाव भगीरथ
भयीयाव साहुति-
१४. न तया जुरो ॥ पुन भाषा श्रीश्रीजयश्रीनिवासमल्ल थाकुरसन
श्री ३ बुंग इष्टदेवता प्रीतिन आरतीगुथि दुन्ताया भाषा
थ्वति। रोव १२० वन्ह्याक भूय रो-
१५. व १० वन्ह्यांक रोव ५ ङखो, रोव ३ ज ३ चेतक्व, रो २ X भोलो-
क्व, कर्ष २ X तिचोथलि, भुयोखा ३ X पाघरिक्यव, जव ३ कु ७ X
तवबाहार जोवछें, खा ८ कु ९ पा-
१६. तार थंतिछे भुय खा १ कु १० बुंगदेवल ननिवन्ता जावछे, थ्वति
बुंछे, क्यव दुत्ता जुरो, थ्वतिया वरसानन, ताम्रपत्रस चोस्यतको
सामग्री दयक नसचास, ब-
१७. लन्हि आरती छोयकेमार जुरो, यखालषु त्वारया कोबाहार त्वा-
रया भूजोङ कुसरिया जुगि नेम्हस्यन, शंख पुयकेमार जुरो, थुति
भाषा गुथिसमूहप-
१८. निस्यन, ताम्रपत्रस चोस्यतया दानपत्रस चोङथ्य निस्त्रपेमार, खान
छम्ह वीथिवाहाबनकं प्रसन्न जुया जुरो ॥ भूय रोव ७ तग नालाजा,
रोव १ ज ३
१९. मतखेल, रोव ५ चोवाहार क्व, भूय रोव ४ चोबाहारक्व भूय रोव ३
चोबाहारक्व, रोव ७ ङखो भूय रोव १ जव १ ङखा रोव ५
ङखोयिता भूय रो २ ङखोयिता
२०. रोव ५ थंसिया कातद्व, रो ३ खोसि परिलीवने, रोव ७ लघना बुं
भूय रोव ५ लघना बुं खा २ क्वब, भूय खा ४ ध्वाखानपि पुखुडि
येताक्वब, खा २ तवबा-

२१. हार यंताछे, थंतिछेया छेडिकोट १ खा १ जव ३ वुंगदेवलननि महाकाल ग्रंथि
लीवनेछे तुति बुछे क्यव दुन्ता जुरो, थ्वतिया वरसानन, ताम्र पत्रस, चो-
२२. स्यतको, सामग्री दयकं, बान्हिसव, वाचासव आरती छोयकं निस्त्र पेमार जुरो,
सातिग्ल त्वारया, न्हुफले त्वारयान भुजोङ कुसरिया जुगि नेम्हस्य-
२३. न शंख पुयकेमार जुरो, थुति भाषां गुथिसमूहपनिस्यन ताम्रपत्रस चोस्य तया
दानपत्रसं चोङथ्य वेल मफेस्यं निस्त्रपेमार जुरो, खान छम्ह बीथि-
२४. बाहा वेनकं प्रसनन्न जुया जुरो, वीथिवाहायां खं थ्यन चोङथ्य प्रमान जुरो,
पुनर्व्वार जीव मधास्यं विमति यायमदो, राजा पतिस्यन जुरसां मवको-
२५. व्यङकें मदो, व्यङपनि मव्यङकें मदो, थ्वति भाषा, जुवराज श्रीश्रीजोगनरसिंह
साक्षि तयाव भगीरथ मयीयाव साहुतिन तया जुरो ॥ पुन भाषा स ए-
२६. व श्रीश्रीजयश्रीनिवास मल्ल थाकुरसन, ओहो प्रतापयात दुन्ता, रोव २ जव २
साखलख वु ताहाव धरयायेकं दाम, थ्वति वरसानन, फोकरा कुन्हु ओहो प्र-
२७. तापस तङनं ताम्रपत्रसं तोस्य तया दानपत्रस चोङथ्व गुथिसमूहपनि स्यन
निस्त्रपेमार जुरो ॥ भूय रोव ६ जव १ यमचो, कर्ष १ जव १ वलाता कर्ष १ ज-
२८. व ३, मति थ्वतिया वरसानन कार्तिक कृष्ण प्रतिपदा कुन्हु श्री ३ बुंग
इष्टदेवया अग्रस होम छोयकं मास उपवासन चोङ धर्म्मुमिपनि नो फेनकं भूय
२९. राथ्वक आदित्यवार प्रति श्री ३ लोडेक्वडे भट्टारकसके म्हं १ हंस
दयक पूजा याङन, ताम्रपत्रस चोस्य तया दानपत्रस चोङथ्य गुथिस- मूहपनि-
३०. स्यन निस्त्रपेमार जुरो ॥ भूय रोव ६ बलंवुस थ्वया बरसानन श्री ३
बुंग इष्टदेवता अग्रस चोङ सुवर्ण प्रनारीस चोङ महादेवपूजा याचकं
३१. ताम्रपत्रस चोस्यतया दानपत्रस चोङथ्य गुथिसमूहपनिस्यन निस्त्रपेमार
जुरो ॥ भूय न्हवन गुथिस दुन्ता रोव ६ सिलंवु थ्वतिया वरसानन
३२. गंगाजल आदिन ताम्रपत्रस चोस्यतक्व सामग्री दयकं श्री ३ बुंग इष्ट
देवता स्नान याचकं पन्चतार वाद्य थाय आरती छोयकेमार जुरो भूय भ्य-
३३. गुरजात्रासं पन्चतारवाद्य थास्यं आरती छोयकेमार जुरो, थ्वति भाषा
गुथिसमूह स्व खलकनं, ताम्रपत्रस चोस्य यता दानपत्रस चोङथ्य नि-
३४. स्त्रपेमार जुरो ॥ भूय शिवरात्र गुथिस दुन्ता रोव ७ कलुकोचा थ्वतिया
बरसानन ताम्रपत्रस चोस्य तक्व सामग्री दयकं पे (पहरसं पूजा यायमार जु
३५. रो ॥ थ्वति श्रीश्रीजयश्रीनिवासमल्ल थाकुरसन दुन्ता गुथिस, ताम्रपत्र स
चोस्यतया दानपत्रसचोङथ्य मयातसा श्री ३ बुंगदे इष्टदेव-
३६. ताया कुदृष्टि श्रीश्रीथाकुरया गुणागाहार जुरो, थ्वति भाषा जुवराज
श्रीश्रीजोगनरसिंह साक्षी तयाव भगीरथ भयीया व साहु-
३७. तिन तया जुरो ॥ थ्वति गुथिस राजा प्रमान जोवालल गुथिकतक आदिन
सुनानं कचंगल थन्नेमदो, कचंगल थनसा गोब्राम्हणादि पन्च



३८. महापातक राक जुरो ॥ पुनभाषा, माणिग्लस बसरपाव चोक्वस्यंन
चाकसिबिथिस धरमासालेस सुनानं राजा प्रमानयाके धायाव बेनके
३९. मदु ग्वम्हन बेनकर ओम्हयात श्रीश्रीबुंग इष्टदेवताया कुदृष्टि,
राजाया गुणाहागार थ्वति भाषा जुवराज श्रीश्रीजोगनरसिंह
४०. साक्षी तयाव भगीरथ भयीयाव साहुतिन तया जुरो ॥ पुन भाषा
श्रीश्रीराजान प्रजापति दुख बीयु थुति अर्थस जुरो, गढ प्राकार ज्या
४१. ता साल ज्यास दक्षिस छपोल जाथुसि कायस राजिकया ज्यास थ्वति
ज्यास, सुनानं बेङ मवेङ धास्यं भुइँयमदो, ग्वम्हन मयात, ओ-
४२. म्हयाके वसुत काय, खकिन चेय, पाखान पिकार्य जोग्य जोग्यथ्य शास्ति याय
थथ्य याङा धक प्रजा पनि दुख चायमदो, राजाप-
४३. निस्यन जुरसां, थवकेनिस्त्रपु धक बेङकेमदो, कुम्हरजुपनिस्य जुरसां
प्रमानपनिस्य जुरसां थव थवस्के निस्त्रपु धक थुति वि-
४४. थिबाहा बेङकरसा श्री ३ बुंग इष्टदेवता कुदृष्टि श्रीश्रीथाकुरया
गुणाहागार जुरो, थ्वति भाषा जुवराज श्रीश्रीजोगनरसिंह सा-
४५. क्षी तयाव भगीरथ भयीयाव साहुतिन तया, पुन भापा श्रीश्रीराजा
पनिस्यन जुरसां प्रजापनि मुमारकं अतिदुख बीयभदो, मु-
४६. मारकं फछिन दुख बिरसा प्रजापतिस्यन राजायाके फिराद यायमार
जुक्तिथ्य प्रजापनिस्यनं मयायंपदो, परमाननं भुइँयं म-
४७. दो थ्व समस्तं श्री बुंग इष्टदेवता आज्ञान परंपरा चोस्य तया जुरो,
श्रीश्रीजयश्रीनिवासमल्ल थाकुरया थ्व देहेन पिंकायाव
४८. भगीरथ भयीया चौतारा याङाव थव देहेव, ओव भीन्न मयाङा,
मेवनं भीन्न यायमदो, थ्वतिया साक्षी ३ बुंग इष्टदेवता
४९. श्रीश्रीजोगनरसिंह थाकुरस । पुन भाषा स एव श्रीश्रीजयश्रीनिवासमल्ल
थाकुरसन स्वमाता श्रीश्रीभानुमतीदेवी-
५०. स नामन श्री ३ बुंग इष्टदेवता प्रीतिन जोगीचक्र गुथि दुन्तास भाषा
थ्वति, रोव ६ अफल रोव ४ X ङखो रोव २ X कोल-
५१. जलधुनिक्व रोव ४ यिलदु रोव ३ ज ३ खोलंवु, थ्वति बुया वरसानन ताम्रपत्रस
चोस्यं तक्व सामग्री दयकं चैत्रकृष्णाया
५२. अमावास्या कुन्हु तववाहारस, घटस्थापना याङन जोगीचक्र नकेमाल जुरो
थ्वति भाषा श्री ३ त्रैलोक्यनाथया
५३. चरणारविन्दया सेवक जुवराज श्रीश्रीजोगनरसिंह थाकुर साक्षी तयाव,
भगीरथ भयियाव साहुतिन
५४. थ्व चोस्यं तया जुरो, लिखित नकबाहार विश्वसिंह ॥ ॥ श्रेयोऽस्तु
सम्वत् ७९३ फाल्गुण शुक्ल दशमी आदित्यवा-

५५. र थ्व हुन्हु थ्व संवच्छल लोहो स्थापना याङा जुरो । थ्वति वंधेज
राजानं प्रजानं मानय यायभार जुरो ॥ शुभ ॥
५६. पुन भाषा पसिल्यापनि सध्यसा, सिथिया चेकन पेङक कुत, थ्वति
सुनान ग्वाहारी मालसां बेङके मदो जुरो ।
५७. पुनु भाषा श्री ३ त्रैलोक्यनाथया रथयात्रायात लंजोगाजो मदो धक
नोहाल कस्तुतु सुनान रणि धनि धक धास्य
५८. लागास्य सन्नेमदो ॥ श्री ३ त्रैलोक्यनाथ रथस बिज्यातोले सुनान
लकामन नह्यामदो थुति न्हांनिस्यया नेम मानय-
५९. यायमार, थुति नेम मानय मयातसा श्री ३ बुंग इष्टदेवताया कुदृष्टि
श्रीश्रीथाकुरया गुणागाहार जुरो ॥ थ्वति भाषा
६०. जुवराज श्रीश्रीजोगनरसिंह साक्षि तयाव भगीरथ भयीयाव साहुतिन
तया जुरो ॥ पुनर्भाषा प्रजानिस क्यवलिबिस
६१. उच्चाछ्न थनसा सो आदिन भूमतलस कचंगल थनसा ओम्ह्याके लुं
प्ल १ श्रीश्रीराजदण्ड जुरो, सुनानं थ्व थिथि इष्ट-
६२. मित्र धक कोय मदो राजा प्रमानयाके विनति यायमदो, राजा प्रमाननं थ्व
थ्वके निस्त्रप यायं मदो जुरो ॥ पुन भा-
६३. षा थुगुर पर्य्यायस, पुरा वाधय याङा, ग्व वेलस पुरा स्यनङाव
सुनान बेङमबेङ धायमदो सकल्य प्रजापतिस्यन
६४. ल्होनेभार जुरो, थ्वति भाषा जुवराज श्रीश्रीजोगनरसिंह साक्षी
तयाव भगीरथ भयीयाव साहुतिन तया जुरो ॥
६५. पुरा ज्यास चिता याक श्रीश्रीराजवंश नरसिंह भाव, शुभ ॥

## अनुवाद

कल्याण होस् । श्री ३ आर्यावलोकितेश्वर देवतालाई नमस्कार । श्रीमाणिग्लका अधिपति, महाराजाधिराज श्रीश्री जयनिवासल्लदेव प्रभु ठाकुरले यस देशको (ललितपुरको) मर्यादा व्यवहार ( स्थितिरीति) आफूलाई थाहा भए जति यस संवत्सर लो हं मा लेखिराखिए । पोहर पद्यमा लेखी राखिएको थियो । त्यसको अर्थ बुझ्ने पनि होलान्, नबुझ्ने पनि होलान् । यसकारण भाषामा ( नेवारी भाषामा) लेखी राखियो ।

श्री ३ बुंग (मत्स्येन्द्रनाथ) इष्टदेवताप्रति माणिग्लका र राजाहरूले गर्नु पर्ने कुराको वेहोरा यस प्रकारको छ -- श्री ३ त्रैलोक्यनाथ बुंग इष्टदेवताको स्नान जात्रा, रथजात्रा आदिमा बुंगमतीमा जानु पर्दा तवबहालमा जानु पर्दा राजाहरूले सबै काम छोडिकन पनि निश्चित ठाउँसम्म जानु पर्छ । यी जात्रामा राजाहरूलाई आशोच, दुःख परे पनि बाजा-गाजाहरू निषेध गर्नु हुँदैन । यो बेहोरा युवराज श्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार राखिएको हो ।

रथसम्बन्धी चाहिने जति कुरा पोहर सुवर्ण पत्रमा लेखिए अनुसार प्रमाण मानी गर्नु पर्छ । अर्को बेहोरा-- बेसत (?) हरूले गर्नु पर्ने यस प्रकारको छ-- चामल सवाको--अनाज आदि बखतमै



भित्र्याई त्यसको हेरविचार गर्नु पर्छ । आफ्नोआफ्नो मर्यादा अनुसार बाहिक कचिंगल उठाउनु हुँदैन । श्री ३ बुंग इष्टदेवता प्रति राम्ररी काम गर्नु पर्छ । रथजात्रा स्नानजात्रामा राजाहरूलाई पहिले नै निमन्त्रणा पठाउनु पर्छ । आफूआफूले बोकिराखेका अभिभारा पहिले नै ठीक पारिराख्नु पर्छ । रथको लागि काठ, साहार, पखि ओलत आदि सामान ठीक पारी राख्नु पर्छ । पहिले उल्लिखित भएको स्थिति अनुसार वालाही घरकोहरूलाई ताकिता गरी ल्याउनु पर्छ । यति आफ्ना-आफ्ना अभिभाराको विषयमा मनलाएनन् भने, काम गरेनन् भन्ने श्री ३ बुंग इष्टदेवताको कुदृष्टि परोस्, श्रीश्री ठाकुरको (राजाको) सामुन्ने ती अपराधी ठहर्छन् । यो बेहोरा श्रीश्री जोगनरसिंह साक्षी राखी, भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

**वालाहीहरूले गर्नुपर्ने काम यस प्रकारको छ :-**

आफ्नोआफ्नो काम पहिलेदेखि जसरी निश्चित गरिराखिएको छ, त्यसरी नै गर्नु पर्छ । त्यस्तो गर्नु पऱ्यो भनी, बोलाउन आउलान् भनी अबेर गरी बस्नु हुँदैन । ठाकुरहरूले (राजा परिवारले) पनि पालोपालो अनुसार पहिलेदेखिको गर्नु पर्ने व्यवहार गर्नु पर्छ । यो बेहोरा श्रीश्री जोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

यसै गरी घलकोहरूले पनि गर्नु पर्ने यस प्रकारको छ -- पहिलेदेखिको मर्यादाअनुसार व्यवहार गर्नु पर्छ । पुरानो ओलतको प्रयोग गर्नु हुँदैन । महालायहरूले पनि पुरानो ओलतको प्रयोग गर्नु हुँदैन । ढीलो गर्नु हुँदैन । निश्चित समयमा काममा रहनु पर्छ । यस्तो गरेनन् भने श्री ३ बुंग इष्टदेवताको कुदृष्टि परोस् । श्रीश्रीराजाको सामुन्ने अपराधी ठहर्दछन् । यो बेहोरा युवराज जोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

अर्को बेहोरा-- श्रीश्रीजयश्रीनिवासमल्ल ठाकुरले श्री ३ बुंग इष्ट देवतालाई प्रसन्न पार्न आरतीगुठी चढाइयो । यसको बेहोरा यस प्रकारको छ --- बह्न्याकको १२० रोपनी, फेरि बहन्याकको १० रोपनी, ङखोको ५ रोपनी चेतकवको ३ रोपनी ३ जवा, भोलोक्वको २१/२ रोपनी तिचोथालिको २१/२ कर्ष, फेरि पाघरि क्यवको ३१/२ खा, तव वाहार जोवछेंको ३ जवा ७१/२ हाल थतिछेंका ८ खा, ९ हात पाताल, फेरि बुंगदेवल ननिवन्ता जावछें को १ खा १० हात ।

यति घरखेत बारी गुठी राखिए । यसको आयस्ताले ताम्रपत्रमा लेखिराखिए अनुसारको सामग्री राखी सन्ध्याकालमा आरति गर्नु पर्छ । यखालखु टोलका, कोबहालटोलका कुसले जोगी दुइ जनाले शङ्ख फुक्नु पर्छ । गुठियारहरूले यो बेहोरा अनुसार र ताम्रपत्र दानपत्रमा लेखिए जस्तै, गर्नु पर्छ । घरै पिच्छे एकजनालाई विधिव्यवहार नलाग्ने गरी (माफी गरी) निगाहा गरियो ।

फेरि तगनालाजाको ७१/२ रोपनी, मतखेलको १ रोपनी ३ जवा, चोवहारक्वको ५ रोपनी फेरि चोवहारक्वको नै ४ रोपनी फेरि चोवहार क्वको नै ३ रोपनी, ङखोको ७१/२ रोपनी, फेरि ङखोको १ रोपनी १ जवा, ङखो यिताको ५ रोपनी, फेरि ङखोयिताको नै २ रोपनी थंसियाकातद्वंको ५ रोपनी, खोसी परिलीवनेको ३ रोपनी, लघब्रध्वुको ७ रोपनी फेरि लघनावुं कै २ खा बारी, फारि धवाखानपि पुखुडि येताक्यवको ४ खा, तवबाहार यंताछेंको २१/२ खा, थंतिछेंको छेडिकोट १, बुंगदेवलननि महाकाल ग्रंथि लीवनेछे १ खा ३ जव,

यति घरखेत बारी चढाइए । यतिको आयस्ताले ताम्रपत्रमा लेखिए जति सामग्री ठीक पारी मध्यान्हमा र मध्यरातमा आरती गर्नु पर्छ । सातिग्लटोलका न्हपले टोलया भुजोङ कुसले जोगी दुइजनाले शङ्ख फुक्न लाउनु पर्छ । यति बेहोरा गुठियारहरूले ताम्रपत्र, दानपत्रमा लेखिए अनुसार वेलामै गर्न लाउनु पर्छ । घरैपिच्छे एकजनालाई बिठिव्यवहार नलाग्ने गरी निगाह गरियो । बिठिव्यवहारको कुरा यहाँ लेखिए अनुसार प्रमाण हुन्छ । फेरि --कुन्छ हुँदैन भनी मति (दोधार)

गर्न पाइँदैन । राजाहरूले पनि नआउनेलाई माफी गर्न पाइँदैन । माफी भएकालाई (विठिव्यवहार) लगाउन पाइँदैन । यो बेहोरा युवराज श्रीश्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

अर्को बेहोरा -- राजा श्रीश्रीजयश्रीनिवासमल्ल ठाकुरले नै चाँदीको पताकालाई गुठी राखियो । साखलखवुको २ रोपनी २ जव, -- दाम, यति आयस्ता भ्कोकराको दिन चाँदीको पताकामा थपी ताम्रपत्र, दानपत्रमा लेखिए अनुसार गुठियारहरूले काम चलाउनु पर्छ ।

फेरि यमचोको ६ रोपनी १ जब, बलातको १ कर्ष १ जब, मतिको १ कर्ष ३ जब यतिको आयस्ताले कार्तिक कृष्ण प्रतिपदाको दिन श्री ३ बुंग इष्टदेवताको अगाडि होम गरीकन, एक महीना उपवास बस्ने धर्म्मुमिहरूलाई पारण गराइकन, फेरि कार्तिक शुक्लको आदितवारपिच्छे श्री ३ लोडेक्वडे भट्टारकलाई एउटा हाँस राखी पूजा गराइकन ताम्रपत्र, दानपत्रमा लेखिए अनुसार गुठियारहरूले काम चलाउनु पर्छ । फेरि बलम्वूको ६ रोपनी । यसको आयस्ताले श्री ३ बुंग इष्टदेवता स्थानको अगाडि रहेको सुनधारामा रहेको महादेवको पूजा गरीकन ताम्रपत्र दानपत्रमा लेखिए अनुसार गुठियारहरूले काम चलाउनु पर्छ ।

फेरि न्हवन (महास्नान) गुठीमा सिलंबुको ६ रोपनी चढाइयो । यसको आयस्ताले गंगाजल आदि ताम्रपत्रमा लेखिए अनुसारका सामग्री ठीक पारी श्री ३ बुंग इष्टदेवताको स्नान गराई पञ्चताल बाजा बजाउन लाउनू आरती गराउनू । यो बेहोरा अनुसार तीनै खलक गुठियारहरूले ताम्रपत्र, दानपत्रमा लेखिए बमोजिम गर्नु पर्छ ।

फेरि शिवरात्रि गुठीमा कलुकोचाको ७ रोपनी चढाइयो । यसको आयस्ताले ताम्रपत्रमा लेखिए अनुसारका सामग्री राखी चारै प्रहरमा पूजा गराउनू । श्रीश्रीजय श्रीनिवासमल्ल राजाले चढाएका यी गुठीमा ताम्रपत्रमा लेखिए अनुसार गरिएन भने श्री ३ बुंग इष्टदेवताको कुदृष्टि परोस् । ती व्यक्ति राजाको सामुन्ने अपराधी ठहर्दछन् । यो बेहोरा युवराज श्रीश्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

यी गुठीहरूमा राजा, भारदार, जोवाल, गुठियार आदि कसैले पनि कचिंगल उठाउनु हुँदैन । कचिंगल उठाए भने गोहत्या ब्रह्महत्या आदि पञ्चमहापाप लागोस् ।

अर्को बेहोरा -- माणिग्लमा बस्ने जतिले चाकसि विठि (बेठ-विष्टि) मा घरमा तान्ने कुरामा कसैले पनि राजा र मन्त्री भारदारहरूलाई विन्ति पारी छुटकारा लिन पाइँदैन । जसले छुट्टी पाउँछन्; उनीप्रति श्री ३ बुंग इष्टदेवताको कुदृष्टि परोस् । उनी राजाको सामुन्ने अपराधी ठहर्छन् । यो बेहोरा युवराज श्रीश्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

अर्को बेहोरा -- श्रीश्रीराजाले यति कुरामा प्रजाहरूलाई दुःख दिन पाइन्छ --गढ पर्खालको काममा, पुल फेर्ने काममा, वर्षको एकपटक जाथुसि (कर विशेष ?) लिने कुरामा, राजिक काम राजकाजसम्बन्धी काम कतै लड्न जानु पर्दा खेरिको काममा यति काममा कसैले फुर्सद छैन भनी आनाकानी गर्न पाउँदैन । जसले यी काम गर्दैनः उससँग पैसा दण्ड गर्नु ? उसलाई डोरीले बाँध्नू; देशनिष्कासन गर्नू ।जस्तो ठीक हुन्छ; त्यस्तो सजाय गर्नू । यसरी सजाय गरियो भनी प्रजाहरूले दुःख नमान्नू । आफ्ना मान्छे भनी राजाले छाड्नु हुँदैन । राजकुमार तथा भारदारहरूले पनि आफ्ना-आफ्ना मान्छे भनी यति विठि व्यवहार स्थितिबन्धुज नाघ्नु हुँदैन । नाघे भने श्री ३ बुंग इष्टदेवता (राता मछिन्द्रनाथ) को कुदृष्टि परोस् । श्रीश्रीराजाको सामुन्ने ती अपराधी ठहरिने छन् । यो बेहोरा युवराज श्रीश्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाहले बनाइएको हो ।



अर्को बेहोरा -- श्रीश्रीराजाहरूले पनि प्रजाहरूलाई खाँचो नपरी दुःख दिनु (बिना ज्यालामा काम लाउनु) हुँदैन खाँचो नपरी त्यसै दुःख दिइयो भने प्रजाहरूले राजासँग उजूरी गर्नू । उचित कुरा प्रजाहरूले पनि नगर्नु हुँदैन (गर्नु पर्छ) । यी सबै कुरा श्री ३ बुंग इष्टदेवताको आज्ञाले परम्परा अनुसार लेखिएका हुन् ।

श्रीश्रीजयश्रीनिवासमल्ल ठाकुरले आफैँले छानी (आफ्नै शरीरबाट निकाली) भगीरथ भैयालाई चौतारा बनाउने भएको हो । मैले (श्रीनिवासमल्लले) आफ्नो जीउ र उनमा (भगीरथ भैयामा) फरक देखेको छैन । अरूले पनि भिन्न संझनु हुँदैन । कुराको साक्षी श्री ३ बुंग (राता मत्स्येद्रनाथ) इष्टदेवता हुनुहुन्छ । श्रीश्रीजोगनरसिंह ठाकुर (युवराज) छन् ।

अर्को बेहोरा -- उहाँ श्रीश्रीजयश्रीनिवासमल्ल ठाकुरले नै आफ्नी आमा श्रीश्रीभानुमती देवीको नाउंले श्री ३ बुंग इष्टदेवतालाई प्रसन्न पार्न जोगिचक गुठी चढाएको बेहोरा यस प्रकारको छ -- अफलको ६ रोपनी, ड्खोको ४१/२ रोपनी, कोलजलधुनिक्कको २१/२ रोपनी, यिलदुको ४ रोपनी, खोलबुंको ३ रोपनी ३ जब । यति खेतको आयस्ताले ताम्रपत्रमा लेखिए अनुसारको सामग्री ठीक पारी चैत्र कृष्ण अमावास्याको दिन तवबहालमा घटस्थापन गरीकन जोगिचकलाई भोज खुवाउनु पर्छ ।

यति कुरा श्री ३ त्रैलोक्यनाथका चरणकमलका सेवक, युवराज श्रीश्रीजोगनरसिंह ठाकुर साक्षी राखीकन भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएका हुन् । लेखक --तवबहालका विश्वसिंह ।

कल्याण होस् । ने.सं. ७९३ (वि.सं. १७२९) फाल्गुन शुक्ल दशमी आदित्यवार यस दिन यो संवन्तसरलोहं स्थापना गरियो । यी स्थिति बन्धेज राजाले पनि प्रजाले पनि मान्नु पर्छ । शुभ ।

अर्को बेहोरा -- पसलेहरू पनि अरूले पनि चाहियो भने सिटीको लागि तेल ४ --गुहार गर्नु पर्छ । टार्नु हुँदैन ।

अर्को बेहोरा --श्री ३ त्रैलोक्यनाथ (राता मछिन्द्रनाथ) को रथजात्राको लागि लुगा ओड्ने आदि छैनन् भनी तथा कसैले ऋणी धनी भनी हस्तक्षेप गर्न पाइँदैन । श्री ३ त्रैलोक्यनाथ रथमा रहनु हुन्जेल कसैले जुत्ता लाउनु हुँदैन । यति अघि देखिको नियम मान्नु पर्छ । यति नियम मानेनन् भने तिनमा श्री ३ बुंग इष्टदेवताको कुदृष्टि परोस् । श्रीश्रीराजाको सामुन्ने ती अपराधी ठहरिने छन् । यो बेहोरा युवराज श्रीश्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखिराखिएको हो ।

अर्को बेहोरा -- प्रजाहरूले बगैंचा, लिबिमा उच्चाटन गरे भने ती र भूमतल आदिमा कचिंगल उठाए भने उनीसँग एक पल सुन श्रीश्रीराजाबाट दण्ड गरिने छ । कसैले आफ्नो नाता कुटुम्व, इष्टमित्र भनी तिनको पक्ष लिनु हुँदैन । तिनको कुरा लिई राजा भारदारहरूसँग बिन्ति गर्नु हुँदैन । राजा र भारदारहरूले आफन्त भनी पक्षपात गर्नु हुँदैन ।

अर्को बेहोरा --यसपालि पूरा स्थितिबन्धेज बाँधिए । जब यो संवत्सर लोहँ बिग्रिएला, त्यसबेला सबै मिली यसको जीर्णोद्धार गर्नु पर्छ । उपेक्षा गर्नु हुँदैन । यो कुरा युवराज श्रीश्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाहले लेखिराखिएको हो । जीर्णोद्धार गर्ने कुरामा रेखदेख गर्ने श्रीश्रीराजवंशी नरसिंहमा नियुक्त गरिएका छन् । शुभ ।

**व्याख्या**

ललितपुरका मल्लकालका राजनीतिक, सामाजिक, सांस्कृतिक आदि दृष्टिले महत्त्वपूर्ण अभिलेखमध्ये यो अभिलेखको पनि प्रमुख स्थान रहेको छ । यस अभिलेखको नामकरण यहाँ संवत्सर लोहो भनी गरिएको छ । ललितपुरका राजा र प्रजाहरूले वर्ष दिनसम्म पालना गर्नु पर्ने

प्रमुख नियम यसमा लेखिएका हुँदा यसको नाम **संवत्सर लोहा** भनी रहेको हो। यसको अनुसरण गरी पछिपछि साधारण नियम लेखिएका शिलापत्रलाई पनि **संवत्सर लोहा** भनी भन्ने चलन ललितपुरमा चलेको पाइन्छ।

यस अभिलेखको उठानमा **थ्वदेशया मर्जाता व्यवहार थमस्यको थ्व संवछल लोव्हस चोस्यं तया जुरो** (यस ललितपुर देशका मर्यादाव्यवहार, स्थितिरीति आफूलाई थाहा भएजति यस **संवत्सर लोहा** मा लेखीराखिए भनी लेखिएको हुनाले यी नियमहरू श्रीनिवासमल्ल आफैंले बनाएका होइनन्; अघिदेखि प्रचलित नियमलाई विधिवत् संवत्सर लोहोमा उनले कुँदाएका मात्र हुन् भन्ने संकेत पाइन्छ, तर केलाई हेर्दा केही नियम भने उनैले थपेका छन् भन्ने पनि थाहा पाइन्छ। यस संवत्सर लोहोमा अंकित हरनियमको अन्त्यमा **थ्वति भाषा जुवराज श्रीश्रीजोगनरसिंह साक्षी तयाव भगीरथ भयीया साहुतिन तथा जुरो** --यो बेहोरा युवराज श्रीजोगनरसिंह साक्षी राखी भगीरथ भैयाको सल्लाह अनुसार लेखीराखिएको हो भन्ने वाक्य परेको छ। एउटा नियममा त **मभा (राजामा) र भगीरथ भैयामा कुनै भेद छैन** भन्ने भाव समेत परेको छ। यस कारण सबभन्दा पहिले भगीरथ भैया को हुन्; उनले राजा श्रीनिवासमल्लमा कसरी प्रभाव पारेका थिए भन्ने कुराको चर्चा गर्नु आवश्यक देखिन्छ।

मल्लकालमा राजालाई राजकाजमा, शासनमा मदत गर्न मन्त्रीपरिषद्को गठन भएको हुन्थ्यो। मन्त्रीपरिषद्मा प्रायः गरी चार मन्त्री र एक जना चौतारा (मुख्यमन्त्री) रहेका हुन्थे। गद्दीनशीन राजा बालक वा कमजोर भएको अवसरमा कहिलेकहीँ चौताराको हातमा असीम शक्ति रहन जान्थ्यो। कान्तिपुरमा प्रतापमल्लको मृत्युपछि चौतारा चिकुटि (देवीदास) निकै शक्तिशाली भई निस्केथे। चिकुटिलाई पन्छाई चौतारा बन्न पुगेका लक्ष्मीनारायण जोशीले उनलाई माथ गरेका थिए। टकमा राजासँग आफ्नो पनि नाम कुँदाउन लक्ष्मीनारायण जोशी पुगेथे। यसैगरी भक्तपुरमा पनि जगतप्रकाशमल्लको पालामा चन्द्रशेखर, जितामित्रमल्लको पालामा चौतारा भगीरथ भैया शक्तिशाली भई निस्केथे। यसरी विक्रमको अठारौं शताब्दीको पूर्वार्द्धमा नेपाल उपत्यकामा चौताराहरूको जगजगी रह्यो। राजालाई समेत अठ्याई अगाडि आउने यसबेलामा मन्त्रीहरूमा चन्द्रशेखर पहिला देखिएका छन्। ने.सं. ७८२ को जगतप्रकाशमल्लको सुकीमा राजाको साथै चन्द्रशेखरको पनि नाम अंकित छ। ने.सं. ७८७ को शिलालेखमा राजा जगतप्रकाशमल्लको मुखबाट **चन्द्रशेखर मेरा प्राण तुल्य हुन** आदि भाव कुँदिएको छ। पछि त **जगचन्द्र** का रूपमा राजा जगतप्रकाशमल्ल र चन्द्रशेखर एकाकार जस्तै भएथे।

चन्द्रशेखरले देखाएको बाटोको अनुसरण भगीरथ भैयाले पनि गरेका हुन् भन्ने देखिएको छ। चन्द्रशेखरले जस्तै भगीरथ भैयाले पनि यस **संवत्सर लोहोमा** राजा श्रीनिवासमल्लको तर्फबाट यस्तो लेखाउन लाइएको छ ---

"श्रीश्रीजयश्रीनिवासमल्ल थाकुरया थ्वदेहेनपिंकायाव भगीरथ भयीया चौतारा याडाव थ्व देहे व ओव भीन्न मयाङा, मेवनं भीन्न यायमदो थतिया साथी श्री बुंग इष्टदेवता श्रीश्रीजोगनरसिंह थाकुरस"

श्रीश्रीजयश्रीनिवासमल्ल ठाकुरले आफैंले छानी (आफ्नै शरीरबाट निकाली) भगीरथ भैयालाई चौतारा बनाउनु भएको हो। मैले (श्रीनिवासमल्लले) आफ्नो जीउ र उनमा (भगीरथ भैया) फरक देखेको छैन; अरूले पनि भिन्न सम्झनु हुँदैन। यस कुराका साक्षी श्री ३ बुंग (राता मछिन्द्रनाथ) इष्ट देवता श्रीश्रीजोगनरसिंह ठाकुर हुनुहुन्छ।

यसरी यहाँ **म र भगीरथ भैयामा केही फरक छैन** भन्ने घोषणा राजाद्वारा गर्न लाइएको छ। भगीरथ भैया राजाकै अर्को अवतार हुन् भन्ने आशय पनिको माथि वाक्यबाट झल्किन्छ।



यसबाट राजा श्रीनिवासमल्ल उपर चौतारा भगीरथ भैयाले कत्रो प्रभाव पारेका थिए भन्ने स्पष्ट थाहा पाइन्छ। युवराज योगनरेन्द्रमल्लले विद्रोह गरी वि.सं.१७४१ मा ललितपुर राज्यको सत्ता आफ्नो हातमा लिई चौतारा भगीरथ भैयालाई नपन्छाएसम्म भगीरथ भैयाको उक्त अवस्था कायम नै रह्यो।

चौतारा चिकुटि, लक्ष्मीनारायण जोशी र चन्द्रशेखरहरू शक्तिशाली हुनाको कारण निकै अंशमा थाहा पाई सकिएकोछ, तर चौतारा भगीरथ भैयाले राजा श्रीनिवासमल्ल उपर यसरी प्रभाव पार्न कसरी सके भन्ने कुरा अझै राम्ररी खुल्न सकेको छैन, तर तत्कालिक प्रतिस्पर्धात्मक राजकाजमा प्रमुख भूमिका खेली भगीरथ भैयाले ललितपुरको केही गौरव बढाई दिएका हुँदा उनी त्यो अवस्थामा पुगेका हुन् भन्ने अनुमान हुन्छ।

भगीरथ भैया चौतारा भएको बेलादेखि नेपाल उपत्यकाका तीन मल्लराज्यमा ललितपुरको प्रतिष्ठा झन् बढ्यो। वि.सं. १७२९ मा भक्तपुरका राजा जगतप्रकाशमल्लको मृत्यु भयो। यसको डेढ वर्षपछि वि.सं. १७३१ को प्रारम्भमा कान्तिपुरका राजा प्रतापमल्लको पनि मृत्यु भयो। यसरी दुइ ठूला प्रतिद्वन्द्वीको मृत्यु भएको हुनाले नेपाल उपत्यकाको राजकाजमा श्रीनिवासमल्ल मण्डलनाभि बन्न पुगे। भक्तपुरमा जगतप्रकाशमल्लपछि उनका छोरा जितामित्रमल्ल गद्दीमा बसे। उनी केही समर्थ उमेरका भए तापनि श्रीनिवासमल्लका अगाडि टक्कर लिन सक्ने स्थितिमा थिएनन्। अतः उनी श्रीनिवासमल्लका अनुकूलै भएका थिए।

कान्तिपुरमा त प्रतापमल्लपछि श्रीनिवासमल्लको प्रशस्त प्रभाव जम्यो। उनी जसलाई चाहे उसलाई राजा मन्त्री बनाउन सक्ने स्थितिमा पुगे। प्रतापमल्लले आफूपछि कान्तिपुरको गद्दीमा आफ्ना त्यसबेला जीवित छोराहरूमा कान्छा महीपतेन्द्रमल्ललाई राजा बनाउनू भन्ने व्यवस्था मिलाएर गएका थिए। परन्तु प्रतापमल्लको मृत्यु भएको ३ महीनापछि श्रीनिवासमल्लले त्यसबेला प्रतापमल्लका जीवित छोराहरूमा जेठा नृपेन्द्रमल्ललाई आफैंले टीका लाइदिई गद्दीमा बसाले। प्रतापमल्लको पालामा कान्तिपुरका प्रसिद्ध भारदार चिकुटि कान्तिपुरबाट भागी ललितपुरमा शरण लिई बसेका थिए। प्रतापमल्लको मृत्यु हुनेबित्तिकै चिकुटिलाई कान्तिपुर फर्काउने प्रबन्ध श्रीनिवासले मिलाइदिए; अनि चिकुटि कान्तिपुर पुगी शक्तिशाली चौतारा बन्न पुगे। यसरी आफैंले बनाइदिएका राजा मन्त्री भएका हुँदा त्यसबेला कान्तिपुरमा श्रीनिवासमल्लको प्रभाव जम्नु स्वाभाविक थियो।

यसरी नेपाल उपत्यकाका तीनै राज्यमा प्रभाव फैलिएपछि माणिग्लाधिपति श्रीनिवासमल्लको **नेपालेश्वर** बन्ने पुरानो सपना त्यसबेला केही मात्रामा साकार बनेको थियो। यो कुरा यसताकाका श्रीनिवासमल्लका अभिलेखबाट थाहा पाइन्छ। वि.सं. १७३७ मा भीमसेनको मन्दिरको जीर्णोद्धार गरी त्यहाँ राख्न ल्याएको अभिलेखमा यो कुरा अलि स्पष्ट रूपमै लेखिएको छ। विचारार्थ त्यसको अलिकता अंश यहाँ उद्धृत गरिन्छ ---

"श्रीमणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्लदेव प्रभु ठाकुरसन स्व नगरं छगुल जुयाव नेपालेश्वर जुयाय विजयराज्य याङ बिज्याक, थथिं अवसरस श्री ३ भीमसेन भट्टारकस -- सएव ठाकुलसन मन्त्री भगीरथ भैया भारोस व संभत याङन आज्ञा प्रसन्न जुस्यं थ्व देवल दयक बिज्याक जुरो"

(श्रीमाणिग्लाकाअधिपति, महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्लदेव प्रभु ठाकुरले तीनै शहर एक भएका (परस्परमा मिलेर बसेका) हुनाले **नेपालेश्वर** भईकन राज्य गरिरहनु भएको अवसरमा --उहाँ राजाले मन्त्री भगीरथ भैया भारोको सल्लाह लिएर प्रसन्नतापूर्वक अह्राउनु भई श्री ३ भीमसेन देवताको यो देवल बनाउन लाउनु भएको हो)।

यसरी यसताका श्रीनिवासमल्लको प्रभाव बढ्नामा चौतारा भगीरथ भैयाको पनि विशेष हात रहेको थियो । यसै हुँदा श्रीनिवासमल्ल उपर दवाव हाल्नामा उनी समर्थ भएका देखिन्छन् । श्रीनिवासमल्लका यसताकाका प्रायः सबैजसो अभिलेखमा भगीरथ भैयाको सल्लाह अनुसार यो काम गरिएको भन्ने कुरा परेको पाइन्छ । भगीरथ भैया सम्बन्धी अरू कुरा तलका अभिलेखमा यथास्थानमा गरिएको छ । श्रीनिवासमल्लले यस संवत्सरलोहो मा लेखाइएका नियम यसभन्दा एक वर्ष अगाडि संस्कृतमा श्लोकवद्ध गराई लेखाइएका थिए, तर संस्कृतमा लेखिएका कुरा कतिले नबुभ्ने देखिएको हुनाले यस साल नेवारीमा लेखाई राखिएको कुरा यस अभिलेखको उठानमा थवने श्लोक चोस्यं तथा अर्थ सेवदयुं, मसेव दयु, थ्वतिया अर्थन भाषान चोस्यं तया भनी लेखिएको छ । संस्कृतमा लेखिएको सो अभिलेख भने भेट्टिएको छैन ।

यस संवत्सरलोहोमा सबभन्दा पहिले श्री मत्स्येन्द्रनाथको रथजात्रा, स्नानजात्रा आदिको बेला ललितपुरका गद्दीनशीन राजाले पालना गर्नु पर्ने नियम उल्लिखित छ । मत्स्येन्द्रनाथ बुङमती, लगिँदा वा बुङमतीबाट तवबहालमा ल्याउँदा अरू सब काम छोडेर पनि राजाले त्यहाँ सम्मिलित हुनु पर्ने कुरा यहाँ लेखिएको छ । साथै राजदरवारमा शोक, आशौच आदि परे पनि मत्स्येन्द्रनाथको जात्रामा बाजाहरू साविक बमोजिम नै रहनु पर्ने नियम यहाँ उल्लिखित छ । त्यसपछि मत्स्येन्द्रनाथको रथजात्रामा सम्बद्ध विभिन्न व्यक्तिहरूले प्रतिपालन गर्नु पर्ने नियमहरू यहाँ उल्लिखित छन् ।

यसबाट ललितपुरका राजाहरूले श्री मत्स्येन्द्रनाथलाई कुन स्थान दिएका रहेछन् भन्ने कुरा स्पष्ट हुन्छ । हुन पनि कान्तिपुरका मल्लराजाहरूले पशुपतिनाथलाई जस्तै ललितपुरका राजाहरूले मत्स्येन्द्रनाथलाई ललितपुरका अधिष्ठाता देवताको रूपमा सम्मानित गरेको हामी पाउछौं । ललितपुरका राजाहरूले आफ्ना टकमा समेत लोकनाथ, करुणामय अंकित गराई श्रीमत्स्येन्द्रनाथको सम्मान गरेको पाइन्छ ।

यसपछि यस अभिलेखमा श्रीनिवासमल्लले मत्स्येन्द्रनाथलाई आरती गुठी चढाएको उल्लेख यस अभिलेखमा परेको छ । यसका लागि प्रशस्त जग्गा, बारी र घरसमेत चढाइएका छन् । यसैगरी शिवरात्री गुठी अरू गुठीको विवरण यहाँ परेको छ । तात्कालिक धार्मिक र सामाजिक कुरा बुझ्न यी विवरण उपयोगी छन् ।

उपर्युक्त धार्मिक र सामाजिक कुरा बाहेक यस संवत्सरलोहा मा राजनीतिक कुरा पनि केही कुँदाइएका छन् । मल्लकालका ऐतिहासिक सामग्रीहरू केलाई हेऱ्यो भने त्यसबेला राजकाजमा प्रजापञ्चहरूको ठूलो स्थान थियो । प्रजाहरूले निकै अधिकार पाएका थिए भन्ने कुरा स्पष्ट रूपमा थाहा पाइन्छ । एकातिर राजकाजमा प्रजापञ्चहरूले यसरी ठूलो अधिकार पाएका थिए भने अर्कोतिर प्रजाहरूले अनिवार्य रूपमा पूरा गर्नु पर्ने केही कर्तव्यहरू पनि थिए । उक्त कर्तव्यको प्रतिपालन नगर्ने प्रजापञ्चहरूलाई दण्ड दिने अधिकार राजालाई प्राप्त थियो । यस कुराको पुष्टि यस अभिलेखबाट हुन्छ । यस अभिलेखमा उक्त कुरालाई दर्शाउने प्रकम यस प्रकारको छ

"पुन भाषा श्रीश्रीराजान प्रजापनि दुःख बीयु थुतिं अर्थस जुसे गठ प्रकार ज्यास, ता साल ज्यासं दक्षिस छपोल जाजुथि कायस रजिक या ज्यास, थ्वति ज्यास सुनान बेङ मवेङ धास्यं मयायमदो, ग्वम्हनं मयात, ओम्हयाक वसुत काय, खकिन वेय पाखान पिंकाय जोग्य जोग्यथ्वं शास्तियाय, थथ्य याङाधक प्रजापति दुःख याय मदो, राजापतिस्यन जुरसां, थुवके निस्त्रपु धक बेङके मदो, कुम्हरजुपतिस्यन जुरसां प्रमानपतिस्यन जुरसां थव थवस्के निस्त्रपुधक थुति विधिबाहा बेङकरसा श्री ३ बुंग इष्टदेवताया कुदृष्टि, श्रीश्रीथाकुरया गुणाहा गारजुरो, थ्वति भाषा जुवराज श्रीश्रीजोगनरेसिंह साक्षी तयाव भगीरथ भयीयाव साहुतिन तया" पुन भाषा श्रीश्रीराजापतिस्यन जुरसां प्रजापति मुमारकं अति दुःख बीयमदो, मुमारक फछिन दुःख बिरसा प्रजापतिस्यन राजायाके फिराद याथमार । जुक्तीथ्य प्रजापतिस्यनं मयायंमदो, परमाननं मयायं मदो ॥

एक किसिमको संविधानको एक धाराको रूपमा कुँदाइएको यस नियमले मल्लकालमा राजा र प्रजाको अधिकारबारे संक्षिप्त सीमा रेखा खिचिदिएकोछ । यस अधिकार पत्रबाट देश निर्माणको काममा देश रक्षाको काममा राजाले प्रजासँग अनिवार्य रूपमा काम लिन पाइने भयो; यसभन्दा अरू कुरामा राजाले प्रजासँग जबरजस्ती काम लिन नपाइने पनि यसबाट निश्चित भयो । देशनिर्माण तथा देशरक्षाको साक्षी काममा श्रमदान गर्नु पर्दा प्रजापञ्चहरूले नाहीं भन्ने त कुरै भएन; यस्तो अवस्थामा प्रजाहरूबाट राजाले काम लिंदा यो कुनै हालतमा पनि ज्यादती ठहर्दैन; यो त प्रजाहरूको पूरा परम्परागत कर्तव्य नै भयो । यस्तो राष्ट्रिय कर्तव्य कसैले पूरा गर्दैन भने त्यसलाई सजाय गर्नु पनि न्यायसँगत र वैध नै हुन्छ भन्ने स्पष्ट छ ।

यसरी उक्त व्यवस्थाबाट मल्लकालका शासकहरू एक किसिमको संविधान प्रदत्त अधिकारको प्रयोग गरी प्रजाहरूको सहयोग लिई शासन गर्दथे भन्ने महत्त्वपूर्ण संकेत यसबाट पाइन्छ । संक्षिप्त भए पनि राजा र प्रजाको अधिकारलाई वैध रूपमा दर्शाउने संवत्सर लोहा मा अंकित उक्त नियम यस विषयको एक उपयोगी सामग्री हुन आएको छ । इत्यादि अनेक कुराले गर्दा यो अभिलेख अत्यन्त उपयोगी रहेको छ ।

★★★

(१३०)

## नवबहिल यताबहालभित्र क्वापाल देवताका सिँढीमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमो वुधाय ॥ ॐ नमः श्रीशाक्यसिंह; वंदे श्रीशाक्यसिं-
२. ह, सभरवल हरनं मोक्ष हेतो तरानां; श्रीत्मान शुघाल रु-
३. पं; मभयकलवरं; पद्म पत्रायताक्षम्; श्रीमतदिपंरोवे जि-
४. न गुणविखभंम् सर्व्वसत्वानमामिक; ...... व्यङगहो मुनिम्; वैशाष-
५. मास्य; अष्टमिदिने पूर्व्वभद्र नक्ष्यत्रे जोगशिवक्लंम, ससिवारे
६. श्रीमत् श्रीश्रीवर्जासन; शाक्य मुनिसके; मथर्कोष्ट; श्रीचकसं-
७. स्वर; वजवाराहि; सहिते; शुवर्ण्णरिपित; कृसे सुवर्ण्णछत्रेस-
८. हित्यं दोहोलपा; श्रीवुध भगवानसके; अनपति साक्य वं-
९. स देसिङ; साक्यवंश देव; साक्यवंस मंजु साक्यवंस गुनचद्रंल-
१०. साक्यवंस वापसिङ मालसिङ भारो ; वैलिराम भारो; नलसिङ
११. भारो; विश्वसिङ भारो; लक्ष्युराम भारो; राथुति समोहन;
१२. पुर दयकाव, गजुरि छाया जुरो; थो व्यलस राजा; महारा-

१३. जाधिराज; श्रीश्रीनिवासमल्लं अषड खडगसिद्धि प्रतापदो व जु-
१४. रो: ॥ श्रीयो:ऽस्तु सम्वत् ७९४ थ्व संन छल; पत्रावाहालस
१५. श्रीवुधभगवान सक्ये पुन्हि ........ सेवाकन गजुरि ....
१६. कांस्यं पूल दयकाव ........ छास्यं दिन जज्ञ
१७. याडाव प्रतिस्था याडा जुरो: ॥ शुभ ॥ थुति
१८. श्रीवुद्ध भगवानस .......... स
१९. मोहन; पलम्यश्व ..........
२०. शुभमस्तु सर्व्वडा ..........

★★★

(१३१)

## पाटन किसिपिंडी गाउँ चामुण्डादेवीको शिलालेख

### मूलपाठ

१. ? श्रीश्रीश्रीचामुण्डायनिदेवि नमः ॥
२. सिंह दोहोरपा जुरोः श्रीश्रीणिवा-
३. समलः प्रभुठाकुर विश्वराम भारो
४. श्रीहि भारो, विष्णुराम भारो जकेराज व-
५. ........ जितर भाव हाकु। भाव भारोसिं भावः
६. हाकुसिं भाव, होथ्वन भावः रासिंह भाव
७. थ्वते समोहानः सिंह दोहोरपा जुरोः छे प्र-
८. कु- ॥ दोहोरपा जुरोः छेकभित ॥ राय-
९. सिंह प्रमुष श्रीश्रीकिसिप्रे देसया ॥ चवदश-
१०. सेवा दयका जुरो ॥ ? सम्वत् ७९४ माघ
११. कृष्ण चतुर्दस्यां तिथौ ॥ धनेष्ठनक्षत्र
१२. शिजोगे ॥ सोमवाशरे शुभः ॥

### अनुवाद

श्रीश्रीश्रीचामुण्डा देवीलाई नमस्कार । सिंह चढाइयो । श्रीश्रीनिवासमल्ल प्रभु ठाकुरको जियराज्यमा ।



विश्वराम भारो श्रीहि भारो विष्णुराम भारो जकेराज ..... जितर भारो हाकु भाव, भारो सिं भाव, हाकुसिं भाव, होथ्वन भाव, रासिंह भाव, यति समूहले सिंह कचढाइयो । ........ को दिन चढाइयो छेकसी राय सिंह प्रमुख श्रीकिसिपिंडी देशको चतुर्दशी सेवा खलकले बनाइएको हो ।

ने.सं. ७९४ (वि.सं. १७३०) माघ कृष्ण चतुर्दशी सोमवार धनिष्ठा नक्षत्र शिवयोग । शुभ होस् ।

★★★

(१३२)

## पाटन कुम्भेश्वर बहालको अभिलेख

### मूलपाठ

१. स्वस्ति । ॐ नमः ॥ शिवाय देवाय ॥ एकं ब्रम्हं चाद्वितीयं समस्तं
२. सत्यं सत्यं नेह नानास्ति किंचित् । एको रुद्रो नद्वितीयो वतस्थो
३. तस्मादेकं त्वां प्रपद्ये महेशं ॥ ॥ शर्व्वेश्वरं लिंगवरं स्वय-
४. भुवं, कुम्भेश्वरं नामशिवं प्रणम्य च । सूर्य्यादिरामेन म-
५. यातिभक्तिना सूर्य्येश्वरं स्थापितमेव मुक्तये ॥ वागम-
६. त्यां दक्षिणकौरे, श्रीललितपुलनगरे देश माणिगलाधिपति जय
७. श्रीनिवासमल्लदेव प्रभु थाकुल महाराज लाज्येस कोमतिर्थ श्रीम-
८. त् श्रीश्रीसर्व्वेश्वर महादेवसमिप आग्नेकुनेस श्रीश्रीसूर्य्ये-
९. श्वर महादेव फतकि लिंग परमेश्वर थावलपाव सुवर्ण्ण चतुरमु-
१०. खमूर्ति याडा सुवर्ण स्वतं छत्र छास्यं प्रतिस्था याडा कालण्ड वाहार
११. सूर्य्यराम मुल्मी भारोसन मनो हर्षमानत्वं ॥ श्रेयोस्तु ॥ सम्वत् ७९३
१२. मार्ग्गशिर शुक्ल ॥ पन्चम्यायान्तिथौ ॥ उत्तराषाढनक्षेत्रेः वृद्धि यो-
१३. गे ॥ जथाकर्ण्णे महुर्त्तके बृहस्पतिवासरे ॥ विछलासिगते सवितरिः ला
१४. मकलासिगते चन्द्रमसि; अस्मिन्दीवसे परमेश्वर स्थावरपाव मू-
१५. जन याडाव यज्ञ याङ जिर्ण्णेधारन विस्य सूर्य्यरामन थव स्वाधिकार
१६. दकोव सिधुनिसुवुरो व छि १ जव छि १ एतत्क्षत्रस वरंसान जाक्य फं
१७. स्वं ३ नित्य पूजायाय यात - - -थ्वतेन परसेख पूजावारियात दि--
१८. पूजा भ --- सिजलया --ति १ सिजलया धडग्वड १--सालिक --- या आल
१९. ति प्वात ५ --- स्वान ---नसिया २ ॥ थ्व वु वर्ष प्रति वोसाधनयात
२०. --- सलाथ्व के ---- जुरो ॥ थ्व परमेश्वरया अग्रस नमस्कार
२१. --- याङ ----

★★★

## (१३३)

# मूलचोकको श्रीनिवासमल्लको अभिलेख

ललितपुर राजदरवारको मूलचोकमा केही वर्ष अगाडिसम्म निकै ताम्रपत्रहरू टाँसी राखिएका थिए। यो अभिलेख कुँदिएको ताम्रपत्र पनि त्यहीँ थियो। परन्तु सुरक्षाको प्रबन्ध नहुँदा त्यहाँका धेरै ताम्रपत्र हराइसके। यो अभिलेख कुँदिएको ताम्रपत्र पनि हराइसकेको छ। यसमा ने.सं. ७९५ दिइएको छ।

संशोधनमण्डलद्वारा **अभिलेख**-सँग्रह १० भागको ११-१२ पृष्ठमा यो अभिलेख छापिएको छ।

१. स्वस्ति ॥ श्रेयो ऽस्तु ॥ सम्वत् ७९५ चैत्रशुक्लपञ्चम्यान्तिथौ ॥ श्रीश्रीजयश्री निवासमल्लदेव श्रीश्रीजयजितामित्रमल्लदेव श्रीश्रीजयनृपेन्द्रमल्लदेव थ्वति त्रिभय थाकूलसन ॥

२. दुंजल बाधय जुयाव थाय थायस थ्यओस श्री ३ इष्टदेवतासके कर्म्महीन जुवस श्रीउपाध्याजुपनि पण्डितपनि मुनकाव बधेज याङ चोस्यं तयाय भाषा थ्वति ॥ श्री-

३. धर्म्मजु उपाध्याय श्रीदेवेन्द्र उपाध्या श्रीहरिनाथ उपाध्या श्रीरामचन्द्र उपाध्याय श्रीकीर्तिराज उपाध्याय श्रीउपेन्द्र उपाध्याय श्रीमधुसूदन उपाध्याय श्री सुदर्शन उपाध्याय थ्वति उपा-

४. ध्या श्रीयादव भट्टाचार्य्य श्रीमुख भट्टाचार्य्य श्रीसदाशिव भट्टाचार्य्य श्रीरूपनारायण चक्रवर्ती श्रीवीरेश्वर चक्रवर्ती श्रीवैद्यनाथ राय श्रीवछापि उझाथ्वति पण्डित

५. श्रीहरिवंश श्रीशिवहरि श्रीबलभद्र श्रीशिवनाथ थ्वतिसमेत सो नगरया मुनकाव ओपनिस्के डेडाव शास्त्रस्मृतिया वचन कायाव ओललस आज्ञा दोततिन याङा-

६. या भाषा थथ्य जुरो ॥ श्रीकुम्हरजुपनि श्रीथकुनीजुपनि राजकुलन पिंहा बिज्याचोडाव मभिंङ जुकाले दुखस राजकुल दुनेया जुको जिमनेन्हुन शुद्ध जिमसोन्हु-

७. कुन्हु ब्राह्मणजुपनि भोपस्के कर्म्म आदिन समस्तं याय‌दतो राजकुल दुनेया जुरनासजुको सो नगरयां लत्या परिमान जुरो, पिवनेया कुम्हरजुपनिस लवतपनिस-

८. जुको मर्ज्जातथ्य जुरो ॥ पुनर्भाषा पिवनेयापनिस जात जुवया कार्य्यस संकट जुरसा कार्य्य मधुतोले वचसिन्द्र श्रीश्रीउपाध्याजुपनि-स्यं तय जुरो, सो नगरयां



९. थ्वति परिमान जुरो ॥ थ्वति परिमान मयातसा श्री ३ इष्टदेवताया कुदृष्टि श्रीउपाध्याजुपनिस्यन श्रीश्रीथाकुलपनिस .... केङाव थ्व गुल परिमान मयातसा थ्व-

१० थ्यं ॥ थ्वति भाषा यलन याङा धक मानयमयाय मदो, खोपोन याङा धक मानय मयाय मदो यंन धक मानय मयाय मदो, थ्वति परिपाति सो नगरंया श्रीश्रीथा-

११. कुलपनि समुच्चयन याङा जुरो ॥ पुनर्भाषा सुनानं जुरसनो श्रीश्री राजया थथ्ययात धक मेवयां थ्वगुल परिमान यातकसरां यातसा यातकुम्हयाके मोहर टं-

१२. का १०० याकम्हयाके मोहोर टंका १०० श्रीश्रीराजदण्डन केङ जुरो, थ्वतिया साक्षी देवीदास भगीरथ भैया देवराम एते प्रमानलोके इष्टः ॥ शुभ मस्तु जगतां ॥

## अनुवाद

कल्याण होस्। ने.सं. ७९५ (वि.सं. १७३२) चैत्र शुक्ल पञ्चमी। श्रीश्रीजयश्रीनिवासमल्लदेव, श्रीश्रीजयजितामित्रमल्लदेव श्रीश्रीजयनृपेन्द्रमल्लदेव उहाँ तीनजना ठाकुर (राजा) हरू मिली अघिदेखि चलिआएका स्थितिमा बाधा परेको हुनाले ठाउँठाउँमा आफ्आफ्ना श्री ३ इष्टदेवता कहाँ कर्महीन (गर्नु पर्ने विधिमा कमी भएको) हुनाले उपाध्याय (गुरुज्यू) हरू पण्डितहरू गरी बन्धेज बाँधी लेखिराखिएको बेहोरा यस प्रकारको छ ......

श्रीधर्म्मजू उपाध्याय श्रीदेवेन्द्र उपाध्याय, श्रीहरिनाथ उपाध्याय, श्रीमधुसूदन उपाध्याय, श्रीसुदर्शन उपाध्याय यति उपाध्यायहरू, श्रीयादव भट्टाचार्य, श्रीश्रीमुख भट्टाचार्य, श्रीसदाशिव भट्टाचार्य, श्रीरुद्रनारायण चक्रवर्ती, श्रीवीरेश्वर चक्रवर्ती, श्रीवैद्यनाथ राय, श्रीबछापि उझा, यति पण्डितहरू, श्रीहरिवंश, श्रीशिवहरि, श्रीबलभद्र, श्रीशिवनाथ यी समेत तीनै नगरका पण्डितहरू भेला गरी उहाँहरूसँग सोधपूछ गरी शास्त्र, स्मृतिका वचन हेरी उहाँहरूको आज्ञा लिई लेखिराखिएका बेहोरा यस प्रकारका छन् .......

श्रीराजकुमारहरू, श्रीमहारानीहरू राजदरवारबाट बाहिर रहेकाको आशौच पऱ्यो भने राजदरवार भित्रकाले १२ दिन आशोच बारे पुग्छ; बाह्रौं दिनमा शुद्ध हुन्छ। तेह्रौं दिनमा ब्राह्मणहरूलाई भोजन गराउने काम आदि सबै गर्न हुन्छ। राजदरवार भित्रैको आशोच पऱ्यो भने चाहिँ तीनै नगरमा डेढ महीना आशौच बार्नू। बाहिरका कुम्हरहरू र मठ्याहरूले पहिलेको मर्यादा अनुसार गर्नू।

अर्को बेहोरा ... दरबार बाहिरका कहाँ कोही जन्मी काममा बाधा पऱ्यो भने सो काम नसिद्धियून्जेल वचासिन्ध ( ( श्रीश्रीउपाध्याय (गुरुज्यू) हरूले राख्नू। तीन शहरको यस नियम अनुसार गर्नू। यस अनुसार गरेनन् भने श्री ३ इष्टदेवताको कुदृष्टि परोस्। उपाध्यायहरूले श्रीश्रीराजाहरूलाई यो देखाई संझाई यस अनुसार गरेनन् भने त्यस्तै होस् (श्री ३ इष्ट देवताको कुदृष्टि परोस्)।

यति कुरा ललितपुरले गरेको भनी अरूले नमान्नु हुँदैन । भक्तपुरले गरेको भनी अरूले नमान्नु हुँदैन । कान्तिपुरले गरेको भनी अरूले नमान्नु हुँदैन । यो नियम तीन्नै नगरका श्रीश्रीराजाहरू भेला भई बनाइएको हो ।

अर्को बेहोरा... राजाहरूले यसो गरे भनी अरू कसैले (दुनियाँ दारले) यस किसिमले गरे भने गराए भने गराउनेसँग शय (१००) रु दण्ड राजाले लिनू; भनेसँग पनि शय (१००) रु राजाले दण्ड लिनू ।

यस कुरामा दृष्ट साक्षी देवीदाश, भगीरथ भैया, देवराम प्रमान (मन्त्री, भारादार) छन् । संसारको शुभ होस् ।

**व्याख्या**

नेपाल उपत्यकाभित्र राजधानी रही खडा भएका भक्तपुर कान्तिपुर र ललितपुर राजनीतिक दृष्टिले तीन स्वतन्त्र राज्य थिए । यसो हुँदा ती राज्यहरूले आफ्नो-आफ्नो राज्यको गौरव बढाउन, हित गर्न सकभर उद्योग गर्नु स्वाभाविक थियो । यसरी आफ्नो-आफ्नो राज्यको विकासको लागि उद्योग गर्दा यी तीन राज्यमा प्रतिस्पर्धा हुनु स्वाभाविक छ । हुन पनि गत शताब्दीको यीन राज्यको राजनीतिक इतिहास परस्परमा तीव्र प्रतिस्पर्धात्मक रहेको छ । विशेषगरी प्रतापमल्ल, जगतप्रकाशमल्ल र श्रीनिवासमल्लको राज्यकालमा यो प्रतिस्पर्धा झन बढी भएको देखापरेको छ ।

यसरी यी तीन राज्यमा राजनीतिक दृष्टिले जतिप्रतिस्पर्धा भए पनि, हानथाप, लडाइँ झैझगडा भए पनि यी तीनै राज्यका राजाहरू एकै मल्लवंशका थिए । यसो हुँदा जति तीव्र कलह भए पनि मर्दापर्दा एक दोस्रोले आशौच बार्नु पर्ने आदि बाध्यताले यिनीहरूलाई जकडिराखेको थियो । साथै कति सामाजिक कुराहरू समान रूपमा प्रतिपालन गर्नु पनि यिनीहरूलाई अभीष्ट थियो । यही कुराको झलक ने.सं.७९५ (वि.सं. १७३२) मा उपत्यकाका तीनै राजा मिली गरेको यस सन्धिपत्रले देखाउँछ । यस सन्धिमा प्रत्यक्षतः राजनीतिक कुरा परेको छैन । सामाजिक र धार्मिक कुरा मात्र परेको छ । **यति कुरा ललितपुरले गरेको भनी अरूले नमान्नु हुँदैन । भक्तपुरले गरेको भनी अरूले नमान्नु हुँदैन कान्तिपुरले गरेको भनी अरूले नमान्नु हुँदैन; यो नियम तीनैनगरका श्रीश्रीराजाहरू भेला भई बनाइएको हो** भन्ने कुरा यस अभिलेखमा स्पष्ट रूपमा कुँदाइएको छ । यसबाट तात्कालिक सामाजिक कुराको केही झलक प्राप्त हुन्छ ।

यस ताकाको समाज आफ्नोआफ्नो रीतिस्थितिमा कट्टर बन्दै गइरहेको हामी पाउँछौं । कसले कति दिन आशौच बार्ने, कति दिन सूतक बार्ने आदि प्रश्नलाई समाजले ज्यादा महत्त्व दिन थालेको थियो । यो कुराको संकेत सामाजिक नियम बाँधिराखेको यस अभिलेखबाट र यस्तै नियम बाँधिराखिएका अरू अभिलेखबाट पाइन्छ ।

मल्ल राजाहरू सामाजिक नियमहरू बनाउँदा धर्मशास्त्रहरू बमोजिम बनाउने गर्दथे । यसकारण नियम बनाउँदा धर्मशास्त्र जान्ने ब्राह्मण, पण्डित वर्गको सहायता लिन्थे । यस अभिलेखमा आशौच बार्ने नियम बनाउँदा तीनै शहरका उपाध्याय (गुरुज्यू) हरू बाहेक भट्टाचार्य, चक्रवर्ती, राय, उझा आदि बाहिरका अरू पण्डितहरू पनि भेला गराई धर्मशास्त्रको वचन अनुसार, मात्र बनाइएको स्पष्ट उल्लेख गरिएको छ ।

यसबेलासम्म मल्ल राजाहरूको परिवार निकै विस्तृत हुँदै थियो । राजपरिवारका कति व्यक्ति त राजदरवारभित्र रहन्थे । केही राजकुमार र रानीहरू भने दरवार बाहिर पनि रहन्थे । यसताका बहुविवाह प्रथा निकै प्रचलित थियो । मल्ल राजाहरू राजदरवार बाहिर पनि निकै स्वास्नी राख्तथे । यसो हुँदा मल्ल राज्यपरिवारका केही व्यक्ति दरवार बाहिर पनि रहन्थे । साथै, यसताका ठ्याहा, 



मठ्याहा प्रथा पनि प्रबल हुँदै थियो । अतः मल्ल राजखलकका व्यक्तिको मृत्यु हुँदा के कसरी आशौच बार्ने भन्ने समस्या खडा भएथ्यो । यसो हुँदा उपत्यकाका तीनै राज्यका मल्लराजाहरू मिली आशौच बार्ने कुरामा एकरूपता ल्याउने प्रयास यहाँ गरिएको हो । तर यस नियमको राम्रो प्रतिपालन भएन । खूद श्रीनिवासमल्लका छोरा योगनरेन्द्रमल्लले नै आफू सत्तामा आउने बित्तिकै यस नियमको बदला अर्को नियम धर्मशास्त्रकै वचन लिई बनाएथे । जे होस् , तात्कालिक सामाजिक अवस्था बुझ्न यो अभिलेख निकै उपयोगी रहेको छ ।

यस सन्धिपत्रमा प्रत्यक्षतः राजनीतिक कुरा परेको छैन तापनि अप्रत्यक्षतः यस सन्धिपत्रले यसताका श्रीनिवासमल्लको प्रभाव बढेको संकेत भने गर्दछ । यसताका श्रीनिवासमल्लको प्रभाव कसरी बढेथ्यो भन्ने कुरा माथि लेखिसकेको हुँदा यहाँ दोहोऱ्याउनु आवश्यक छैन । राजनीतिक क्षेत्रमा रहेको श्रीनिवासमल्लको त्यही प्रभावले गर्दा नै उनले भक्तपुरका राजा जितामित्रमल्ल र कान्तिपुरका राजा नृपेन्द्र मल्ललाई समेत यस सन्धिपत्रमा सामेल गराउन सकेका हुन् । यसकारण अप्रत्यक्ष रूपमा यस सन्धिपत्रले श्रीनिवासमल्लको प्रभाव बढेको कुराको संकेत गर्दछ ।

★★★

## (१३४)

# भण्डारखालको राजर्षि सिद्धिनरसिंहमल्लको अभिलेख

ललितपुर भण्डारखालभित्र एउटा पोखरी छ । त्यसको उत्तर किनारमा सिद्धिनरसिंहले बनाउन लाएको भूगोल भनी प्रसिद्ध ठाउँ छ । त्यसको उत्तरपट्टिको भित्तामा यो अभिलेख कुँदिएको शिलापत्र टाँसी राखिएको छ । यहाँ सम्वत् ने.सं. ७९६ छ ।

संशोधनमण्डलद्वारा अभिलेख-सँग्रह छैटौं भागको १३ पृष्ठमा यो प्रकाशित भएको छ ।

१. ॐ स्वस्ति ॥ श्रीमत्पशुपतिचरणकमलधूलिधूसरितशिरोरुह श्रीमन्मा-
२. नेश्वरीष्टदेवतावरलब्धप्रसादित देदीप्यमान मानोन्नत रविकुलतिलक
३. हनूमद्ध्वज राजभृषीश्वर श्रीश्रीजयसिद्धिनरसिंहमल्लदेव प्रभु
४. ठाकुरसन ॥ श्री ३ इष्टदेवतायात स्वानयात निमित्तन थ्व क्यव दुन्ता जु-
५. रो, महानवमिन निक लाख काययात खंल खेलेयात कारणस थ्वहितिसहि-
६. तन भंदारखाल दयका जुरो ॥ भाषा थ्व हितिस पुखडिस भेव मोड न्हुयमदो
७. वा दायमदो नरकचलक वायमदो जीर्ण्ण वस्त्र आदिन मुभिङ वस्तुवोय-
८. मदो श्रीश्रीजुजुबाहिकन मेव लकामनं न्हयायमदो भूगोलस चोने-
९. मदो श्रीथकुनीजुपनि बाहिकनं मेव मिसतो दुंहायमदो, ग्व वेलस माल-
१०. नास श्रीउपाध्याजुपनिजुको स्नाय याय दो, श्रीउपाध्याजुपनिस ब्राह्म-
११. णीजुपनि जुको बिज्याय दो जुरो ॥ पुनर्भाषा ॥ क्यवनायकपनि स्यन जुर-
१२. सां भै स्वान श्री ३ इष्टदेवतायात बाहिकन मेलेयात यन्नेमदो क्यव दुं-

१३. हावको वस्तु सोसि मंडा आदिपन छु वस्तु जुरसा. पितयन्नेमदो मल-
१४. मूत्र आदिनं कचंगल थड्न अगम्य कर्म्म यायमदो जुरो ॥ थ्वति मानय
१५. मयातसा श्री ३ इष्टदेवताया कुदृष्टि श्रीश्रीथाकुलया गुणाहागा-
१६. र लाक जुरो गोब्राह्मणदिहथ्या पञ्चमहापातक लाक जुरो ॥ थ्वतिया
१७. साक्षी नेपालेश्वर महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्लदेव प्रभु
१८. थाकुलस दृष्टः ॥ सम्वत् ७९६ कार्तिक शुक्लप्रतिपद्यान्तिथौ ।
१९. पुनर्भाषा श्रीश्रीथाकुलस आज्ञा दतसा आज्ञादोतपिं ग्राय तेव वि-
२०. ना आज्ञान जुको छु यायं मतेव, थ्व चोस्यं तयाथ्य परिमान जुरो, शुभ ॥

## अनुवाद

कल्याण होस् । श्रीपशुपतिका पाउरूपी कमलका धूलाले कपाल फुस्रो भएका, श्रीमानेश्वरी इष्टदेवताबाट वरप्रसाद पाएका, उज्वल ठूलो इज्जत भएका, सूर्यवंशका टीका जस्ता, झण्डामा हनूमान् भएका, राजर्षि श्रीश्रीजयसिद्धिनरसिंहमल्लदेव प्रभु ठाकुरले श्री ३ इष्टदेवतालाई फूलको निम्ति यो बगैंचा चढाइएको हो । महानवमीको दिन चोखो पानी लिनको लागि खड्गहरू धुनको लागि धारा सहितको भण्डारखाल बनाइएको हो ।

बेहोरा ... यो धारा र पोखरीमा अरूले नुहाउन पाइँदैन । धान सुकाउन पाइँदैन । फोहरमैला फाल्न पाइदैन । थोप्रा कपडा आदि खराब वस्तु फाल्न पाइँदैन । श्रीश्रीराजा बाहेक अरूले यहाँ जुत्ता लाएर आउनु हुँदैन । भूगोलमा बस्नु हुँदैन । महारानी बाहेक अरू आइमाई यहाँ भित्र पस्नु हुँदैन । कुनैवेला आवश्यक पऱ्यो भने श्री उपाध्याय (गुरुज्यू) हरूले स्नान गर्न पाइन्छ । श्रीउपाध्यायका ब्राह्मणी (पत्नी)हरू मात्र पस्न पाइन्छ ।

अर्को बेहोरा-- बगैंचा नाइकेहरुले पनि श्री ३ इष्टदेवतालाई बाहेक अरूकाको लागि फूलहरु टिप्न पाइँदैन । बगैंचाभित्र पसे जति जुनसुकै वस्तु पनि बाहिर लान पाइँदैन । मलमूत्र आदि फोहर हुने कुनै खराब काम पनि गर्न हुँदैन । यति कुरा मानिनन् भने श्री ३ इष्टदेवताको कुदृष्टि परोस् । श्रीश्रीराजाको सामुन्ने उनी अपराधी ठहरिने छन् । गोहत्या, ब्राह्मणहत्या आदि पञ्चमहापाप लागोस् ।

यस कुराका दृष्ट साक्षी नेपालेश्वर महाराजाधिराज श्रीश्री जयश्रीनिवासमल्लदेव प्रभु ठाकुर हुनुहुन्छ ।

ने.सं. ७९६ (१७३२) कार्तिक शुक्ल प्रतिपदा ।

अर्को बेहोरा -- श्रीश्रीराजाबाट आज्ञा भयो भने आज्ञा पाउँनेले सो गर्न पाउँछन् । आज्ञाबिना अरू केही गर्न पाइँदैन । यहाँ लेखिए अनुसार गर्नु पर्छ । शुभ ।

**व्याख्या**

शासनाधिकार छोरा श्रीनिवासमल्ललाई सुम्पेपछि सिद्धिनरसिंह कुन रूपमा रहे भन्ने कुरामा यस अभिलेखले निकै प्रकाश पार्छ । यसभन्दा १६ वर्षजति पहिले नै सिद्धिनरसिंहले छोरा श्रीनिवासमल्ललाई राज्याधिकार विधिवत् सुम्पिसकेका थिए । छोरा श्रीनिवासमल्लले ललितपुरको शासन राम्ररी नै चलाएका थिए तापनि तात्कालिक नेपालको राजाकाजमा समेत श्रीनिवासमल्लको राम्रो प्रभाव रहथ्यो । यसरी सिद्धिनरसिंहले फेरि राजकाजमा हात हाल्नु पर्ने अवस्था नै आएन ।



यसबीच सिद्धिनरसिंह कुन रूपमा रहे भन्ने कुरा जिज्ञासाको विषय हुनु स्वाभाविक छ । त्यस जिज्ञासाको पूर्ति केही अंशमा यस अभिलेखले गर्छ । छोरालाई राज्याधिकार सुम्पेपछि सिद्धिनरसिंह राजर्षिका रूपमा रहेछन् । उनलाई विधिवत् राजर्षि भनी लेखिएको सर्वप्रथम यसै अभिलेखमा पाइन्छ । राजर्षि भएपछि उनको प्रशस्ति कस्तो रह्यो भन्ने कुराको झलक पनि यस अभिलेखबाट पाइन्छ । गद्दीनशीनमल्ल राजा सरह श्रीमत्पशुपति चरणकमलधूलिधूसरितशिरोरुह श्रीमन्मानेश्वरीष्टदेवतावरलब्ध प्रसादित देदीप्यमान मानोन्नत रविकुल तिलक हनूमद्ध्वज प्रभु ठाकुर आदि उनमा पनि यथावत् नै रहेको रहेछ । खालि महाराजाधिराज नेपालेश्वर आदि पदवी मात्र प्रशस्तबाट झिकिएको रहेछ । यसबाट सिद्धिनरसिंहको तात्कालिक अवस्थाको झलक पाइन्छ । उनी पदच्युत राजा सरह पनि होइन, गद्दीनशीन राजाहरूसरह पनि होइन, राजर्षिका रूपमा अलि बेग्लै खालको अवस्थामा उनी रहेछन् भन्ने थाहा पाइन्छ ।

सिद्धिनरसिंहमल्ल स्वभावतः पहिलेदेखि नै धर्मात्माप्रकृतिका थिए, अब राजर्षि बनेपछि राजकाजबाट उनको सम्बन्ध छुटेको हुँदा उनी स्वतः झन् बढी धर्मकर्मतिर लागे । राज्याधिकार छोडेपछि केही वर्ष विशेष गरी उनी आफ्ना इष्टदेवताको आराधनामा लागे भन्ने थाहा पाइन्छ । यो कुरा माथि गएको भण्डारखालको अभिलेखबाट पनि थाहा पाइन्छ । यस अभिलेखबाट पनि थाहा पाइन्छ । इष्टदेवतालाई फूल चढाउन पुष्पवाटिका, पोखरी आदि सिद्धिनरसिंहले पहिले नै बनाइसकेका थिए । अहिले आएर उनले त्यसलाई भण्डारखालको रूप दिएछन् । साथै भण्डारखाल र त्यहाँ बनेको धारा आदिको नियम बाँधी उनले यस अभिलेखमा कुँदाएका छन् । सिद्धिनरसिंहले बाँधेको उक्त नियमले तात्कालिक सामाजिक ढाँचाको अलिकता रूप झल्काउँछ । भण्डारखाल भित्र रहेको उक्त धारा र पोखरीको मुख्य प्रयोजन दशैंको महानवमीको दिन पूजाको लागि चोखो पानी लिने र खड्गहरू पखाल्ने थियो । यो बाहेक उक्त धारा पोखरीमा अरूले नुहाउनु मनाइ थियो । त्यहाँ भण्डारखालमा धान निफन्ने, फोहरमैला अरूले फाल्ने, थोत्रो कपडा फाल्ने आदि गर्न पाइँदैनथ्यो । राजा बाहेक अरूले त्यहाँ जुत्ता लाएर जानु हुँदैनथ्यो । सबभन्दा चाखलाग्दो नियम त्यहाँ श्रीथकुनीजु (महारानी) बाहेक अरू आइमाईले त्यहाँ पस्न पाइँदैनथ्यो । चाहिएको खण्डमा उपाध्याय (गुरुज्यू) ब्राह्मणकी ब्राह्मणीसम्मले पस्न पाइन्थ्यो । आवश्यक परेमा उपाध्याय (गुरुज्यू) ले त्यहाँ नुहाउन पनि पाइन्थ्यो । यस नियमले कति धार्मिक स्थलमा आइमाईलाई पस्न निषिद्ध गरेको कुरा चाल पाइन्छ । धार्मिक र सामाजिक क्षेत्रमा ब्राह्मणको चाहिँ स्थान उच्च हुँदा ब्राह्मणलाई चाहिँ विशिष्ट सन्मान दिइन्थ्यो भन्ने यताबाट थाहा पाइन्छ ।

सिद्धिनरसिंहले पाटन भण्डारखालमा भूगोल पनि बनाएका थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । भूगोल स चोनेमदो- भूगोलमा बस्न हुँदैन भन्ने नियम बनेको हुनाले बस्न हुने फराकिलो ठाउँ भएको भूगोल सिद्धिनरसिंहले बनाएका थिए भन्ने संकेत पाइन्छ । भण्डारखालभित्र सिद्धिनरसिंहले बनाएको भूगोल भनी प्रसिद्ध ठाउँ त अहिले पनि छ । तर त्यसले पुरानो रूपको प्रतिनिधित्व गरेको छैन । यसकारण सिद्धिनरसिंहको भूगोल कस्तो प्रकारको थियो, कुन उद्देश्यले बनाइएको थियो भन्ने खुल्न सकेको छैन । ने.सं. ७७७ मा प्रतापमल्लले बनाउन लाएको भूगोल हनूमानढोका मोहनचोकमा रहेको छ । त्यसमा थम शास्त्रस सोयाव पिकायाव थ भूगोल पृथ्वी चोस्य बिज्याडा- आफैं शास्त्र हेरी यो भूगोल पृथ्वी लेखाइयो भनी लेखिएको छ । प्रतापमल्लले बनाउन लाएको भूगोल चाहिँ पृथ्वीको मानचित्र (उनले बुझेजस्तो) नै हो । धातु निर्मित सो भूगोल गोल नभएर थालजस्तो च्याप्टो आकारको छ । त्यस भूगोलको सबभन्दा तल्लो भागमा तल, पाताल, रसातल आदि अनेक धरातल देखाइएका छन् । तर सिद्धिनरसिंहले बनाउन लाएको

भूगोल चाहिँ अर्कै किसिमको थियो कि भन्ने अनुमान हुन्छ । भुगोलस चानेमदो भन्ने नियम बनाइएको हुँदा उक्त अनुमान गर्न सकिन्छ ।

भण्डारखाल बगैंचाको देखरेखको लागि **क्यबनायक** (बगैंचा नाइके) नियुक्त गरिएका थिए । ती बगैंचा नाइकेले प्रतिपाल गर्नुपर्ने नियमको पनि यस अभिलेखमा उल्लेख परेको छ । उक्त बगैंचामा फुलेका फूलहरू इष्टदेवतालाई चढाउनाका लागि मात्र हुन्, बगैंचा नाइकले ती फूल बेच्न बाहिर लान हुँदैनथ्यो । बगैंचाभित्रका सुकेका काठ आदि वस्तुसम्म पनि त्यहाँबाट बाहिर लान पाइँदैनथ्यो । बगैंचा नाइकेले बगैंचालाई सफा राख्नु पर्थ्यो । फोहरमैला गर्न पाइँदैनथ्यो ।

यस अभिलेखमा दृष्ट साक्षी श्रीनिवासमल्ल राखिएका छन् । उनलाई यहाँ नेपालेश्वर महाराजाधिराज भनिएको छ । यसताका उता कान्तिपुरमा प्रतापमल्लको मृत्यु भइसकेको थियो । भक्तपुरमा पनि जगतप्रकाशमल्लको मृत्यु भइसकेको थियो । यसकारण आफ्ना कट्टरप्रतिद्वन्द्वी दुवैको अस्त भईसकेको हुँदा यसताका श्रीनिवासमल्लको प्रभाव तीनै राज्यमा परेको थियो । उनी आफूलाई नेपालेश्वरको रूपमा निकै अगाडिदेखि नै दावी गर्न थालेका थिए तापनि यसबेला चाहिँ श्रीनिवासमल्ल केही अंशमा साँच्चै नेपालेश्वर बनेका थिए । यस विषयको अरू चर्चा तल गरिएको छ ।

सिद्धिनरसिंहमल्लको यो आखिरी अभिलेख हो भनी भन्न सकिन्छ । यसको केही कालपछि उनी नेपाल छोडी तीर्थयात्राको लागि भारततिर लागेका थिए । ने.सं. ८०० को श्रीनिवासमल्लकी छोरी कीर्ति मंगलाको वंशगोपाल मन्दिरको अभिलेखमा सिद्धिनरसिंह तीर्थ गएको कुरा पश्चाद् राज्यमिदं विहाय तृणवत् तीर्थानुगामी भवत् भनी लेखिएको छ । यसबाट ने.सं. ८०० भन्दा केही अघि सिद्धिनरसिंह तीर्थयात्राको लागि गएको थाहा पाइन्छ । हुन त राज्याधिकार छोड्ने बित्तिकै पनि एक चोटी उनी तीर्थयात्राका लागि गइसकेका थिए, तर बीचमा एकचोटि फर्केर आई ललितपुरमा रही धर्मकर्म गरी रहन लागेका थिए । ने.सं. ८०० भन्दा केही अघि फेरि तीर्थयात्राका लागि भारत गएपछि उनी फेरि फर्केनन् । एक शय चार वर्षको लामो आयु पाई ने.सं. ८३० ( वि.सं. १७६७) मा मात्र सिद्धिनरसिंहको मृत्यु भएको थियो । एक ठ्यासफूमा उक्त कुरा यसरी टिपिएको छ -

> सं. ८३० जेष्ठ शु. १५ शुभयोग बुधवार थ्व कुन्हु श्री ३ सिद्धिनरसिंह मल्लजुया जानक अग्निसंस्कार याक शं (ख) मोङ थ्व वेलस् वसपोलया आयु वर्ष १०४ दं दतो ॥ कोनि विज्याक वर्ष पियगुं ४९ दं दतो ॥ जंल याकात वेलस कर्म याक नीयनिह्नु २२ हतछोत यात पलङस जुंक्क मथङ ।
>
> (ने.सं. ८३०. १७६७) ज्येष्ठ शुक्ल पूर्णिमा बुधवार शुभयोगको दिन श्री सिद्धिनरसिंहमल्लको जन्मपत्रिका (चिना) को अग्निसंस्कार शङ्खमूलमा गरियो । यसबेला उहाँको आयु १०४ वर्षको थियो । कोनि (भारत) तिर गएको ४९ वर्ष भएको थियो । ललितपुर एक्लो परेको बेलामा कर्म गरियो । २२ दिनमा हतछोत गरियो । पलङमा राखी लाने काम भने गरिएन ।

यसरी १०४ वर्षको लामो आयु पाउने राजा नेपालको इतिहासमा राजर्षि सिद्धिनरसिंह मात्र देखिएको छ । गोपालवंशावलीमा नेपालका राजाहरूमा सबभन्दा बढी आयु हुने राजा लिच्छवि वृषदेवको उल्लेख परेको छ । तर त्यहाँ वृषदेवको आयु १०० वर्ष दिइएको छ । सिद्धिनरसिंहको चाहिँ १०४ वर्षको आयु रहेको थियो । फेरि वृषदेवको उल्लेख अरू प्रमाणबाट पुष्ट भएको छैन । सिद्धिनरसिंहको उल्लेख चाहिँ तत्काल टिपिएको हुँदा प्रामाणिक रहेको छ ।



जेहोस् सिद्धिनरसिंहको हरगतिविधि अरू राजाभन्दा अलि भिन्नै रहेको छ । शरीरलाई सुखसयलमा मात्र नराखी सिद्धिनरसिंहले निकै कष्ट उठाएथे । कृच्छ्चान्द्रायण व्रत बँस्नु, पन्चाग्नि ताप्नु आदि कठिन व्रत उनले लिएको वर्णन भाषावंशावलीमा परेको छ तर आयु, भने १०४ वर्षको रहेको यो उल्लेख निकै रोचक छ ।

★★★

## (१३५)

# बुङ्मती गाउँ यताटोल मत्स्येन्द्रबहालको शिलालेख

## मूलपाठ

१. ? स्वस्ति॥ श्रीमल्लोकनाथचरणकमल धूलिधूसरित शिरोरुह श्रीमन्मानेश्वरीष्टदेवता वर-२. लब्ध प्रसादित देदीप्यमान मानोन्नत-विकुलतिलक हनूमद्ध्वज नेपालेश्वर महाराजाधिरा-३. ज श्रीश्रीजय श्रीनिवास-मल्लदेव ठाकुलसन ॥ श्री ३ त्रैलोक्यनाथ इष्टदेवता-सके लिथ्य लिथ्य्
४. कचंगल दङव वयु धक ओम्ह परमेश्वरयात भारा मक्यियात थुति भाषा चोस्य तया जुरो ॥
५. भाषा मास उपासन चोङ वयुपनि न्हपां जाति सोधय यायमार जुगिन दोविन नयिन तयम-
६. दो जुरो ॥ कतिनपुन्हिस कुन्हु चछि न्हिछिन चोनबको जुको तय दोओलनलिवको तय म-
७. दो जुरो ॥ छुकार्ज्जसं सन्देहे जुरनास नायकजुपनि सकल्यं साहुति समधारन याय मार
८. छम्ह नेम्हस्यन धायातति याय मदो जुरो ॥ पुनर्भाषा छुकार्ज्जसं काजिकर्ज्जन यायस गुरु-
९. का कायके धायु श्रीश्रीथाकुलसके गोचर मयासे थथवस सुखन सन्ने मदो ॥ सुनान
१०. जुरसनो खयक देव आवेश मजुयिक देव पा छायाव अध्य थ्यय धार धक खंल्हाय मदो
११. जुरो ॥ पुनर्भाषा स एव श्रीश्रीजय श्रीनिवासमल्लदेव थाकुलखन दुन्ता यमचोवु रोव ६ ज-

१२. व १ ध्व वुया वरसानन वर्षप्रति कार्तिक कृष्ण प्रतिपदा कुन्हु श्री ३ त्रैलोक्य नाथया
१३. अगूस होम याङन चापाङस दुगु म्हं १ हि. खोङन शूय भिनायकं जुपनिस्त बो
१४. तस्यं मास उपासन चोङ धम्मुणि पनि नो फेनके जुरो ॥ ध्वतिया साक्षी श्रीश्रीज-
१५. य नरेन्द्रमल्ल थाकुलस प्रमान भगीरथ भैया दृष्टः ॥ श्रेयोऽस्तु ॥
१६. सम्वत् ७९६ कार्तिक शुक्ल पूर्णमाश्यान्तिथौ ॥ ॥ ध्वति भाषा श्रीवसुदे-
१७. व थलिया श्रीगुणचन्द्र गुरुवाहार ध्वपनि पर्द्यायसचोस्य तया जुरो ॥
१८. ध्व चोस्य तया ध्व मानय मयातसा श्री ३ त्रैलोक्य नाथया कुदृष्टि शुभ ॥

## अनुवाद

कल्याण होस् । श्रीलोकनाथको चरणकमलको धूलोले कपाल फुस्रो भएका, श्रीमानेश्वरी इष्टदेवताबाट वरप्रसाद पाएका, उज्याला, ठूलो इज्जत भएका, सूर्यवंशका टीकाजस्ता, ध्वजामा हनूमान् भएका, नेपालेश्वर महाराजाधिराज श्रीश्रीजय श्रीनिवासमल्लदेव ठाकुरले श्री ३ त्रैलोक्यनाथ इष्टदेवता कहाँ पछिपछि कचिङ्गल उठ्ला भनी उहाँ परमेश्वरलाई भार नपार्नाको लागि यति व्यहोरा लेखी राखिएको हो ।

व्यहोरा-- मास-- उपासन (एक महीनासम्म केही नखाई बसिने व्रत) बस्न आउनेहरूको पहिले जाति- शोधन गर्नु पर्छ । जुगिनी (कुसले) धोबिनी, कसाईनीलाई उक्त व्रत बस्न दिनु हुँदैन । कार्तिक पूर्णिमाको दिन रात दिनभरिमा व्रत बस्न आउनेलाई मात्र बस्न दिनु । यसपछि आउनेलाई बस्न नदिनु ।

कुनै कार्यमा सन्देह भयो भने नाइकेहरू सबैले सल्लाह साहुति गरी समस्याको समाधान गर्नु पर्छ । एक दुइजनाले भन्दैमा गर्न हुँदैन ।

अर्को व्यहोरा-- कुनै कार्यमा पनि-- श्रीश्रीठाकुरलाई अवगत नगराईकन आफ्नो इच्छाले गर्न पाइँदैन । कसैले पनि साक्षात् देव आवेश नभईकन देवपा चढाई यस्तो उस्तो भनियो भनी कुरा गर्न पाइँदैन ।

अर्को व्यहोरा-- उहाँ श्रीश्रीजयश्रीनिवासमल्लदेव ठाकुरले चढाइएको यमचो खेत ६ रोपनी, १ जव, यस खेतको आयस्ताले प्रतिवर्ष कार्तिक कृष्ण प्रतिपदाको दिन श्री ३ त्रैलोक्यनाथको सामुन्ने होम गर्नु । चपाङमा एक बोको बलि दिनु । ३० जना नाइकेहरूलाई भोज भाग पन्छाई मास व्रत बस्न आउने धर्म्मुनीहरूलाई नो फेनके (खान दिन शुरु गर्ने काम) गर्नु ।

यस कुराका दृष्ट साक्षी श्रीश्रीजयनरेन्द्रमल्ल ठाकुर र प्रमान भगीरथ भैया हुन् ।

कल्याण होस् । ने.सं.७९६ (वि.सं. १७३२) कार्तिक शुक्ल पूर्णिमा । यति बेहोरा श्रीवसुदेव थलिपा श्रीगुणचन्द्र गुरुवहालको पालामा लेखी राखिएको हो । यसमा लेखिए जति मानेनन् भने श्री ३ त्रैलोक्यनाथको कुदृष्टि परोस् ।

शुभ होस् ।



**व्याख्या**

ने.सं. ७९६ (वि.सं. १७३२) कार्तिकमा श्रीनिवासमल्लले स्थिति बाँधी यो अभिलेख राख्न लाएका हुन् । तात्कालिक सामाजिक इतिहासको दृष्टिले यो अभिलेख पनि निकै उपयोगी रहेको छ ।

मध्यकालमा व्रत बस्नु, उपासन बस्नु आदि धर्मकर्म निकै लोकप्रिय रहेको थियो । जनता आफ्नो श्रद्धा र विश्वास अनुसार अनेक थरी व्रत बस्दथे । तात्कालिक ऐतिहासिक सामग्रीहरूमा यस कुराको उल्लेख प्रशस्त पाइन्छ । त्यस्ता व्रतहरूमा मास-उपासन (एक महीनासम्म केही नखाई बसिने व्रत) को बेग्लै महत्त्व रहेको थियो । यो व्रत निकै कष्टसाध्य छ । तैपनि भक्तिनीहरू यो व्रत बस्दथे । विशेष गरी पतिद्वारा 'परित्यक्ता आईमाईहरू यो व्रत बस्दथे । परित्यक्ता आइमाईहरूको लागि यो व्रत एक अग्निपरीक्षा समान थियो । मास-उपासन व्रतसाङ्गे गर्ने दिन पति अथवा पतिका नातेदार आई लिन आए भने ती परित्यक्ता आईमाईको लागि यो विजयको क्षण हुन्थ्यो; पति वा पतिको परिवारले त्यस दिन पनि लिन आएनन् भने पनि परित्यक्ता आईमाईको लागि सो क्षण बन्धनमुक्त हुने क्षण हुन्थ्यो; अर्थात् मासव्रतको साङ्गैको दिन पनि पति लिन आएनन् भने विधिवत् पारपाचुके पाएको कुरा यसले पुष्टि गर्थ्यो । अर्को शब्दमा भन्ने हो भन्ने यसपछि सो स्त्रीले पूर्वपतिको बन्धनमा रहनु नपर्ने हुन्थ्यो; उनीले अर्को विवाह गर्ने अधिकार विधिवत् पाउँथिन् । यसकारण मास-उपासन को धार्मिक बाहेक सामाजिक महत्त्व पनि कम थिएन ।

मास उपासन व्रत प्रायः गरी प्रसिद्ध देवमन्दिरमा गई बस्ने चलन छ । विशेष गरी बुंगमतीका राता मत्स्येन्द्रनाथको मन्दिरमा मास-उपासन बस्ने चलन बढी लोकप्रिय थियो । यस अभिलेखमा बुंगमतीमा मास-उपासन बस्ने नियम बाँधेको कुरा परेको छ ।

मल्लकालको समाज अनेक जाति, उपजातिमा विभक्त थियो । तिनमा पानी चल्ने, पानी नचल्ने आदि अनेक भेद थिए । प्रत्येक जाति उपजातिको मर्यादा तोकिएको हुन्थ्यो । यसो हुँदा मास-उपासन बस्न आउनेहरूमा पानी नचल्ने तल्लो जातिलाई राख्ने कि नराख्ने पनि समस्या उठेछ । पानी चल्ने र पानी नचल्नेलाई पनि एकै ठाउँमा राख्नु पनि त्यसबेलाको धारणाले उचित ठहरिएन छ र कुसलेनी, धोबिनी, कसाईनीलाई मास-उपासन व्रत बस्न नदिने भन्ने नियम बाँधेको कुरा यस अभिलेखमा परेकोछ । यस कुराले तात्कालिक समाजमा रहेको विषमतालाई औँल्याएको छ ।

मास-उपासन बस्दा धेरै नियमको पालना गर्नु पर्थ्यो । यसकारण जुनवेला आएपनि व्रत बस्न दिनु सम्भव थिएन । यसैले यस अभिलेखमा कार्तिक पूर्णिमा दिन २४ घण्टा भित्र व्रत बस्न आउनेलाई मात्र अनुमति दिने; यसपछि आउनेलाई प्रवेश नदिने निर्णय गरिएको कुरा यस अभिलेखमा परेको छ ।

कुनै कुरामा केही सन्देह उठ्यो भने त्यसको निवारण सबै नाइकेहरू बसी सल्लाहसाहुति गरेर मात्र गर्ने; केही नाइकेले भन्दैमा सो नमान्ने कुरा पनि यस अभिलेखमा उल्लिखित छ । बुंगमतीमा त्यसबेला यस्ता नाइकेहरू तीस जना थिए भन्ने पनि यस अभिलेखबाट थाहा पाइन्छ । विशेष कुराको निर्णय गर्नु पर्‍यो भने चाहिँ श्रीश्रीराजालाई नै अवगत गराएरमात्र गरिन्थ्यो ।

यसरी एक महीनासम्म व्रत बस्नेहरूलाई नोफेनके (व्रतको साङ्गे गरी पारण गराउने काम) गराउँदा होम गर्ने, बलि दिने आदि विधान गर्नु पर्थ्यो यसका लागि श्रीनिवासमल्लले केही खेत गुठी राखिदिएको चर्चा पनि यसमा परेको छ ।

यो नियम बाँधा साक्षीका रूपमा युवराज योगनरेन्द्र र प्रमान भगीरथ भैया रहेका छन् । यसताका चौतारा भगीरथको कार्यकालमा श्रीनिवासमल्लले अनेक स्थितिरीति बाँध्ने काम गरेका

थिए । यस कुराको पुष्टि माथि गएका संवत्सर लोहो मूलचोकको अभिलेख आदिले गर्छन् । त्यसै सिलसिलामा राता मत्स्येन्द्रनाथस्थानमा मास-उपासन बस्नेहरूको लागि पनि स्थिति बाँधी यो अभिलेख राख्न ल्याएको देखिन्छ ।

★★★

(१३६)

## पाटन इखालखुटोल बुंगननि चैत्यको शिलालेख

### मूलपाठ

१. नमो लोकनाथाय ॥ अखि-
२. ल भुवननाथं देववृन्दाधिनाथं, स-
३. कल सुगतनाथं सर्व्वसंधातनाथम् ॥ दहन-
४. नदनाथं रक्षसां संघनाथं दितिज भुजग-
५. नाथं नौम्यहं लोकनाथं ॥ पूर्व्वप्रसुत इति योव भ ता-
६. ग्रकारे । वित्तान्वितो गुणनिधि; स हि माधवाख्यः ॥ त-
७. स्यात्मजो सुविपुलो जनिजव्यसिंह, स्तस्यैव सुरुरभव
८. त्स च विष्णुसिंहः ॥ अस्य पुत्रास्तयो जाता, कार्य्यज्ञः पुण्य-
९. भागिनः ॥ ज्येष्ठः कुसुमसिंहोसौ भागीसिंहश्च मध्यमः ॥-
१०. कनिष्ठः स च वासिंहो धर्म्मदानदयाकरः ॥ मातास्य
११. चण्डिकानाम्नी भगिनी ललितावरा । मातुरर्थ कृता दे-
१२. वी तारास्वर्ण्ण विलेपिता ॥ तस्य माय्ये सुरूपे द्वे, भव-
१३. तः पतिधर्म्मगे ॥ अब्देस्मिनरसरंध्रवाजिनिर्गिते
१४. ज्येष्ठेसुधाशोस्तिथौ, मैत्रक्षे दिवसे हिमांशु तनं-
१५. येतसिद्धियोगे सति । नेपाले ललितापुरे सुललि-
१६. ते भूपाल चूडामणै । धर्म्मादये धनदानदातरि सदा
१७. श्रीश्रीनिवास नृपे । वा सिंहेन । शिलामयेः सुकृति
१८. ना प्रसाद एकः कृतस्तातार्थन सुवर्ण्णलपरचि-
१९. तः श्रीश्रीलोकनाथः सरः रम्येस्मिन्सुरनायकं त्रिदि-
२०. वदं तं स्थाप्य तारां च तां, तेनाकारि मुर्दा सुवर्ण्णकल-
२१. शस्यारोहणं सध्वजम् । तेन पुण्यप्रभावेण, राजां म-
२२. ङ्गलमेधतां । क्षीराढ्याः सन्तु गावस्ताः स्वाचाराः सन्तु



२३. भूसुराः । तोयदारतोयदाः सन्तु देवाः सन्तु सुदृष्टयः ॥-
२४. पृथवी भवतु सस्या ढ्या, फलिनः सन्तु यादपाः ॥ सानन्दा
२५. सकलालोकाः सन्तु पुण्यप्रभावतः। धर्म्मात्मा च जनो
२६. रास्तु देशोस्तु निरूपद्रवः ॥ ॥ शुभमस्तु सर्व्वदा

★★★

(१३७)

## फर्पिङ्ग कोछुटोलको भगीरथ भैयाको अभिलेख

१. स्वस्ति॥ श्रेयोऽस्तु सम्वत् ७९२ चैत्रमासे ॥ श्रीश्रीज-
२. यश्रीनिवासमल्लदेव प्रभु ठाकुलस, मन्त्री भगीर-
३. थ भैया थम चिता यास्यं फणपि देशया ध्वाका
४. दक्कं ल्होङा धसिपोलन इ -- षा मदु ध्वाकान थि-
५. लस लोव्हन चिङा श्री ३ शिखरनारायणया
६. लोह ध्वाका दयका हन हि ति ल्होङा जुरो ॥ थ्व
७. हितियात थवने चौगुलि हिति नेगुलिनं स्ववो
८. छिवोछिवो लाखवोति बियमाल जुरो को-
९. छु कोत्वार मदयक आव गाहा डोले मदो जु-
१०. रो ॥ धर छार वनेमाल काले देशसमोहो न
११. वनेमार जुरो लस ध्वकास दयदसं निदा-
१२. न यायमाल थ्वगुलि-स साहान छोयमदो
१३. सि सालमदो जुरो ॥ थ्वते भापा सुनानु जुरस-
१४. नो थ्व चोस्यं तयाथ्य यायमार चोस्यतथाथ्य
१५. मयातसा श्रीश्रीथाकुलस गुणाहागार ला-
१६. क जुरो ॥ थ्व ज्यास चिता याक यलंया नरहरि
१७. भारो मानसिंह भारो ह्राकुदेव भारो, न्हवन
१८. भारो तुलसीराम भारो, ग्वविन्द भारो वि-
१९. श्वसिंह भारो, विश्वहरि सूज्ज थ्वते जुरो शु-
२०. भ

## अनुवाद

कल्याण होस् । ने.सं. ७९७ (वि.सं. १७३४) चैत्रमा । श्रीश्रीजयश्रीनिवासमल्लदेव प्रभु ठाकुरका मन्त्री भगीरथ भैयाले आफैंले हेरचाहा गरी फर्पिङ्ग शहरका जम्मै ढोकाहरूको जीर्णोद्धार गरे । -- ढोकाका आसपासको सडकमा ढुंगाले छापे । श्री ३ शिखरनारायण कहाँ ढुंगाको ढोका बनाए; फेरि धारोको जीर्णोद्धार गरे । यो धारालाई अगाडिका दुइ धाराका पानीमध्ये तीन भागको एकभाग दिनु पर्छ । कोछुटोललाई नपुगुन्जेल-- गर्न पाइँदैन । कुलो सफा गर्न जानु पर्ने वेलामा देशका ( फर्पिङ्गका) सबै मिली जानु पर्छ । सडकहरू र ढोकाहरूको मरमत प्रतिवर्ष गर्नु पर्छ । यहाँ -- हिँड्न दिनु हुँदैन । काठ तान्न दिनु हुँदैन ।

यो बेहोरा, यसमा लेखिए अनुसार जुनसुकैले पनि मान्नु पर्छ । मानेन भने श्रीश्रीराजाको सामुन्ने अपराधी ठहरिनेछन् ।

यो काम गर्दा देखरेख गर्ने पाटनका नरहरि भारो, मानसिंह भारो, हाकुदेव भारो, न्हवन भारो, तुलसीराम भादो, गोविन्द भारो, विश्वसिंह भारो, विश्वहरि, सूर्यहरू हुन् । शुभ होस् ।

**व्याख्या**

श्रीनिवासमल्लको पालामा चौतारा भगीरथ भैयाको प्रभाव कसरी बढ्यो भन्ने कुराको चर्चा माथि गरिसकेको छ । उनी एक किसिमले राजाकै अवतार हुन् भन्ने कुरा राजाद्वारा नै घोषणा गराइएको थियो । यसरी चौतारा भगीरथ भैया खालि शक्तिशाली चौतारा मात्र नभएर राजा समानका शासक बन्न पुगेका थिए । पाए एक प्रदेशका सामन्त बन्ने पनि उनको सपना भएको बुझिन्छ, तर उनको सो सपना भने पूरा भएको देखिँदैन तापनि सामन्त राजाले जस्तै फर्पिङ्ग देशको अधिपतित्व चाहिँ भगीरथ भैयाले पाएका थिए । फर्पिङको अर्को अभिलेखमा **मन्त्री महीभुज स्तस्य स्वामिभक्तो भगीरथ; अभवत् शिखरापुर्या आधिपत्यमवा प्तवान** भनी उक्त कुरा स्पष्ट रूपमा लेखिएको छ । यसरी फर्पिङ्गको आधिपत्य सोझै भगीरथ भैयाले पाएका हुँदा यसको परिणाममा फर्पिङ्गलाई भने राम्रै भयो । भगीरथ भैयाले फर्पिङ्ग देशको विकासका लागि निकै प्रयत्न गरे । यो कुरा फर्पिङका अरू अभिलेखबाट पनि थाहा पाइन्छ । यस अभिलेखबाट पनि थाहा पाइन्छ ।

मध्यकालमा कुनै पनि बस्ती देश कहलाउन गढ पर्खाल, ढोका आदि अपरिहार्य अंग हुन्थे । फर्पिङ्ग लिच्छविकालकै बस्ती हो तापनि मध्यकालको पूर्वार्द्धमा यसको अझ बढी विकास भएथ्यो । त्यसबेला यस बस्तीले मजबुत गढ को रूप पनि लियो । मध्यकालको उत्तरार्धमा आएर फर्पिङ्गको स्तर अलि गिऱ्यो । नेपाल-उपत्यकामा तीन मल्लराज्य खडा भएपछि फर्पिङ्ग ललितपुर राज्य अन्तर्गतको एक देश बन्यो, तर जीर्णोद्धार आदि राम्ररी नहुँदा फर्पिङ्ग देशका ढोका आदि जीर्ण भइसकेका थिए । चौतारा भगीरथ भैयाको आधिपत्यमा फर्पिङ्ग देश आएपछि उनले देशका सबैको ढोका जीर्णोद्धार गराए । अझ ढोकाका ढुंगा छाप्ने आदि गरेर झन् बढी शोभा बढाइएको थियो; फर्पिङ्गका प्रसिद्ध देवता शिखरनारायण स्थानमा ढुंगाको ढोका बनाइयो; त्यहाँका धाराहरूको जीर्णोद्धार गरियो । कुलोको मरम्मत गर्दा देश समूह भइ गर्ने; ढोकाहरू र बाटोहरूको मरम्मत प्रतिवर्ष गर्ने आदि बन्दोबस्त पनि उनले गरे; बाटोको सम्भारको लागि केही नियम पनि उनले लागू गरे । यसरी भगीरथ भैयाले फर्पिङ्ग देशको विकासको लागि उल्लेखनीय प्रबन्ध गरेको देखिन्छ ।







## मंगलबजार भाइदेवलको अभिलेख

मंगलबजारमा राजदरवारदेखि पश्चिमपट्टि विश्वनाथको मन्दिर छ । भगीरथ भैयाले वनाइएको हुनाले विश्वनाथको यो मन्दिर **भैयादेवल-भाइ देवल** भनी कहलाएको छ । यस मन्दिरको पूर्वपट्टिको भित्तामा यो अभिलेख कुँदिएको शिलापत्र टाँसी राखिएको छ । यहाँ ने.सं. ७९८ छ ।

संशोधन-मण्डलद्वारा अभिलेख-सँग्रह छ भागका १४-१५ पृष्ठमा यो छापिएको छ ।

१. ॐ श्री ३ विश्वेश्वराय नमः ॥ ॥ गजासुरेन्द्रदारिणः विदारिता
न्धकासुरं, सदाशिवंसदा शिवप्र-
२. दं सदारमीश्वरम्,, विभूतिभूपितं विभुं स्वभक्तभूरिभूतिदं भजे भुजङ्ग
भूषणं भवं भवाभयप्रदम् ॥
३. श्रीश्रीनिवासे यशसो निवासो भूवासवो वासरनाथतेजाः। ज्ञाता च
दाता ललितनगर्यां विभाति ने-
४. पाल नृपालसिंहः ॥ महीयसस्तस्य महीभुंजोऽभूत, भगीरथो नाम महान्
सुमन्त्री । वशीकृतानेकपरा-
५. वनीन्द्रः परावनीन्द्रैः सुसपर्प्पितेमः साधो यः सुखदः शशीव च
खले सन्तापदो वन्हिवत्, गाम्भीर्य्ये ज-
६. लधिर्य्यथा सुरतरुर्दातृत्वशक्तौ यथा । धैर्य्ये धर्म्मसुतो यथा च समरे
भीमो यथा भीषणः। सोऽयं मन्त्रिमर्णिर्व्वि-
७. माति मतिमान् देवद्विजे भक्तिमान् ॥ ध[illegible]मात्मना तेन भगीरथेन विश्वेश्वर
स्थापित एप भक्त्या । संपूज्य विप्रान दि-
८. वसे ऽनुकूले श्रीश्रीनिवासस्य दिमोः प्रसादात् । असौ भगीरथो
धीमान् प्रासाद मकरोन्मुदा । मत्या श्रीनि[illegible]-
९. नाथार्थ श्रीनिवासनृपाज्ञया ॥ प्राचीनेन भगीरथेन गिरिशन्नीता
क्षितौ जान्हवी, विश्वेशः किमु नूतनेन यव-
१०. नाद्भीतः प्रचण्डादिव । काश्याः पुण्यपुरः पुरे चं ललिते नीत
स्त्रिलोकेश्वरः; किं किं नो हि कृपाभरेण लभते श्रीश्रीनिवा-
११. सप्रमोः । नेपालाव्दे गजबिलमुनौ माधवे मासि पक्षे, कृष्णऽष्टम्यां
विधिवदमुना शैवयज्ञं विधाय । प्रासादेऽस्मिन्
१२. कनककलशः स्थापितो ब्राम्हणेभ्यो दत्वा वस्त्रं कनकरचितं भूषणं
चाश्वमुख्यान् ॥ श्रीहरिवंशेन कृताः श्लोकाः।

१३. ॥ ॥ श्रेयोऽस्तु॥ सम्वत् ७९८ माघ शुक्लषष्टम्यां तिथौ ॥ थ्व
कुन्हु श्रीमाणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजय-
१४. श्रीनिवासमल्लदेव ठाकुलस मन्त्री भगीरथ भैया भारोसन,श्री ३
विश्वेश्वरस्थापना याङ्गन स्वंतपोल देवल
१५. दयां वैशाख कृष्ण सप्तमी पर अष्टमी थ्व कुन्हु प्रतिष्ठा यास्यं
सुवर्ण कलश ध्वजावरोहन याङ्गा जुरो ॥ थ्वते धुङ्ग-
१६. काव श्री ३ विश्वेश्वरप्रीतिन गुथि दुन्ता जुरो ॥ रोव ७ तवदोल
क्षेत्र, रोव ५ बदेग्रामक्व क्षेत्र, रोव ३ X म्यालथं क्षेत्र
१७. रोव ९ कोटिजोल क्षेत्र, रोव २ बिसिंद्व क्षेत्र, रोव १० जव ३
नवक क्षेत्र, रोव ७ नतुख्वाद क्षेत्र, रोव ४ जव १ पखादोल
१८. एते क्षेत्र स एक भगीरथ भैया भारोसन भ्राता भागी भारो समोहोन
दुन्ता जुरो ॥ भाषा थ्वते बुया वर्ष प्रति वरसानन, नि-
१९. त्यपूजायात दानपत्रस चोस्यं तक्व अविछिन्न याङ्गन दयकं पूजा
कायमाल संकान्ति प्रति पञ्चामृत दयके मा-
२०. ला ॥ भूय शिवरात्रि कुन्हु पेप फलसं मोहोर शुका २ व्यालपत्र,
घेलकुड १ बेलदिवायात वो आ-
२१. रतीयात वो दयकं पूजा याय चेक्न फं २ तोचकं चाकमतं छोयके
माल ॥ भूयबुंग लगनयात कुन्हु वो इन्द्रजा-
२२. त्राया मणिग्लयात कुन्हु वो नेच धातसं चेक्न कुड ६ धाले तोचकं
चाक्मत छोयकेमाल ॥ भूय वैशाख कृष्ण
२३. अष्टमी कुन्हु होम याङ्गन देशबलि छोस्यं वोसाधन यायमाल ॥
प्रशेषन जाक्य फं २७० भूय कोटिजोलया श-
२४. स्य दंक्व वो देवलहिक ब्राम्हणयात पिंबिक्यमाल जुरो ॥ जाक्य फं
३० देवलस बंपुक जोगियात व्रर्ष प्रति
२५. पिंबियमाल जुरो ॥ थ्वतेया चिन्ता याक गोष्ठी नेकबहिरि अमात्ते
बलि माहात भ्राते सह, इन्द्रराज मा-
२६. हात भ्रात्ते सह देवीदास भारो भ्राते पुत्र सह, देवीदास भारो
भात्ते सह, थ्वते सन व्रर्ष प्रति अविछिन्न
२७. याङ्गन निस्त्रपेमाल जुरो ॥ भूय रोव ६ जुवा वरसानन गुथि
मुनेयात जुरो ॥ शुभ ॥ थ्व ज्यास चिन्ता याक श्रीराजवंश रावुत्त
नरसिंह भा जुरो ॥



## अनुवाद

श्रीश्रीश्रीविश्वेश्वरलाई नमस्कार । गजासुरेन्द्रलाई मारेका, अन्धकारसुरलाई खतम पारेका, सधैं कल्याण गर्ने, खरानी घसेका, आफ्ना भक्तहरूको धेरै कल्याण गर्ने, सर्प नै गहना भएका संसारलाई अमर दिने पार्वती सहितका सदाशिव महादेवको भजन गर्दछु ।

कीर्ति फैलिएका, तेजिला, विद्वान्, दानी, नेपालका राजाहरूमा श्रेष्ठ श्रीश्रीनिवासमल्ल राजा ललितपुरमा हुनुहुन्छ । ठूला राजा उहाँका ठूला मन्त्री भगीरथ छन् । उनले अनेक अरू राजाहरूलाई वश पारेका छन् । उनलाई अरू राजाले असल हात्ती दिएका थिए । उनी सज्जनहरूलाई चन्द्रमा जस्तै सुख दिने छन्; दुष्टहरूलाई आगो जस्तै पोल्ने छन्, उनी समुद्र जस्तै गम्भीर, दातापनमा कल्पवृक्ष जस्ता, युधिष्ठिर जस्तै धैर्य भएका लडाइँको मैदानमा भीमसेन जस्तै डरलाग्दा छन् । देव, ब्राम्हणमा भक्ति गर्ने बुद्धिमान् ती भगीरथ भैया मन्त्रीहरूमा श्रेष्ठ छन् । धर्मात्मा ती भगीरथले असल दिनमा ब्राम्हणहरूलाई पूजा गरेर श्रीश्रीनिवास प्रभुको निगाहले विश्वेश्वरको स्थापना गरे । वुद्धिमान् यी भगीरथले श्रीनिवासमल्ल राजाको आज्ञाले श्रीविश्वेश्वरको लागि भक्तिपूर्वक सुखीसाथ मन्दिर बनाउन लाए ।

उहिलेका भगीरथले महादेवकहाँवाट पृथ्वीमा गंगाजी ल्याएका थिए । अहिलेका यी भगीरथले पुण्यभूमि काशीवाट भयंकर यवन (मुसलमान-औरंगजेब) देखि उद्विग्न भएजस्ता विश्वनाथ महादेवलाई ललितपुरमा ल्याए क्यारे । श्रीश्रीनिवास प्रभुको निगाहले के पो पाइँदैन ।

ने.सं. ७९८ (वि.सं. १७३४) वैशाख कृष्ण अष्टमीको दिन यी भगीरथले विधिपूर्वक होम गरीकन यस मन्दिरमा सुनको गजुर हाल्न लाए । ब्राम्हणहरूलाई कपडा, सुनका गहना, घोडाको दान पनि गरे ।

यी पद्य श्रीहरिवंशले वनाएका हुन् ।

कल्याण होस् । ने.सं. ७९८(वि.सं.१७३४) माघ शुक्ल षष्ठीको दिन, श्रीमाणिग्लाका अधिपत्ति, महाराजाधिराज श्रीश्रीजय श्रीनिवासमल्लदेव ठाकुरका मन्त्री भगीरथ भैया भारोले श्री ३ विश्वेश्वरको स्थापना गरी तीनतले मन्दिर बनाउन लगाई वैशाख कृष्ण सप्तमी उप्रान्त अष्टमीको दिन प्रतिष्ठा गरी सुनको गजुर र ध्वजा चढाउने काम गरे । यति गरी सिद्धलाई श्री ३ विश्वेश्वरलाई प्रसन्न राख्न गुठी चढाइयो । नवदोलको खेत ७ रोपनी बदेग्रामक्वको खेत ५ रोपनी, म्यालथको खेत ३ रोपनी, कोटिजोलको खेत १० रोपनी ३ जवा नतुख्वातको खेत ७ रोपनी परक दोलको खेत ४ रोपनी १ जवा यति खेत उनै भगीरथ भैया भारोले भाइ भागी भारोसँग मिली गुठी राखिएका हुन् ।

यस गुठीको वेहोरा यस प्रकारको छ --- खेतको आयस्ताले वर्ष दिनसम्म नित्यपूजा गर्नाको लागि दानपत्रमा लेखिए अनुसार नटुट्ने गरी पूजा गर्नु पर्छ । संकान्तिपिच्छे (पूजामा) पञ्चामृत रहनु आवश्यक छ । फेरि शिवरात्रिको दिन चारै पाटीमा दुइ सुका, बेलपत्र पानसको लागि र आरतीको लागि १ कुरुवा घिउ राखिकन पूजा गर्नु । २ पाथी तेल राखी चाकमत बाल्नु । फेरि मत्स्येन्द्रनाथको लगनजात्राको दिन र इन्द्रजात्राको माणिग्लजात्राको दिन ६/६ कुरुवा तेल राखी दुवैतिर चाकमत वाल्नु । फेरि वैशाख कृष्ण अष्टमीको दिन होम गरीकन देशबलि पठाई बुसाधन गर्नु, बाँकी रहेका २७० पाथी चामल र कोटिजोलको अनाज जति देवताको हेरविचार गर्ने ब्राम्हणलाई दिनु । देवलमा बढार्ने काम गर्ने जोगी (कुसले) लाई प्रतिवर्ष ३० पाथी चामल दिनु ।

यस कुराको हेरचाह गर्ने गुठियार नक बहीका अमात्य बलि माहात र उनीका भाइ, इन्द्रराज माहात र उनका भाइ, देवीदास भारो र उनका भाइ छोराहरू, देवीदास भारो र उनका भाइ, यति

जनाले प्रतिवर्ष नटुट्ने गरी काम चलाउनु पर्छ । फेरि ६ रोपनी खेत गुठीयारहरू भेला हुनाको लागि राखियो । शुभ । यस कामको हेरचाह गर्ने श्रीराजवंशी रावत् नरसिंहमा छन् ।

व्याख्या

ललितपुरका मल्ल राजाहरूमा श्रीनिवासमल्लको उल्लेखनीय स्थान रहेको छ । उनले नेपालको तात्कालिक राजाहरूमा विशेषस्थान पाएका थिए । नेपाल-उपत्यकाका तीन मल्ल राज्यहरूमा मात्र होइन; त्यसबेलाका मकवानपुर आदि अरू राज्यमा पनि श्रीनिवासमल्लको केही प्रभाव फैलिएथ्यो । श्रीनिवासमल्लको यसरी प्रभाव बढ्नामा चौतारा भगीरथ भैयाको पनि हात थियो । यस कुराको झलक भगीरथ भैयाको यस अभिलेखबाट पाइन्छ ।

वि.सं. १७२६ मा मुगल बादशाल औरङ्गजेवले काशीका विश्वनाथको मन्दिर भत्काई दिएका थिए । नेपालीहरू पनि बराबर काशी गई विश्वनाथको दर्शनपूजन गर्ने हुनाले काशीको विश्वनाथ मन्दिर भत्काइएको खबरले यहाँका नेपाली धर्मात्माहरूमा पनि खलबली मच्चिनु स्वाभाविक थियो । यसो हुँदा एउटा टिपोटमा औरङ्गजेबले विश्वनाथको मन्दिर भत्काइएको कुरा **सम्वत् ७८९ भाद्र कृष्ण चतुर्थी श्रीविश्वेश्वर काशी अवरङ्गजेव पातसाहन कचिंगर थड दिन** (ने.सं. ७८९ ( वि.सं. १७२६) भाद्र कृष्ण चतुर्थीको दिन बादशाह औरङ्गजेवले काशीका विश्वेश्वरको मन्दिर भत्काए) भनी तत्काल टिपोट गरिएको पाइन्छ । यसबाट औरङ्गजेव काशीका विश्वनाथ भत्काएको घटनाले नेपालीहरूलाई पनि चिन्तित पारेको संकेत पाइन्छ ।

यसको आठवर्षपछि भगीरथ भैयाले ललितपुर मंगलबजारमा एउटा ठूलो मन्दिर बनाउन लगाई धूमधामसँग पूजा आदि गराई विश्वनाथको स्थापना गरे । काशीका विश्वनाथ नष्ट पारिएका हुनाले अब ललितपुरका प्रजाले साथै अरू नेपालीहरूले पनि यही विश्वनाथको दर्शनपूजन गर्न पाऊन् भन्ने अभिप्राय भगीरथ भैयाको रहेको देखिन्छ । त्यस कुराको संकेत यस अभिलेखबाट पाइन्छ । हुनपनि विश्वेश्वरको प्रतिष्ठा भगीरथ भैयाले धूमधामसँग गरेका थिए । सो प्रतिष्ठा समारोहमा बाह्र राजाहरू उपस्थित भएका थिए । भगीरथ भैयाले विश्वेश्वर मन्दिरको सामुन्ने **लामो पाटी** नामक एक सत्तल पनि बनाइएका थिए । सोही भवनका अतिथि राजाहरूलाई बस्ने प्रबन्ध गरिएको थियो । लामोपाटीमा बाह्र कोठाको निर्माण सो समारोहमा उपस्थित हुने बाह्र राजाहरूको लागि नै निर्माण गरिएको थियो भन्ने कुरा पाटनका बुढापाकाहरू अहिलेसम्म भन्दैछन् । त्यसताका नेपालमा खडा भएका विभिन्न राज्यका मित्र राजाहरूलाई विशेष समारोहमा निम्ता बोलाउने चलन चलेको थियो । मेल भएका राजाहरू यस्ता समारोहमा उपस्थित पनि हुन्थे । यस्ता उल्लेख वंशावलीमा ठाउँठाउँमा आएको पाइन्छ । यसैगरी भगीरथ भैयाले विश्वनाथको प्रतिष्ठा गर्दाखेरि पनि केही राजाहरू उपस्थित भएको देखिन्छ ।

जेहोस्; गत पाँचवर्षदेखि चौतारा भगीरथ भैयाको प्रभाव निरन्तर बढ्दै आइरहेको कुरा यस अभिलेखले देखाउँछ । राजा श्रीनिवासमल्लमा त शुरुमै भगीरथ भैयाले ठूलो असर पार्न सकेका थिए । वि.सं. १७२९ को **संवत्सर लोहो मा म र भगीरथ भैयामा केही फरक छैन** भन्ने घोषणा राजा श्रीनिवासमल्लबाट गराइएको हुनाले उक्त कुरा स्पष्ट थाहा पाइन्छ । त्यसको पाँच वर्षपछिको यस अभिलेखबाट भगीरथ भैयाको प्रभाव ललितपुर राज्यमा बाहेक बाहिरका अरू राज्यमा पनि पर्न लागेको संकेत पाइन्छ । यस अभिलेखमा भगीरथ भैयाको वर्णन जुन रूपमा गरिएको छ; त्यसबाट उक्त कुराको पुष्टि हुन्छ । उदाहरणार्थ यस पद्यलाई देखाउन सकिन्छ --

> **महीयसस्तस्य महीभुजोऽभूत, भगीरथो नाम महान् सुमन्त्री ।**
> **वशीकृतानेकपरावनीन्द्र, परावनीन्द्रैः सुसमर्पितेम,**



भगीरथ भैयाले अनेक अरू राजाहरूलाई वश पारेका छन्; उनलाई अरू राजाहरूले असल हात्ती उपहार दिएका थिए आदि यस वर्णनले तात्कालिक राजकाजमा भगीरथ भैयाको प्रभावलाई स्पष्ट रूपमा झल्काउँछ । यस कुराको पुष्टि वंशावलीबाट पनि हुन्छ । उदाहरणार्थ हात्ती उपहार दिएको कुरालाई लिऔं । वंशावलीमा ने.सं. ७९५ (वि.सं. १७३२) तिर शुभसेनले चार हात्ती पाटनका राजा श्रीनिवासमल्ललाई उपहार दिएको कुराका उल्लेख यसरी गरिएको छ ---

> **सम्वत् ७९४ (वि.सं. १७३१) आश्विन महीनामा सेन राजाहरूको तकार भई नमिली शुभसेन राजा आई मदत माग्न आउँदा ललितपत्तनका राजा प्रमुख भई भक्तपुर र तनहुँका राजा सामेल भई पूर्वतिर हरिहरसेन राजाका राज्य मोरंगमाथि चढाई गरी रावाहलेसी आदि १७ ग्राम जिती शुभसेन राजाकन दिई फर्कि आया दोश्रो साल मोरंगबाट ४ हात्ती शुभसेन राजाले श्रीनिवासमल्लकन चढाई पठाया**

यस कुराको पुष्टि तात्कालिक ठ्यासफूबाट पनि हुन्छ । उपर्युक्त घटना चौतारा भगीरथ भैयाको कार्यकालमा भएको हुनाले यसै घटनालाई लक्ष्य गरी भगीरथ भैयाले आफूलाई **परावनीन्द्रैः सुमर्पितेमः** भनी लेख्न लाएको देखिन्छ ।

विश्वेश्वर स्थापनाको लागि भगीरथ भैयाले तीनतले भव्य मन्दिर बनाउन लाएको वर्णन यस अभिलेखमा परेको छ । गजुर पनि सुनको भव्य नै चढाइएको थियो, तर भगीरथ भैयाले बनाउन लाएको त्यो भव्य मन्दिर अहिले सबूत रूपमा रहेको छैन । भूकम्पले भत्कँदा हाल सानो मन्दिर बनेको कुरा स्थानीय बूढापाकाहरू सुनाउँछन् । विश्वेश्वरको पूजाआजाको लागि जगाजमीन पनि भगीरथ भैयाले निकै नै चढाएका थिए । नित्य र नैमित्तिक पूजाको पनि बन्दोबस्त उनले गरेथे, तर अहिलेको अवस्था भने अर्कै रहेको देखा पर्छ ।

हरिवंश पण्डित श्रीनिवासमल्लको दरवारमा पनि मानप्रतिष्ठा पाएका, संस्कृत भाषामा राम्रो दखल जमेका त्यसबेलाका प्रसिद्ध पण्डित थिए । भगीरथ भैयाको यो अभिलेखको पद्य भाग उनै हरिवंशले बनाएका हुन् **श्रीहरिवंशेन कृताः श्लोकाः** भनी उक्त कुरा यस अभिलेखमा खुलाएर लेखिएको पनि छ ।

★★★

## (१३९)

# फर्पिङ्गको भगीरथ भैयाको शिलालेख

१. स्वस्ति ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७९९ कार्तिक कृष्ण नवमी मघानक्षत्र, ब्रम्हयोग सो-
२. मवार थ्व कुन्हु श्रीमाणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजय श्री-
३. वासमल्ल देव ठाकुलस मन्त्री भागीरथ भैयान श्री ३ मत् शीखरनाराय-

४. ण प्रीतिन थ्व गरुड स्थापना याङन दुन्ता जुरो ॥ थ्व गरुड सुनान जुरसनों
५. इचेल थिचेल याङ सन्ने मदो जुरो ॥ सुनानं इचेल थिचेल याङ सन्न-
६. सपञ्चमहापातक लाक जुरा ॥ थ्वया चिन्ता याक य-खालपुतव
७. दु छे अभात्ते नरहरि भारो जुरो ॥ शुभ मस्तु सर्व्वदा ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७९९ (वि.सं. १७३५) कार्तिक कृष्ण नवमी सोमवार मघानक्षत्र ब्रम्हयोग यस दिन श्रीमाणिग्लका अधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्लदेव ठाकुरका मन्त्री भगीरथ भैयाले श्री ३ शिखर नारायणलाई प्रसन्न पार्न यी गरुडको स्थापना गरिएको हो । कसैले श्री गरुडलाई थिचोमिचो गर्न हुन्न । कसैले थिचोमिचो गरे भने पञ्चमहापाप लागोस् ।

यस कुराको हेरचाह गर्ने यखालंखु तवदुछेका अमात्य नरहरिं भारो । सधैं शुभ होस् ।

**व्याख्या**

चौतारा भगीरथ भैयाले फर्पिङ्गको आधिपत्य पाएका थिए; यसो हुँदा फर्पिङ्गको विकाशको लागि उनले सक्दो प्रयास गरेका थिए भन्ने चर्चा माथिको अभिलेखमा गरिसकेको छ । ने.सं. ७९७ मा उनले फर्पिङ्ग देशका जम्मै ढोकाहरूको जीर्णोद्धार गर्दा शिखरनारायण स्थानमा विशेष ढुंगे ढोका बनाएका थिए; साथै त्यहाँको ढुंगे धारोको पनि जीर्णोद्धार गरेका थिए । त्यसै सिलसिलामा ने.सं. ७९९ मा शिखरनारायणलाई प्रसन्न पार्न गरुड स्थापना गरी यो अभिलेख कुँदाएका हुन् । यसरी फर्पिङ्गमा भगीरथ भैयालाई सम्झाउने स्मारक रूपमा यो गरुड पनि रहेको छ । यो गरुड कलाको दृष्टिले ठीकै खालको छ ।

नारायणका भक्तहरू नारायणलाई प्रसन्न पार्न गरुड चढाउने गर्दथे । यो परम्परा हामीकहाँ लिच्छविकालदेखि नै प्रचलित रहेको थियो । प्रसिद्ध लिच्छवि राजा मानदेवले चाँगुनारायण स्थानमा गरुड चढाएथे । लिच्छविकालका अर्का प्रसिद्ध विद्वान अनुपरमले हाँडिगाउँ सत्यनारायण स्थानमा चढाएको गरुड अहिलेसम्म कायमै छ । यही परम्परा मल्लकालमा पनि कायमै रह्यो । त्यसै परम्पराको अनुसरण भगीरथ भैयाले पनि गरेका हुन् । भगीरथ भैयाका अर्का अवतार कान्तिपुरका चौतारा लक्ष्मीनारायण जोशीले पनि यसै गरी गरुड स्थापना गरेका थिए ।





(१४०)

## पाटन छायबहालको क्वापाल देवताको घरको भित्तामा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमो वुधाय । नमो धर्माय । नमो संघाय
२. ॥स्वस्ति ॥ श्रेयोऽस्तु सम्वत् ७९९ ज्येष्ठ मासे शु-
३. क्लपक्षे । त्यतीयायांतिथौ । पुनर्व्वसु प्र पुस्य न-
४. क्षत्र । धुव योगे । आदित्यवासरे ॥ थ्व दिन-
५. स श्री ३ धर्म्मधातु वागीश्वर साक्येमिदे प्रभु-
६. खन थापना याङा न प्रतिष्ठा याङा दि-
७. न जुरो ॥ राजाधिराज श्रीश्रीनिवासमल्ल
८. प्रभु थाकुर तस्य पुत्र श्रीयोगनरेन्द्र राजकुमा-
९. र उभयस विजयराज्य ॥ दानपति छाय वा-
१०. हार श्रीवजाचाय श्रीधर्म्मजोति जु ॥ तस्य भा-
११. र्य्या मजुनामढिय थ्वते समोहन थ्व धर्म्म
१२. धातु साक्यसिंह -- प्रमुखन थापना या-
१३. ङन प्रतिष्ठा याङा जुरो ॥ शुभमस्तु ॥
१४. श्रीसाक्यसिंहसके -- सिका दुं-
१५. ता जुरो ॥ ....................
१६. --- परलोक ---



(१४१)

## पाटन बोडे गाउँ सडकमुनि बुद्धको सिँढीमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीधर्म्मधातवे ॥ नमस्तम्मै । मुनीन्द्राय, चैत्यश्रीधर्म्मधा-

२. तवे । प्राचीनप्रभवेशाय, लोकानां फलदायिने ॥ चैत्यामराश्री--
३ तैसुशोभित बौद्धपुर्य्या: श्रीश्रीनिवासनृपते ॥ सदयो जनेषु ॥
४. विश्वंभर: सचिवमंडल मुष्यमन्त्री जीव्यात्सदा खलजनस्य प-
५. रं प्रचण्ड: ॥ मुनीन्द्रा ऽमृताभादि बौद्धेश्वराणां, महद्धर्म्मधातो स्थित-
६. तानां चतुर्णा । अमात्येन विश्वंभरेण प्रशस्ता अपूर्व्वा नवा नि-
७. र्म्मिता नित्य पूजा: ॥ अव्दे विलग्रह मुनौ षाषाढे पूर्णिमा तिथौ ।
८. विश्वंभरेण चैत्यस्य, पूजार्थ क्षेत्रमर्पितं ॥ । अथ नेपाल भा-
९. पा: संम्वत् ७९९ आषाढ पूर्णिमांसी, थ्व ह्नंकुन्हु चकवाहारया प्रमान
१०. विश्वंभर भारोसन वंदेगाभुइँ चैत्रभराड भटारकयात नित्य पू-
११. जायात वन्दे गामको वु रोव छित्या १ दुंता जुलो थ्वति
१२. वुया वरसानन वर्षप्रति नित्य पूजायाङ व मत विय
१३. माल, के फं २० पूजा याक वंदेजु यात के फं १० देवपूजा
१४. यात जुलो; देवया दक्षिणा दको दछिदछिसं त्याख दु-
१५. तय माल, थ्वति ल्हासेतको भुइँतसा पंचमहापा-
१६. प लाक जुलो, थ्वति यातसा पापमलाक महाधर्म्म ला-
१७. क जुलो ॥ पुनभाषा थो देवपूजायाय पार रा-
१८. कम्हया राजयां प्रमानयां वितवाहा भुमाल
१९. ॥ ङ्ह्व थो देवपूजा मदयाव चोङस चाकवा-
२०. हारयां प्रमान विश्वंभर भारोसया, जोवार
२१. चाक वाहरया मुकुन्द राज भारो, चिंता या-
२२. का जुरो ॥ शुभमस्तु सर्व्वदां ॥ ० ॥

★★★

(१४२)

## पाटन बलंबुगाउँ लाछिटोल महालक्ष्मीको शिलालेख

### मूलपाठ

१. स्वतुश्री ३ सम्वत ८०१ महालछि-
२. मि, पितिन कोतवाल, तया भवानि
३. संषजु हरिहलजु व निम्ल सकि
४. पान, तुलसिराम मेसहेलन



५. तया कतरा थ्वक पंचमि कुन्हु
६. तया जुरो शुभ ॥ ॥

### अनुवाद

कल्याण होस् । ने. सं. ८०१ (वि.सं. १७३७), महालक्ष्मीलाई प्रसन्न पार्न कोतवाल (?) चढाइयो । भवानीशङ्कर, हरिहर दुइजना र ॥ तुलसीराम ॥ हेलनले कार्तिक शुक्ल पञ्चमीको दिन चढाइयो । शुभ होस् ।

★★★

(१४३)

## पाटन येबहालटोल चिबहालको शिलालेख

### मूलपाठ

१. ......................................
२. ......................................
३. श्रेयोऽस्तु ॥ सम्वत् ८०१ .......शुक्ल ........................
४. - नक्षत्र बुद्धवार थ्व कुन्हु श्रीभिक्षु काल .....................
५. - भार्य्या नारायणी ..... स्त्रीपुरुषखन थ्व चैत्र भलाऽद-
६. यकं अहोरात्र यज्ञयाङ प्रतिष्ठा याङा दिन जुरो-
७. ...... तिवु रोव स्व ३ अव स्वं ३ दुता थ्व वुया वर्षप्रति
८. - फाल्गुण शुक्लनवमी कुन्हु यज्ञ याङन बोसाधन
९. याङ गुरुभंराङ म्हं ११ पूजा याङ भोज्य विज्याचकेमा-
१०. ल भूय आश्विणी शुक्ल पूर्णमाशी कुन्हु चैत्र कु ३
११. मतं प्वाट २३ छोयकं दान पिंते शियाङ के फं छ
१२. ....... थ्वं फं ३ अजिथ्वं कु्ऽ ६ लाकु्ऽ २ म्वात कु्ऽ-
१३. - कुड १ पाल्व प्र २ वजि फं १ धलिप्वात १२ थ्वते
१४. विस्यं - यात जाक्ये फं ६ धाले लेनके माल जु-
१५. थ्वतेया चिन्तायाक यजमान मेल्व भारो ...........
१६. ..................... पुनजोति भारो राम भारो .............
१७. ...................... जुरो ...................

## अनुवाद

..... कल्याण होस् । ने.सं. ८०१ (वि.सं.१७३८) ........... शुक्ल .......... नक्षत्र बुधवार यस दिन श्रीभिक्षु काल ..... पत्नी नारायणी .... पतिपत्नीले यो चैत्यभट्टारक बनाई अहोरात्र यज्ञ गरी प्रतिष्ठा गरियो । ......... खेत ३ रोपनी ३ कर्ष चढाइयो । यस खेतको आयस्ताले प्रतिवर्ष ..... फाल्गुन शुक्ल नवमीको दिन यज्ञ गरी बुसाधन गरी एकजना गुरु भाजुलाई पूजा गरी भोज खुवाउनु । फेरि आश्विन शुक्ल पूर्णिमाको दिन तीन कुरुवा तेलले २४ वटा बत्ती बाल्नु । भुटेको चिउरा ६ पाथी ..... जाँड तीन पाथी, अजिथ्वं (जाँड विशेष) ६ कुरुवा, मासु २ कुरुवा, भटमास .... कुरुवा ..... १ कुरुवा ......... अदुवा दुइ पल, चिउरा १ पाथी, १२ कहतारा दही यति दिनु । ....... को लागि ६ पाथी चामल बाँकी राख्नु । यस कुराको हेरचाह गर्ने जजमान भेल्व भारो, .... पूर्णज्योति भारो, राम भारो छन् ।

★★★

## (१४४)

# पाटन बुङ्गमती गाउँ यताटोल मत्स्येन्द्रबहालभित्र अमरापुरका देवलको भित्ताको शिलालेख

## मूलपाठ

१. स्वस्ति ॥ द्विजायं स्वयंभूस्वभूशंभुरूपं सदा योगिनां यं च मत्स्येन्द्रनाथम्
२. जिनाएवलोकेश्वरं यं वदन्ति भजे लोकनाथंपरं बंह्मरूपम् ॥ ॥ सम्वत्
३. ८०१ मार्गशिर कृष्ण चतुर्थी, पुष्पनक्षत्र इन्द्रयोग सोमवार, थ्वकुन्हु ने-
४. पालेश्वर महाराजाधिराज श्रीश्रीश्रीनिवास मल्ल थाकुरया ज्येष्ठ पुत्री
५. श्रीरुद्रमल्ल कुम्हरजुया विवाहिता स्त्री श्रीरुद्रमती देवी थकुरा-
६. यणीन, स्वंपुत्र श्रीरुद्रेन्द्रमल्ल ठाकुर जुजुओ संमत यास्यं थ्व मण्डप
७. जीर्णोद्धार याङन प्रतिष्ठा याङ विज्याक जुरो ॥ पुन: श्री भैरवस्ते चेक-
८. न अर्त्वन चिङा जुरो ॥ पुनर्भाषा, कर्ष २ चोनिक्व, कर्ष २ वुगदे, कर्ष
९. १ कलेपाक, कर्ष २ तिचो, कर्ष १ तिचो, कर्ष २ मुतुहीर जव १
१०. ङषो, थ्वति न्हयरासि वुया वरसानन, पायात कुन्हु प्वात २४ मत छो-
११. यके मार ॥ गुणरा पादु कुन्हु मत छोयके मार प्वात १ ॥ थ्वने घातसं
१२. सह्मय विस्यं दानयाय मार ॥ थ्वति तिल संकाकुन्हु दत्त दुन्तास्य
१३. विज्याक जुवो ॥ पुनर्भाषा थ्वति हङान लेक्वन मोहर टंका १ दयदसं
१४. सेल्होयात मुनेमार ॥ परसेक लेक्वन गुथि कतकयात भक्षा भोज-
१५. न जुरो ॥ थ्वतिया चिन्ता याक, राजाराम भारो ॥ भवाणीशंकर भा-



१६. रो ॥ ख्वसिं दुवार भारो ॥ विश्वेश्वर मदीर भारो ॥ विश्वेश्वर भारो ॥
१७. ताहाक दुवार भारो ॥ थ्वति चिन्ता याक गुथि कतक जुरो ॥ स्वह्म
१८. नं लोभ, मोह, मोह यातसा श्री ३ लोकनाथया कुदृष्टि ॥ भिनक चिंता
१९. यातसा सुदृष्टि जुरो ॥ पुनर्भाषा थ्वमण्डपस न्हिर्थावयुयभार ॥
२०. कर्ष २ दुद्वलवु वयुकयात विस्यं तया जुरो ॥ ॥ शुभं ॥
२१. ॥ द्विजवर श्रीगंगाधरेण लिखितमिदं ॥

## अनुवाद

कल्याण होस् । जसलाई ब्राह्मणहरू स्वयम्भू स्वभू र शम्भु रूपका, योगीहरूमध्ये मत्स्येन्द्रनाथ भन्दछन् । बौद्धहरू जसलाई लोकेश्वर भन्दछन् । परब्रह्मस्वरूप ती लोकनाथको भजन गर्दछु । ने.सं. ८०१ (वि.सं. १७३७) मार्ग कृष्ण चतुर्थी सोमवार पुष्पनक्षत्र इन्द्रयोग, यस दिन नेपालेश्वर महाराजाधिराज श्रीश्रीश्री निवासमल्ल ठाकुरकी जेठी छोरी, श्रीरुद्रमल्ल कुम्हरकी विवाहित पत्नी श्रीरुद्रमती देवी ठकुरानीले आफ्ना छोरा श्री रुद्रेन्द्रमल्ल ठाकुरसँग सल्लाह गरी यो मण्डप जीर्णोद्धार गरी प्रतिष्ठा गरियो । फेरि श्रीभैरवलाई तैलिया ईंटले छाउने काम गरियो ।

फेरि व्यहोरा- चौनिक्व खेत २ कर्ष, बुंगदे खेत ३ कर्ष, कलेपाक खेत डेढ कर्ष, तिचो खेत २ कर्ष, तिचो खेत डेढ कर्ष, मुतुहीर खेत २ कर्ष, ङखो खेत; यति ..... खेतको आयस्ताले पायात ( खड्ग जात्रा) को दिन २४ वटा बत्ती बाल्नु पर्छ । श्रावण प्रतिपदाको दिन १ बत्ती बाल्नुपर्छ । यी दुवै पटक सह्मय दिई दान दिनु पर्छ । यति तिलकसंकान्ति (माघसंकान्ति) को दिन दत्त चढाइएको हो ।

अर्को व्यहोरा- यति काम लगाएर बाँकी रहेकोमध्येबाट एक रुपियाँ प्रतिवर्ष मरम्मत गर्नाको लागि जम्मा गर्नु पर्छ । बाँकी रहेकोले गुठियारहरूले भक्ष्य भोजन गर्नु ।

यसको चिताई गर्ने राजाराम भारो, भवानीशङ्कर भारो, ख्वसिं द्वारे भारो, विश्वेश्वर मदीर भागे, विश्वेश्वर भारो, ताहाक द्वारे । यति चिताइ गर्ने गुठियारहरू हुन् । कसैले लोभ मोह गरे भने श्री ३ लोकनाथको कुदृष्टि परोस् । राम्ररी हेरचाह गरे भने सुदृष्टि परोस् ।

अर्को व्यहोरा- यस मण्डपमा दिनका दिन बढार्नु पर्छ । दुडोल खेत दुइ कर्ष बढार्नेलाई दिन छुट्याइएको छ । शुभ । असल ब्राह्मण श्री गङ्गाधरले यो लेखेका हुन् ।

★★★

(१४५)

## पाटन थैनाटोलको गणेश मन्दिरको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्री गणेशाय ॥ गंगाधरसुतः श्रीमान गणाधीशोगणेश्वर ।
२. गंगापुत्रगणेशाय जगवक्त्राय ते नमः ॥ परशुमोडक मूलअ-
३. क्षसुत्रकरं घ्रतः । विघ्निराजस्त्रिनेत्रञ्चनमामि सिद्धिंदायकं ॥
४. श्रेयोऽस्तु सम्वत् ८०० अश्विनीमासे शुक्लपक्षे पूर्णामास्यान्ति-
५. थौ, रेवतीनक्षत्रे, व्याघाटयोगे, अंगारवासरे कन्यारासिगते, सवितरि मीन-
६. रासिगते चन्द्रमसि ॥ थ्व कुन्हु श्रीमानिगलाधिपति महाराजाधिराजः ॥
७. श्रीश्रीजयश्रीनिवास मल्ल देव प्रभु थाकुलस विजयराज्यसमये ॥ थ्व
८. थइनायत्वर श्रीश्रीश्रीगणेश्वरसके, मंगारवार पति सेवा दंयकं
९. द्वारकपाट सहितन काष्ठमय तोरण दोहोरपा जुरो ॥ थुतिया दा-
१०. नपति श्री जयश्रीमहाविहारधिवासितः धर्म्मगोप्टिया छे कभ्कित
११. जेष्ठ श्री अमुजु प्रमुखन वारसेवा दयकं दोहोरपा जुरो ॥ थुति पु-
१२. न्याय प्रभावन समस्त विघ्नहरण याङ कार्य्य सिद्धि याक थ जुरो ॥ शुभ

### अनुवाद

श्रीगणेशलाई नमस्कार ॥ महादेवका छोरा गणका अधिपति, हात्तीको मुख भएका, गङ्गाका छोरा श्रीमान् गणेशलाई नमस्कार । बञ्चरो लड्डू मूला अक्षसूत्र हातमा लिएका, तीन आँखा भएका, सिद्धि दिने विघ्नराज गणेशलाई नमस्कार गर्दछु ।

कल्याण होस् । ने.सं. ८०० (वि.सं. १७३७) आश्विन शुक्ल पूर्णिमा मङ्गलवार रेवतीनक्षत्र व्याघातयोग कन्या राशिमा सूर्य रहेमा, मीनराशिमा चन्द्रमा रहेमा, यस दिन श्रीमानिगलका अधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्ल देव प्रभु ठाकुरको विजयराज्यमा । थइनाच टोलमा मङ्गलवार-सेवा खलकले यी श्री ३ गणेशलाई ढोका, खापा सहित काठको तोरण बनाई चढाइयो । यसका दानपति श्रीजय श्रीमहाविहारमा बस्ने धर्म गोष्ठीका छेंकभी जेठा श्रीअमुजु प्रमुख मङ्गलवार सेवा खलकले बनाई चढाइएको हो ।

यस पुण्यको प्रभावले सारा विघ्नको नाश होस्; काममा सिद्धि होस् । शुभ ।

★★★



(१४६)

## वंशगोपाल मन्दिरको श्रीनिवासमल्ल ताकाको अभिलेख

कुम्भेश्वरबाट अलिकति पूर्व-दक्षिणतिर लागेपछि वंशगोपालको ठूलो ढुङ्गे मन्दिर आउँछ । त्यसको दक्षिणपट्टिको भित्तामा यो अभिलेख कुँदिएको शिलापत्र टाँसी राखिएको छ । यहाँ ने.सं. ८०० छ ।

संशोधन- मण्डलद्वारा अभिलेख-सँग्रह ६ भागका १६-१८ पृष्ठमा यो छापिएको छ ।

१. ॐ श्रीश्रीश्रीगोपिनाथाय नमः ॥ सुनादवेणुनदिनं, विशालपुष्पमालिनं, ब्रजाङ्गणाविहारि-
२. णं, धराधरेन्द्रधारिणं । महाफणीन्द्रशाधिनं, सितेतरहिशायिनं, वकासुरासुहारिणं, नमा-
३. मि, माविलासिनम् ॥ श्रीमान् सिद्धिनृसिंहमल्लनुपतिर्भातिस्म भानूपमो,यःश्रीमल्ललित भिधान-
४. नगरे स्वर्गे यथा स्वर्विभुः । पश्चाद्राज्यर्मिदं विहाय तृणबत्तीर्थानुगामी भवन् शान्तात्मा व वशीकृ-
५. तेन्द्रियगणो राजर्षितुल्योभवत् । राजर्षेस्तस्य सूनुः क्षितिपतितिलकः श्रीनिवासो निवासो, ध-
६. र्म्माणां कश्यपर्षेः स्मरपतिरिव प्रोल्लसत्सङ्गरश्रीः । दाता धाता प्रजानाममृतकरवशा भानुभानु-
७. प्रतापो रूपेणानङ्गतुल्यो गुणमणिजलधी राबते राजचन्द्रः । मध्यमा चसुता तस्य, भूपतेः की-
८. र्तिमङ्गला । जामातामरसिंहश्च तौ विभातश्च विभातश्च दम्पती ॥ अकारी देवालय एष ताभ्यां, सुवर्ण्णपा-
९. षाणमयो महीयान् । गौरप्रभः कृष्णपदाव्जभक्त्या महोच्चयो मैरुरिवाद्भुतश्रीः । प्रासादेऽ
१०. स्मिन् स्थापिता कृष्णमूर्त्तिः, भक्त्या ताभ्र्‍ईं दम्पतीभ्र्‍ईं मनोज्ञा । पार्श्वद्वन्दे गोपिका- रम्यमूर्तिः, हस्ता-
११. म्भोजद्वंदसंन्यस्तवेणुः । नेपालब्दे गगणखगंजे, ज्येष्ठमासे च कृष्णे, विष्णुप्रीत्या विषधर- तियो, द-
१२. म्पतीभ्र्‍ईं च ताभ्र्‍ईं । प्रासादेस्मिन् कनककलशाः स्थापिताः सोमबारे, कृत्वा होमं

द्विजवरगणम् पूज-
१३. यित्वा स्वशक्त्या ॥ ॥ श्रीहरिवंशेन कृतानि पद्यानि ॥ ॥ अतष्परं देशभाखा लिख्यतें ॥ श्रेयोऽस्तु ॥ स्वस्ति
१४. सम्वत् ८०० ज्येष्ठमासे कृष्णपक्षे, चतुर्थ्यान्तिथो, श्रवणा प्र धनेष्ठा नक्षत्रे, वैधृती प्र विष्कंभयोगे, आ-
१५. दित्यवासरे, थ्व कुन्हु अग्निस्थापन यांङ श्रीमत्श्रीश्रीवंशगोपालमूर्ति गोपिसहितन स्थापना यांङा-
१६. संति, पंचमी कुन्हु, श्रीब्राह्मणपनी बोदानथं सिंधतेको ब्राह्मणी पनि जोशि, आचार्य पनि बिज्या-
१७. चकं जिमस्वंपु गजुरी द्वास्थं प्रतिष्ठा याङा दिन जुरो ॥ थ्व देकायातं आय प्रत्याय दुन्ता, बिसि-
१८. ङ्ढंबु नै खण्डन रोव इलंपित्या १४ बन्देग्राम वुरो गु ९ थसिवं रोव षुत्या थ्वते वुया वर्षप्रति वर-
१९. सानन निते पूजायात पूजाको अस्ता १ स्वानयांत अस्ता १ दिवायातं घेल जं २ दं ४ तोचकं माधे ता २ धलि दं १
२०. बजि कुड १ दंछि यातनं श्रीखण्ड प्र २ थ्वते नित्यपूजायातं जुरो ॥ ज्येष्ठकृष्ण, पंचमी कुन्हु होम याङ
२१. बौसाधन यायमाल ॥ श्रावण कृष्ण, अष्टमी कुन्हु, होम याङ पवित्रारोहण यायमाल ॥ चैत्र शु-
२२. ल्क, त्रयोदशी कुन्हु होम याङ दमनारोहण यायमाल ॥ प्रशेषनं जाक्ये फं पियङा ४५ देव-
२३. पूजायात ब्राह्मणस्तं वर्षप्रतिं पिं बियमाल जुरो ॥ भूय सिन्धतं ग्व १ गुगुरु दं २ चेकन प्र २
२४. थ्वते लस लस नित्यपूजायात जुरो, थ्वते श्रीअमरसिंह कुंह्मरजुस भार्य्या श्रीकीर्त्तिमङ्गला थकुनिजु
२५. श्रीपुरुषसेन थ्व लोहों, दयकं, स एवो श्री ३ परमेश्वरमूर्त्ति भट्टारक स्थापन याङ थ्वते बु दुंता
२६. जुरो, थ्व देवल देवप्रतिष्ठा याक, थंबु बखनिह्म द्विजवर सुदर्शण उपाध्या, वखनबाहार दै-
२७. वज्ञ सिद्धिराज जोशि, थ्व देवलस कम्म याचके मालकोपनिस परिवालन जुरो, पुनर्भाखा, बोसाधननं
२८. पु. १ पवित्रारोहननं पु १ दमनारोहननं पु १ स्वप घातनं मोहोर शुकि धाले न्हव द-



२९. स्यं चौग्व जोनास तंन्यमाल, थ्वते हङन, दको सैल्होयातं लेनकेमाल, थ्वतैया चिन्ता याक गोष्ठी
३०. कोबाहार केशवराम भारो, जयकृष्ण भारो, कारण्डबहार सूर्य्यराम मुल्मी भारो,
३१. थ्वतेसन थ्व चोस्यंतको अविछिन्न यांङन लोभ मयास्यं निस्त्रपेमाल; चोस्यंतको मनिस्त्रपं लोभ या काले
३२. गोब्राह्मणादि पञ्चमहापातक लाक जुरो, लोभ मयाकाले उत्तोत्तर जुरो ॥ थ्व देवस तिसानो
३३. वस्तुजातनों, थ्व गुथि भारोपनीसनं विचाय यायमाल, मयायमदो जुरो ॥ थ्व देवपूजा याचका
३४. वलनिह्मया विप्र श्रीहरिनन्दन सर्म्मण जुरो, थ्व ब्राह्मणन काल कपत मयातोले, थ्वया परिवार याचके
३५. माल, काल कपत यांङ, कचिंगल थनसा, मालको मनिगु परसा, सेवु ब्राह्मणन पूजा याचके ये, थ्व दैवलया
३६. तलेस जुक्व प्याखन स्वय, गुथि भारोपनिसके मङस्यं चोनेमदो जुरो ॥

## अनुवाद

श्री ३ गोपीनाथलाई नमस्कार । राम्रो आवाज आउने बाँसुरी बजाउने, लामो फूलको माला लाउने, गोपिनीहरूलाई रमाउने, गोवर्धन पहाड उचाल्ने, ठूलो नागराजमा सुत्ने, कृष्ण नागमा सुत्ने, वकासुरलाई मार्ने, लक्ष्मीका पति (विष्णु) लाई नमस्कार गर्दछु ।

सूर्यजस्ता श्रीसिद्धिनरसिंह मल्लराजा स्वर्गमा इन्द्रजस्तै श्रीललितपुर शहरमा सुहाउनु भएथ्यो । पछि यो राज्यलाई घाँसजस्तै ठानी छोडीकन तीर्थ गर्नुतिर लाग्नु भयो र शान्त आत्मा भएका इन्द्रियलाई वसमा पारेका, उहाँ राजर्षिजस्तै हुनुभयो ।

कश्यप ऋषिका स्मरपति जस्तै उहाँ राजर्षिका छोरा श्रीनिवासमल्ल राजा हुनुहुन्छ । उहाँ धर्मात्मा, लडाईंको मैदानमा विजयश्री पाएका, दानी, प्रजाहरूको पालनपोषण गर्ने, चन्द्रमाकोजस्तो कीर्ति फैलिएका, तेजिला सूर्यजस्तै प्रतापी, कामदेवजस्तै राम्रा, गुणी र राज्यहरूमा श्रेष्ठ हुनुहुन्छ ।

उहाँ राजाकी माहिली छोरी कीर्तिमङ्गला जुवाइँ अमरसिंह दम्पती हुनुहुन्छ । उहाँ दुइ जनाले कृष्णको पाउ उपरको भक्तिले सुन र ढुङ्गाले बनेको सुमेरुजस्तै, ठूलो, अग्लो र सेतो देखिने गजबको शोभा भएको यो मन्दिर बनाउन लाग्नु भयो ।

उहाँ दुइ दम्पतीले यस मन्दिका, दुइतिर राम्रा गोपिनीहरू भएका दुइ हातले बाँसुरी समाएको, कृष्णको राम्रो मूर्ति भक्तिपूर्वक स्थापना गर्नु भयो ।

ने.सं. ८०० (वि.सं. १७३७) ज्येष्ठ कृष्ण पञ्चमी सोमबारका दिन, उहाँ दुइ दम्पतीले होम गरीकन, ब्राह्मणहरूलाई यथाशक्ति सम्मान गरीकन विष्णुलाई प्रसन्न पार्न यस मन्दिरमा सुनका गजूर स्थापना गर्नु भयो ।

श्री हरिवंशले यी पद्य बनाएका हुन् । यसपछि देश भाषामा देखिएको कुराको अनुवाद-

कल्याण होस् । ने.सं. ८०० (वि.सं. १७३७) ज्येष्ठ कृष्ण चतुर्थी आदित्यबार श्रवण उप्रान्त घनिष्ठानक्षत्र, वैकृति उप्रान्त विस्कुंभायोगमा अग्निस्थापना गरी गोपी सहितको श्री ३

वंशगोपालको मूर्ति स्थापना गरियो । भोलिपल्ट पञ्चमीको दिन श्री ब्राह्मणहरू र बोदानथं सिन्दूर (?) हालिएका ब्राह्मणीहरू तथा जोशी आचार्यहरूलाई पनि निमन्त्रणा गरी (बोलाई) तेह्रवटा गजुर चढाई प्रतिष्ठा गरियो ।

यस देवलाई चढाएको आयस्ता यस प्रकारको छ- विसिङ्ख्वका खेत दुवै खण्ड गरी १४$^1/_2$ रोपनी, बन्देग्रामको खेत ९ रोपनी, थसिंवंको खेत ६$^1/_2$ रोपनी । यी खेतका आयस्ताले वर्षदिनभरि नित्यपूजाको लागि एक अस्तको चामल, एक अस्तको फूल, पानसको लागि २ जं घिउ, ४ द्रम्म पर्ने मिठाइ दुइटा, एक द्रम्मको दही, एक कुरुवा चिउरा र २ प्र श्रीखण्ड राखी दिनका दिन नित्यपूजा गर्नु । ज्येष्ठ कृष्ण पञ्चमीको दिन होम गरीकन बुसाधन गर्नु । श्रावण कृष्ण अष्टमीको दिन होम गरीकन पवित्रारोहण गर्नु चैत्र शुक्ल त्रयोदशीको दिन होम गरीकन दमनारोहण गर्नु । बाँकीमध्ये ४५ पाथी चामल पुजाहारी ब्राह्मणलाई प्रतिवर्ष दिनु । फेरि सिन्दूर एक ढिक्का, दुइ दमको मुग्गुल २ प्र तेल यति कुरा महीनामहीनामा एक दिन नित्यपूजा राख्नु ।

श्रीअमरसिंह कुलरज्यूकी पत्नी श्री कीर्तिमङ्गला ठकुरिणी र उहाँका पति समेत भई यो शिलापत्रमा लेखाई उनै श्री ३ परमेश्वर मूर्ति भट्टारकको स्थापना गरी यी खेत गुठी राखिएका हुन् । यस देवलमा देवता प्रतिष्ठा गर्ने थ्वं वखनिह्मका ठूला ब्राह्मण सुदर्शन उपाध्याय, बखनबहालका ज्योतिषी सिद्धिराज जोशी । यस देवलमा गर्नु पर्ने जति कर्म यिनै परिवारले गर्नु अर्को बेहोरा-बुसाधनको दिन, पवित्रारोहण र दमणारोहणको दिन गरी तीन पटक अघि भएका मालामा शुकी मोहर थप्दै लैजानु पर्छ ।

यति कुरा गरी बाँकी रहेको देवल मरम्मतको लागि जोगाई राख्नुपर्छ । यस कुराको हेरचाह गर्ने गोष्ठी कोबहालका केशवराम भारो, जयकृष्ण भारो, कारण्ड बहारका सूर्यराम मुल्मी भारो । यति जनाले यहाँ लेखिए अनुसार कति छुटफूट नगरीकन, लोभ नगरीकन गराउनुपर्छ । लेखिएअनुसार नगरे लोभ गरे गौहत्या ब्राह्मणहत्या आदि पञ्चमहापाप लागोस् । लोभ गरेन भने उत्तरोत्तर (झन् झन् वृद्धि) होस् । यी देवताका गहनाहरू र मालताहरू पनि यी गोष्ठी भारोहरूले विचार गर्नुपर्छ, नगरी हुँदैन । यस देवताका पूजा गर्ने पुजारी ब्राह्मण
श्रीहरिनन्दन शर्मा हुन् । छलकपट नगरुन्जेल यी ब्राह्मण र यिनको परिवारद्वारा पूजा गराउनु । यस देवलमा बसी नाच हेर्नुहुन्छ; गुठियार भारोहरूसँग नसोधी यहाँ बस्न भने हुँदैन ।

**व्याख्या**

राजा श्रीनिवासमल्लकी माहिली छोरी कीर्तिमङ्गला ठकुरिणीले ने.सं. ८०० (वि.सं. १७३७) वंशगोपालको मन्दिर बनाउन लगाई यो अभिलेख कुँद्न लाएकी हुन् । कुम्भेश्वरबाट अलिकति पूर्व-दक्षिणतिर उक्त भव्य ढुङ्गे मन्दिर रहेको छ । सिद्धिनरसिंहको कृष्णमन्दिर शैलीमै यो वंशगोपालको मन्दिर पनि ढुङ्गाको बनाइएको छ । सिद्धिनरसिंह श्री कृष्णका भक्त हुँदा त्यसको असर अरू राजपरिवार र प्रजामा समेत परेको देखिएको छ । यसैले पाटनमा यसताका निकै कृष्ण मन्दिर बने । तिनमा पनि गोपी सहितका वंशीधर कृष्ण (वंशगोपाल) का मूर्तिहरू बढी स्थापित भएको पाइन्छ । यसै परम्परा अनुसार श्रीनिवासमल्लकी माहिली छोरी कीर्तिमङ्गलाले वंशगोपालको मन्दिर बनाउन लाएकी हुन् ।

यस अभिलेखमा सिद्धिनरसिंहमल्लको पनि वर्णन परेको छ । यसबेला सिद्धिनरसिंह राजर्षि भई तीर्थयात्रातिर लागिसकेको कुरा त्यस वर्णनबाट थाहा पाइन्छ । छोरा श्रीनिवासमल्ललाई राज्यभार सुम्पी पहिले पनि एक पटक सिद्धिनरसिंह तीर्थयात्राका लागि गइसकेका थिए, तर पछि फेरि नेपाल आई यहीं धर्मकर्म गरी उनी बसेका थिए । ने.सं ७९६ सम्म उनी यहीं थिए भन्ने कुरा माथि



भएको भण्डारखालको अर्को अभिलेखबाट थाहा पाइन्छ । यस पटक उनी तीर्थयात्राको बाहिर गएपछि फेरि फर्केर आएनन् ।

यस अभिलेखका पद्यभागका रचयिता पनि श्री हरिवंश पण्डित नै हुन् । श्रीहरिवंशेन कृतानि पद्यानि भनी यस अभिलेखमा पनि उनको नामोल्लेख गरिएको छ । प्रायः गरी अभिलेखमा रचयिताको नाउँ कुँदिएको पाइँदैन । विशेष प्रभावशाली पण्डितहरूले मात्र यसरी आफ्नो नामोल्लेख गराउन सकेको पाइन्छ । यसबाट हरिवंश पण्डित प्रभावशाली रहेछन् भन्ने थाहा पाइन्छ । उनका रचना प्राय प्रौढ नै रहेका छ । यसकारण मल्लकालका माथिल्लो स्तरका पण्डितहरूमा यिनको पनि गणना हुन्छ ।

कीर्तिमङ्गलाले मन्दिर बनाई गोपी सहित वंशगोपाल मात्र स्थापना गरेकी होइनन् । देवताको नित्यपूजा नैमित्तिक पूजाको लागि आवश्यक प्रबन्ध गरेको उल्लेख पनि यस अभिलेखमा परेको छ । पूजाको लागि आवश्यक आयस्ताको बन्दोबस्त यहाँ गरिएको छ । पूजा गर्ने ब्राह्मणको व्यवस्था यहाँ छ । पूजाको लागि निर्धारित ब्राह्मणले पूजा राम्ररी नगरे तिनलाई खोसी अर्को राख्ने व्यवस्था पनि यहाँ छ । देखरेखको लागि गुठियारहरू तोकिएका छन् । यसरी दान धर्म, पूजा आजा सबै गर्ने व्यवस्था यस अभिलेखमा गरिएको छ ।

श्रीनिवासमल्लकी माहिली छोरी यी कीर्तिमङ्गला पछिसम्म पनि सामाजिक कायकर्त्रीको रूपमा देखापरेकी छन् । यो अभिलेख राखेको ३१ वर्षपछि अर्थात् ने.सं. ८३१ (वि.सं.१७३८) मा आफ्नो टोलका पञ्चहरूसँग मिली सांस्कृतिक कार्यक्रमको आयोजना गरेको उल्लेख पाइन्छ । जस्तै-

> ने.सं. ८३१ चैत्र कृष्ण एकादशी सोमबार कुन्हु श्री सर्वेश्वर कुम्भेश्वर उत्पत्ति प्याखं पिदङा जुरो कोवार त्वार्या पंचसकर समूहन श्री कीर्तिमङ्गला रानी दातिह्म थकुनि ..... आदिन देशछिं त्वारछि समूह जुस्यं थ्व पाखं दयका.....
> (ने.सं. ८३१ वि.सं. १७६८) चैत्र कृष्ण एकादशी सोमबारको दिन श्री शर्वेश्वर कुम्भेश्वर उत्पत्ति नाटक बाहिर प्रदर्शन गरियो । कोबाहाल टोलका सारा पञ्चसमूहले श्रीकीर्तिमङ्गला रानी माहिली ठकुरिणीले .......... आदि देशभरिका टोलभरिका समूह मिली यो नाच नचाउने काम गरिएको हो ) ।

सर्वेश्वरोत्पत्ति नाटकको अन्त्यमा लेखिएको उपर्युक्त पुष्पिका वाक्यले पछिसम्म पनि कीर्तिमङ्गला ठकुरिणी धर्मकर्म, सामाजिक काममा संलग्न रहेकी थिइन् भन्ने सिद्ध गर्छ । यस अभिलेखमा कीर्तिमङ्गला पति (श्रीनिवासमल्लका ज्वाइँ) श्रीअमरसिंह कुम्मर हुन् भन्ने लेखिएको छ । ती कुम्मर कोवहाल टोलका रहेछन् भन्ने कुरा उक्त प्रसङ्गबाट थाहा भएको छ । मल्ल राजाहरूले आफ्ना छोरीहरूको विवाह प्रायः यस्तै कुम्मरहरूसँगै गरेको उल्लेख पाइन्छ । प्रतापमल्ल आदि मल्ल राजाहरूले भारतका राजाहरूकी छोरी विवाह गरेको उल्लेख पाइन्छ तापनि मल्ल राजाकी छोरीको विवाह बाहिरका राजखलकसँग भएको उल्लेख पाइएको छैन ।

जेहोस्, मल्लकालको इतिहासको दृष्टिले उपयोगी अभिलेखहरूमा कीर्तिमङ्गलाको
यो अभिलेख पनि पर्दछ । यस अभिलेखबाट तात्कालिक केही कुरा बुझ्न मद्दत पाइन्छ ।

★★★

# पाटन ज्याबहाल बाहिर चैत्यको शिलालेख

## मूलपाठ

१. ॐ नमो बुद्धाय नमो धर्म्माय नमो शंघायं ॥ तं बौद्धदेवमगलप्रमेंस-
२. र्व्वमूर्ति ब्रह्मेन्द्र विष्णुशशिशेखर रूपनिस्थं हेरंवसूर्य्यविधु-
३. शक्तिधर स्वरूपं चैत्रं नमामि सततं शुभदं नराणां ॥ श्रेऽस्तु-
४. सम्वत्, ८०० कार्त्तिकमासे कृष्णपक्षे पञ्चम्यायां तिथौ पोष्यनक्षत्रे
५. शुक्लयोग्य बुधबासरे, थ्व कुन्हु श्रीचाखाबाहार चाकलं यता श्री-
६. ज्याथवाहार वहिरिन्हवने, श्री ३ चैतबाहार दयकाव अहोरात्र
७. ज्ञ याङाव प्रतिष्ठा याङा दिन जुरो ॥ थ्व थायशंवश्वक फरे
८. जिर्ण्णउद्धार याङाव श्री ३ उमामहेश्वर स्थापना याङा जुरो ॥ थ्व
९. वेरस नेपारेश्वर श्रीमणिग्लाधिपति श्रीश्रीजयश्रीनिवासमल्ल दे-
१०. व प्रभु ठाकुलस विजयराज्ये वेरस प्रमान भगीरथ भैया भारो-
११. स पप्रज्यायवेल जुरो थ वेरस चोखा वाहारया चाकर येताछे-
१२. या हरिनन्दन दुबार भारोसन थुव इप्टदेवता प्रीतिन दुन्ता.
१३. बाहार रिवि वुरोव १ ज ३ ग्वारख्वात बुरो १ जव १ भूय विनतमयिन
१४ दुन्ता हंसजोल वातिका कर्प छि १ जव २ थ्वते वुया वरसानन प्रर्ष-
१५. यति कतिनि बुन्हिशि कुन्हु सख्वारन पास्य चाकंमत छोयके प्वात
१६. १६ फरेस प्वात ३ पीथिगनन्स प्वात २ फरेस दानपितेमार सति कु-
१७. न्हु होम छोयके चह्न छायमार, गुरुवाहारजु मात्राजुपनि ह्मं ५
१८. मोपस्केभार, कार्त्तिक कृष्ण पंचमि कुन्हु देवपूजा यायभार थ्वं
१९. देवपूजा या ङाखाचोकया रत्न करजु यात थ्वगुथिन वा फं
२०. २७ वियभार जुरो प्रसेखं सेल्होयात रेनके वा फं ७ भार थ्वगते-
२१. या चिंता याक ज्याथबाहार विष्णु श्रीधरमुनिजु श्रीदेवजोति-
२२. जु श्रीसुषुरिदेवजु थ्वते भाखा चोस्यं तको मयातसा पंच-
२३ महापातक लाक लोभ मयाकले उत्तोत्तरं जुरो शुभ ॥

★★★





# पाटन क्वाबहाल चोबुननिको शिलालेख

## मूलपाठ

१. श्री ३ स्वेष्टदेवतायै नमः ॥ सम्वत्सरे ८०० थ्व दन महारा-
२. धिराज श्रीश्रीश्रीजयश्रीनिवासमल्ल देव प्रभु थाकुरस वि-
३. जय राज्यस भगीरथ भैया मन्त्री बेलस यंपिचो भूननि वं-
४. कुलि गृहस स एव मन्त्रीया वुस चिंता यातकाव तयाह्म वावुचा
५. भावोन स एव श्री राजस ...... कायाव ननि- पागालखा नसि २
६. श्री ३ इष्ट देवतां प्रीतिन दुंताव श्री ३ इष्टदेवता स्थापना याङा जुसे थ्वू-
७. सा स्थापना याङा जुरो ॥ ॥ थ्वनलि ॥ सम्वत् ८०२ ज्येष्ठ शुक्ल ॥ दशम्यान्ति-
८. थौ ॥ हस्तानक्षत्र ॥ बलियानयोगे ॥ तैतिलकरणे ॥ आदित्यवासरे ॥ थ्व
९. कुन्हु ल्वहो देवल दयकाव प्रतिष्ठा याङा दिन जुरो ॥ थ्व भोग्यस्थली दे-
१०. गुरी गोष्ठिन निदान याय मार विचार याय मार जुरो ॥ शुभं ॥

थपेको भाग

११. पुनभाषा स
१२. एव धुवाषेर
१३. बु लोव २
१४. श्री ३ राज
१५. स वुया थ्व
१६. या खबोस
१७. छि वो, थ्वतेया
१८. वसानन, वर्ष-
१९. स्पति पात २०
२०. धरि कुड १ X
२१. रा दं २ चि दं २ चेकन, कुड १० जाकें खले वाड काय, थ्वया दि फं ३ थ्व, थ्वतेया र-
२२. ....... मार, अ- छे - दुगाल ........
२३. थ्वतेया चिन्तायाक विहु भावो .......
२४. मार जुलो

★★★

(१४९)

## चोभारको श्रीनिवासमल्लको पालाको अभिलेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ८०१ पौष शुद्धि १५ चोवाहार श्री ३ लो-
२. केश्वर भट्टारकास न्हवनया थेंसिमाबुस थने लेंख हयल
३. टंका दाम जधलनथं मेवु सुननं थ्व लंख धलस दिपस
४. कं काय मदो जुरो । श्रीनिवास राजा प्रमाण भगीरथिं भा-
५. यिस्के , जप यिनाप याङा ॥ हरिसिंहजु, चोवाहा-
६. र गोपिरामजु प्रमुख, नरसिंहदेवजु स्वह्म प्रमुख
७. ह्मं ७ गुथि चिन्ता यायमार ॥ ॥ न्हपाया सिजलपति जी-
८. र्ण्ण जुवस थ्व ल्हेस्यं तया ॥ सं. ८७४ चैत्रवद्धि १५ सोमवार ॥ शुभं ॥

अनुवाद

कल्याण होस् । ने.सं. ८०१ (वि.सं. १७३७) पौष शुक्ल पूर्णिमा, चोबहारका श्री ३ लोकेश्वर भट्टारको महास्नानको लागि थसिमावुको ठाउँबाट पानी ल्याउन लाउनू । पानी ल्याउनको लागि रुपियाँ दिए । यस पानी लिने कुलोमा, दीपमा कसैले पनि कालीमाटी लिनु राजा श्रीनिवासमल्ल र प्रमान भगीरथ भैयासँग यस विषयमा निवेदन गरिएको छ । हरिसिंहज्यू, चोवहारका गोपिरामज्यू र नरसिंहदेव आदि तीनजना प्रमुख भई सातजनाले गुठीको हेरचाह गर्नु पर्छ ।

पहिलेको ताम्रपत्र जीर्ण भएको हुँदा अर्को ताम्रपत्रमा सारी यो लेखिराखेको हो । ने.सं. ८७४ (वि.सं. १८११) चैत्र कृष्ण अमावास्या सोमवार । शुभम् ।

★★★

(१५०)

## भीमसेन मन्दिरको श्रीनिवासमल्लको अभिलेख

ललितपुर मङ्गलवजारमा भीमसेनको प्रसिद्ध मन्दिर छ । त्यस मन्दिरको ढोकाको दायाँपट्टि कुनामा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ ।
यहाँ ने.सं. ८०१ छ ।

संशोधन-मण्डलद्वारा अभिलेख-सँग्रह, ६ भागका १८-१९ पृष्ठमा यो छापिएको छ ।



### मूलपाठ

१. ॐ श्री ३ भीमसेनाय नमः ॥ ॥ दोर्दण्डेन बलेन येन निहतो दुःशारदुःशासनो युद्धे भीषणया जघान गदया दुर्य्योधनं योऽधम-
२. म् । यो हन्ति स्म निशि प्रचण्डवलिनं कामातुरं कीचकं, शत्रूणां मवदं भयङकरनिमं तं भीमसेनं भजे । नानानृत्यकलाविलासर-
३. सिकः कन्दर्प्पवत्सुन्दरो, वीणातालमृदङ्गगीतनिपुणः सङ्गीतविद्यानिधिः । भास्वद्मानुनिभः प्रतापनिहतप्रोद्यत्प्रतीपद्यु-
४ तिः, नेपाले ललितापुरे विहरति श्रीश्रीनिवासो नृपः ॥ यस्तात्मजो योगनरेन्द्रमल्लो नाकाधिनाथस्य यथा जयन्तः । प्रभात-
५. भानुप्रतिमप्रतापो विराजते मारसमा नरूपः ॥ स श्रीनिवासो नृपवासरेशो भगीरथस्यानुमतं गृहीत्वा, अकारयद् भीषण-
६. भीमसेनप्रासादमेनं नयनाभिरामं ॥ नेपालाव्दे शशधरनमःकुन्जरे भासिभार्ग्गे, शुक्ले पक्षे गुहतिथियुते वासरे चन्द्रपु-
७. त्रै प्रासादेऽस्मिन् कनककलशौ स्थापितौ भीमभक्त्या । होमं कृत्वाऽनुपमयशसा श्रीनिवासेन राज्ञा ॥ ॥ हरिवंशेन कृताः
८ श्लोकाः ॥ अतःपरं नेपालभापया लिख्यते ॥ ॥ स्वस्ति ॥ श्रीमणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्ल
९. देव प्रभु ठाकुलसन स्व नगरं छगुल नुयाव नेपालेश्वर जुयाव विजयराज्य याङबिज्याक, थथिं अवसरस श्री ३ भीमसे-
१०. न भट्टारक कास न्हपा चपाड याङ चोङस स एव ठाकुलसन मन्त्री भगीरथ भैया भारोस व संवत याङन आज्ञा प्रसन्न जु-
११ स्यं, थ्व देवल दयकबिज्याक जुरो ॥ ॥ श्रेऽयोस्तु ॥ सम्वत् ८०१ मार्ग्गशिल शुक्ल ॥ पप्ट्यान्तिथौ श्रवण प्रधनेप्ठानक्षेत्रे
१२. धुव प्र. व्याघाटयोगे ॥ बुधवासरे ॥ थ्व कुन्हु थ्व देवल प्रतिप्ठा यास्यं सुवर्णाकलश ध्वजावरोहन याङा दिन जुरो ॥ भापा
१३. थ्व देवलस ल्होनेमालकाले मेवन ल्होङ मदतसा व्यसतपनिस्य चिन्ता याङन देवया वस्तुन ल्होनेमाल जुरो ॥ थ्व दे-
१४. वल ज्यास चिन्ता याक पात्रवंश रावुत तवभ्याल भाकतु कोथ्य तवभ्याल पात्रवंश रावुत्त रत्नराज भारो भ्रात्ते स-
१५. ह दथुलाछे पात्रवश रावुत काशिराज भारो दधवाहार पात्रवंश रावुत्त मयासिंह भारो, नकबाहर वि-
१६. श्वसिंह भारो ॥ व्यसत मनिग्ल कोविछे मनोहरिसिंह भारो भ्रात्ते भागसिंह भारो, मनिकराज भारो भ्रात्ते

१७. विष्णुनारायण भारो कनेष्ठ भ्रात्ते शिवनारायण भारो, मोतिराज भारो, चाखाबाहार बैकुण्डराम भारो
१८. भ्रात्ते विश्वसिंह भारो कनेष्ठ भ्रात्ते नरसिंह भारो थ्वतेस्यन चिन्ता याचकं थ्व देवल दयक बिज्याक जुरो ॥ शुभ ।

## अनुवाद

श्री ३ भीमसेनलाई नमस्कार । जसले आफ्नो बाहुबलले दुष्ट दुशासनलाई मारे; लडाइँमा गदाले अधम दुर्योधनलाई मारे; जसले निकै बलिया गुण्डो कीचकलाई राती मारेथे; शत्रुहरूलाई तर्साउने भयङ्कर ती भीमसेनको भजन गर्दछु ।

अनेकथरी नाचका कलामा ठूलो चाख राख्ने, कामदेवजस्ता राम्रा, वीणा, ताल, मृदङ्ग र गीतमा सिपालु, सङ्गीत विद्याका खानि भएका, तेजिला सूर्यजस्ता, आफ्नो प्रतापले शत्रुको प्रतापलाई खतम पारेका श्रीश्रीनिवासमल्ल राजा नेपाल, ललितपुरमा आनन्दसँग रहनुहुन्छ ।

इन्द्रका छोरा जयन्त जस्तै उहाँका छोरा योगनरेन्द्रमल्ल हुनुहुन्छ । उहाँ उदाउन लाएका सूर्यजस्तै प्रतापी, कामदेवजस्ता राम्रा हुनुहुन्छ ।

राजाहरूमा श्रेष्ठ उहाँ श्रीनिवासमल्लले भगीरथ भैयासँग सरसल्लाह गरी भीमसेनको यो ठूलो राम्रो मन्दिर बनाउन लाउनु भयो ।

ने. सं. ८०१ (वि.सं. १७३८) मार्ग शुक्ल षष्ठी बुधवारको दिन बेजोड कीर्ति भएका श्रीनिवासमल्ल राजाले भीमसेनमा भक्ति राखी होमगरीकन यस मन्दिरमा सुनका दुइटा गजुर राख्न लाउनु भयो ।

हरिवंशले यी पद्य बनाएका हुन् । यसपछि नेवारीमा लेखिएको कुराको अनुवाद दिइन्छ ।

**व्याख्या**

नेपालमा भीमसेनको पूजा, आराधना व्यापारमा वृद्धि गराउने-देवताका रूपमा गरिन्छ । यसो हुँदा नेपालमा अरू वर्गभन्दा व्यापारी वर्गले भीमसेनको पूजा बढी गर्छन् । व्यापारीहरू आफ्नो व्यापार सपार्न पऱ्यो भने भीमसेन जगाउनु पऱ्यो भनी भीमसेनको उपासना गर्दछन् । उहिले भोट आदि दुर्गम क्षेत्रमा गई व्यापार गर्न जाँदा सुरक्षाको लागि बलको आवश्यकता परेको हुनाले बलवान् भनी प्रसिद्ध भीमसेनको उपासना गर्ने चलन व्यापारी वर्गमा बढी चलेको अनुमान हुन्छ । यसरी वैदेशिक व्यापारसँग बढी सम्बन्ध भएको देवता भए तापनि भीमसेन आर्थिक समृद्धि ल्याउने, शत्रुनिवारण गर्ने देवताका रूपमा पनि पूजिएका छन् । यसो हुनाले मल्लकालमा हरेक राज्यमा भनेजस्तै भीमसेन स्थापना गरिएका थिए ।

ललितपुरमा पनि श्रीनिवासमल्ल भन्दा अघि नै राजदरबार अगाडि भीमसेनको भव्यमूर्ति स्थापना भइसकेको थियो, तर भीमसेनको मन्दिर भने त्यति भव्य हुन सकेको थिएन । चपाडरूपको एक किसिमको पाटीमा भीमसेनको स्थापना भइरहेको थियो । श्रीनिवासको पालामा ललितपुरको राजनीतिक दृष्टिको साथ आर्थिक दृष्टिले पनि समृद्ध रहेको बेलामा ने.सं. ८०१ ( वि.सं.१७३७) मा भीमसेनको लागि भव्य मन्दिर बनाई यो अभिलेख राख्न लाइएको हो ।

यसताका श्रीनिवासमल्लको प्रभाव बढेको थियो ललितपुर बाहेक कान्तिपुर र भक्तपुरमा समेत केही अंशमा उनको प्रभाव फैलिएको थियो; यसरी नेपाल- उपत्यकाका तीनै राज्यमा प्रभाव



फैलिएपछि माणिग्लाधिपति श्रीनिवासमल्लको नेपालेश्वर हुने सपना यसताका केही अंशमा साकार हुन थालेथ्यो भन्ने कुरा माथि लेखिसकेको छ । यसकारण यहाँ फेरि दोहऱ्याउनु आवश्यक छैन । भीमसेन मन्दिर बनाई राख्न लाएको यस अभिलेखमा उपर्युक्त कुरा संक्षेपमा भए पनि खुलाएर लेखिएको छ । श्रीमाणिग्लाधिपति महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्ल देव प्रभु ठाकुलसन स्व नगरं छगुल जुयाव नेपालेश्वर जुयाव विजय राज्य याङ बिज्याक, थथिं अवसास .... थ्व देवल दयक बिज्याक जुरो भनी कुँदाइएको यस वाक्यले तात्कालिक राजनीतिक अवस्थामा निकै प्रकाश पार्छ ।

यसताका श्रीनिवासमल्लका धेरैजसो अभिलेखमा चौतारा भगीरथ भैयाको उल्लेख सम्मान साथ गरिएको पाइन्छ । यस अभिलेखमा पनि मन्त्री भगीरथ भैया भारोसव सम्वत् याङन .... थव देवल दयक बिज्याक जुरो भनी लेखिएको छ । संस्कृत भागमा पनि
स श्रीनिवासो नृपवासरेशो भगीरथस्यानुमतं गृहीत्वा, अमारय भीषणभीमसेनप्रसादमेनं नयनाभिराम भनिएको छ । राजाको अनुमति लिई मन्त्रीले यस्तो काम गरे भन्ने उल्लेख आएको भए सामान्य हुन्थ्यो, यहाँ भने मन्त्री भगीरथ भैयाको अनुमति लिई राजाले भीमसेनको मन्दिर बनाए भनिएको छ । यसै गरी श्रीनिवासमल्लताकाका अरू अभिलेखमा पनि मन्त्रीको अनुमति लिई यस्तो गरिएको भनेर नै लेखिएको पाइन्छ । यसबाट भगीरथ भैयाले श्रीनिवासमल्ल उपर कसरी प्रभाव पारेका रहेछन् भन्ने चाखलाग्दो संकेत पाइन्छ ।

तीनै राज्यकामल्लहरू सङ्गीत प्रेमी थिए । भक्तपुरका जगज्ज्योतिमल्ल जगतप्रकाशमल्लहरूले रचेका गीत, गीतसम्बन्धी ग्रन्थहरू अनेक पाइएका छन् । कान्तिपुरका प्रतापमल्लले आफ्ना प्रशस्तिमा समेत सङ्गीतार्णवपारग भनी लेखेका छन् । उनी स्वयं कुशल नर्तक, वाद्यवादक पनि थिए । ललितपुरमा सिद्धिनरसिंह पनि सङ्गीत प्रेमी थिए । उनले विशेष गरेर धार्मिक गीतहरू रचेर प्रख्याति पाएका थिए । उनीहरूको तुलनामा श्रीनिवासमल्लको सङ्गीतप्रेम अलि कम थियो कि भन्ने भानपर्छ, किनभने उनका अभिलेखमा यस कुराको उल्लेख अलि कम पाइन्छ । तर श्रीनिवासमल्ल पनि सङ्गीत प्रेममा पछि भने परेका थिएनन् भन्ने कुरा यस अभिलेखले देखाउँछ । यस अभिलेखमा नानानृत्यकलाविलासरसिकः .... वीणा ताल मृदङ्ग गीतनिपुणः सङ्गीत विद्यानिधिः भनेर स्फूर्तिसाथ लेखिएको छ । यसबाट श्रीनिवासमल्ल पनि तौर्यत्तिक अर्थात् नृत्य, गीत वाद्य तीनै विद्या निपुण देखापरेका छन् । पछि योगनरेन्द्रमल्लले बाबु श्रीनिवासमल्ललाई पनि उछिनेको देखिन्छ । उनले त आफ्नो प्रशस्तिमा र टकमा समेत सँगीतार्णवपारगं भनी कुँदाएका थिए ।

यस अभिलेखका पद्यभागका रचयिता उनै हरिवंश पण्डित हुन् । श्रीनिवासमल्लका पालाका अरू अभिलेखका पनि पद्यभाग हरिवंश पण्डितले नै रचेका थिए । संस्कृत भाषामा हरिवंशको राम्ररी दखल भएको देखिएको छ । उनका अभिलेखमा कुँदिएका यी कृति बाहेक अरू पनि केही कृति पाइएका छन् ।

★★★

(१५१)

## थानकोट आदिनारायणको शिलापत्र

### मूलपाठ

१. श्रेयोस्तु सम्वत् ८०१ मार्ग्गमासे कृष्णपक्षे (च)
२. तुर्द्धस्यान्तिथौ आदितबार कुन्हु ॥ थ्वत नामन
३. रोङ्लान प्रतिमा दियकं श्री विष्णु प्रितिन दुन्त
४. जुरो दानपति देसाहिति उत्र श्री ह्मेमिराज
५. भारो तसे भार्ज्या सुमति दितिय भार्ज्या रामवति
६. थुतिसन दयका दोहरपा जुरो

अनुवाद

कल्याण होस् । ने.सं. ८०१ (वि.सं. १७३७) मार्ग कृष्ण चतुर्दशी आदित्यबारको दिन आफ्नो नामले ढुङ्गाको प्रतिमा बनाई श्रीविष्णुलाई प्रसन्न पार्न चढाइयो । दानपति देशाहितिदेखि उत्तरतिरका श्रीहमेमिराज भारो, उनकी पत्नी सुमति अर्की पत्नी रामवती, यति जनाले बनाई चढाइएको हो ।

★★★

(१५२)

## पाटन येंपिबहाल अशोक चिवहालको शिलालेख

### मूलपाठ

१. २ सम्वत् ८०१ माघ शुक्ल दशमि कुन्हु श्रीयेपि .... सिंह दोहोरपा ॥
२. ...... श्रीधर्मधातुसके बुद्ध श्रीभवान जुया श्रीयपि बिहारि यंथा चोकया ॥
३. श्रीकर्म्मपानि भिक्षुया सिषे, मेवराम, हाकुदेव, विन्हुसिङ ॥



अनुवाद

ने.सं. ८०१ (वि.सं. १७३७) माघ शुक्ल दशमीको दिन श्रीयेंपिबहालका श्रीधर्मधातु बुद्ध भगवानलाई सिंह चढाइयो । चढाउनेहरू श्री यपिबिहारी यथांचोकका श्रीकर्मपाणि भिक्षुका शिष्य मेवराम हाकुदेव र विष्णुसिंह हुन् ।

★★★

(१५३)

## पाटन टुँडिखेल यछेटोल महालक्ष्मीको शिलालेख

### मूलपाठ

१. २ सम्वत् ८०१ गोविदंलालजुनं द-
२. यका जुरो ॥

अनुवाद

ने.सं. ८०१ (वि.सं. १७३८), गोविन्दलालजुले यो बनाएका हुन् ।

★★★

(१५४)

## पाटन न्हागलाबहाल न्हायकंबहिलको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय नमो धर्माय
२. पांकक्षमक्वशंकरनाप दं
३. समन्तभद्रसास्तारं शाक्यसिहनमा-
४. मिहं श्रेयोस्तु सम्वत् ८०१ वैसाषमास्ये शु-

५. कपक्ष त्रियोदस्यायान्तिथौ, हस्तन-
६. क्षेत्रैः वजयोग बुधवासरे, थ्व कुन्हु श्री-
७. साक्यमुनि .... सक लुयामुख तर्तोकपु-
८. संपूर्ण्ण याङा दिन जुरो पदानप्रति भिक्षु श्री
९. देवजोतिः तस्य भाज्या दोवी थुति निह्म
१०. त्रिपुरिसमधार याङाव थ्व देव पुन द-
११. यका जुरो करेशाच्वन यज्ञ याङा
१२. जुरोः थ्वया पुन्नेन आयुवृधिरस्तुः
१३. धनवृधिरस्तुः सदामंगर कल्यान
१४. भवतु ॥ सव्व जगेदा, शुभ ॥
१५. थ्व रह्म तसा पञ्चमहापात-
१६. कया पाप जुरो ॥ ० ॥ ३ मोहो तं

★★★

(१५५)

## पाटन क्वाबहालटोल चोवुननीको शिलापत्र

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ८०१ भाद्रपद शुक्ल ॥ त्रयो-
२. दश्यान्तिथौ ॥ श्रवणनक्षत्रे ॥ शोभनयोगे ॥
३. जथाकर्ण्णमुहुत्तके ॥ बुधवासर ॥ सिंहरासि-
४. गते सवितरि, मकराशिगते चन्द्रमसि ॥ अ-
५. स्मिन्दिने दानपति श्री चंकि बिहारि लिविछे व-
६. न्तागृह न्हवणसिंह भारोस्न पुत्र दिवंगत माल-
७. सिंह यात नाम्न थ्व गाडयितिल यन्तास फले द्व-
८. यकं श्री ३ उमामहेश्वर प्रतिमा द्वयका जुरो । दु-
९. ने छेदिजुक्व अग्निसारा जुरो ॥ तलचोत जुक्व
१०. दानपतिया जुरो ॥ थ्व छेदिफले दवसम्प्रदत्तो
११. भवति ॥ स्वदत्त परदत्तोम्वा हरे शुरविप्रयो, ष-
१२. ष्ठिवर्षसहस्याणि बृस्थाया जायते किमि ॥ थ्वते-



१३. या चिन्ता याक्व गोष्ठि दानपति न्हवणसिं भारो
१४. भाता माधवराज भारो, बिहारि भिक्षु श्रीचिन्तामु-
१५. निजु, कानन्दबाहार एनद्रराज मुल्मी भारो, केश-
१६. वराज मुल्मी भारोः थ्वतेसन चिन्ता याङ यञ्जमा-
१७. ल ॥ थ्व फले देव अग्नि सारा सुनानो सेनकरसा
१८. पञ्चमहापातक शक जुरो ॥ भिनकर उत्तोत्तर ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ८०१ (वि.सं. १७३८) भाद्र शुक्ल त्रयोदशी बुधवार श्रवण नक्षत्र शोभन योग पर्नु पर्ने करण मुहूर्त परेको बेलामा, सिंहराशिमा सूर्य, मकर राशिमा चन्द्रमा रहेको बेलामा यस दिन दानपति श्रीचंविबिहारी लिविछें वन्तागृहका न्हवणसिंह भारोले दिवङ्गत छोरा मालसिंहको नामले गाडयितिलयन्तामा पाटी बनाई श्री ३ उमामहेश्वरको मूर्ति स्थापना गरियो । भित्रको छेडी भाग जति अग्निशाला हो । तलचोत जति दानपतिको हो । यो छेडी र पाटी देवतालाई चढाइयो । आफूले अथवा अरूले देवता र ब्राम्मणलाई दान दिएको जसले हर्ला, त्यो साठी हजार वर्षसम्म विष्टाको कीरा भएर रहला ।

यसको चिताई गर्ने गुठियार- दानपति न्हवणसिं भारो, भाइ माधवराज भारो, विहारीका भिक्षु श्रीचिन्तामुनिजु, कानन्दवहालका एन्द्रराज भारो, केशवराज मुल्मी भारो, यति जनाले हेरचाह गर्दै लानुपर्छ । यो पाटी, देवता, अग्निशाला कसैले बिगारे भने पञ्चमहापाप लागोस् । सपारे भने उत्तरोत्तर शुभ होस् ।

★★★

(१५६)

## पाटन न्हुफलेटोल उकुबहालभित्र ढुङ्गाको देवलमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमो लोकनाथाय ॥ बुद्धन्नमामि सततं वरपद्मपाणिं मैत्र्यात्मजं गगनगंजसमन्तभद्रं । यक्षाधिपो
२. परहितोद्धृत मंजुघोषं विष्कंभिनं क्षितिगर्भखगर्भ, प्रणमामि भक्त्या ॥ ॥ अव्दे नेपालिके
३. प्राप्ते हिमांशुविन्दुदिग्गजे । मासि कार्तिकिके कृष्णे, तिथौ युग्मे च सम्मते ॥ नक्षत्रे

४. ह्रिणीयाते, शिवयोगे कवौ दिने । ध्वजारोहन प्रासादे, दान नाम्ना प्रकारित
५. पत्नी सरस्वती तस्य पुत्र दानज्योतिर्युतः । पुत्री सर्व्वाणी देवी च, यस्य दानस्य तैर्युतः ॥
६. श्रेयोऽस्तु सम्वत् ८०१ कार्तिक कृष्ण द्वितीया, रोहिणीनक्षत्रे शिवयोग शुक्र-
७. वारे थ्व कुन्हु विधिपूर्व्वक यज्ञ याङन सर्वसंघभोजन याचकं ध्वजावरोहण प्रतिष्ठा याङा
८. दिन जुरो ॥ जजमान श्री दानपति ........ लक्ष्मी पुत्र दानजोति नाम्न
९. पुत्री सर्व्वाणी नाम्ना थ्वते प्रमुखनं ......... प्रतिष्ठा याङा जुरो शुभ-

### अनुवाद

लोकनाथलाई नमस्कार । बुद्धलाई सधैं नमस्कार गर्छु । पद्मपाणि मैत्रेय ....समन्तभद्र, यक्षाधिप, अर्काको हितमा लागेका मञ्जुश्री विष्कम्भी क्षितिजर्भ, स्वगर्भहरू भक्तिपूर्वक प्रणाम गर्दछु।

ने.सं. ८०१ (वि.सं. १७३७) कार्तिक कृष्ण द्वितीया शुक्रबार रोहिणीनक्षत्र शिवयोगको दान भन्नेले पत्नी सरस्वती छोरा दानज्योति, छोरी शर्वाणीका साथ मन्दिरमा ध्वजा चढाउने काम गरे ।

कल्याण होस् । ने.सं. ८०१ (वि.सं. १७३७) कार्तिक कृष्ण द्वितीया शुक्रबार रोहिणीनक्षत्र शिवयोगको दिन विधिपूर्वक यज्ञ गरी सर्व्वसङ्घ भोजन गराई ध्वजारोहण गरी प्रतिष्ठा गरियो । जजमान श्रीदानपति ..... लक्ष्मी, छोरा दानज्योति, छोरी शर्वाणी यति प्रमुख भई ................... प्रतिष्ठा गरिएको हो ।

शुभ होस् ।

★★★

(१५७)

## पाटन चापागाउँ वषुटोल नारायणका देवलमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमो नारायण ॥ नारायणं नमकृत्य नरंचैव नरोत्तमम् ॥
२. देवी सरस्वती चैव ततो जय मुदीरयेत् ॥ श्रेयोऽस्तु ॥ सम्वत ।
३. ८०१ कार्तिकमासे कृष्णपक्षे ॥ द्वादश्यान्तिथौ ॥ हस्तानक्षत्रे
४. प्रीति प्र आयुष्मानयोगे ॥ यथाकरणमुहूत्ते ॥ आदित्य-
५. वासरे ॥ विछराशिगत सवितरि ॥ कन्याराशिगते चन्द्रमासि
६. अस्मिन्दिने ओवादेश सिकोछे रत्नराम भारोस स्वभायया



७. चंपावती मयी थ्व नेह्म स्त्रीपुरुषंन ॥ थ्वछे न्हव लोहोन
८. देवल दयकं, श्रीश्रीश्री लक्ष्मीनारायण भट्टारक थ्वया ज-
९. वस श्री ३ हरिशंकरदेव, खवस, श्री ३ भवाणीशङ्करदेव
१०. थ्वते देव स्थापना याङन, अहोरात्र यज्ञ याङन प्रतिष्ठा
११. याङा दिन जुरो ॥ एते देवताः प्रितये, वंवुक्षेत्र द्वादश रोप-
१२. निकं रोव इलंमनसि १२ आरं विगुथिन क्यंङ थामस् जुरो ।
१३. स्वदत्ताम्परदत्ताम्वा यो हरेत्सुरविप्रयोः । षष्ठी वर्ष सहस्रा-
१४. णि विष्टायां जायते क्रिमि ॥ भाषा थ्वते वुया वर्षप्रति वरशानं
१५. न नित्यपूजा यायमाल ॥ चंगुलायातओ इन्द्रयातओ म-
१६. त छोयकं दान वियमाल जुरो ॥ मण्डलयातन मत छोयके
१७. माल ॥ तुलसी पेयमाल ॥ कार्तिक लछिं मत छोयके मार
१८. धूनके वेलस स्वंन्हु हरिमंदिरतय, पुण्णिसी कुन्हु घेलदि-
१९. वा छोयके माल ॥ संक्रान्तिप्रतिं दक्षिणा दम छि १ तय माल
२०. ॥ गुणिला पादोन श्री ३ वुंगदेवस्त घेलदिवा छोयके ॥ संका-
२१. न्ति प्रति घेर दिवा छोयके माल ॥ श्री ३ वंतावासा गण्डल अष्टिन
२२. घेल दिवा छोयके माल । इन्द्रयातस श्री ३ थानगणेशया-
२३. त घेल दिवा छोयके ॥ इन्द्रयातन देवलस फल फुर वोयमाल ॥

### अनुवाद

नारायणलाई नमस्कार । नारायणलाई नरोत्तम नरलाई नमस्कार गरेर अनि देवी सरस्वतीलाई नमस्कार नमस्कार गरेर जय पुकार्नु ।

कल्याण होस् । ने.सं. ८०१ (वि.सं. १७३७) कार्तिक कृष्ण द्वादशी आदित्यबार हस्तनक्षत्र प्रीति उप्रान्त आयुष्मान् योग, पर्नुपर्ने कारणमुहूर्त परेको बेलामा, वृश्चिकराशिमा सूर्य, कन्याराशिमा चन्द्रमा रहेको बेलामा, यस दिन ओवा(चापागाउँ) देश, सिकोछेंका रत्नराम भारो, आफ्नी पत्नी चंपावती मयी, यी दुइ पतिपत्नीले आफ्नो घरको सामुन्ने ढुङ्गेदेवल बनाई श्रीश्रीश्रीलक्ष्मीनारायण भट्टारक, यिनका दायाँपट्टि श्री ३ हरिशङ्करदेव, बायाँपट्टि श्रीभवानीशङ्करदेव, यी देवता स्थापना गरी अहोरात्र यज्ञ गरी प्रतिष्ठा गरियो ।

यी देवताहरूलाई प्रसन्न पार्न वंबु खेत बाह्र रोपनी..... गुठी चढाइयो । आफूले वा अरूले देवता र ब्राह्मणलाई दान दिएको कसैले हर्‍यो भने त्यो साठीहजार वर्षसम्म नरकमा पर्ला ।

बेहोरा- यी खेतको आयस्ताले प्रतिवर्ष नित्यपूजा गर्नुपर्छ । चंगुलायात्रा र इन्द्रयात्राको बेलामा बत्ती बाल्नुपर्छ । मण्डलयात्राको बेलामा पनि बत्ती बाल्नुपर्छ । तुलसी रोप्नुपर्छ ।
कार्तिक महीनाभरि बत्ती बाल्नुपर्छ । पूर्ण गर्ने बेलामा तीन दिन हरिमन्दिर राख्नु । पूर्णिमाको दिन घिउको बत्ती बाल्नु पर्छ । प्रत्येक संकान्तिको दिन एक द्रम दक्षिणा राख्नु पर्छ । श्रावण प्रतिपदाको दिन पनि श्री ३ बुंगदेवतालाई घिउको बत्ती बाल्नू । प्रत्येक संकात्तिको दिन घिउको बत्ती बाल्नु

पर्छ। श्री ३ वंतावासामा मण्डल अष्टमीको दिन घिउको बत्ती बाल्नू। इन्द्रजात्राको बेलामा, श्री ३ स्थान गणेशलाई घिउको बत्ती बाल्नू। इंन्द्रजात्राको बेला देवलमा फलफूलको प्रदर्शन गर्नुपर्छ।

★★★

(१५८)

## पाटन ज्याठा बहालभित्र खम्बाको अभिलेख

### मूलपाठ

१. .......... सम्वत् ..........
२. ..........स्वस्ति दिवस ...........
३. ........... कुन्हु पुनिस ............
४. सुवर्ण्ण ध्यार्म्मधा-
५. तु गजुरि छाया दिन जुरो
६. सम्वत् ८०१ मागशिर शु-
७. क्ल, नौमि कुन्हु नरराजन
८. प्रतिमा दयक दोहोरपा
९. जुरो॥ शुभ॥

### अनुवाद

...... पूर्णिमाको दिन ... धर्मधातुलाई सुनको गजुर चढाइयो। ने.सं. ८०१ (वि.सं. १७३७) मार्ग शुक्ल नवमीको दिन नरराजले प्रतिमा बनाई चढाए। शुभ होस्।

★★★



(१५९)

## पाटन वडेगाउँ ढोकासिटोलको पाटीको अभिलेख

### मूलपाठ

१. श्री उमामहेश्वराभ्र्दं नमः॥ उमामहेश्वरौ वंदे
२. पितरौ जगतामपि॥ आधारौ सर्व्वलोकानां त्रिकोकीलोक-
३. पूजितौ॥ विश्वंभरस्य भार्य्यासौ महालक्ष्मीर्महामतिः अ-
४. करोद्धर्म्मलाभाय जनविश्राममण्डपं॥ ॥ सम्वत् ८०१ मार्गशिर
५. शुक्ल थ्व कुन्हु चाखाबाहारया प्रमान विश्वंभर भारोन मामया ना-
६. मन वंदेग्रामस पुषुरि दयकं स एव विश्वंभर भारोया भार्य्या म-
७. हालक्ष्मी मयिन स्वकलवलफले दयकं उमामहेश्वर दयंक प्रति-
८. ष्ठा याङा जुलो॥ भाषा वंदेग्राम कोवु रोव २ थ्वया वरसानं व-
९. र्षप्रति वंदेग्रामया यात कुन्हु श्री ३ देवस्त जाक्य भो कुड १ दं २ दछि-
१०. णा दान विय फल्के फं ४ वजि कुड २ धरि दं ३ थ्वं कुड ६ पालु प्र १ म्वात
११. कुड १ तुति प्र २ दं २ चेकंमत छोयके थ्वति दान विय फं ३ संघ्वा-
१२. र पुषुरिया प्राकार पाय॥ मोहोरे शुकि २ लेनके सोल्हो यात
१३. थ्वतिया चिंतायाक भल भारो हरिसिंह भारो कृष्णदेव भारो
१४. मानसिंह भारो थ्व पेह्मसेन चोसेतको मयासे लोभुइँकारे
१५. ब्रह्महत्यादि पंचपहापाप लाक जुरो लोभ मयाकाले
१६. महापुंन्य लाक जुरो उत्तरोत्तर जुरो॥ ॥ स्वदत्तम्परद-
१७. त्तां वा यो हरेन्सुरविप्रयोः। षष्ठिवर्ष सहस्त्राणि वि-
१८. ष्टायां जायते क्रिमि॥ ॥ शुभमस्तु जगतां॥

### अनुवाद

उमामहेश्वरलाई नमस्कार। संसारका आमाबाबु भएका, सारा लोकका आधार भएका, तीनै लोकले पूजिएका उमामहेश्वरलाई ढोग्दछु।

विश्वम्भरकी पत्नी, बुद्धि भएकी महालक्ष्मीले धर्म लाभ होस् भनी मानिसहरूले आराम लिने मण्डप (पाटी) बनाउन लाइन्।

ने.सं. ८०१ (वि.सं. १७३७) मार्ग शुक्ल .... को दिन चाखाबहालका प्रमान विश्वम्भर भारोले आमाको नामले बाँडेगाउँमा पोखरी बनाई तथा विश्वम्भर भारोकी पत्नी महालक्ष्मी मयीले तीनकवल भएको पाटी बनाई उमामहेश्वर स्थापना गरी प्रतिष्ठा गरियो।

व्यहोरा- वंदेग्रामको खेत दुइ रोपनी; यसको आयस्ताले प्रतिवर्ष बाँडेगाउँको जात्राको दिन श्री ३ देवतालाई चामल एक कुरुवा दक्षिणा दुइ द्रम्म । भुटेको चिउरा चारपाथी, चिउरा दुइ कुरुवा, तीन दम्मको दही, छ कुरुवा जाँड, अदुवा एक पाउ, भटमास एक कुरुवा, वोरी दुइ पाउ यति दान दिनू । दुइ द्रम्मको तेलको बत्ती बाल्नू । तीन पाथी नून पोखरीको पर्खालमा लाउनू । मरम्मतको लागि दुइ सुकी मोहर बचाउनू ।

यस कुराका चिताई गर्नेहरू भल भारो, हरिसिंह भारो, कृष्णदेव भारो मानसिंह भारो, यी चार जनाले यहाँ लेखिए अनुसार नगदी लोभ गरे भने ब्रम्महत्या आदि पञ्चमहापाप लागोस् लोभ गरेनन् भने महापुण्य लागोस्; उत्तरोत्तर वृद्धि होस् ।
आफूले अथवा अरूले देवता र ब्राम्मणलाई दान दिएको जसले हर्ला; त्यो साठीहजार वर्षसम्म नरकमा कीरा भएर रहला ।

संसारको शुभ होस् ।

★★★

(१६०)

## पाटन गाःबहालटोल हुकबहालको शिलापत्र

### मूलपाठ

१. २ ॐ नमः बुद्धायः॥ नेपाप्य सम्मत्यवषे ॥ गगणे-
२. न्दुवसुसहिते ॥ अस्मिंवषे ॥ माघशिते अग्नि तिथि
३. नारायननक्षत्र ॥ सुधियोगे, सोमवारसरे, थ्वदिन प-
४. तिस्था कृत, वरह्मि वनमहाबिहाराधिवासित चकेश्वरि श्री-
५. चन्द्रमुनिजु ॥ श्री वंसिंजु ॥ श्रीजिवचन्द्रजु ॥ श्रीदेवसिंह
६. जु ॥ श्रीवज्रपानिजु ॥ श्रीकनकजु ॥ श्रीदेवजु ॥ श्रीमा-
७. नदेवजु ॥ श्री धरंजु ॥ श्रीसिक्षमुनिजु ॥ श्री धरंजु ॥ थु-
८. ति दशपारमिता प्रमभुषन संघसमूहन श्री रथंजु
९. श्री वज्रपानिजु वराया मुरमिकाशिरायजुन समूह-
१०. याङाव थ्वत्य स्वह्मम पमुषन चिन्ता याङाव थ्व हत्य-
११. क वाहारसं, रूपछेयारसं थुति थायसं अतवन चि-
१२. ङा जुरो गोविन्द्र राय भारो, श्रेयोऽस्तु सम्वत् ८०१ सेत-
१३. म थ्वक पादु कुन्हु प्रधिस्था याङा जुरो शुभ ॥ थ्व वा-
१४. हारस ग्वह्ममनं किपतातसा ॥ उर म्वात आदि प-
१५. नं छु वस्तु दारसा पञ्चमहापाप राक जुरो ॥ ग्वह्म-



१६. नं मिनकरसा वपुतसांधास आदिन पूस्यं नि-
१७. दान यातसा ॥ थ्वह्मयात श्री ३ इस्तदेवतास्यं
१८. रक्षा याक थ जुरो ॥ ॥ शुभ सर्व्वदा ॥

★★★

(१६१)

## पाटन धालटोल इनारमुनि गणेश-देवलको भित्तामा टाँसिएको अभिलेख

### मूलपाठ

१. श्री गणेशाय ॥ सम्वत् ८०२ वैशाख शु-
२. क्ल द्वादश्यान्तिथौ चित्रनक्षत्र व्यति-
३. पातजोगे सोमवासर, थ्व कुन्हु-
४. क त्वार गृह र - क गदामुनिन
५. बंलाया दिवंगत पिता नारा-
६. यनसिंह भारोयात नामन .....
७. थानस देवल दयकं प्रतिमा दय-
८. कं प्रतिष्ठा याङा दिन बु जुरो ॥ शुभ

### अनुवाद

श्री गणेशलाई नमस्कार । ने.सं. ८०२ (वि.सं. १७३९) वैशाख शुक्ल द्वादशी सोमवार चित्रा नक्षत्र व्यतिपातयोग, यस दिन ... क टोल ... घरमा बस्ने गदामुनिले ..... दिवङ्गत बाबु नारायणसिंह भारोको नामले स्थान गणेशको देवल बनाई मूर्ति स्थापना गरी प्रतिष्ठा गरे । शुभ होस् ।

★★★

(१६२)

## पाटन वटकोटोल पक्कबहिल भित्रको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय ॥ श्रेयोऽस्तु सम्वत् ८०२ आषाढ शुक्ल प्रतिप-
२. दान्तिथौ, प्यनक्षेत्रे, हर्षणयोगे, सोमवासरे, थ्व कुन्हु थ्व
३. नामन, थव लोव्हसं सारिका तया सी पुरुष ॥ पुनर्व्वार गधुरी
४. भृगार भून्ह सकरसह, थ्वनंलि खापा हिरा, धलिङ हिरा-
५. लिरल्होडा ॥ थ्वनंलि, चैत्य वाहारस दन्दालि तया दूरु थी-
६. प्वात ५ सह ॥ थ्वनलि मुन स्वाहान ल्होडा जुरो ॥ भिक्षु श्री-
७. - जु, भोरीजु, थ्वया पुत्र जयचन्द्रजुन तयां जुरो ॥ गुलि
८. धर्म शास्त्रस ल्हाल, उनि फल लाकथ जुल ॥ शुभमस्तु ॥

अनुवाद

बुद्धलाई नमस्कार । कल्याण होस् । ने.सं. ८०२ (वि.सं. १७३९) आषाढ शुक्ल प्रतिपदा सोमवार ... नक्षत्र, हर्षणयोग, यस दिन आफू पतीपत्नीको नामले ढुङ्गाको यो सालिक राखियो । फेरि .... सबै सहितका गंधुरी देवता स्थापना गरिए । यसपछि खापा, दलिन आदि फेर्ने काम गरियो । यसपछि चैत्यभट्टारकमा डँडाली राखियो । पाँचवटा डलु (बत्ती- बाल्ने पात्र विशेष) राखिए । यसपछि मुख्य भऱ्याङ पनि फेरियो ।

भिक्षु श्री-जु, भरीजु, छोरा जयचन्द्रजुले उक्त काम गरेका हुन् । शास्त्रमा बताएजति फल लागोस् । शुभ होस् ।

★★★

(१६३)

## पाटन पाकोचोटोल हरसिद्धिदेवीको शिलालेख

### मूलपाठ

१. अथ श्री ३ श्रीहरीसिद्धिदेवदेवै नमस्तु ते ॥ श्रीनैपार सम्वत्सरे ८०२ श्राव-



२. ण शुक्ल: प्रतिपद्यान्तिथौ ॥ शतभिषानक्षत्रे गंन्धयोगे वृहस्पतिवा-
३. रसले । तस्मिदिने श्रीजतल्ह देश श्री ३ लिखिजुया कलजोतया थ्व
४. कुन्हु डकुरीधरम यातयां चिन्ता याक रामदास भावो, काशीराम भावो
५. कृष्णदास भावो वासिंह भावो छेह्मोय थ्वते चिन्ता याक जुरो पुनबाहार
६. सिंह थकालि, कम्मराम भावो, मनहोरसिंह गुदेव भावो धाक उझा
७. भावो । धारासिंह उझा, हाकुदेव हास्वर, उपर भावो, पंदेव भावो, म-
८. धनसिंह हास्वर ज्येनवसिंह, चिकुधिक भावो, मधनसिंह हास्वर
९. मणिकराम भावो, ..... भावो, ककुसिंह भावो, ज्यवणसिंह भावो
१०. बलिराम भावो ..... भावो हाकुसिंह भावो सत्यराम भावो
११. भगिराम भावो: .... राम भावो गुनिराज भावो जोगीदे-
१२. व भावो ॥ दलराम भावो, असन्तिसिंह भावो गोमति नकिनी ॥
१३. थ्वतेसन लसस्तान डकुरि ..... रि दकाया संवत्सर रोहो वि - क-
१४. ....... जुरो ॥ शुभमस्तु ॥

★★★

(१६४)

## पुल्चोक लाछिटोल पाटीको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ८०२ जे-
२. ष्ठमासे शुक्लपक्षे ॥ दशम्यां-
३. न्तिथौ ॥ हस्तनक्षेत्र बज्रयो-
४. गे ॥ यथाकलन मुहत्रके आ-
५. दित्यवासरे ॥ मिथुनराशिग-
६. ते सवितरि कन्याराशिगते चं-
७. द्रमशि ॥ पुरचोकोपूली हरि-
८. कृष्ण भारो रामकृष्ण भारो प्र-
९. मुखन देशया पञ्चसमूह गु-
१०. णिरा धर्म्मसमूच्चर्यन थ्व फरे
११. दयका जुरो ॥ शुभ भवनु ॥

अनुवाद

कल्याण होस् । ने.सं. ८०२ (वि.सं. १७३९) ज्येष्ठ शुक्ल दशमी आदित्यबार हस्तनक्षत्र बज्रयोग पर्नु पर्ने कारण मुहूर्त परेको बेलामा, मिथुन राशिमा सूर्य रहेमा, कन्या राशिमा चन्द्रमा रहेमा, पुल्चोकका हरिकृष्ण भारो, रामकृष्ण भारो, आदि देशका पञ्चसमूह, श्रावण धर्मसमुच्चयले यो पाटी बनाइएको हो ।
शुभ होस् ।

★★★

(१६५)

## पाटन नबहिलटोल यटाबहालको शिलापत्र

### मूलपाठ

१. श्रेयोऽस्तु सम्वत् ८०२ फाल्गुण पू-
२. र्णमासि थ्व कुन्हु तोरन तया दिन जु-
३. रो थरपा देसि जुया बेरस टया
४. जुलो दिनजु देवमुनिजु, हाकु-
५. जु, देवचंडरजु वासिजु, कुतु-
६. देवजु जयसिंजु, मजुसिंजु, सा-
७. कसिंजु, पुनमनिजु, जयमनिजु
८. दाखा चु ... धमसिंजु, विश्वसिं-
९. ङ भारो ..... लाभ भारो ॥ थुति
१०. समूहन तोरन तया जुरो ॥
११. शुभमस्तु सर्व्वदा ॥

अनुवाद

कल्याण होस् । ने.सं. ८०२ (वि.सं. १७३९) फाल्गुन पूर्णिमाको दिन तोरण चढाइयो । थरपा देसिजुको पालोमा चढाइएको हो , दिन, देवमुनि, हाकु, देवचन्द्र बासिं कुतुदेव, जयसिं, मंजुसिं साकसिं, पुनमनि, जयमनि दाखाचेकका धर्मसिं, विश्वसिं ... भारो, .... लाभ भारो, यति समूहले तोरण राखिएको हो । सधैं शुभ होस् ।

★★★



(१६६)

## पाटन बल्खु सरस्वतीदेवी मुनि वैष्णवीको शिलालेख

### मूलपाठ

१. श्री श्री भवानीसके
२. सिवा जुया चु देसन
३. दोहोलपा ककिस्थ न
४. वु फ संवत् ८०२ खन
५. मासि कासुतु - मशव
६. ...... वे.... मग था प्रमुखन
७. चन्दसशिवाजुया ॥ थ्वया
८. ..... रभि थ्वन
९. कि .... केसराम गथा ॥
१०. केससिं गथा । देवसिं ग-
११. पा ॥ माधव गथा ॥ थ्वतें
१२. समोहोन ॥ शुभ ॥

अनुवाद

श्रीश्रीभवानीलाई सेखाखलकले ..... चढाइयो । ने.सं. ८०२ (वि.सं. १७३९) ... प्रमुख भई केशराम गथा केशसिं गथा देवसिं गथा, माधव गथा यति समूहले चढाइएको हो ।
शुभ होस् ।

★★★

(१६७)

## पाटन क्वाबहाल टोल यपिंथुको पाटीको शिलालेख

### मूलपाठ

१. श्री ३ हरिहरलोकेश्वराय नमः ॥

२. स्वस्ति ॥ सम्वत्सरे ८०२ ज्येष्ठमासे शु-
३. क्लपक्षे ॥ दशम्यान्तिथौ ॥ हस्तानक्षत्रे ॥
४. बलियानयोगे । बालवकरणे ॥ आदि-
५. त्यवासरे ॥ थ्व कुन्हु महाराजाधिराज श्री
६. श्रीजय श्रीनिवासमल्ल देव प्रभु थाकुर-
७. स विजय राजेस भागीरथ भैया मन्त्री
८. वेलस यंपि चोभुननि वंकुलिगृहस
९. एव मन्त्रीया वुस चिंता यातकाव तयाह्म
१०. बाबु चा भावोन थो फले दयकाव प्र-
११. तिष्ठा याङा दिन जुरो ॥ शुभ ॥ पुनभाषा
१२. धुपाखेर, वु लोव ३ श्री ३ राजस वुया, थ्वया स्ववो
१३. स मेवो, थ्वतेया वत्सानन वर्षम्पति इन्द्रजात्रा ल्हुगर
१४. यात कुन्हु, फं १ सियाफकि प्र २. रा. कुड २ थ्व, म्वात
१५. पारु सहित, थ्वते दान वियमार, म्वात ३ मत, अस्था
१६. ३ चेकं मत छोयके भुय कतिन पुन्हिसि प्वात ३ मत
१७. अस्ता ३ चिकंमत छोयके फं १ सियाफकि प्र २ रा
१८. कुड २ थ्व म्वात पारु, थ्वते अविछिन्न दान विस्यं मत
१९. छोयके मार, थ्वतेया दानपति बाबु चा भावों ववानि म-
२०. यि-नेह्मं त्रिपुर समोहन दुन्ता जुलो, फं ५ वा ल्यनकेमार....

★★★

(१६८)

## पाटन कपिंदोटोल कालभैरवको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ८०२ माघकृष्ण, चतुर्दशी कुन्हु, श्री ३
२. कालभैरव भट्टारकासके दोपिछेया माधवराम भारो
३. जेवनराम र माहान भावो, मानसिंह धुगुरि भावो, लाछेवा
४. पुनसिंह धगुरि भावो कोनेया तालसिंह भावो, एन्द्रसिंह
५. भावो सुखुरि भावो, वदे भावो, हाकुराम भावो, पुनसिं-
६. आसकोछेया विष्णुसिंह भावो, कृष्णराम भावो, मानसिं-



७. ह भवो, थ्वते प्रमुखन चतुर्दशी सेवा दयक रोहान सिं-
८. ह निह्म दयकाव प्रतिष्ठा याङा दिन जुरो ॥ थ्वतिया
९. चितायाक छेह्मयोय भालसिं धगुरि भावो माहा-
१०. नजेनरा भावो मोछेंया पुनसिंह भावो कोनेया
११. मारसिंह भावो थ्व पेह्मं चिता याक जुरो; यथाशा-
१२. स्त्र फल जुरो ॥ ॥ शुभमस्तु ॥

★★★

(१६९)

## थानकोट शिखछुटोल आदिनारायणको शिलालेख

### मूलपाठ

१. ॐ नमो नारायण ॥ नमामि वासुदेवन्तं यत्पादपङ्कजोद्भवैः
२. रेणुभिः पूतमस्तोहं भवेत्पूजापरायणः ॥ वर्षे नैपालिके याते चन्द्रवि-
३. न्द्वचलाचिते पूर्णामास्यां च माघस्य पुष्पर्क्षे रविवासरे सुपेभापुरिसंस्थ-
४. स्य विष्णोः प्रासादवेदिका ॥ शिलाभिन्निर्मिता ॥ शुद्रैर्व्वहुभिर्म्माधवादिभिः ॥
५. स्यति, श्रेयोऽस्तु सम्वत् ८०१ माघमासे शुक्लपक्षे पूर्णमास्यां
६. न्तीथौ पुष्य प्ल अनुराधानक्षत्रे आयुष्मा प्ल सौभाग्ययोगे आदित्य-
७. वासरे मकररासिकते सवित्रि, कर्क्कटरासिकते चन्द्रमसि ॥ ल्हां-
८. अजा धर्म्मसिं दुवाल भारोन देवर दयकास थन छय हाकुदेव दुवा
९. र भारो प्रमुखन थ्व परमेश्वर श्रीमत् श्री आदिनारायणया लोहो-
१०. न फल चिनकं लि थ छुत जुल सर्व्वसेन डाव ल्होन चिन्ता गुथिस, श-
११. रकोस्यन जुरो ॥ थ्व परमेश्वर पूजा नित्यकर्म्म श्री ब्राह्मणजुन भाजन
१२. प्वास वु रोव डा ५ जुरो सलि ङदुलिसि कुन्हु वोसाधनया प्रताप वु रो-
१३. व सरमछि ११ सहकन थ्व क्षेत्रया वरसानन वर्षप्रति ब्राह्मण
१४. पूजा विधि विधान दको याङ दान धरि बाज स्वाचन्हा दकोरि द-
१५. को त्वं पदार्थ याङ याङत्वं, इन्द्रजात्रा दुलिसि कुन्हु प्वात डा ५
१६. मत पूर्णमासि कुन्हु, घेर दिवा प्वात छि १ थ्वते चिन्ता निस्त्र-
१७. पं जजमान हाकुदेव दुवार भारो प्रमुखन तस्य पत्र
१८. माधवजु वैज्यनाथजु, गोपीलिक शिवदास मुकुन्द-
१९. राज, अभयसिंह, सुषुरि, थ्वतेस्न रोभानि पापाणि मया-

२०. स्यं चिन्ता याय माल जुरो ॥ लिखित्वा श्रीवीरभद्रे-
२१. पुत्र श्रीशिवनारायण शर्म्मणा ॥ शुभमस्तु ॥

★★★

(१७०)

## फर्पिङ्गको भगीरथ भैयाको अभिलेख

फर्पिङ्ग शिखरनारायणको मन्दिरको दायाँतिर भित्तामा लहरै तीनवटा शिलापत्र राखिएका छन् । तिनमा माझको शिलापत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ ने.सं. ८०३ दिइएकोछ । संशोधन-मण्डलद्वारा अभिलेख-सँग्रह १० भागको १२-१३ पृष्ठमा यो छापिएको छ ।

### मूलपाठ

१. ॐश्री ३ शिखरनारायणाय नमः ॥ ॥ रमामुखांम्भीरूहभुङ्गमीशं पिताम्बरं फुल्लसरोजनेत्रं
२. सनीर नीरप्रदनीलगात्रं नारायणं देवमहं नमामि ॥ श्रीनिवासनृपतिर्व्विराजते, कान्तियुक्त-
३. ललिताभिधे पुरे । नाकनाथ इव नाकपत्तने सारदेन्दुकिरणावलीयशाः ॥ मन्त्री महीभुज-
४. स्तस्य स्वामिभक्तो भगीरथः ॥ अभवत् शिखरापुर्य्या आधिपत्यमवाप्तवान् ॥ नारायणस्य चर-
५. णाम्बुजपूजनार्थ क्षेत्राणि तेन सुधिया च भगीरथेन । संकल्पितानि हरिभक्तिपरायणेन, चन्द्रो-
६. परागतमये खलु धर्मबुद्ध्या ॥ ॥ श्रेयोऽस्तु ॥ सम्वत् ८०३ माघशुक्लपूर्णमास्यान्तिथौ अश्लेषान-
७. क्षेत्र शोभनयोगे बृहस्पतिवासरे चन्द्रग्रासमहापर्व्वणि ॥ थ्व कुन्हु श्रीमाणिग्लाधिपति महाराजाधि-
८. राज श्रीश्रीजयश्रीनिवासमल्लदेव ठाकुलस मन्त्री भगीरथ भैया भारोसन श्रीमत् श्री ३ शिखरनारा-



९. यणप्रीतिन दुन्ता खाद्बलक्षेत्र रोव च्या ८ भूय चोबु क्षेत्र नेचातलन रोव श्लंगु १९ भूय नखुचा क्षेत्र नेचा-
१०. तलन रोव गुं ९ थ्व स्वरासिक्षेत्रया वरसानन नित्यपूजा भर जो १ दक्षिण क्य अस्ता १ निश्रावयात बजि
११. कुड १ दामतो माध्य ता १ धरिपात १ थ्वते दयकं श्रीमत् श्री ३ शिखरनारायण नित्यपूजा यायमाल
१२. जुरो ॥ भूय कार्तिकया पूर्णिमा कुन्हु पञ्चामृत दयक पूजाभर जो १ निश्राव जो १ दक्षिणा द्रम्म २ थ्वते
१३. दयकं देवपूजा याङाव चेक्न फं १ थ्वतेया मतप्वात २४ छोयकेमाल बजि फं १ चासे मतकुलपति-
१४. स्त वियमाल ॥ थ्वनलि माघया पूर्णिमा कुन्हु थ्वते दयकं पूजा याय, मत छोयकेमाल जुरो ॥ भूय
१५. अक्षयतृतीया कुन्हु भरडिसादक्क पूजा याङाव छो फं २० मङाव चि कुड १ नं वालाव नकेमाल ॥
१६. सायात द्रम्म २ सापूजा याकह्म ब्राह्मणयात द्रम्म २ दक्षिणा वियमाल ॥थ्व कुन्हु पूजा जो १ जोना शु-
१७. कि- या पञ्चामृत नेश्राव जो १ देव दक्षिणा द्रम्म २ थ्वते दयक देवपूजा यायमाल थ्व कुन्हु जाक्य
१८. फं २० थ्वतेन दुथे फणपिया ब्राह्मण स्वान १ पूजा माङन ह्मति द्रम्म १ धारे दक्षिणा विस्यं भोज नकेमा
१९. ल जुरो ॥ बलन्हि चेक्य फं १ या मत प्वात २४ छोयकेमाल ॥ देवपूजा याकह्म ब्राह्मणयात ज्याक्य
२०. फं ४५ वर्षप्रति वीयमाल जुरो । थ्वतेया चिन्ता याक, यमलषु शिवमंगल भारो, यमलषु विष्णुरा-
२१. म भारो, कोछुत्वा चण्डिदास भारो, कोत्वार मनोहरसिंह भारो थ्वते चिन्ता याक जुरो ॥
२२. भूय गरुडशुद्धा स्थापना याङा जुरो ॥ थ्वते चिन्तायाक तवदुछेया नरहरि भारो जुरो, ॥ शुभ ॥

(सँगैरहेको शिलामा कुँदिएको)
२३. पुनभार्षा थ्व गुथि मकवानपुरि घेरय याङाव चोङाव वेलस थानास, माघया पूर्णिमा कुन्हु
२४. संकल्प याङा थ्वनालि फाल्गुण शुक्लया चतुर्थी कुन्हु मकवानपुर चाल दिन जुरो शुभ ।

## अनुवाद

श्री ३ शिखरनारायणलाई नमस्कार । लक्ष्मीको मुखरूपी कमलका भँवराजस्ता, पीताम्बर (पहेँलो लुगा) लाएका, फुलेको कमलजस्ता आँखा भएका, पानी भएको बादलजस्तो नीलो जिउ भएका, नारायण परमेश्वरलाई नमस्कार गर्दछु !

स्वर्गमा इन्द्रजस्तै, कान्तिले युक्त भएको ललितपुरका चन्द्रमाको किरण (जून) जस्तै सफा कीर्ति भएका राजा श्रीनिवासमल्ल हुनुहुन्छ । उहाँ राजाका भक्त मन्त्री भगीरथ भैया छन् । उनले शिखरपुरी (फर्पिङ्) को आधिपत्य पाएका छन् ।

नारायणको भक्तिमा लागेका बुद्धिमान ती भगीरथ भैयाले चन्द्र ग्रहणको अवसरमा धर्म गर्ने इच्छाले नारायणको पाउको पूजाको लागि खेतहरू संकल्प गरी दान दिए ।

कल्याण होस् । ने.सं. ८०३ (वि.सं. १७३९) माघ शुक्ल पूर्णिमा अश्लेषानक्षत्र, शोभनयोग, बृहस्पतिबार चन्द्रग्रहणको ठूलो पर्वमा । यस दिन श्रीमाणिग्लका अधिपति, महाराजाधिराज श्रीश्रीजयश्रीनिवासमल्लदेव ठाकुरका मन्त्री भगीरथ भैया भारोले श्री ३ शिखरनारायणलाई प्रसन्न पार्न खादुल खेत ८ रोपनी, फेरि चौवुखेत दुवैतिर गरी १९ रोपनी, फेरि नखुचोकको खेत दुवैतिर गरी ९ रोपनी । यी खेतको आयस्ताले नित्यपूजालाई चाहिने सामग्री-१, दक्षिणाको लागि १ अस्ता चामल, निश्रावको लागि चिउरा एक कुरुवा, मिठाइ एक, दही एक कहतारो, यति राखीकन श्री ३ शिखरनारायणको नित्यपूजा गर्नुपर्छ ।

फेरि कार्तिक पूर्णिमाको दिन पञ्चामृत राखीकन पूजाको सामग्री १, निश्रावको सामग्री १, दक्षिणा २ द्रम्म, यति राखी देवताको पूजा गर्नु; एक पाथी तेलले २४ वटा बत्ती बाल्नु । राति बत्ती बाल्ने काममा खटिएकालाई एक पाथी चिउरा दिनू । यसपछि माघ पूर्णिमाको दिन पनि उपर्युक्त कुरा राखी पूजा गर्नू ; बत्ती बाल्नू ।

फेरि अक्षय तृतीयाको दिन गर्नु पर्ने पूजा गरिसकेपछि २० पाथी गहुँ उसिनेर एक कुरुवा नून हाली मुछेर (जनतालाई) खुवाउनू । गाईजात्राको दिन गाई पूजा गर्ने ब्राह्मणलाई दुइद्रम्म दक्षिणा दिनुपर्छ । यस दिन पूजा सामग्री १, शुकीको पञ्चामृत निसराव, देवतालाई दक्षिणा २ द्रम्म, यति राखी देवपूजा गर्नुपर्छ । यस दिन चामल २० पाथी, यतिले पुग्ने किसिमले फर्पिङ्का ब्राह्मणलाई पूजा गरी १ द्रम्म दक्षिणा दिई भोज खुवाउनु पर्छ । राति एक पाथी तेलले २४ वटा बत्ती बाल्नु पर्छ । देवताको पूजा गर्ने ब्राह्मणलाई ४५ पाथी चालम प्रतिवर्ष दिनु पर्छ ।

यस कुराको हेरचाह गर्नेहरू- यमलखुका शिवमङ्गल भारो, यमलखु विष्णुराम भारो, कोछुत्वारका चण्डिदास भारो, कोत्वारका मनोहरसिंह भारो यिनीहरूले हेरचाह गर्नु । फेरि गरुड पनि स्थापना गरियो । यसको हेरचाह गर्ने तवदुछेंका नरहरि भारो छन् । शुभ ।

अर्को बेहोरा- यो गुठी मकवानपुरमा घेरा हालिबसेको बेलामा, ठानामा, माघ पूर्णिमाको दिन संकलन गरिएको हो । यसपछि फाल्गुन शुक्ल चतुर्थीको दिन मकवानपुर खुल्यो । शुभ ।

**व्याख्या**

चौतारा भगीरथ भैयाले शिखरनारायणलाई गुठी राखी ने.सं. ८०३ (वि.सं. १७३९) मा यो अभिलेख राख्न लाएका हुन् । यस अभिलेखबाट शक्तिशाली चौतारा भगीरथ भैयाबारे केही बढी कुरा थाहा पाउन मद्दत पाइन्छ । श्रीनिवासमल्लको पालामा चौतारा भगीरथ भैया कसरी शक्तिशाली हुन पुगे; उनी अरू सरह सामान्य चौतारा मात्र थिएनन्; उनी राजासरह नै थिए; राजाले समेत उनको



अनुमति लिई काम गर्दथे आदि भगीरथ भैया सम्बन्धी केही कुराको चर्चा माथि गरिसकेको छ । यस कारण यहाँ दोहऱ्याउनु आवश्यक देखिँदैन ।

प्रशासनिक दृष्टिले चौतारा पद त्यसै निकै महत्त्वको थियो । त्यसमा पनि कुनै कारणवश राजामा विशेष प्रभाव पार्न सकेका चौताराहरूले आफ्नो स्थिति त्यसै माथि उकाल्थे । भगीरथ भैया पनि त्यस्तै चौतारा हुन् । उनी पाए सामन्त राजा नै बन्न चाहन्थे, तर पहिले जस्तै अहिले श्रीनिवासमल्लको ताका आएर सामन्त बन्ने प्रथा एकासिमले हटिसकेको थियो । यसकारण भगीरथ भैया सोझै सामन्त बन्ने अवसर त पाएनन्, तैपनि भगीरथ भैयाले फर्पिङ भेकको आधिपत्य त सोझै पाएका थिए । त्यो कुरा यस अभिलेखबाट स्पष्ट थाहा पाइन्छ । मन्त्री महीभुजस्तस्य स्वामिभक्तो भगीरथः । अभवत् शिखरापुर्या आधिपत्यमवाप्तवान भनी यस अभिलेखमा उक्त कुरा स्पष्ट रूपमा नै लेखिएको छ । माथि भएको फर्पिङ देशको जीर्णोद्धार गरी राखेको अभिलेखबाट पनि उक्त कुराको केही झलक पाइन्छ । यस अभिलेखबाट चाहिँ उक्त कुरा झन् स्पष्ट हुन्छ ।

चौतारा भगीरथ भैयाको प्रभाव किन त्यसरी बढेको हो भन्ने कुराको पनि अलिकता झलक यस अभिलेखबाट पाइन्छ । यस अभिलेखको अन्त्यभागमा थ्व गुथि मकवानपुरि घेरय यांडाव चोडडाव वेलस थानास माघया पूर्णिमा कुन्हु संकल्प याङा थ्वनालि फाल्गुण शुक्लया चतुर्थी कुन्हु मकवानपुर चाल दिन जुरो (यो गुठी मकवानपुरमा घेरा हालिबसेको बेलामा ठानामा माघ पूर्णिमाको दिन संकल्प गरिएको हो; यसपछि फाल्गुण शुक्ल चतुर्थीको दिन मकवानपुर खुल्यो) भनी लेखिएको छ । यसबाट ने.सं. ८०३ माघमा मकवानपुरमा आक्रमण गरिँदा चौतारा भगीरथ भैया स्वयं गएका थिए । त्यही आक्रमणको अवसरमा माघ पूर्णिमाको चन्द्रग्रहणको उपलक्ष्यमा भगीरथ भैयाले शिखरनारायणलाई गुठी चढाउने संकल्प गरेछन्; त्यसको लगतै फाल्गुणमा त ठाना खुल्यो पनि । अनि यसै विजयको खुसियालीमा यो अभिलेख राख्न लाइएछ । यद्यपि ने.सं. ८०३ मा मकवानपुरमा आक्रमण गरिँदा त्यस दलमा ललितपुर बाहेक कान्तिपुर, भक्तपुर, गोरखा, लमजुङ पनि सम्मिलित भएथे । थ्यासफूहरूमा यस कुराको उल्लेख पाइन्छ । जस्तै:-

> **सम्वत् ८०३ कार्तिक कृष्णः ॥ दशमी हस्तनक्षेत्र, अंगारबार थ्व कुन्हु .... मुकानपुलि हथार न्ह्याङा, यंथा यस्या खप्वया ओरखरि, रत्रजुंङया, थ्वतेया राजा मुङाव हथार वङ जुरो ।**
>
> **सम्वत् ८०३ फाल्गुण शुक्ल चतुर्थी प्र पंचमी अश्विनी प्र भरणीनक्षेत्र, अंगारवार कुन्हु या रात्रीस मुकानपुलि चार दिन ॥**
>
> (चन्द्रमान जोशीसँगको थ्यासफू)

ने.सं. ८०३ (वि.सं. १७३९) कार्तिक कृष्ण दशमी हस्तनक्षेत्र मङ्गलवार यस दिन .... मकवानपुरमा आक्रमण गर्न प्रस्थान गरियो । कान्तिपुर, ललितपुर, भक्तपुर, गोरखा र लमजुङ्का राजाहरू मिली आक्रमण गरिएको हो ।

ने.सं. ८०३ (वि.सं. १७३९) फाल्गुण शुक्ल चतुर्थी उप्रान्त पञ्चमी अश्विनी उप्रान्त भरणीनक्षेत्र मङ्गलवारको दिन राती मकवानपुर खुल्यो) ।

यसरी मकवानपुरमा गरिएको उक्त आक्रमण संयुक्त रूपमा गरिएको थियो तापनि त्यसमा ललितपुरले बढी सक्रियता लिएको थियो तथा ललितपुरतर्फबाट चौतारा भगीरथ भैयाले त्यसमा भाग लिएका थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । यसै गरी स्वयं लडाइँको मैदानमा

उत्री ललितपुरको गौरव बढाई दिएको हुनाले नै श्रीनिवासमल्लको पालामा भगीरथ भैयाको विशेष प्रभाव बढ्नेको हो भन्ने देखि
एको छ।

पन्ध्रवर्षभन्दा बढी समयसम्म चौतारा भगीरथ भैयाले ललितपुरको इतिहासमा महत्त्वपूर्ण स्थान प्राप्त गरेका थिए। लगभग यसै समयमा भक्तपुरमा भागिराम, कान्तिपुरमा चिकुटि (देवीदास), लक्ष्मीनारायण जोशी प्रभावशाली चौताराका रूपमा देखापरेका थिए। परन्तु भागीराम, चिकुटि, लक्ष्मीनारायणहरू शक्तिशाली भई हर्ताकर्ता हुनामा र भगीरथ भैया शक्तिशाली हुनामा केही भिन्नता थियो। चिकुटीहरू गद्दीनसीन राजालाई कमजोर पाएर त्यस रूपमा शक्तिशाली भएका थिए। परन्तु भगीरथ भैया चौतारा बन्दा श्रीनिवासमल्ल समर्थ र बुज्रुक राजा थिए। यसकारण भगीरथ भैया यसरी शक्तिशाली हुनमा भित्री अर्कै कारण पनि थियो होला भन्ने अनुमान हुन्छ। यस विषयमा खोजीनीति हुनु आवश्यक देखिन्छ।

यस प्रसङ्गमा एउटा कुरा विचारणीय छ। त्यो हो, चौतारा भगीरथ भैयाको अन्त। ललितपुरको गौरव बढाएर मात्र भगीरथ भैयाको प्रभाव बढेको हो भने उनको अन्त त्यसरी दयनीय ढङ्गले नहुनु पर्ने, तर विद्रोह गरी युवराज योगनरेन्द्रमल्ल सत्तामा आउन लाग्ने बित्तिकै भगीरथ भैयालाई पहिले चौतारा पदबाट हटाउने काम गरियो अनि पछि उनको बध नै गरियो।

चौतारा भगीरथ भैयाले जसरी अधिकार र शक्ति बढाउँदै लगेका थिए; त्यो कुरा उमेर अलि कच्चै भए पनि युवराज योगनरेन्द्रमल्ललाई मनपरेको थिएन। यस कुरामा पछि युवराज योगनरेन्द्रले विरोध गर्ने सम्भावना छ भन्ने कुरा चतुर भगीरथ भैयाले अघिबाटै देखेका थिए। यसै हुनाले वि.सं. १७२९ मा **म र भगीरथ भैयामा फरक छैन** भन्ने घोषणा राजाबाट गराउँदा योगनरेन्द्रमल्ललाई पनि साक्षी राख्न लाएका थिए। परन्तु त्यस बखत योगनरेन्द्रमल्ल पांचवर्षका मात्र थिए। यस कारण त्यसबेला के घटना हुन लागिरहेछ भन्ने कुरा बुझ्ने अवस्था उनको भएको थिएन। पछि बुझ्ने भएपछि युवराज योगनरेन्द्रमल्ल भगीरथ भैयादेखि जल्न लागे। अतः उनी भित्रभित्रबाट भगीरथ भैयालाई पन्छाउने मौका पर्खन लागे, तर राजाले पत्याई अघिदेखि अधिकार दिइएका व्यक्तिलाई सजिलैसँग हटाउनु सम्भव थिएन।

आखिरमा अर्को उपाय नपाई योगनरेन्द्रमल्लले आफ्ना बाबुको विरुद्ध विद्रोह गरेथे। उनले पनि कीर्तिपुरमा आफ्नो अखाडा जमाएथे। यसपछि धार्मिक प्रकृतिका उद्धार राजा सिद्धिनरसिंहमल्लले छोरालाई बोलाई राजगद्दी सुम्पिदिएथे। आफूचाहिँ राजर्षि भई रहेथे। यही परम्परामा श्रीनिवासमल्लले पनि योगनरेन्द्रमल्ललाई दबाउने मार्ग लिएनन्। छोरालाई बोलाई सम्झौता गर्ने प्रयास उनले गरे। यस प्रसङ्गमा सर्वप्रथम चौतारा भगीरथ भैयालाई चौतारा पदबाट हटाउने काम गरियो। एउटा ठ्यासफूमा **सम्वत् ८०४ माघ शुक्ल श्रीपंचमि थ्व हुन्हु भागजु चउतारा कोकार** भनी लेखिएको छ। भागजु भगीरथ भैयाको अर्को नाउँ हो। यसबेला योगनरेन्द्रमल्ल गद्दीमा बसिसकेका थिएनन्। यसको एघाह्र महीनापछि मात्र योगनरेन्द्र मल्ललाई गद्दीमा राखिएको थियो। यस कुराको उल्लेख ठ्यासफूहरूमा आएको छ। उदाहरणार्थ चन्द्रमान जोशीको ठ्यासफूको यस वाक्यलाई देखाउन सकिन्छ-

> **सम्वत् ८०५ पौष कृष्ण पंचमी, हस्तनक्षत्रे बृहस्पतिवार, थ्व कुन्हु श्रीश्रीयोगनरेन्द्रमल्ल राजा, बाबु श्रीश्रीनिवासमल्ल मखयकाओ, यंया, खप्वयां राजा दयकाओ ॥**



अरू ठ्यासफूमा पनि उक्त कुराको उल्लेख पाइन्छ। यसबाट योगनरेन्द्रमल्लको राज्याभिषेक हुनुभन्दा अगाडि नै भगीरथ भैया पदच्युत गरिइसकेका थिए भन्ने थाहा पाइन्छ। आफू गद्दीमा बसेको केही कालपछि राजा योगनरेन्द्रमल्लले भगीरथ भैयाको बध गराएका थिए। यस विषयको भाषावंशावलीको कथन रोचक हुँदा यहाँ उद्धृत गरिन्छ

> **सम्वत् ८०५ (वि.सं. १७४२) भाद्र ८ दिनमा भाग नाम काजी बाबाका (श्रीनिवासमल्लका) पालादेखिकाले सब काजीभन्दा मुख्य भई आफ्ना मनग्य गर्दा रानीकन बेमर्यादाको वचन गर्दा प्रजाहरू राजी नहुँदा राजाले (योगनरेन्द्रमल्लले) र युक्तिसँग मान खोसी पछिबाट भरिदिया।**

यताबाट चौतारा भगीरथ भैयालाई हटाउन योगनरेन्द्रमल्ललाई निकै बुद्धि खर्च गर्नु परेको थियो भन्ने देखिन्छ। यसका लागि भगीरथ भैया उपर कुनै आरोप लगाई दुनियाँको नजरबाट उनलाई गिराइदिनु आवश्यक थियो। यसै हुँदा चौतारा भगीरथ भैयाले रानीहरूप्रति शिष्टाचार पुऱ्याएनन् भन्ने हल्ला पिटाई यसको विरोधमा ललितपुरका प्रजाहरू उठाइए। अनि यसै आरोपमा ने.सं. ८०५ (वि.सं. १७४२) भाद्रमा उनको बध गरियो भन्ने कुरा वंशावलीको उक्त कथनबाट थाहा पाइन्छ।

समर्थ राजालाई पनि अँठ्याई शासनको बागडोर सधैँ आफ्नो हातमा राख्छु भनी कोसिस गर्ने मन्त्री भारादारको प्रायः यस्तै अवसान भएका उदाहरण इतिहासमा धेरै पाइन्छन्। यसकारण राजा **र ममा केही फरक छैन** भनी घोषणा गराउने; प्रत्येक कामकुरा भगीरथ भैयाको अनुमतिले गरेको हुँ भनी राजाबाट लेखाई प्रसिद्ध देवस्थलमा राख्न लाउने चौतारा भगीरथ भैयाको त्यसरूपमा पतन भएकोमा आश्चर्य त छैन तैपनि उनले श्रीनिवासमल्लमा कसरी प्रभाव पार्न सकेका रहेछन्; यो भने अझै खोजीको विषय रहेको छ।

जेहोस्; चौतारा भगीरथ भैयाको कार्यकालमा फर्पिङ्ग देशको भने निकै मात्रामा विकास गरिएथ्यो। फरपिङ्गका प्रसिद्ध शिखरनारायणको नित्यपूजा र नैमित्तिक पूजाको लागि चौतारा भगीरथ भैयाले निकै रोपनी जग्गा गुठी राखेको उल्लेख यस अभिलेखमा परेको छ। नित्यपूजा र नैमित्तिकपूजा गर्ने विवरण पनि यस अभिलेखमा कुँद्न लाएका छन्। साथै, गुठीको देखरेखको लागि केही व्यक्तिहरू पनि निर्धारित गरेका छन्।

यसरी तात्कालिक ललितपुरको कुरा बुझ्न भगीरथ भैयाको यो अभिलेख केही उपयोगी रहेको छ।

★★★

(१७१)

## पाटन गाबहालटोल न:बहालभित्र रहेको शिलापत्र

### मूलपाठ

१. ॐनमो बुद्धाय ॥ श्रेयोऽस्तु सम्वत् ८०३ चैत्रशुक
२. .... त्रयोदश्यां तिथौ उत्रफागुनिनक्षत्रे ध्रुवजो-
३. गे शुक्लवालसे मेषरासिगते सवितरि, सिंह-
४. रासिगते चन्द्रमसि ॥ थो कुन्हु ॥ श्रीमत् श्रीश्री
५. धर्मधातुवागीश्वर भट्टारकसके ॥ श्रीधोजा-
६. रोहन पुन्हिहसिवा दयकाओ, थ्व तोरन दयका
७. जुरो ॥ दानपति शाक्यवंश देवमुनिजु प्रभुषन
८. तेजसिंजु, जयरन्हजु, जयजु, अभिचंन्द्र
९. ..... देवजु चन्द्रसिंहजु, अभिसिंजु, पासिंदेवजु
१०. ...... रामेश्वरजु भारो, थुति समोहोन दु-
११. ...... शुभमस्तु सवदा ॥ ० ॥

★★★

(१७२)

## पाटन सतुमोल क्वाक्वटोल बुद्ध भगवान्को आसनको शिलालेख

### मूलपाठ

१. सम्वत् ८०३ २ श्री ३ बुद्ध थापना याङा जुलो
२. .......... विश्वलामजु, हैरिलामजु
३. .......... निह्म फुकिङ्गजुसन दयका ।

### अनुवाद

ने.सं. ८०३ (वि.सं. १७४०), श्री ३ बुद्धको स्थापना गरियो ..... विश्वराम, हरिराम .... दुइजना दाजुभाइले बनाएका हुन् ।

★★★



(१७३)

## पाटन यकछेटोल दगुबहाल भित्रको शिलालेख

### मूलपाठ

१. सम्वत् ८०३ विरंपति दयका- न स दयका पुन्हीस सि-
२. वार दयका जुरो, श्री वेजचाजे चिंतामनिजु, धनम-
३. सिंह भावो: सुषुरि भावो, गोपिराम भावो
४. देसिंङ भावो, अभिराम भावो
५. थुति समोहोन दयका जुरो
६. शुभ

### अनुवाद

ने.सं. ८०३ (वि.सं. १७४०) पूर्णिमा सेवाखलकले विलंपति बनाइयो । श्री बज्राचार्य चिन्तामणि, धनमसिंह भावो, सुखुली भावो, गोपीराम भावो, देसिङ्ग भावो, अभिराम भावो, यति समूहले बनाइएको हो । शुभ होस् ।

★★★

(१७४)

## पाटन नबहिलटोल वालिफले पाटीको शिलालेख

### मूलपाठ

१. श्रीगणेशाय नम: ॥ श्रेयोऽस्तु संव-
२. त् ८०३ श्रावण शुक्ल एकादशी थ्व कु-
३. न्हु वदिफले त्वारया पंच समूह मु-
४. ङान थ्व वादेफले न्हवने लन्हे-
५. स चेकन अतवन चिङन पंच-
६. चोने थाय दयकाया भाषा थ्व-
७. ते जुरो थ्व लन्हेस सुनानं वा-

(१७१)

## पाटन गाबहालटोल नःबहालभित्र रहेको शिलापत्र

### मूलपाठ

१. ॐनमो बुद्धाय ॥ श्रेयोऽस्तु सम्वत् ८०३ चैत्रशुक
२. .... त्रयोदश्यां तिथौ उत्रफागुनिनक्षत्रे ध्रुवजो-
३. गे शुक्लवालसे मेपरासिगते सवितरि, सिंह-
४. रासिगते चन्द्रमसि ॥ थो कुन्हु ॥ श्रीमत् श्रीश्री
५. धर्मधातुवागीश्वर भट्टारकसके ॥ श्रीधोजा-
६. रोहन पुन्हिहसिवा दयकाओ, थ्व तोरन दयका
७. जुरो ॥ दानपति शाक्यवंश देवमुनिजु प्रभुषन
८. तेजसिंजु, जयरन्हजु, जयजु, अभिचंन्द्र
९. ..... देवजु चन्द्रसिंहजु, अभिसिंजु, पासिंदेवजु
१०. ...... रामेश्वरजु भारो, थुति समोहोन दु-
११. ...... शुभमस्तु सवदा ॥ ० ॥

★★★

(१७२)

## पाटन सतुमोल क्वाक्वटोल बुद्ध भगवान्को आसनको शिलालेख

### मूलपाठ

१. सम्वत् ८०३ २ श्री ३ बुद्ध थापना याङा जुलो
२. .......... विश्वलामजु, हैरिलामजु
३. .......... निह्म फुकिङ्गजुसन दयका।

अनुवाद

ने.सं. ८०३ (वि.सं. १७४०), श्री ३ बुद्धको स्थापना गरियो ..... विश्वराम, हरिराम .... दुइजना दाजुभाइले बनाएका हुन्।

★★★



(१७३)

## पाटन यकछेटोल दगुबहाल भित्रको शिलालेख

### मूलपाठ

१. सम्वत् ८०३ विरंपति दयका- न स दयका पुन्हीस सि-
२. वार दयका जुरो, श्री वेजचाजे चिंतामनिजु, धनम-
३. सिंह भावो: सुषुरि भावो, गोपिराम भावो
४. देसिंङ भावो, अभिराम भावो
५. थुति समोहोन दयका जुरो
६. शुभ

अनुवाद

ने.सं. ८०३ (वि.सं. १७४०) पूर्णिमा सेवाखलकले विलंपति बनाइयो। श्री बज्राचार्य चिन्तामणि, धनमसिंह भावो, सुखुली भावो, गोपीराम भावो, देसिङ्ग भावो, अभिराम भावो, यति समूहले बनाइएको हो। शुभ होस्।

★★★

(१७४)

## पाटन नबहिलटोल वालिफले पाटीको शिलालेख

### मूलपाठ

१. श्रीगणेशाय नम: ॥ श्रेयोऽस्तु संव-
२. त् ८०३ श्रावण शुक्ल एकादशी थ्व कु-
३. न्हु वदिफले त्वारया पंच समूह मु-
४. डान थ्व वादेफले न्हवने लन्हे-
५. स चेकन अतवन चिङन पंच-
६. चोने थाय दयकाया भापा थ्व-
७. ते जुरो थ्व लन्हेस सुनानं वा-

८. यि पाङन कचिंगल म थने-
९. दो सुनानं वायियाङन क-
१०. चिङ ल थनसा श्री ३ गणे-
११. सचो कु दृष्टि पंचमहापा-
१२. प लाक जुरो थ्व भाषास चो-
१३. ङण्थे सुनसा महापुण्य ला-
१४. क कु रो ॥ ॥ शुभ ॥

### अनुवाद

श्रीगणेशलाई नमस्कार । कल्याण होस् । ने.सं. ८०३ श्रावण शुक्ल एकादशीको दिन वादेफले टोलका पञ्चसमूह मिली यो वादेफले (पाटी विशेष) को सामुन्ने बाटोमा तेलिया इँटले छाप्ने काम गरियो तथा पञ्चहरूको सभास्थल (पंचायत भवन) बनाइयो । यसको बेहोरा यसप्रकारको छ- यस ठाउँमा कसैले धानसान सुकाई फोहरमैला थुपार्नु हुँदैन । कसैले धानसान सुकाई फोहरमैला थुपाऱ्यो भने श्री ३ गणेशको कुदृष्टि परोस्; पञ्चमहापाप लागोस् । यस बेहोराको प्रतिपालन गरे ठूलो पुण्य लागोस् ।

शुभ होस् ।

★★★

## (१७५)

## पाटन क्वाथटोल गणेश देवलको शिलालेख

### मूलपाठ

१. ॐनमः श्रीगणेशाय ॥ श्रीयोऽस्तु सम्वत् ८०३ भाद्रपदमासे शुकपक्षे द्वादश्यां तिथौ
२. उत्राषाढनक्षत्रे शौभनयोगे वृहस्पतिवासरे ॥ थ्व कुन्हु थानपति श्री ३ गणेश्वरभट्टा-
३. रकसके सुवर्णमुख दयकं प्रतिस्था याङा दिन जुरो ॥ दानपछि श्री देवराज प्रमुखन श्रीपुरुदेव
४. श्रीशाक्यमुनि श्रीधन श्रीधम्मगिरि, किन्हसिंह भाव, तवधिक भाव, बिन्हु भाव, न्हवन भाव,



५. इन्द्रसिंह भाव । चन्द्रसिंह भाव, जिवनकेश भाव, वयकुत भाव, शिव भाव, भागिसिंह भाव,
६. गोपिसिंह भाव, माधवराम भाव ॥ थुति धर्म्म गोष्टि समूहन, पूर्णमासि सेवा दयकं,
७. श्री ३ थानदेवसके लुया मुदय दयकं दोहोरवा जुरो ॥ सुभमस्तु सर्व्वदा ॥

★★★

## (१७६)

## पाटन पुंचलिटोल चन्देश्वरी देवको अभिलेख

### मूलपाठ

१. ॐ नमः चण्डिकायै ॥ त्वं देवी विष्णुमाया प्रकृतिगुणमयपरा पार्व्वती त्वत्र, स्वाहासृष्टि स्थि-
२. त्यन्तहेतुः सकलगुणमयी कारिणीतारिणी त्वं, संसारस्यैकसारांप्रणत भयहरा शं-
३. करत्योतमांगे, लीनां शंखेन्दुकुन्देर्द्धवलदश भुजां पञ्चवक्त्रान्नमामि ॥ ॥ श्रेयोऽ-
४. स्तु ॥ सम्वत् ८०४ कार्तिकमासे शुक्लपक्ष ॥ नवम्यायां तिथौ, श्रवण पर धनेष्ठानक्षे-
५. त्रे, शूलयोगे, वृहस्पतिवासले, तुल्यराशिगते सवितरि मकरासिकते चन्द्रमासि, अस्मिं द्विजकु-
६. ल वंलानिह्मवया श्रीपतिदेवस्य राबुर पुत्र देव भारो, तस्य पुत्र नरसिंह भालोसन स्वपति-
७. मा देव दयकं श्री ३ देगुरिदेवीसके भक्तयास्यं प्रतिष्ठा याङा दिन जुरो ॥ स
८. एव, स्वमातृ देवकीया तरि दशहराया मामन स्वपुत्र मनोहोरसिंह स्वपुत्री
९. रम्भावती ॥ थ्वें पेम्हस मूर्ति दयकं इष्टदेवता प्रितिन दयका जुरो ॥ थ्वह्मनं थ्व सा-
१०. रिक सेनकलसा गो ब्राह्मणादि पञ्चमहापातक राक जुरो ॥ निदान ग्रातसा जतो-
११. त्तर जुरो ॥ सिंहतोलन थ्वन तया जुरो ॥ सम्वत् ८०४ फाल्गुण कृष्ण सप्तमि जेष्ठा-
१२. नक्षेत्रे, व्यतिपातयोगे बुद्धवासरे मीनरासिगते सवितलि विछरासिगते चन्द्र-

१३. मासि, तस्मिन्दिने श्री ३ पूर्णचण्डिस्त नरसिंह भारोन, ओन कर्ष १ धरसि दु-
१४. न्ता थ्वया वरशानन ह्मं वरवनिह्मया श्रीवीरेश्वरजु उपाध्याय, ह्म १२ थंथुछेया प्रोहितया ब्रा-
१५. ह्मणी ब्रह्म भोज थ्वते चिन्ता याक सुप्रत सिंह मूला भारो जलस्याङ् सिंह मुल्मा भारो
१६. ... रानामसाहि भालो, ख्वात वाहा लक्ष्मन भावो थ्व पंह्मसन चिन्ता यायमार वोसाध-
१७. न हुन्हु मत छोयके कुडछि १ चेवन, थ्वन सन्ति कुन्हु ब्रह्म भोज नके मार ॥ थ्वते रोप-
१८. यातसा पञ्चमहापाप राक जुरो, रोप मयातसा उतोत्तर जुरो ॥ ॥ भुर्य ह्मं २ कसिं-
१९. ह तोरन दुवशे चोङ निदान यायय भार जुरो, दं १ देवस्त दक्षिणा जुछि निश्चा-
२०. व ब्रह्मभोजयांत वं १ दक्षिणा वियमार जुरो ॥ जो १ पूजाभर ॥ शुभमस्तु सर्व्वदा ।

बिचमा थपेको

२१. ....... या सालिकया सेल्होयात मो टं ८ श्री इष्टदेवता प्रीतिन दुन्ता ॥

★★★

(१७७)

## पाटन संखमोल सिकबहिल गोरखनाथस्थान सिंहको आसनको शिलालेख

### मूलपाठ

१. श्रवस्तु ॥ सम्वत् ८०४ पौषमास्य शुक्रपक्षः अष्टम्वाया तिथौ आदितवार
२. थ्व कुन्हु श्री ३ अष्टमास्तिकासके लोहोन सिंह्न ह्म २ दोहरपा ॥ दानप
३. .................... नरशीम जुजु श्री बुधसिजु, श्रीजगनाथजु श्री देव र ...... ..,

★★★



(१७८)

## पाटन चोबहाल आदिनाथको देवलको शिलालेख

### मूलपाठ

१. नमः श्री आर्यावलोकिश्वराय ॥ बोद्धिस
२. ................. महा कारुनिकाय । अन
३. ................. संमत ८०४ माघ शुक्ल
४. .................. सरे प्व नक्षत्रे सो
५. ..................... अंगवासरे ।
६. .......................गते चन्द्रम-

★★★

(१७९)

## थानकोट देकोटोल महालक्ष्मीको शिलालेख

### मूलपाठ

१. ॐ नमः शिवाय ॥ द्विलोचनां तिलोचनां शुभामर .......... गं व-
२. रं ॥ हरिस्थितांवृषास्थते, मुमांमहेश्वरं नमः ॥ यातेऽद्रेशर बिन्दु-
३. नागसहिते माभसिते मास्विने कदर्प्पस्य तिथौ दिने दयुसेनसो भं-
४. त्तिभ्रवान्याः शुभा शंभोः पुत्रसंमन्वितस्य विधिवत्संस्थापितासोत्सवं
५. नमो चिन्तरपर्णवेः ... तेल्लोकस्यवास्तव्यके । अतः परदेश भा-
६. षा ॥ संम्वत् ८०४ माघमासे शुक्रपक्षे त्रयोदश्यान्तिथौ मघानक्षत्रे शु-
७. कवासरे, थ्व कुन्हु ववुया निमिर्त्तिन रामचन्द्र दुवार भारो, पण्डव दुवा
८. भारो, अचिन्तन भारो, थ्व सोम समूहन उमामहेश्वर प्रतिमा स-
९. पन याङा दिन जुरो ॥ थ्व फलेख दुन्ताया वुलुंफलेर वस्व ३ तपुस्वा-
१०. त्व व्हवु रोव नसि २ थ्वतेया वलसानन दुथे दान याय यात भा-
११. द्रपद शुक्लया द्वाशी कुन्हु बजी कु ६ थो फं १ रा प्र ३ मतप्वात ५ पु-
१२. न्हिसि कुन्हु बजि कु ६ दं ४ धरिदं २ चाकु भाद्रपद कृष्ण पंचमी कु-

१३. न्हु पिण्डदान यात श्री ब्राह्मणजु श्रीब्रह्मणीजु, जोसिजु थोतेया-
१४. त दक्षिण दं १४ जुरो ॥ दिपदारस दयका चपार सेल्हो चि-
१५. न्ता गुथिस गेरकसण जुरो ॥ जजमान पण्डव दुवार भारो प्रभु-
१६. खन शिहवहरि दुवार भारो, गोपिनाथ भारो, विश्व दुवार भारो
१७. भवाणीशंखर भारो, क्षतराज भारो, थोतेस्न लोभानि पापानि
१८. मयास्यं चिन्दर पमार रोभानि यातसा पञ्चमहापाप ब्रह्म गो
१९. स्त्रीहत्या जुरो। सूर्यरामस्य पुत्र शिवकृष्ण, सहितन दिवं-
२०. गत वङस तया जुरो शुभ ॥ लिखित द्विजवल श्रीशिवरा-
२१. म ... शर्माण ॥ श्री २ योगनरेन्द्रमल्ल ि प्रजायस दयका-
२२. .............................

★★★

(१८०)

## पाटन भाजंगालको शिलालेख

### मूलपाठ

१. ॐ नमोः श्रीश्रीश्रीस्वेइष्ट भैरवायै नमः ॥ अर्थः स्वय्यतवाराहकल्पेत्यादि ॥ सम्वत् ८०४ फाल्गुण
२. कृष्ण ॥ द्वितीयान्तिथौ, हस्तनक्षत्रे, वृद्धियोगे, शुक्रवासरे ॥ थ्व कुन्हु कितिपुरि कुसिको रामकृष्ण भारो, थंकाडि मणि-
३. राज भारो गोष्ठि समुर्च्चयन, भाजनवोस पाषान देवल दयकं श्रीमत् श्रीश्रीस्वइष्ट मैलवीदेवत्व थाप्ना सुवर्ण्ण चुडामणि छा-
४. स्यं, दिन जज्ञे सपुर्ण्णाहूति याङा जुरो ॥ आव स्वइष्ट देवसके वोशाधन याय निमिर्त्तिन मार्ग्गशिल शुक्ल, पूर्ण्णमाशी कुन्हु श्रीच-
५. न्द्रगासपर्व्वदिने, स्व रामकृष्ण भारोन स्वहस्तेन निक्षपन दुन्ता, नख्वात वु रोव नसि २ जुक्व संप्रदर्त्ता भवति ॥ स्वदत्तं प्रदर्त्ताभ्वाजो ह-
६. रेत्सुरविप्रयो वृर्त्तिस जायते विट्भूवर्षानांमजुताजुतै ॥ भाषा थ्वते वुया वर्षप्रति वरसानन, वोसाधन याय, पूजाजोर सगुण पात २
७. पाचामृत दं २ ह्मं १ दक्षिना दं १ संख्वार फं छ न दुगे पाय जुरो। थ्वते हंङाव रको गुथि भारो भक्षा भोजन जुरो ॥ गुथिभारो,



८. जजमान रामकृष्ण भारो गोष्ठिस थंकाडि जुवह्म नको थंकाडि जुवह्ममाफल याङाह्म थ्वतेस्यन दुन्त तको प्रषंप्रति अविछि-
९. निस्त्रपं देवल निदान याङन निस्त्रपं यंजमाल ॥ मनिस्त्रपं गुथि ज्याङ रोपा-रोपयाकारे पञ्चमाहापातक राक ॥ निस्त्रपं हं-
१०. तोरे उर्त्तरत्वं जुरो ॥ थ्वतेया साक्षि श्री ३ चन्द्रसूर्य्यत्व जुरो ॥ पुन भाषा थ्वते हङान दश दाम टंका छि १ ले नके माल सेल्होयात
११. थ्व देव देवल सुनानं सेनक सनसा पञ्चमाहापतंक राक, श्रीइष्टभवाणिया कृदृष्ति राक, सर्व्वदा कल्यान मंगल ॥ शुभ ॥

★★★

(१८१)

## पाटन नबहाल भित्रको शिलापत्र

### मूलपाठ

१. ॐ नमः श्री ३ वोधिसत्वाय नमः ॥ श्रीयोऽस्तु सम्वत् ८०४ चैत्रमासे शुक्रपक्ष, पूर्ण्णमास्यां तिथौ हस्त-
२. ८०४ चैत्रमासे शुक्रपक्ष, पूर्ण्यमास्यां तिथो हस्त-
३. नक्षेत्र व्याघातजोगे शुक्रवारसले मीनरासि-
४. कन्यारासिगते चन्द्रमसि ॥ थो क्वास्यार छे ल्होङा
५. पूर्ण्णमासिशिवा दयकाव आवन चिस्य तया ॥ दान-
६. प्रति नकवाहारया ॥ श्रीधर्म्मराजजु, श्रीजित्पारजु,
७. श्रीदेवराजजु श्रीदेवजु श्रीचन्द्रजु श्रीविजयसिंजु
८. श्रीजुगिदेवजु, श्रीधमदेवजु, श्रीदेवमुनिजु, श्रीसजाजु
९. श्रीजयचन्द्रजु चिकितिजु भारो, मनिचधं गुकिन्ह
१०. सिँगु, दसिंधंगु, वरिराम धंगुरि ॥ थुति प्रमु-
११. खन, ननिचेक सम्भोहन, आवन चिस्यं ल्होङा
१२. जुरो ॥ थ्व छेस ति सु, सि, सो लोहो, थुति
१३. आदिपं तय मदु जुरो, सुनानं कचिंगर
१४. थनसा तरसा पञ्चमाहापातक जु-
१५. रो ॥ शुभमस्तु सर्व्वदा ॥ ॥

★★★

## (१८२)

# पाटन वलंखु गाउँ लाछिटोलको शिलालेख

## मूलपाठ

१. श्रेयोऽस्तु । सम्वत् ८०४ वैशाख कृष्ण ॥ द्वादश्यान्ती
२. थौ, रेवतानक्षत्र .................................वृहस्पतिवासरे ॥ थ्व
३. कुन्हु वलवु या राम ............................. मानसिंह भारो नि-
४. ह्म प्रमुखन पदुशिव गुथि भारो समोह-
५. न श्री ३ गणेश भट्टारकासके लोहोया सिंह
६. ह्म २ दयकाव प्रतिस्था याङान .............
७. चि विधिकल भारो .................. श्रकु
८. भारा ................. भारोः राम
९. वि- भारो .......................... निसेषर
१०. ............................ श दय्यका जु-
११. रो ......................... शुभ ॥ जुरो ॥

★★★

## (१८३)

# पाटन खाछेटोल पिंपबहिलभित्र क्वापाल देवताको सिँढीको शिलालेख

## मूलपाठ

१. ॐ नमो बुद्धायः ॥ श्रीयोऽस्तु सम्वत् ७८९ वैशाष शुक्र अष्ट-
२. मि कुन्हु ॥ श्रीणापिचन्द्र महाविहारस, श्रीगंधुर देवया फ
३. ससः पुर दयका जुरो । थ्वनरिः जलसि स्यङाव चोङ स-
४. जरसि ल्होङा जुरो ॥ थ्वनरिसः सिजर वाता दयका जुरो ॥
५. थ्वनरिः वहिरयाङ क्षदोसं, चरण सकरें जग्यया जु-
६. रो ॥ थ्वतिस्यङ, ल्होङावः दयका जुरो ॥ थ्व वेरस वहि-



७. रयाः थरपाः भिक्षु श्री दुइजु प्रमुषणंः मचातो सकरे
८. वासनकावः ल्होङा जुरो ॥ ॥ सम्वत् ८०४ आषा-
९. द शुकः षष्टंम्यायातिथौ ॥ थो दिन कुन्हु थरपा श्री
१०. दुइजु दिवगत जुव दिन जुरो ॥ थ्वयात नामन, आ-
११. गमस श्रीमत् श्रीश्रीचक्र सम्वर वजवारहि देव-
१२. देवि दयकं स्थापना याङा जुरो ॥ थो देव दयकुह्म
१३. ॥ श्वपुत्र भिक्षु श्रीशुषुरदेवजु, मातृ श्रीग्यानंमो-
१४. तिजु ॥ निह्म फुकिजनं थम माम ववुयातन दय-
१५. का जुरो ॥ शुभमस्तु सर्व्वदाकारः कल्यानम-
१६. स्तु ॥ शुभ ॥

★★★

## (१८४)

# पाटन न्हुफलेटोल उकुबहालभित्र सिंहका आसनको शिलालेख

## मूलपाठ

१. श्रीश्रीश्रीसाक्यमुणीस्तथागत प्रीति पूर्व्वन विधिथ्यं यज्ञ याङन प्रति-
२. ष्ठा याङान, थ्व सिंह नेह्म दुन्ता जुरो ॥ राजधिराज श्री २ श्रीनिवासमल्ल-
३. स्य विजयराजे जुरो ॥ यथाशक्तिथ्यं, संघप्रमुखन, जिङवाहार आदिन, वुंगया
४. सूयह्म नायक विज्याचकं थ्व सिंह दुन्ता जुरो ॥ जजमान साक्यं श दानपति
५. नाम श्री सरस्वतीनाम, पुत्र शिक्षमुनि नाम थ्वते प्रमुखन दुन्ता जुरो ॥
६. थ्वया पुण्यन । यतो शास्त्र ततो फलसिद्धि जुय मार ॥ थ्व वेरस, स्वगुरी राज्य

★★★

५. त्तरी मिर्ण्णरासिगते चन्द्रर्मासि चैते धर्म्मधातु दयकं प्रधिस्न याङा
६. दिन जुरो । थ्ववुया साकवंस श्रीवेषादेवजुन दयका जुरो तिरिमा
७. यर्या पूर्ण्णधरिमात्राजु पुत्र वषमात्रजु पुत्र चिकुतिजु पुत्र स
८. त मुनिजु थुनि समुहन दयका जुरो, कतिनि पुन्हिसि कुन्हु श्री-
९. ३ चैत्र भतार सके: चिकन प्र ? १ मत छोयकेमाल वोसाधन
१०. कुन्हु जई छोयकेमाल सप्वार कुल, १ पायंमाल, पंचामितं दा-
११. यकं पुजा यायमाल ॥ ॥ तेदोर बु कर्ष, १
१२. म्ह गुरवाहार जु म्हं मात्राजु ॥ ङ दुवाहारयान किनिजु
१३. नायकजु थुति विर्ज्याचकेमार श्रीधर्म्म जोतिजु श्री
१४. जयज्योतिजु ........ जमान ॥ श्रीचिकुति जु श्री सत्तमु
१५. न्ति जु श्री बज्राचार्य राजजु पुरतिर थिति

★★★

(२१८)

## पाटन यकटोल जीर्णबहालभित्र क्वापाल घरको भित्ताको अभिलेख

### मूलपाठ

१. श्रोयोऽस्तु सम्वत् ८१३ चैत्रकृष्ण सप्तम्याया-
२. न्तिथो, उत्राखाढनक्षेत्र, साध्वयोज्ञ, आदित्र-
३. वा ..... मेषरासिगत सवित्री मकरासिगते च-
४. न्द्रमसि ॥ थ्व कुन्हु ज्यलवाहार चेकन अतवन
५. चिङाव प्रतिथा याङा दिन जुरो, शीजिनिदेव
६. षुरमयी काय; श्रीअवलदेव: मनहोराम-
७. रा: थ्व माजरचात: फर मुना: धनकोपचा-
८. के यात मारको: क्वाराक्य वसनिमार
९. चडल चिर कलपा छय चण्डिका म-
१०. यीन: चेकं अतवन चिङान जुरो: केत-
११. कि स्वान छफोर: चाम्ह लछङा-
१२. का जुरो: स्वम्हनं स्यनकलशा ..... नं ल
१३. क चलक वा तसा: पंचमहापाप ला
१४. ............ शुभमस्तु ॥

★★★



(२१९)

## पाटन नखु वैष्णवीदेवीमुनि मूल बाटोको भुइँमा रहेको अभिलेख

### मूलपाठ

१. श्री ३ वैष्णवी देव्यै नम: ॥ महद्वावानांरणेदारुणानांप्रचण्ड
२. प्रसन्नाननायादि शान्ति: ॥ त्रिलोकेश्वरी सा जगल्लोकमाता महा-
३. वैष्णवी यं । सदा यातु लोकान ॥ ॥ श्रेयोऽस्तु ॥ नेपाल सम्वत् ८१४ वै-
४. शाखमास शुक्लपक्ष सप्तमी तिथि पुष्यनक्षेत्र शूलयोग शनैश्व-
५. वार थ्व कुन्हु वैष्णवी परमेश्वरी प्रीतिन, वंलात्वार गृहनिवासि
६. देवराम जुया मध्यम पुत्र भवाणीशङ्करजु, पत्नीमहालक्ष्मी
७. देवी उभयसन थ्व पलि दयकाओ प्रतिष्ठा याङाजुरो ॥ थ्व प-
८. लि दयकाया वर्ष प्रति बोसाधन याय माल: दिन मार्ग्गशिर
९. पूर्ण्णमासी कुन्हु जुरो ॥ रोव ४ ओरु वु ॥ पुन रोव ३ स
१०. राव गाव थ्वने रासि वुया ओरसानन् वोसाधन कुन्हु
११. दानपत्रस चोडथे यायमाल ॥ थ्वया चिन्ता याक: बुवा-
१२. हारया बज्राचार्य श्रीद्विज श्रीसर्व्वसिंजु, श्रीधनदेवजु,
१३. श्रीविश्वमुनिजु, थ्व पेम्ह जुरो ॥ जाग़रया नरसिं कुम्हार
१४. ज्याल वाहारया मालसिं धंगुर थ्वपिं, नेम्ह दयकेमार
१५. मो टं १ दय दसं । ले नकेमार सेल्हो यात ॥ दानपत्र स
१६. वोथे मयातसा वैष्णवीया कुदिष्टि पंचमहापतक ला-
१७. क जुरो ॥ दानपत्रस चोङ थे यातसा गो ब्राह्मणा-
१८. दि भक्षा पुंण्य पुण्येन श्री ३ वैष्णवी देवीया सुदृष्टि लाक
१९. जुरो ॥ अनेन पुण्येन श्री ३ वैष्णवी प्रीणातु ॥ शुभं ॥
२०. थ्व पूर्ण्णमासी कुन्हु लुया श्रीभैरव मूर्त्तिबोयमार

★★★

## (२२०)

# पाटन नबहिल टोल यता बहालभित्र क्वापा देवताको भित्तामा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय: ॥ ॐ नम: श्रीश्री(शा)क्यसिंह: वदे श्रीशाक्य
२. सिंह: समरवलहरं मोक्ष हेतो नरानां: श्रीभारं जो-
३. ररूप: मभयवलकरं: पद्म पतायताक्ष: श्रीमत् दिपं-
४. करो वै जिनगुणविषत्रैमं, सर्व्वसत्वा नमामि:श्रीवोतु
५. सम्वत् ८१४ फाल्गुण शुक्र सप्तम्यायांतिथौ, राणिही नक्ष-
६. त्र विस्कभयोगे, बुधवासरे, थ्वो कुन्हो, श्री ३ हेमापुलिमा-
७. हाविहारम शिराया सिह म्ह २ थापना याङाया: दानपति
८. नैचा स नामसँगति वोङयगीस्यन थापना याङा जुरो दान-
९. पति साक्यवंस, मजुसिङ, पद्मदेव शाक्यमुनि, पद्मसिं-
१०. ङ भागीसिङ भारो, हाकुदेव भारो, सिद्धिराम भारो, हरि-
११. कृष्ण भारो, थुति समोहन थो सिंह थापना याङा जुरो ॥
१२. रुवाहार: वज्राचाय: धमजोति जुरो: थोवुरस राजा
१३. श्री ३ योगनरेन्द्र मल्लजु २ जुरो: ॥ शुभ ॥ थो सिंह ज्याङाया
१४. चिन्तायक: विश्वसिङ भारो: ॥ प्रमुख मजुसिङ भारो: शुभ ॥

★★★

## (२२१)

# पाटन कपिंदोटोल कालभैरवको देवलको सिँढीमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नम: श्रीमहाभैरवाय ॥ ३ ॥ श्रेयोऽस्तु ॥
२. सम्वत् ८१४ चैत्र कृष्ण ॥ त्रयोदशी प्र चतुर्दशी ॥ उ



३. त्र भद्र प्ररेवतीनक्षेत्र ॥ बृहस्पतिवार ॥ थ्व कुन्हु श्री-
४. मत श्रीश्रीमहाभैरव भट्टारकासके खपिनिछे जित्र-
५. सिंह प्रजापति मालसिंह धंतुलि पुनसिंह धंतु-
६. लि मालसिंह भावो वदे भावो मनिसिंह भावो
७. वासिंह भावो पूनसिंह धंतुलि मनिसिंह धंतु
८. लि कृष्णराम भावो वूसिंह भावो छे ज्यायवृ-
९. ह भावो भागीराम लं माहान देवसिंह भावो
१०. नयनसिंह भावो वदे भावो भागीसिंह भावो
११. धर्म्मसिंह भावो मानसिंह भावो माधवसिंह
१२. भावो मानसिंह धंगुलि थ्वते समूहन चतु-
१३. र्दशी सेवा दयकं थ्व चपाड लिवन छे दङा-
१४. व प्रतिस्था याङा दिन जुरो ॥ यया शास्त्रोक्त
१५. फल मस्तु ॥ शुभ ॥

★★★

## (२२२)

# पाटन तापाहिटी तीनधाराको भुइँमा रहेको शिलालेख

### मूलपाठ

१. सम्वत् ८१५ चैत्रमासे शुक्लपक्ष न्दि-
२. चतुर्दश्यान्तिथौ, कुजे दिने अस्मिने
३. अमात्ते सिद्धिरामेंण लिषित्वा हरि-
४. राम नामे नन्दुराम नामे एते कत्रय
५ भारो प्रमूखन चिन्ता याक जुरो
६. शुभ ॥ रामेश्वर भारो शह ॥

### अनुवाद

ने.सं. ८१५ (वि.सं. १७५२) चैत्र शुक्ल चतुर्दशी मंगलवार, यस दिन अमात्य सिद्धिरामले यो लेखाएका हुन् । हरिराम, नन्दुराम यी भारोहरू प्रमुख भई चिताई गरिएको हो । शुभ । रामेश्वर भारो पनि चिताइदार हुन् ।

★★★

(२२३)

## पाटन गा:वाहाल टोल मिल्कुबहाल भित्र क्वापाल देवताका घरमा रहेको अभिलेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ८१५ आश्विन
२. मास्य शुक्लपक्षे ॥ द्वादश्यान्तिथौ
३. ॥ पूर्व्वभद्रनक्षत्रे ॥ धुवयोगे ॥ बुढवा-
४. सरे ॥ तास्मिदिन ॥ एषालंषु दुंथुवंलानिम्हं गृह ॥
५. वासित धन्वं तरिभागिसिंह वैद्य भारो सेन्न दुतां श्री ३ भैरव कु-
६. टि श्री ३ पंचवक्त चैत्र वाहरस पाषान ल्वलया त्वरन जुछि १
७. दुंता दीन जुरो शुभं ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ८१५ (वि.सं. १७५२) आश्विन शुक्ल द्वादशी बुधवार पूर्व भाद्रनक्षेत्र, धुवयोग, त्यस दिन ईखालखुभित्र वंलानिम्हं घरमा बस्ने धन्वन्तरि भागिरिंह वैद्य भारोले श्री ३ भैरव .... श्री ३ पन्चवक्त्र, चैत्यभट्टारकमा ढुंगाको एक तोरण चढाए ।
शुभ होस् ।

★★★

(२२४)

## ल.पु.ई. न्हुकले टोल उकुवहालभित्र क्वापाल देवताको घरको भित्तामा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीशाक्य मुनिय ॥ मुनिन्द्रे श्रीधन श्रीसान



२. शाक्य सिंहो गुणोदधि क्षेता होय विहारेत स्थो वेवर्ग-
३. नि सह ॥ श्रीयोऽस्तु सम्वत् ८१६ माघ कृष्ण चतुर्य्याती-
४. थौ चित्रानक्षत्रे वुधवासरे तदिन श्रीखद्र वशुर्ण-
५. महाविहारे ॥ श्रीसाक्यमुनि वुधमतारकस्य ॥ चित/वि
६. याङा ॥ प्रतिष्ठा अहोरात यगे याङ ॥ समस्त
७. यज्ञराज सतत आदिनं सवोध याङ धुनका जु-
८. रो ॥ थ्वतेया दानपति ओकुवहिरिया धर्मा आल्मा ॥ सा-
९. ........... श्रीपुत्रराजजु । तस्य भार्ज्या सुमन द्विती भार्ज्या
१०. ........... पुत्रयज्ञपतिराज द्वितीय पुत्र रक्षपति
११. राज.......... प्रथम पुत्रिधर्मवत्ति । रक्षवति ग्यानवति
१२. थुति समुहन अहोरात्र यग्य याङ धुंगो जुरो
१३. थोतिया गुरु वाहार जयजोतिजु ॥ ओपाध्या वु-
१४. वाहारया हाकुदेव थरपा महाधया ध-
१५. नजु ॥ थ्व कुन्हु जु ॥ शुभ ॥ मस्तु सर्व्वदा
१६. ........... जनधनस व्रिधिरहनु ॥

★★★

(२२५)

## ल.पु.इ. नबहिल टोल न्यापाचोकभित्र उत्तरपट्टि चिबहालमा रहेको शिलापत्र

### मूलपाठ

१. ॐ नमो बुद्धायः श्री ....... सम्वत् ८१६
२. माघ कृष्ण ......... तिथौ ............स्वाति नक्षेत्रे
३. धुव जोगे ......... वृहस्पवा-
४. सरे कृमरासि गते तुररासी
५. गते चन्द्रमसि ॥ थ्वते ....... वुरा
६. याङा दिन जुरो ॥

## अनुवाद

बुद्धलाई नमस्कार । ने.सं. ८१६ (वि.सं. १७५२) माघ कृष्ण ......... बृहस्पतिवार स्वातिनक्षत्र ध्रुवयोग, कुम्भराशिमा सूर्य तुलाराशिमा चन्द्रमा भएको बेला ....... यो सम्पूर्ण पारियो ।

★★★

## (२२६)

# पाटन सिबहाल जाने बाटोको शिलापत्र

## मूलपाठ

१. नमः श्रीगणेशायः नम ॥ सम्वत् ८१६ माघ शुक्ल
२. त्रयोदसि पुष्यनक्षत्रे सौभाग्ययोगे बुधवार-
३. सरे कुम्भरासिगते सवितरि कर्क्कटरासिगते
४. चन्द्रमसि थ्व कुन्हु श्री ३ गणेशयाके देवर द-
५. यकाव पाषाण ध्वजारोहन यास्य .......
६. नयज्ञ यास्यं प्रतिष्ठा याङा दिन जुरो श्री ३ रा-
७. जा ......... श्री ३ योगनरेन्द्रमल्लस विजयराजे
८. वेरस दानपति श्रीकच्छवाहारया शाक्यवं-
९. श श्रीपुनसिंजु श्री .... देवजु श्रीपुनचन्दजु
१०. श्रीमत्र दानसिंजु श्रीस जुरो श्री ....... सि
११. जु श्रीधक्ष .......... जुग्य ............
१२. पृक्षति ................ समुहन ..........कुन्हु
१३. ........................

★★★



## (२२७)

# पाटन क्वबहाल टोल बहालभित्र गणेश देवल मुनि पाटीको भित्तामा टाँसिएको अभिलेख

## मूलपाठ

१. श्रीनारायणाय नमः । यस्य हस्ते गदा चक्रं गरुडो
२. यस्य वाहनः स मे करोतु कल्यानं, पद्मनाभो
३. जनार्दनो ॥ श्रेयोऽस्तु ॥ सम्वत् ८१७ चैत कृष्ण । ए-
४. कादशी सत भीष नक्षत्रे शुक्लयोगे ॥ बृहस्पति-
५. वासरे ॥ थ्व कुन्हु ओ वाहार लाछे यंता सवतल त-
६. तलभु, जओ १ कीलकास्यं फले कवडं स्व ३ दय-
७. कं पश्चिम कवडस पिता दिवंगत गो-
८. पारसिंह भारो ...... नामन श्री ३ नारायण
९. मूर्त्ति तस्य, दथ्वकवडस श्रीविष्णुप्रीतिन श्री ३ वि
१०. ष्णुमूर्त्ति तस्य पूर्व्वकवडस श्री ३ गणेशमूर्त्ति तस्यं
११. थ्व संवत्सर लोहो तस्यं दिन यज्ञ यास्यं प्रतिष्ठा
१२. याङा दिन जुरो । दानपति वंबाहाल ननि य-
१३. तागृह । ललितसिंह भारोसन, थ्व फले-
१४. दयकं श्रीदेव तया जुरो ॥ वर्षवन्ध यात आ-
१५. दुन्ता अहोरात्र ....... टंका २५१ थ्वतेया
१६. वरसानन ...........
१७. ..........................

★★★

## (२२८)

# पाटन थवबहाल टोल ॐबहालभित्र गणेशका देवलमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीगणपतेये ॥ श्रेयोऽस्तु ॥ सम्वत् ८१७ चैत्र कृष्ण अ-
२. मावाश्यान्तिथौ ॥ अश्विणीनक्षत्र ॥ प्रीतियोगे आदित्यवासरे ॥ थ्व कुन्हु
३. श्री ३ सूर्य्यग्रास पर्व्वदिन वंवाहार ननि वंतागृह रामकृष्ण भारोसन वंवाङ-
४. रला छेंस चोग्व श्री ३ गणेश भट्टारकासके स्वतपलि देवल दयकं गुजुरि स्वान
५. माल छत्र, छत्रयोस चूडामणि तस्यं प्रतिष्ठा याङा जुरो आय दुंता थ्वतेस लिक्व-
६. स वु रोव नसि त्या २ प्यंप्वडदूं वु रोव छि १ जव स्व ३ थ्वने खडवुयां अर्दमाग जुरो
७. देवया लिवने पाताल भुजव २ दुंतां, थ्व वुया वरसानंन जेष्ठ शुक्ल द्वाद-
८. शी कुन्हु होमयाङ देवपूजा याङ वो साधन (मा) ल, श्रीमण्डि छेया भाजु म्हं
९. ...य जुम्ह १ थंवुया श्रीभीम ब्राह्मणजु स्त्री पुरुष म्हं २ जोसि म्ह १ थ्वते पू-
१०. जा याङ भोज विज्याचके माल पालिद्वाहाय जवफले स्वंकवल वल-
११. छेस वस्यन ङाव, थ्वगुथिन ल्होन माल, थ्वतेया चिन्ता याक गोष्टि दा-
१२. नपाति रामकृष्ण भारो, देवीदास भारो, तुरसीराम भारो, वेखा-
१३. राम भारो, पूयागराम भारो, पूर्ण्णसिंङ भारो चन्द्रराम भारो
१४. थ्वतेस थ्व चोस्यं तक्व अविछि याङन निस्त्रये माल लोभ याका-
१५. ले ................ राक जुरो। लोभ मयाकले-

### अनुवाद

श्रीगणेशलाई नमस्कार। कल्याण होस्। ने.सं. ८१७ (वि.सं. १७५४) कृष्ण अमावस्या आदित्यवार अश्विनीनक्षत्र प्रीतियोग, यस श्री ३ सूर्यग्रहणको पर्व दिनमा, बंबहालननी वंतागृहका रामकृष्ण भारोले ..... मा रहेका श्री ३ गणेश भट्टारकलाई तीनतले देवल बनाई गजुर, फूलमाला, छत्र, छत्रमाथि चूडामणि राखी प्रतिष्ठा गरियो।

आयस्ता चढाइयो -- सलिक्व खेत अढाई रोपनी, प्यपङद्व खेत एक रोपनी तीन जवा। यी दुइ खण्ड खेतको आधा भाग चढाइयो। देवतालाई पछाडि पाताल जग्गा दुइ जब पनि चढाइयो। यी खेतको आयस्ताले ज्येष्ठ शुक्ल द्वादशीको दिन होम गरी देवता पूजा गरी बोसाधन गर्नु पर्छ।



श्रीमण्डिछेंका - - भाजु। एक, थंवूका श्रीभीम ब्राह्मणजु ससपत्नीक दुइ जना, जोशी एक जना, यति जनालाई पूजा गरी भोज खुवाउनु पर्छ। पालिद्वाहाको दायाँपट्टि तीन कवलको पाटी - - यस गुठीले जीर्णोद्धार गर्नु पर्छ।

यसका हेरचाह गर्ने गुठियार - दानपति रामकृष्ण भारो, देवीदास भारो, तुलसीराम भारो, वेखाराम भारो, प्रयागराम भारो, पूर्णसिंह भारो, चन्द्रराम भारो, यिनीहरूले यहाँ लेखिए बमोजिम अटूट रूपमा चलाउनू। लोभ गरे -- - पाप लागोस्, लोभ गरेनन् भने - - पुण्य होस्।

★★★

## (२२९)

# पाटन कपिंदोटोल कालभैरवमुनि चिबहालमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमः धर्म्माय: ॥ श्रेयोऽस्तु सम्वत् ८१७ माघ कृष्ण अष्टम्या-
२. तिथौ अनुराढनक्षत्र व्याघाटयोगे, यथाकर्ण मुहुतरे वृहस्प-
३. तिवासर कुम्हरासि सवितरे ............विछरासि चन्द्रमसि ॥ थ्व कुन्हु
४. दिन यज्ञ याङ ॥ हव दस्यं चोङ ॥ चैत्र भडाद ............ प्रतिष्ठा या-
५. ङा दिन जुरो ॥ थ्वतेया दानपति धर्म्म गोष्ठि ............ त्वार यन्ता
६. श्री य ..............नामन थ्व जजमान ........... य निमि-
७. त्तिन ॥ जेष्ट य .......... सङ ............. आवो .............ङ
८. भावो ॥ .......... भार्या ............................... व
९. भि ............................................ सि ॥ मा
१०. रसि पमा ........................................ जग (त) सङ
११. भावो ॥ रामसिंङ भाव ॥ ......................... सिङ ..............
१२. व वले .................................. सिंङ भाव ॥
१३. मयनसिंङ भाव ॥ रत्नसिंङ भाव ॥ पू(र्न्न) सिंह भाव ॥ वि-
१४. श्वराम माहान ॥ धर्म्मसिंङ भाव ॥ बाबु भाव ॥ भुपुराज भा-
१५. व ॥ रत्नसिंङ घगुरी ॥ न्हव भाव ॥ जिवाराम भाव ॥ सत्य मा-
१६. हान छेहमोया भाय्र्या हरकि पुत्र जुगी भाव ॥ शुभकल्प ॥

★★★

(२३०)

## नखुयप्याको वैष्णवीदेवीका चौघेराभित्र सिंहमुनि रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीवैष्णवीयः ॥ वैष्णवीस्यामवर्णा ............... श्रीइति-
२. ................. देवी नमामि गरुडासनी । श्रेयोऽस्तु सम्वत् ८१७ माघ
३. कृष्ण द्वादसि उत्राखाढ नक्षत्र सोमवारे थ्व कुन्हु श्री ३ यं-
४. वया वैष्णवीदेवी प्रमुखन अष्ट पीथ सेवा दयकाव हाकु-
५. मोहवन चिंडा आग्निकर्ण मण्डल पाता पु २ ध्वज थ्व-
६. ते दोहरपा जुरोः थ्वतेया गुरु भराड वैद्य श्रीभेन्त दे-
७. वजु दानपति सकले बज्राचार्य वुबाहाया जेष्ट श्री
८. सर्वज्ञजु .......... श्रीधर्मसिरि श्रीपरमानन्द श्रीध-
९. नमुनि धर्मजोति श्री धनसिं श्रीवजण्णाणि श्रीधर्मसि
१०. श्रीपुनमुनि, श्रीविश्वसिं श्रीअंवरसिं , श्रीजय श्रीश्रीधंसि
११. ..................... न्या अमिसिं बाबु रामसिं बाबु ......... थ्वंते
१२. ................ अयुताहुति यज्ञ याङ प्रतिष्ठा याङा जुरो ॥

★★★

(२३१)

## पाटन चाकबहाल टोल ज्यावाबहिलमा रहेको शिलापत्र

### मूलपाठ

१. ॐ नमः श्रीचण्डिकायै ॥ वोभारीमयुरना-
२. रुधा रक्ताङ्गीउक्तवासनी ॥ शाक्त्याक्षविन्दु
३. मुद्राश्व, कोमारी च नमोऽस्तुतु । श्रेयोऽस्तु
४. सम्वत् ८१७ पौष मासे कृष्णपक्ष त्रयोदश्या-
५. न्तिथो मुरनक्षत्र व्याधातयोग आदित्यवार
६. थ्व कुन्हु श्रीलोमारी श्रीविघ्नेश्वर प्रीतिन व



७. ज्ञ याङन प्रतिष्ठा याङा दिन जुरो ॥ माहान
८. विल्हाम भावो, पुत्र सिद्धिरामं प्रशुराम, पौत्र कृ-
९. ष्ण राम पुत्री सरसुति थ्वतेसंभत जुस्यं दोह (रपा)

### अनुवाद

चण्डिकालाई नमस्कार । मयूरमा चढेकी, रातो जीउ, रातो वस्त्र भएकी, शक्ति अक्षमाला विन्दु मुद्रा भएकी कुमारीलाई नमस्कार ।

कल्याण होस् । ने.सं. ८१७ (वि.सं. १७५३) पौष कृष्ण त्रयोदशी आदित्यवार मूलनक्षेत्र व्याघातयोग, यस दिन श्रीकुमारी र श्रीगणेशलाई प्रसन्न पार्न यज्ञ गरीकन प्रतिष्ठा गरियो । माहान विल्हाम भावो, छोरा सिद्धिराम, परशुराम, नाति कृष्णराम, छोरी सरस्वती, यिनीहरूको समेत संमतिले चढाइएको हो ।

★★★

(२३२)

## ल.पु.ई. हरिसिद्धि गाउँ पाकोटोल हरिसिद्धि देवीका देवलमा रहेको शिलालेख

### मूलपाठ

१. स्वस्ति श्रेयोऽस्तु सम्वत्सर ८१७ मार्ग्गशिर शुक्ल पूर्णामास्यान्तिथौ रोहिणी न-
२. क्षेत्रे ॥ साध्य योगे शरैश्वल वाले ॥ थ्व कुन्हु श्री ३ हरसिद्धि त्रिशक्ति देवी प्रीति
३. न ॥ श्रावण याङ देवर धरम समुहन किसियादन्तस
४. सम्वत्सरलोहोदयकं दुन्ता जुरो ॥ थ्वतेया चिन्तायाकं
५. धारासिंह भावो ॥ सिद्धिराम भावो धरमसिंह भावो ॥ जुमि भावो
६. वो जय मयि ॥ थ्वतेया नमन चिन्तायाङाकुटि धन मद र जु ....... सम्व-
७. त्सरं कुत जुरो ॥ धरमसि खरे कु । थ्वते ॥ ......... मतावो
८. भावो ॥ विश्वदेव भावो ॥ वीराम भावो ॥ जुगिराम भावो वयकुण्ड रा-
९. म भावो ॥ अदिराम भावो ॥ देवसिं जयराम भावो ...... राम भावो
१०. कमरसिंह भावो कमरदेव भावो जयकृष्ण भावो ...... मुहेश भावो
११. वावुदेव भावो ....... भावो मंह भावो वि ......... ॥ धनदेव
१२. भावो ॥ विश्वनाथ भावो ॥ गुमिसिंह भावो ॥ भागीराम भावो तुकुरा भा-

१३. वो ॥ याराम भावो ॥ कमरा भावो ॥ भागीराम भावो ॥ भामत भावो ॥ गुहसि
१४. हि भावो ॥ वेखाराम भावो ॥ पनिचा भावो ॥ वमराम भावो ॥ अधुराम
१५. भावो ॥ अमिसिंह भावो ॥ शकुरिदेव भावो ॥ धर्म्म ......... म भावो ॥ मवा भा-
१६. वो ॥ दिन भावो ॥ रामकृष्ण भावो ॥ मोहसिंह भावो ॥ धनराम भावो ॥
१७. थ्वते समोहसन श्री ३ इष्टदेवता प्रीतियाङा जुरो ॥ शुभ ॥

***

(२३३)

## पाटन चापागाउँ झापलापति टुटेधारा मुनि रहेको पाटीको अभिलेख

### मूलपाठ

१. ॐ नमः श्रीमधुसूदनाय ॥ शंखनचक्रदापद्मधारिणाम्मधु-
२. सूदन । नमानि सततभक्त्यासंसाराण्णवतारणं ॥ यातेडव्दें गज-
३. चन्द्रनागं गणितभार्ग्गडसितेचाडनलेतिथ्यां भेमृगशीर्षके भुगु-
४. दिने योगे च साध्ययुते । पित्रर्थ ति दिवंगतस्य ललितं मोक्षायतन्मड
५. पं तेश्चाकारि मुकुण्डनामस्वतितुर्लेवादिभिःपुत्रकैः ॥ ॥ स्वस्ति ॥
६. ८१८ मार्ग्गशिर कृष्ण पतिपदि तिथौ ॥ मृगशिरनक्षत्रे ॥ साध्ययोग
७. वासरे ॥ थ्व कुन्हु वा वादेश चंपाल लिपछेंया ल्पंवा भारो वासिंह भारो
८. पभाराम भारो, देवराम भारो, थ्वते प्यम्हं फुकिजन थ्वक्वु मुकण्ड भो-
९. रो वलनामन थ्व कले दयकं ववुया नामन श्रीमधुसेदनदेव माम-
१०. पनि न्हथु, सरस्वती मयी भरी लिथुः मणिकर्ण्णिकायमी मरि थ्व निम्ह-
११. स्त नामन पतिमा देव देवी श्वम्ह तस्यं फले प्रतिष्ठा वाङा वर्षदिन जुरो
१२. थ्व फले यात आय प्रत्याय दुंता दानपत्रस चोडथ्यं पनशर वुया वर्ष-
१३. प्रति वरसानन वैशाख कृष्ण दशमी स एव मुकुड भारो दिवंगत जुव
१४. कुन्हु श्राद्ध याङव ब्राह्मण जुम्ह २ ब्राह्मढीजुम्ह २ जोशि म्हं १ आचा-
१५. र्य्य म्हं १ थ्वते पूजन याङ दक्षिणा विस्यं भक्षा भोजन यातके मार जु-
१६. रो शाखा प्रशाखाहीन जुकाले गोग्रास पूजा याय जुरो ॥ ॥ चैत्र
१७. शुक्ल चतुर्दशी कुन्हु, इन्द्रयात्रा स्वान छा कुन्हु थ्व निधातसं, थ्व फ-



१८. लेश देव देवी पूजा यास्य दानपत्रस चोङ थ्यं निपोलं उतिधोर
१९. दान पिते मार जुरो ॥ ॥ भूयः स एव माम ववुयात नामल जल-
२०. धेन दयकं, इतको वु रोव पित्या ४ दुंता जुरो, लंख थङ म्हया-
२१. त जाके फं ६७ वर्षप्रति विय मार परशेष गुथिभारो पनिस्त
२२. भक्ष भोजन यात जुरो फले, जल धेने स्यल्हो याय मार जुरो ॥
२३. थ्वतेया चिंता याक स एव, दाताम्ह ४ स्वदगात अनन्त राज भा-
२४. रो यंकुत्वार पंडु भारो, थ्वते गुम्हसन अविछिन्न याङ वर्ष प्र-
२५. ति निष्ठरपेमार जुरो ॥ स्वदत्तं परदत्तं वा योहरेन्सुर विप्रयो-
२६. ः। षष्टी वर्ष सहस्त्राणि विष्टायां जायते क्रिमिः ॥ चोस्यं तक्वयाकाले उ-
२७. तरोत्तर धर्म्म लाक जुरोः दुर्गाराम भारो, गंगाराम भारो स्तिरि महेश्वरी
२८. भरि नायनि मयी, दुतिय भरि, रामेश्वरी मयी तित्तिय भरी विसेश्व
२९. रि मयी ॥ थुति समोहन जुरो शुभमस्तु ॥ ॥

***

(२३४)

## ल.पु.ई. सलुमोल देउननि टोल वैष्णवी देवीको देवलमा रहेको शिलालेख

### मूलपाठ

१. श्रीवैष्णव्यै नमः ॥ ब्रह्मणी प्रमखै र्ज्जणैः परिवृता ताक्षर्यासने संस्थिता रक्षो दैत्यविप-
२. क्षपक्षसकला-हत्वाहवे स्मावति । इन्द्रादीन् विवुधान् सुधानिधिमुखीदेवी शि-
३. वं वैष्णवी, दुर्व्वाश्याम तनेस्तनोतु सततं सा नो तुला चातुलं ॥ ॥
४. भवनं च देव्याः कैलाशतुल्यं कलशैः प्रयुक्तं । सन्तयर्य देवान् सकलांश्च वि-
५. प्रान्, चक्रे प्रतिष्ठा मिरूपुण्यकल्पः ॥ अतष्परं नेपालभाषा ॥ दिवंगत पितृ-
६. पात्र वंश रावुत्त भवानिशंकर वावुन श्री ३ वैष्णवी भट्टारकाया देवल
७. जीर्ण्णोद्धार याङ सुवर्ण्णकलश ध्वरा वरोहण याङ तयास ॥ श्रेयोऽ-
८. स्तु ॥ सम्वत् ८१८ आषाढशुक्ल । द्वितीयायान्तिथौ ॥ पुष्यनक्षत्रे । वज्र-
९. योगे ॥ वुधवासरे ॥ थ्व कुन्हु कोनिम्ह लंयोता गृहपुत्र पात्र वंश रावुत्त गंगा शं-
१०. कर वावुन देवल जीर्ण्णोद्धार याङ स्वत पोतलल दयकं सुवर्ण्णकलशछत्र

११. ध्वजारोहण प्रतिष्ठा दिन जुरो ॥ छुल्कवन वुरो छ पद्मा दहसिवुरो १ थ्वते
१२. वुया वर्शाणन थुव प्रतिष्ठा दिन कुन्हु दुगुम्हं १ दय, भोजन जालूड
१३. न श्री ३ वैष्णवी देवी भट्टारका वर्षप्रति पूजा यायमाल ॥ श्री ३ वूंग देव-
१४. या ष्वाखिस शुकि २ तन्यमाल वर्षप्रति ॥ पूजा वाश्चिमडिछेया श्रीकृष्ण
१५. राजजु ॥ दैवज्ञरायजु ॥ धन आचार्य्य ॥ थ्वते विज्यायके भायेके माला । थ्व
१६. तेया चित्कायाक, सतुग्ल देशया हाकु भारो, सुखुरि भारो, यलदेशया
१७. वरिभद्र भारो, विष्णुभर भारो, थ्वतेसन रोप मयास्यं अविछियाड चिन्ता
१८. यायमाल ॥ देवलस वर्षप्रति सेल्हो यायमाल ॥ थ्व देवलस स्वम्ह
१९. सनं कचिंगल थडन सेनकलसा, गोब्राह्मणादि पंचमहापात-
२०. क लाक जुरो ॥ यथा शास्त्रोक्त प्राप्त मस्तु ॥ ॥ शुभमस्तु ॥

★★★

(२३५)

## ल.पु.ई. कुम्भेश्वर आलुको गणेशस्थानको पछाडि भत्किएको पाटीमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमः श्रीगणेशाय । सम्वत् ८१८ ज्येष्ठ शुक्ल अ-
२. ष्टम्यायांतिथौ पुष्य नक्षेत्र वुधवासरे थ्व कु-
३. न्हु प्रतिष्ठा दिन जुरो दान-प्रति येषा छे खंडचोक
४. नि वंतागृक सत्यराम भारा, स्नी अन्नपुर्ण्ण थ्व
५. स्त्री पुरुषसवन, थ्वपरि दक्षिण सो चकं कवर ४
६. श्रीगणेश प्रीतिन दयका जुरो ॥ थ्वते सत आय-
७. चैत्य भराड गुथिस पिकास्यं, कतिं पन्हि स थ्वते
८. सति कुन्हु चैत्य भराडस च फ छास्यं आरको श्री
९. थान गणेश पुजायाड्ग वर्ष वंधन यायमार
१०. थ्वतेया चिंतायाक गुथि भारो सत्यराम भारो
११. ज्येष्ठ पुत्र शंखराम भारो मध्यम पुत्र शिवनारा
१२. यन भारो कनेष्ठ पुत्र शीताराम भारो वृतो पो-
१३. रया मणिरत्नजु इनायल न्हेया शीरपति जु-



१४. थ्वतेसने थ्व चोस्यं तको निस्त्रपं यायमार
१५. मारनास्यं गुथिन चिंता यास्यं, ल्होनेमार शुभ ॥
१६. थ्व सनानं स्यन करसा पंच महापाप राक जुरो ॥

★★★

(२३६)

## ल.पु.ई. बुङ्गमती गाउँ यताजोटोल मत्स्येन्द्र बहालभित्र ढोकाको दलानमा रहेको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ८१८ चैत्रादि शुक्लपक्षे पूर्णमसि
२. हस्त नक्षत्र ध्रुवजोग ॥ जथाकर्ण्ण मुहुटको बुधवारसरे
३. मीन लासिगत्य सवितरि कन्यरासि गत्य चन्द्रमसि शुभ ॥
४. तसमी दीने दानपटि वुंगदेश देवरननी योकुदी गृह-
५. नोसिं मुल्मी भारो कृष्णराम मुल्मी श्रीहरि मुल्मी हरी
६. कृष्ण मुल्मी कन्याणसिंह मुल्मी रामकृष्ण मुल्मी ॥
७. भोव मुल्मी, विश्वरं मुल्मी विश्वसिंह मुल्मी शिव प्रशं-
८. क मुल्मी रङ्गाराम मुल्मी थ्वते प्रमुष यथा क-
९. फरे दयकं चिन्ता याङानं थ्वते प्रमुष पूर्ण जिर्ण्ण-
१०. उधापं फरे हलो स्यं तया जुलो, थ्वते चिन्तायाक दा-
११. न पतिथ्वही जुलो ॥ भाषा फा गुणी कृष्णया च-
१२. तुर्दशी कुन्हु थ्व फरेसव वपुक म्हयात वो छवो धा-
१३. ले वर्षप्रति वियमार जुलो मवियमतेव
१४. जुरो ॥ थ्व फरेस्यन ल्होने मारप्व थ्वती मु-
१५. ल्मी मालो जुरो शुभ स्र्वदा शुभ ॥ ॥

★★★

(२३७)

## पाटन ग्यछेटोल गणेश देवलको अभिलेख

### मूलपाठ

१. ॐ नमः श्रीगणेशाय ॥ विघ्नोश्वराय, वीरायविश्वरूपा-
२. य ते नमः । सर्व्वविघ्नहरंदेवं सर्व्वशक्ति नमोऽस्तु ते ॥ ॥
३. ? योऽस्तु ॥ सम्वत् ८१८ फाल्गुण शुक्ल अष्टम्यान्तिथौ ॥ रो-
४. हिणीनक्षत्रे ॥ वैधृतीयोगे ॥ अंगारवासरे ॥ अस्मिन
५. दिने पिंथछे शिवराम भारो, देवराम भारो, जितलसिंह भा-
६. वो, इन्द्र भावो, कृष्ण भावो, कृष्णसिंह भावो , केशवराम भा-
७. वो, लसिंह भावो, मधुराम भावो, इन्द्रराम भावो, विष्नु-
८. राम भावो, कर्मराम भावो, ज्येवनराम भावो, वैकुण्ठ रा-
९. म, वसु भावो, सुषुरिराम भावो, देवराम भावो, थ्वते स-
१०. मूहन बौद्ध कृत मदकाल दयकं श्रीमत्श्री २ गणे-
११. श भट्टारकासके पूरि छतं थं तास्य सुवर्ण्ण कलश
१२. ध्वजावरोहन याङा दिन जुरो ॥ छे हमोस येव जित
१३. लसिंह भावो जुरो ॥ यथाशास्त्रोक्त फलमस्तु ॥ शुभ ॥
१४. रछेराम भावो

★★★

(२३८)

## सहको टोलको शिलालेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय पूर्ण्णापारमितायते शासि दयवचनं जगत सुगताय नम
२. स्तस्मै सर्व्वानुकम्पिते ज्ञायन्ने यदतुध्यायादमजतां प्रागवि भूत
३. यः विभुर्जायति मंजु श्री शातुस्सर श्रीसम्व-
४. त् ८१८ माघ शुक्ल पूर्णमाश्यान्तिथौ प्वष्या नक्षत्रे आयुष्मान योगे



५. यथा कर्ण्ण मुहुर्त्तके आदित्यवासरे मकरासिगते सवितरि
६. कर्कट राशिगते चन्द्रमसि ॥ थ्व कुन्हु चनकित्वार शकराछिस
७. चेत भराड हथक पतिष्ठा याङा दिन जुरो ॥ स एव त्वाया सर्व्व
८. भारो शिव श्रीवेर भारो वेखानस भावो वलि भावो रत्नसिंह भा
९. वो पुमराम भावो चिकुन मावो ष्माधसिंह भावो भागिराम भा
१०. वो , किम्ह भावो, देवराम भावो हाकुराम भावो किन्हदेव
११. भावो थ्वते समोहन स एव वेशा यस भावो
१२. का जुरो सेल्येयत कीत्रिसलि कामश्य सहित
१३. ............ दयका जुरो शुभ ॥ ॥

★★★

(२३९)

## मूलचोकको योगनरेन्द्रमल्लको अभिलेख

ललितपुर राजदरवार मूलचोकमा टाँसी राखिएको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ।

संस्कृत-सन्देश वर्ष १ अंक ११ मा यो अभिलेख धनवज्र र ज्ञानमणि नेपालद्वारा प्रकाशित भएको छ । ऐतिहासिक पत्र सँग्रह दोश्रो भागका २२-४० पृष्ठमा व्याख्यासहित यो प्रकाशित भएको छ।

### मूलपाठ

१. स्वस्ति ॥ श्रीश्रीजययोगनरेन्द्रमल्लदेव श्रीश्रीजयभूपालेन्द्रमल्लदेव श्रीश्रीजयभूपतीन्द्रमल्लदेव स्वम्ह राजान नेपालस अनीति जुओ सोयाओ राजा राजाया जीवउपरस सङाओ
२. उलिया निमित्तन श्री ३ तलेजुमाजुस्के सिजलपति तास्यं तया भाखा, कंतुया ववु महादेव उभ्रान अनेक ककतक विद्यदान बियाओ फुतकु, विनाअपराधस एल छोङाओ कुतका-ओ
३. फुतकु, भीममल्लया खं मयासिंङ कङाओ श्रीभिममल्ल फुतकु, अनेक राजा राजा फाओ, अनेक स्त्रेष्ठ फुतकु, अनेक देवताया मन्त्र सेनकु, बालस्त्री मैथुन याङाओ स्याक, थथिङ महादेव उ-

४. झाया काय कंतु उझा, थ्वन्हपां वदल उझाया सेवा याङाओ चोङ, ओलस बदल उझा जयकृष्णजु व निम्हसेन मान्धातायाके सेवां यातुक, मान्धाता मखुथे थुयकाओ, जयकृष्णजु नेम्ह

५. बा काय स्याक, ध्वजराज स्याक, बदल उझा पितिङछोक, थ्वनंलि ओझा हेयकाओ थेमं न्हलुयाओ मान्धाता स्यायतङ, उगुलि सियाओ, मान्धातान कंतु पितिनछोक, थु गुलि खुनसन चि-

६. कुति ओ मिलय याङाओ मान्धाता स्याक, ओलसं हनकं चिकुतिया उपरस सङ, श्रीश्रीनृपेन्द्रमल्ल जुजुन पितिङछोक, ओलसं हानकनं चिकुतिन बोङाओ तओ हनिकनं चिकुतिया उपरस सङओ ।

७. चिकुति बीय (स्य) कर छोक, ओनलि श्रीश्रीपार्थिवेन्द्रमल्ल श्रीश्रीभूपतीन्द्रमल्ल नेम्ह फाव, वंशीधर बाओत किसि थुमिस जीवया उपरस सङ, थ्वगुलि सिवाओ श्रीश्रीजयपार्थिवेन्द्रमल्लन पिति-

८. नछोक, थ्वया कर्त्तव्यन श्रीश्रीमहीपतीन्द्रमल्ल बिसेविज्याक, गुणि ओझानं फान कोखाव, स्याम ओझा गंगाधर ओझायां देशत्याग जुव, मेव अनेग कतकनं दुष्ख सेव, थ्वया कर्त्तव्यनं

९. श्रीश्रीजयपार्थिवेन्द्रमल्ल व श्रीश्रीजययोगनरेन्द्रमल्ल व फाव, ओलस थ्व कुपुत्र सियाओ, मूलचूकस सिजलपति चाक, राज्य दुकाय मुद धक, थुगुल सियाओ लक्ष्मीनारायणयातं भो-

१०. रोसा बियाओ, श्रीश्रीजयपार्थिवेन्द्रमल्ल फुतकु, चिकुतिया परिवारसहितं फुतुकु, श्रीश्रीमहीपतीन्द्रमल्लं फुतकु, थ्व मूलचुकस ताङा सिजलपति मखयक बोङाओ तओम्ह लक्ष्मीना-

११. रायणं फुतकु, ओलस कुङाओ तओम्ह कंतु मनिरायजुन जगन्नाथजु व मिलय याङओ बिओ, जगन्नाथजु सिस्यंलि कंतुन वासर नकाओ ओया दाजु दंडमानिन प्रयोग यातका-

१२. ओ मनिरायजु, स्याक, ओलंलि श्रीश्रीजययोगनरेन्द्रमल्ल याकात तयाओ, श्रीश्रीजयभूपालेन्द्रमल्ल फुतके धक सङाओ, स्वम्ह राजानं विचाल याङा ओ पति चोस्यंतया, थ्वते ग्वम्ह

१३. राजानं ग्वम्हराजाया वंशनं ग्वम्ह काजिनं ग्वम्ह राणीन मेव सुनानं महादेव ओझाया वंश दुकालसा, ओमिसओ खं दयकलसा मिपु लंख अन्न दाम वस्त्रादि छुं वस्तु बिलसां श्रीश्रीश्रीत-

१४. लेजु माजुया कृद्दिष्टि राक श्रीश्रीश्रीपशुपति आदिन नेपालस दको देवताया कृद्दृष्टि लाक जुरो, कोटि पंचमहापातक लाक, कोटि शिवलिङ्गध्वंसन याङा पाप लाक, कोटि अभक्षाभक्ष्य-



१५. न याङा पाप लाक, उपरान्त कोकालसा थ्व सिजलपति सुनानं कोकालसा पिचिल थिचिल यातसां गुप्त यातसां कोकाय धक वचन विलसां कोकाय कलसां सम्पूर्ण देवताया कृद्दृष्टि पंच-

१६. महापातक लाको फल जुरो । थ्वते भाखाया दृष्टसाक्षी श्री ३ चन्द्र सूर्य, श्रीश्रीउग्रमल्ल श्रीश्रीजयभास्करमल्लदेव ॥ श्रीविश्वंभर उपाध्या ॥ वि श्रीविद्याचन्द्र उपाध्या श्रीजयन्त उपाध्या ॥

१७. श्रीकृष्ण भट्ट भाजु ॥ श्रीमहेश्वर भट्टा भाजु ॥ श्रीहरिशङ्करभट्ट भाजु ॥ नवमीसंह भाग्वगल भा ॥ थ्व चोस्यंतको मानयमयातसा थ्व पतिस चोस्यं तको हत्या जुरो ॥ सम्वत् ८१८ शुभ ॥

## अनुवाद

कल्याण होस् । श्रीश्रीजययोगनरेन्द्रमल्लदेव श्रीश्रीजयभूपालेन्द्रमल्लदेव श्रीश्रीजय-भूपतीन्द्रमल्लदेव (हामी) तीन राजाले नेपालमा अन्याय भएको तथा राजाहरूको गाथ ताकेको देखेर श्रीश्रीश्रीतलेजुमाई कहाँ ताम्रपत्र टाँसेर राख्यौं ।

यसको व्यहोरा- कंतुका बाबु महादेव ओझाले अनेक किसिमका विष दवाएर सिध्यायो । विनाअपराधमा पाटनमा पठाई थुन्न लगाई सिध्यायो, भीममल्लको कुरा (नरदेव) मयासिङद्वारा चुक्लीलाई भीममल्ललाई सिध्यायो, अनेक राजाहरूमा फुट पारिदियो, अनेक श्रेष्ठलाई सिध्यायो, अनेक देवताहरूको मन्य बिगाऱ्यो, वालस्त्रीलाई करणी गरी माऱ्यो । यस्तो महादेव ओझाको छोरो कन्तु ओझा पहिले बदल ओझाको सेवा गरी (जागीर खाई) बस्यो । अनि वदल ओझा र जयकृष्ण दुवैले (कन्तुलाई) मान्धाताकहाँ जागिरे गराइदिए । ध्वराजलाई पनि मारिदिए । बदला ओझालाई निकालिदिए । त्यसपछि त्यो ओझाले (कंतुले) फकाई आफू अघि सरी मान्धातालाई मार्न खोज्यो । त्यो कुरा थाहा पाएर मान्धाताले कन्तुलाई निकालिदिए । यसपछि चिकुटिलाई मिलाएर (कन्तुले) मान्धातालाई माऱ्यो । त्यसपछि फेरि (कन्तुले) चिकुटिको उपरमा दगा धऱ्यो । राजा श्रीश्रीनृपेन्द्रमल्लले (कन्तुलाई) निकालिदिनु भयो । त्यसपछि, फेरिपनि चिकुटिले (कन्तुलाई) बोलाएर राखे । (कन्तुले) फेरि चिकुटिको उपरमा दगा धरी चिकुटिलाई भगायो । त्यसपछि श्रीश्रीपार्थिवेन्द्रमल्ल श्रीश्रीभूपतीन्द्रमल्ल दुवैमा फाटो पारिदियो, वंशीधर बाओत किसिम यिनीहरूको ज्यानमा दगा धऱ्यो । यो थाहा पाएर श्रीश्रीजयपार्थिवेन्द्रमल्लले (कन्तुलाई) निकालि दिनु भयो । उसको कर्तव्यले श्रीश्रीमहीपतीन्द्रमल्ल भाग्नु भयो । गुणी ओझाले सुँगुरको माला लाए (मुडिए) श्याम ओझा गंगाधर ओझालाई देश-निकाला भयो, (तिनीहरूले) अरू अनेक किसिमका दुःख पाए । उसको कर्त्तव्यले श्रीश्रीजयपार्थिवेन्द्रमल्ल श्रीश्रीजययोगनरेन्द्रमल्ल दुवैमा फाटो पऱ्यो । त्यसपछि यो कुपुत्र हो भनी थाहा पाएर (कन्तुलाई) राज्यमा पस्न नदिनू भनी मूलचोकमा ताम्रपत्र राखियो । यो थाहा पाएर लक्ष्मीनारायणलाई आड दिई श्रीश्रीजयपार्थिवेन्द्रमल्ललाई सिध्यायो, सपरिवार चिकुटिलाई सिध्यायो, श्रीश्रीमहीपतेन्द्रमल्ललाई पनि सिध्यायो । मूलचोकमा टाँसिराखेका ताम्रपत्रलाई वास्ता नगरी (कन्तुलाई) बोलाएर राख्ने लक्ष्मीनारायणलाई पनि सिध्यायो । त्यसपछि थुनेर राखिएको कन्तुले मरिरायसँग जगन्नाथलाई मिलाइदियो । जगन्नाथ मरेपछि उसको दाजु दण्डपाणिद्वारा प्रयोग गराई औषधि खुवाएर मणिरामलाई माऱ्यो । त्यसपछि

श्रीश्रीजययोगनरेन्द्रमल्ललाई एक्लै पारेर श्रीश्रीजयभूपालेन्द्रमल्लको गाथ ताक्न लागेको हुनाले (हामी) तीन राजाले, विचार गरी ताम्रपत्र लेखी राख्यौं। यसकारण कुनै राजाले कुनै राजाको वंशले कुनै काजीले कुनै रानीले (वा) अरू कसैले महादेव ओझाको वंशलाई भित्र पस्न दिए भने उसँग कुराकानी गरे भने आगो पानी अन्न पैसा वस्त्र आदि कुनै वस्तु दिए भने पनि श्रीश्रीश्रीतलेजुमाईको कुदृष्टि (तिनीहरूमा) परोस्। श्रीश्रीश्रीपशुपति आदि नेपालका सबै देवताको कुदृष्टि परोस्। कोटि पंचमहापाप लागोस्। कोटि शिवलिङ्ग बिगारेको पाप लागोस्। कोटि अभक्ष्य खाएको पाप लागोस्।

उप्रान्त यो ताम्रपत्र कसैले झिके भने, थिचोमिचो गरे भने, झिक भनी वचन दिए भने, झिक्न लाए भने पनि सम्पूर्ण देवताको कुदृष्टि परोस्। पंचमहापापको फल लागोस्। यस वेहोराका दृष्टसाक्षी ..... श्रीश्रीश्रीचन्द्र सूर्य, श्रीश्रीउग्रमल्ल, श्रीश्रीजयभास्करमल्लदेव, श्रीविश्वम्भर उपाध्याय, श्रीविद्यानन्द उपाध्याय, श्रीजयन्त उपाध्याय, श्रीकृष्णभट्ट भाजु, श्रीमहेश्वर भट्ट भाजु श्रीहरि शङ्करभट्ट भाजु, नवमी सिंह भा, ग्वगल भा ॥ यस ताम्रपत्रमा लेखेका जति कुरा मानेन भने यो ताम्रपत्रमा लेखे जति हत्या लागोस् ॥ ने.सं.८१८ (वि.सं. १७५५) ॥ शुभ ॥

### व्याख्या

वि.सं. १७३१ मा कान्तिपुरका राजा प्रताप मल्लको मृत्यु भएपछि उनका उमेर नपुगेका छोरालाई गद्दीमा राखी मन्त्रीहरू हर्ताकर्ता भई शासन चलाउन लागे। यस बेलादेखि यो ताम्रपत्र राखुन्जेल कान्तिपुरमा राजा उपर पनि विष प्रयोग उपांशुवध इत्यादि अनेक घटना घटे। यस्तो अवस्था पर्दा आफ्ना गाथ-गादीको रक्षाको लागि उपत्यकाका तीन राजा मिली वि.सं. १७५५ मा यो ताम्रपत्र राखिएको हो। विशेष गरेर कान्तिपुरमा अनेक घटना भएको हुनाले कान्तिपुरका राजा भूपालेन्द्रमल्लको गाथको सुरक्षाको लागि उनको अनुरोधमा नै ललितपुर, भक्तपुरका राजा समेत मिली यो ताम्रपत्र गरिएको हो।

२५/३० वर्षभित्र कान्तिपुरमा जति उपद्रप भए, ती जम्मै महादेव ओझा र उनका छोरा कन्तु ओझाले गराएका हुन्। त्यसकारण कन्तु ओझा र उनको वंशलाई नेपाल उपत्यका भित्र पस्न नदिने घोषणा यहाँ गरिएको छ। महादेव ओझा, कन्तु ओझा को हुन् भन्ने कुरा अरू प्रमाणबाट अहिलेसम्म हामीले थाहा पाउन सकेका छैनौं। यहाँ कन्तु ओझा र उनका बाबु ले गर भनी लेखिएका कुराहरू पनि जम्मै यथार्थ रूपमा बुझ्न सकेका छैनौं तापनि यहाँ उल्लिखित केही घटनाहरू अरू प्रमाणबाट पनि थाहा हुन आएका छन्। तिनमा केही प्रकाशमा पनि आइसकेका छन् तापनि यस ताम्रपत्रको परीक्षा गर्न संजिलो होस् भनी यस विषयमा केही विचार गर्नु परेको छ।

शिवसिंहमल्लको उत्तराधिकारीका रूपमा उनका नाति लक्ष्मीनरसिंह कान्तिपुरका गद्दीमा बसेका थिए। यी लक्ष्मीनरसिंह बाजे शिवसिं जस्तै चतुरा तया महत्त्वाकाङ्क्षी देखिँदैनन्। यसैले शिवसिंहको पालामा मिलिसकेको ललितपुर पनि यिनका भाइ सिद्धिनरसिंहले विधिपूर्वक छुट्याई स्वतन्त्र पारेको कुरा माथिल्लो पत्रको व्याख्यामा परिसकेको छ। कान्तिपुरमा पनि लक्ष्मीनरसिंहले भारादारहरूलाई अँठ्याई राम्री शासन चलाउन सकेको देखिँदैन। लक्ष्मीनरसिंहको यही कमजोरीबाट फाइदा उठाई उनका भारादारहरूले केही गृहकलह उत्पन्न गराएका थिए। यसैकारण बाबु लक्ष्मीनरसिंह छँदै नै छोरा प्रतापमल्लले सानै उमेरमा भारादारहरूको सहायताले हर्ताकर्ता भई राज्य गर्न लागेका थिए। वि.सं. १६९८ मा प्रतापमल्लले आफूलाई विधिपूर्वक कान्तिपुरका राजा घोषित गरे। प्रतापमल्ल उत्साही तथा चतुर शासक थिए। उनले कान्तिपुरलाई



बलियो बनाउन निकै प्रयास गरेका थिए। काजी भीममल्लको सहायताले प्रतापमल्लले भोटभित्र पर्ने कुति खासा केरुङहरू कब्जा गरी भोटमा व्यापार चलाउने व्यवस्था गरेका थिए। यसबाट कान्तिपुरलाई निकै नै अर्थलाभ भएको थियो। कान्तिपुरको यस अर्थलाभले गर्दा कान्तिपुरका प्रतिद्वन्दी भक्तपुरेहरूलाई जलन हुनु स्वाभाविक थियो। यसैले उसमा बिघ्न पार्ने विचार उनीहरूले गरे। लक्ष्मीनरसिंहका विश्वासपात्र बनी बसेका भक्तपुरे नरदेव भुइँसिंहले भीममल्ल भोटका शासकसँग मिली त्यता भेकका स्वयं शासक भई बसेका छन् आदि कुराको चुक्लीलाईदिँदा भीममल्ल भोटबाट फर्केर आई राजदरवारभित्र पस्न लाग्दा प्रतापमल्लका मानिसद्वारा उनी मारिए। यहाँ भीममल्लया खं मयासिंह कङमओ भीममल्ल फुतक भीममल्लको कुरा (नरदेव) मयासिंहद्वारा चुक्लीलाई भीममल्ललाई सिध्यायो भनी यसै घटनालाई लक्ष्य गरिएको हो।

वि.सं. १७३१ को प्रारम्भमा प्रतापमल्लको मृत्यु भयो। त्यसबेला प्रतापमल्लका तीन छोरा नृपेन्द्रमल्ल, पार्थिवेन्द्रमल्ल, महीपतेन्द्रमल्ल जीवित थिए। प्रतापमल्लले आफूपछि त्यसबेला जीवित छोराहरूमा कान्छा महीपतेन्द्रमल्ललाई राजा बनाउनू भन्ने व्यवस्था मिलाएर गएका थिए। परन्तु यसबाट अरू छोराका पक्ष अप्रसन्न हुनु स्वाभाविक थियो। त्यही असन्तुष्ट पक्षको अनुरोधमा प्रतापमल्लको मृत्यु भएको ३ महीनापछि ललितपुरका राजा श्रीनिवासमल्लले दाजु छँदै भाइलाई राजा बनाउने न्याय संगत होइन भनी स्वयं अघि सरी त्यसबेला प्रतापमल्लका जीवित छोरामा जेठा नृपेन्द्रमल्लको उमेर १२ वर्षको मात्र थियो। प्रतापमल्लको पालामा कान्तिपुरका प्रसिद्ध भारादार चिकुटि थुनिएका थिए। पछि उनी ललितपुरमा शरण लिन पुगेका थिए। श्रीनिवासमल्लले पनि उनलाई शरण दिई राखेका थिए। प्रतापमल्लको मृत्यु हुनेवितिकै चिकुटिलाई कान्तिपुर फर्काउने प्रबन्ध श्रीनिवासमल्लले मिलाई दिए। अनि चिकुटि कान्तिपुर पुगी चौतारा बने। त्यसबेला प्रतापमल्लका एकजना मठ्याहा छोरा मान्धातासिंह शक्तिशाली पुरुष थिए। यसकारण उनलाई नपन्छाई आफू सर्वाधिकारी बन्न नसकिने हुँदा मान्धतासिंहलाई चिकुटिले मार्न लगाए। यसरी आफ्ना विरोधीहरूलाई सिध्याई ठाउँठाउँमा ठूलाठूला पदमा आफ्ना मान्छेलाई राखी चौतारा चिकुटि हर्ताकर्ता बन्न सफल भए।

वि.सं. १७३७ मा १८ वर्षको उमेरमा नृपेन्द्रमल्लको मृत्यु भयो। यसको १३ दिनपछि उनका भाइ पार्थिवेन्द्रमल्ल कान्तिपुरको गद्दीमा राखिए। त्यसपछि पनि चौताराको पदमा चिकुटि नै थिए। यसरी चिकुटिको प्रभाव कायम रहिरहेको देख्दा अरू भारादारहरूलाई असह्य हुन थाल्यो। यसैले केही भारादारहरू चिकुटिलाई सिध्याउने दाउमा लागे। यस कुराको सुइँको पाई वि.सं. १७४० मा राती सपरिवार चिकुटि आफ्ना अनुयायी खसहरूका साथ कान्तिपुरबाट भागी ललितपुरमा शरण लिन पुगे। ललितपुरका राजा श्रीनिवासमल्लले चिकुटिलाई शरण दिए। ४ दिनसम्म चिकुटि ललितपुरको एउटा किल्लामा बसे। परन्तु त्यहाँ रहँदा आफ्नो सुरक्षा हुने नदेखी चिकुटि आफ्ना अनुयायीहरूका साथ बुधसिङ्ग भन्ने गाउँमा गई बस्न लागे। काठमाडौंबाट ८ कोश जति पश्चिम त्रिशूलीपारि बुधसिङ्ग गाउँ पर्दछ।

चिकुटि गएपछि पाटनका राजा श्रीनिवासमल्ल कान्तिपुर आई लक्ष्मीनारायण जोशी बावत जयकृष्णका छोरा श्रीकण्ठु आदि ४ जनाको मन्त्रिपरिषद् कान्तिपुरमा बनाउन लाए। यसपछि कान्तिपुरमा बिस्तारै लक्ष्मीनारायण जोशीको प्रभाव बस्न लाग्यो।

वि.सं. १७४४ मा खानेकुरामा विष हाली ख्वाएकाले राजा पार्थिवेन्द्रमल्लको मृत्यु भयो। पार्थिवेन्द्रमल्लका आमाहरू पनि विरामी भए। परन्तु उनीहरूको चाहिँ मृत्यु हुन पाएन। यस घटनाले कान्तिपुरका प्रजाहरूमा खलबली मच्चिनु स्वाभाविक थियो। यसैले पार्थिवेन्द्र मारिएको ४ दिनपछि हाम्रा राजालाई कसले विष खुवाएको हो, त्यसको पत्ता लगाई हामी पनि त्यसलाई

माछौं भनी कान्तिपुरका प्रजा उठी हनूमानढोकामा जम्मा हुन थाले । भक्तपुरका राजा जितामित्रमल्ल आई अपराधीको पत्ता म लाइदिन्छु भनी सम्झाएपछि मात्र प्रजाहरू शान्त भई आफ्नाआफ्ना घर गए । पार्थिवेन्द मल्ललाई विष खुवाउने काममा लक्ष्मीनारायणको हात थियो । त्यसकारण आफ्नो रक्षा र शत्रुको नाश गर्नाका लागि लक्ष्मीनारायणले मन्त्री वंशीधरको सहायताले चिकुटिले नै पार्थिवेन्द्रमल्ल र अरू राजपरिवारलाई विष खुवाएका हुन् भन्ने हल्ला पिटे । त्यसबेला भूतपूर्व चौतारा चिकुटि पशुपतिमा आई दानधर्म गरी बसिरहेका थिए । वंशीधर चाहि मन्त्रीको रूपमा थिए । अनि यही राजा र राजपरिवारलाई विष खुवाएको आरोप लगाई पशुपतिमा रहेका सपरिवार चिकुटिहरूलाई र उनका अनुयायी खसहरूलाई समाती ल्याए । बाटामा हुलले चिकुटिहरूलाई बेसरी चुटी ठूलो अपमान गऱ्यो । राजदरबारमा बसेका मन्त्री वंशीधरलाई पनि हिटिचोकमा नेल ठोकी राखे । पछि सपरिवार चिकुटि मन्त्री वंशीधर, चिकुटिका अनुयायी खसहरू राजद्रोही ठहराई मारिए ।

पार्थिवेन्द्रमल्ल मारिएको १३ दिनपछि उनका छोरा भूपालेन्द्रमल्ल कान्तिपुरको गद्दीमा राखिए । चौताराको पद लक्ष्मीनारायणले अँठ्याए । भक्तपुरका राजा जितामित्रमल्ल आई यो राज्याभिषेकको समारोह गराएका थिए । यसबेला राजा भूपालेन्द्र ८ वर्षका मात्र थिए । आफ्ना प्रतिद्वन्द्वीहरूलाई सिध्याउन सफल भएका र राजा बालक भएका हुँदा चौतारा लक्ष्मीनारायणको शक्ति बढ्दै गयो र उनी हर्ताकर्ता हुन थाले ।

त्यसबेला प्रतापमल्लका एकजना छोरा महीपतेन्द्र मल्ल जीवित थिए । यसकारण लक्ष्मीनारायण जोशीलाई आफ्नो शक्ति बढाउने काममा महीपतेन्द्र मल्लबाट विघ्न पर्न आउने सम्भावना थियो । यसैले पार्थिवेन्द्र मल्ल मारिएको २ महीनापछि नै वि.सं. १७४४ भाद्रमा देउपाटनमा पशुपतिका पुजारी राधवानन्द स्वामीको घरमा बसेका महीपतेन्द्रमल्ललाई लक्ष्मीनारायणले आफ्ना मान्छे पठाई कष्ट दिइकन मार्न लगाए ।

यसभन्दा २ वर्षजति अघिदेखि नै दरबारिया दाउपेचले महीपतेन्द्रमल्लले यताउति भागी ज्यान जोगाई रहेका थिए । वि.सं. १७४२ मा महीपतेन्द्रलाई बेसरी कुटी हनूमानढोकामा थुनिराखेका थिए । एक दिन मोका पाई महीपतेन्द्र भागी पाटनमा शरण लिन पुगे । पाटनका राजा श्रीनिवासमल्लले महीपतेन्द्र मल्ललाई शरण दिई राखे । अनि महीपतेन्द्रमल्ललाई हामीलाई सुम्पनु होस् भनी कान्तिपुरका राजाले माग्दा महीपतेनद्रमल्लको ज्यानको सुरक्षाको वचन दिने हो भने मात्र सुम्पन्छु भनी श्रीनिवासमल्लले जबाफ दिए । यसको प्रबन्धका लागि कान्तिपुर ललितपुरको सिमाना टेकु दोभानमा भेट गरी धर्म बाधा गरे । कान्तिपुरेको सुर बाहिर धर्मपत्र गरेजस्तो गरी महीपतेन्द्रमल्ललाई जबरजस्ती पक्रेर ल्याउने थियो । यस कुराको सुइँको ललितपुरेहरूले पाएका हुँदा श्रीनिवासमल्लले आफ्ना छोरा योगनरेन्द्रको देखरेखमा महीपतेन्द्रलाई राखी राम्रो व्यवस्था मिलेपछि मात्र महीपतेन्द्र मल्ललाई सुम्पने योजना मिलाएका थिए । ललितपुरेहरूको यो आशय थाहा पाई कान्तिपुरे भारादारहरूले एक्कासी महीपतेन्द्र भएको ठाउँमा हमला गरी महीपतेन्द्र मल्ललाई समातेर ल्याउन खोजे । परन्तु पाटने प्रजाहरू उठी कान्तिपुरेहरूलाई पीटपाट पारी धपाइँदिए ।

यसरी कष्ट पाएका महीपतेन्द्रमल्लपछि पशुपतिका पुजारी राघवानन्द स्वामीको शरणमा देउपाटनमा रहन लागेका थिए । आखिर लक्ष्मीनारायणद्वारा उनी मारिए ।

यसरी दाउपेचमा सफलता पाउदै गएकोले लक्ष्मीनारायण जोशीले कान्तिपुरबाहेक ललितपुर भक्तपुरमा पनि षाड्गुन्य खेल्न लागे । ललितपुरका राजा योगनरेन्द्रमल्ललाई आफ्नो पक्षमा मिलाई भक्तपुरका राजा जितामित्र मल्ललाई हामीसँग मिल्ने मन भए आफ्ना चौतारा भागिरामलाई खोस्नु



होस् भनी लक्ष्मीनारायणले कर लगाए । यसबेला भक्तपुरमा भागिराम प्रभावशाली मन्त्री थिए । भक्तपुरका राजाले पहिले त आफ्ना प्रधानमन्त्रीलाई खोस्न मन्जुर गरेनन् । परन्तु कान्तिपुर र ललितपुर मिली भक्तपुरमा आक्रमण गरी भक्तपुरका वासिन्दालाई दुःख दिँदा भक्तपुरका दुनियाँमा विद्रोह फैलियो र भक्तपुरका राजा जितामित्रले कान्तिपुरमा शरण लिन विवश हुनु पऱ्यो । भक्तपुरका दुनियाँले प्रधानमन्त्री भागिरामको घर घेरी सारा सम्पत्ति लुटी उनको घरमा आगो लाइदिए । भागिरामले चाहिँ भागी ज्यान जोगाए, तर केही कालपछि फेरि भागिराम फर्की भक्तपुरका प्रधानमन्त्री हुन समर्थ भए ।

चौतारा लक्ष्मीनारायण राजकीय-ठाटँबाँटमा रहन थाले तथा बस्न पनि प्रायः दरबारमै बस्न लागे । यी लक्ष्मीनारायणले टकमा राजा भूपालेन्द्र मल्लको साथसाथै आफ्नो पनि नाम कुँदाई चलाए ।

लक्ष्मीनारायण जोशीको यो रमझम अरू भारदारहरूलाई मन नपर्नु स्वाभाविक थियो । पार्थिवेन्द्रलाई विष खुवाएको अभियोग लगाई चिकुटिलाई मार्दा उनका अनुयायी खसहरू पनि मारिएका थिए । यसैले खसहरूको एक दल लक्ष्मीनारायणसँग बदला लिने दाउमा थियो । वि.सं. १७४७ भाद्रमा मौका पाई खसहरूको एक दलले लक्ष्मीनारायण उपर उनकै घरमा हमला गऱ्यो । यसबाट घाइते भएका लक्ष्मीनारायण भाग्दै राजदरबारतिर आउँदा बाटोमा खसहरूले भेट्टाई मारे । यसरी लक्ष्मीनारायणको अन्त भयो ।

यस ताम्रपत्रमा चिकुटिद्वारा मान्धाता मारिनामा, चिकुटिलाई पाटनमा भगाउनमा महीपतेन्द्रमल्ललाई भगाउनामा, पार्थिवेन्द्रलाई मार्न लगाउनामा, चिकुटिलाई मार्न लगाउनामा, महीपतेन्द्रमल्ललाई मार्न लगाउनामा, लक्ष्मीनारायणलाई मार्न लगाउनामा तथा यस्तै अनेक घट्ना गराउनामा महादेव ओझाका छोरा कन्तु ओझाको हात थियो भनी लेखिएको छ । यसताका तीनै मल्ल राजदरबारमा प्रवेश पाएका र प्रायः शिक्षितपनि हुने हुँदा यसताकाको घटनाबाट हामी केही बुझ्नसक्छौं । परन्तु २५/३० वर्षभित्र कान्तिपुरमा घटेका सारा घट्ना महादेव ओझा र उनका छोरा कन्तु ओझाले गराएका हुन् भनी यहाँ दोषारोपण गरिएको कुरा चाहिँ अत्युक्तिपूर्ण देखिन्छ । जेहोस्, यस ताम्रपत्रले प्रकारान्तरले भए पनि कान्तिपुरका तात्कालिक निकै घटनालाई संकेत गर्छ । अरू प्रमाण पाइँदै गएपछि यस विषयमा बढ्ता विचार गर्न सकिने छ ।

यस ताम्रपत्रमा मल्लकालका कान्तिपुरका केही प्रसिद्ध भारादारहरूको उल्लेख परेको छ । यसताकाको मल्लकालको राजकाजको यथार्थ इतिहास बुझ्न यी भारादारहरूको परिचय पाउनु आवश्यक छ । परन्तु साधनको अभावले हामीले अहिले यी भारादारहरूको बारेमा ठीकठीक कुरा बुझ्न सकेका छैनौं । तैपनि यहाँ उल्लिखित भारादारहरूमध्ये केहीको अलिकति कुरा अरू प्रमाणबाट हामी बुझ्न सक्छौं ।

मान्धाता

यस ताम्रपत्रको उठानमा उल्लिखित घटनाबाट मान्धाता एकजना शक्तिशाली पुरुष देखिन्छन् । यिनी प्रतापमल्लका मठ्याहा छोरा हुन् । यसकारण यिनी शक्तिशाली हुनु स्वाभाविक पनि थियो । यिनले वि.सं. १७२७ मा बनाएको गीत केशव भन्ने काव्य पाइएको छ । त्यसबाट बाबुलाईजस्तै यिनलाई पनि म बेस कवि छु भन्ने गर्व थियो भन्न बुझिन्छ । पछि यिनी चिकुटिद्वारा मारिएको उल्लेख यस ताम्रपत्रमा परेको छ ।

**वंशीधर**
वि.सं. १७३८ को आरम्भमा कान्तिपुरका राजा पार्थिवेन्द्रले सिंधुली गढीमा आक्रमण गरेका थिए। यसका लागि पाटन र भक्तपुरका राजाले पनि सहायता गरेका थिए। त्यसबेला यिनै वंशीधरको मातहतमा फौज पठाइएको थियो र सिंधुलीगढी जितिएको थियो। वि.सं. १७४३ मा गोरखा युद्धका लागि कान्तिपुरको सैन्य हिँड्दा त्यसको नेतृत्व गर्नेहरूमा यिनी पनि थिए। वि.सं. १७४४ मा चिकुटि मारिँदा उनीसँगै यिनी पनि मारिएको उल्लेख माथि परिसकेको छ।

**बावत**
वि.सं. १७४० मा चौतारा चिकुटि सपरिवार पाटनमा भागेपछि कान्तिपुरमा बनेको मन्त्रीमण्डलमा यिनी पनि मन्त्री बनाइएको उल्लेख माथि परिसकेको छ। वि.सं. १७४३ मा गोरखायुद्धमा लागि गएका सेनापतिहरूमा यिनी पनि थिए। वि.सं. १७४४ श्रावणमा गोली लागि यिनको मृत्यु भयो।

**किसि**
वि.सं. १७४३ मा ललितपुरमा शरण पर्न गएका महीपतेन्द्रमल्ललाई फेरि कान्तिपुर फर्काएर ल्याउने काण्डमा यिनले निकै काम गरेका थिए। वि.सं. १७४३ कार्तिकमा लडाइँमा गोली लागि यिनको मृत्यु भएको थियो।

**गंगाधर**
यिनी ज्योतिषी थिए। वि.सं. १७४८ मा यिनी छेँभण्डिल (अड्डा) का अधिकारी बनाइएका थिए। वि.सं. १७५३ मा यिनी जागीरबाट खोसिए। यस ताम्रपत्रमा यिनलाई देशनिकाला भएको उल्लेख परेको छ। वि.सं. १७५७ मा यिनी फेरि सोही अड्डामा अधिकारी बनाइए।

**जगन्नाथ**
यिनी ज्योतिषी तथा वैद्य थिए। वि.सं. १७४५ मा भूपालेन्द्रद्वारा यिनी देउपाटनका प्रमान (वडा हाकिम) बनाइएका थिए। यिनले वि.सं. १७४७ मा आफ्नो आगमदेवताको ठूलो देवल बनाएका थिए। त्यस अवसरमा कान्तिपुरका राजा भूपालेन्द्रमल्ल र भक्तपुरका राजा जितामित्र पनि आएका थिए। वि.सं. १७४८ मा भूपालेन्द्रले यिनलाई सुनका बाला लाइदिएका थिए । वि.सं. १७५० मा यिनको मृत्यु भयो।

बदल ओझा, ध्वजराज, गुणी ओझा, श्याम ओझा, मणिराय, दण्डपाणि, यिनीहरूको अन्त उल्लेख पाइएको छैन।

यो ताम्रपत्र कान्तिपुर, ललितपुर, भक्तपुर तीनै राज्यका राजा मिली राखिएको हुनाले यसमा साक्षी बस्नेहरू पनि तीनै राज्यका छन्। अहिले सबैको परिचय पाउन सकिएको छैन। थाहा भएजतिको संक्षिप्त परिचय यस प्रकारको छ। -

**श्रीश्रीउग्रमल्ल**
यिनी भक्तपुरका राजा जितामित्र मल्लका भाइ हुन्। त्यसबेलाको चलनअनुसार दाजु राजा र यिनी कान्छा हुँदा मिरम्ह जुजुकान्छा राजा कहलाएका थिए। वि.सं. १७५३ मा जितामित्रको मृत्युपछि उनका छोरा भूपतीन्द्रमल्ल भक्तपुरको गद्दीमा राखिए। त्यसबेला काका उग्रमल्ल भतिजाको सहायकका रूपमा रहेका थिए।



**श्रीश्रीभास्करमल्ल**
यिनी कान्तिपुरका राजा भूपालेन्द्रका छोरा हुन्। यसबेला (वि.सं. १७५५) यिनको उमेर दुइवर्ष पनि पुगेको थिएन। महत्त्वपूर्ण पत्रहरूमा राजाको उत्तराधिकारी पनि साक्षी बस्नु पर्ने चलन हुँदा सानै भए तापनि यिनी यहाँ साक्षी राखिएका हुन्। भास्करमल्लको अरू परिचय तल आउने पत्रमा परेको छ।

**विश्वम्भर उपाध्याय**
यिनी कान्तिपुरका उपाध्याय (गुरुज्यू) हुन्। वि.सं. १७४५ मा चौतारा लक्ष्मीनारायणले यिनीलाई ठूलो घर दान दिएथे। वि.सं. १७४८ मा भूपालेन्द्रले यिनीसँग दीक्षामन्त्र सुनेका थिए। यो ताम्रपत्र गरिएताका यिनी कान्तिपुरमा शक्तिशाली पुरुष थिए।

**विद्याचन्द्र उपाध्याय**
यिनी ललितपुरका गुरुजू हुन्। वि.सं. १७५५ मा योगनरेन्द्रले केही व्यवस्था बाँधी ताम्रपत्र राख्दा यिनी त्यसका प्रमुख सल्लाह दिने पुरुष थिए।

**नवमीसिंह भा**
यिनी कान्तिपुरका चौतारा हुन्। वि.सं. १७५५ मा रघुवीरलाई खोसी यिनलाई चौतारा बनाइएको थियो। वि.सं. १७४४ मा गोरखायुद्धमा कान्तिपुरका सैन्यले भाग लिँदा त्यसको नेतृत्व गर्नेहरूमा यिनी पनि थिए। यिनको आगमदेवताको ठूलो मन्दिर नघलमा अद्यापि छ ।

**ग्वगल भा**
यिनी ललितपुरका चौतारा हुन्। यिनको घर ललितपुर वाहालुखाटोलमा थियो। वि.सं. १७५८ मा योगनरेन्द्र र भूपतीन्द्रको सन्धिपत्रमा ललितपुरको तर्फबाट साक्षी बस्नेमा यिनी पनि थिए।

यस ताम्रपत्रमा साक्षी बस्नेहरूमा श्रीजयन्त उपाध्याय, श्रीकृष्ण भट्ट, श्रीमहेश्वर भट्ट, श्रीहरिशङ्कर भट्टको अन्त उल्लेख पाइएको छैन।

★★★

(२४०)

## ललितपुर उकुबहाल यतालिवि चिभाचोकको अभिलेख

१. ॐ नमः श्रीधर्म्मधातवे॥ ............ गरुडगतां बज्राकेंपर्य्यङ्कितः बु .....
२. ......... पीतरक्त, स्यामाभवर्णकृतीः । वोध्यं श्रीवरदानमाध्यमयदाः भूस्य समुद्राग्वि-
३. गं वन्दे रत्नकिरीटिन शुकुत्विनः त ज्ञानपन्चात्मकान्॥ सम्वत् ८१७ फागगुण-
४. शुक्लया ९ थ्व कुन्हु दानयात पान हायके यात धक, श्री ३ चैत्रभराड। तुथि

५. स्थापना याङा दिन जुरो ॥ थ्वनरि, सम्वत् ८१७ श्रावण शुक्ल; अस्तमी, शु-
६. कवार, थ्व कुन्हु श्रीश्रीश्रीदीपंकर तथागत प्रमुखन सकलसंघपनि
७. यातं पिण्ड पात्र द्वहरपा दिन जुरो ॥ थ्वति कारणस, निम्ह जुजुपनि बिज्या-
८. चका जुरो ॥ श्रीरलितापुरिः नगराधिपति, श्रीश्रीयोगनरेन्द्रमल्ल था-
९. कुर, श्रीकान्तिपुरः नगराधिपति, श्रीश्रीभूपालेन्द्रमल्ल थाकुल, उभ-
१०. यनिम्ह थाकुल, एतारिविछेस, ओस्वचकं, बिज्याचकाव, दशपतिं द्व-
११. हरपा जुरो ॥ दानपति शाक्यवंश श्रीरत्नमुनिजु, द्वितीय भ्रातु श्रीरत्नराजजु
१२. तृतीया भ्रातु श्रीधनपतिजु भ्रातु श्रीशुमश्रीजु भ्रातु पुत्र श्रीरक्षराजजु
१३. श्रीवंशमुनिजु, श्रीनन्दराजजु, श्रीगुणश्रीजु ॥ श्रीचिकिलिजु, श्रीगोपध-
१४. नजु ॥ श्रीपूर्णराजजु ॥ श्रीरत्नराजजु ॥ श्रीरन्तसिंजु, छेसेवरपाओ चो-
१५. ङ श्रीपूर्णसिंजु । संवरि इनायलङ ॥ श्रीजोतिराजजु, थ्वतेस्य-
१६. न जुजुपनिस्त दशपति द्वहरपाओ पात्र पूरणदान । सिद्ध याङ
१७. ...... जुरो ॥ थ्वनरि सम्वत् ८१९ फाल्गुण शुक्ल ॥ तृतीया रेवतिनक्ष-
१८. त्रै शुक्रमानयोगे ॥ बुधवार, थ्व कुन्हु श्री ३ चेत्तभराड ॥ इनाय ॥
१९. दयकाव थ्वते प्रतिष्ठा यज्ञ याङा दिन जुरो ॥ थ्व चैत्रभराड
२०. बाबु पुरन्दर दिवंगत डेङ कारणस दयका जुरो । पुत्र श्री
२१. रत्नमुनि ॥ श्रीरत्नराज ...... जर्मुनि, दिवंगत वङ श्रीधर्मपति
२२. थ्वति डाम्ह बाकाज नामनं, दयका जुरो, बाबु पुरन्दर मा-
२३. म मन थ्व निम्ह त्रिपुरुषी दिवंगत वङ कारणस, श्रीवकुली
२४. आगम श्री ३ चकसम्वर बज्रवाराही देवी प्रीति नायक
२५. नकिनी भोष्यकेयात दत्तपूजा द्वहरपा, श्री ३ प्रज्ञापारमिता
२६. देवी मामया नामन दयका जुरो ॥ आय रपोविवु र ओ २ - क
२७. छेपिओ ४ धुति ओरसानन यज्ञ याङ वुसाधङ यायमा-
२८. र जुरो ॥ गुरुभराड वुववाहारया परिदेवजु उपाध्या
२९. सिद्धिजु, भिछेंवाहारया, मंजुवज्रजु, थ्वति हाने मा
३०. र ॥ थ्वतिया चिन्तायाक श्रीगुणश्रीजु ...... राजजु
३१. श्रीनन्दराजजु, श्रीचिकिति, थ्वति ..... एतत्पुण्यानु-
३२. भावेन, लोका सन्तु ..... शुभमस्तु सर्वदा

★★★



## (२४१)

# मूलचोकको योगनरेन्द्रमल्लको अभिलेख

ललितपुर राजदरवारको मूलचोकमा केही बर्ष अगाडिसम्म निकै ताम्रपत्रहरू टाँसी राखिएका थिए । तिनमा यो अभिलेख कुँदिएको ताम्रपत्र पनि थियो, तर अहिले सो ताम्रपत्र त्यहाँ छैन; त्यहाँका हराएका ताम्रपत्रमध्ये यो पनि परेको छ । यसमा ने.सं. ८१९ छ ।

संशोधन-मण्डलद्वारा अभिलेख-सँग्रह १० भागको १५ पृष्ठमा यो अभिलेख छापिएको छ ।

१. ॐ स्वस्ति ॥ श्रीनाणीग्लाधिपति महाराजाधिराज सँगीतार्ण्णवपारग श्रीश्रीजययोगनरेन्द्रमल्लदेव प्रभु ठाकुरसन ॥ श्रीविद्याचन्द्र
२. उपाध्याजु प्रमुखन यलंदेशया पण्डित मुनकाव थव गोष्ठीया परिपाति चोस्यंतयास भाषा थ्वते ॥ भाषा सतिग्ल पुलबाहार
३. कोवाहार माहापाल थ्वतेस मोकाले थिथिन्यनं लत्यातो मानययायमाल श्रीश्रीराजन जुक्व, विहांवंङपनिस जिंमने-
४. न्हुन याय, उपरान्त लवत भाजुपनिस नोग्ल स्वट यंछ थ्व स्वखायाजुरनास थवतेस्यन थिथिं श्रीकुम्हरजु श्रीथाकुलजु-
५. पनिस शुद्धान तलवतभाजुपनिस्यन लत्यातो मानय यायमाल जुरो ॥ उपारान्त वनिम्ह बाहारलुखा न्हाया लवत दक्व स-
६. कलस्यनं महनीन खलं जोनवयमाल, श्री ३ देगुडिपूजास होनेमाल जुरो ॥ भूय तुंथिलजुयापनिं बाहारलुखाया-
७. थ्वं जुरो ॥ थ्वते परिपाति चोस्यं तक्व ग्वम्हन मानयमयात, ओम्हयात श्री ३ परमेश्वरीष्टदेवताया कृद्दृष्टि जुरो ॥ साक्षीबा-
८. हारलुखा येतागृह चौतारा ग्वल मा दृष्ट । सम्वत् ८१९ माघशुक्लपूर्णमाश्यां तिथौ ॥ शुभमस्तु सर्वजगतां ॥ ॥

### अनुवाद

कल्याण होस् । श्रीमणिग्लाकाअधिपनि, महाराजाधिराज संगीत रूपी सागरमा पारंगत भएका श्रीयोगनरेन्द्रमल्लदेव प्रभु ठाकुरले श्रीविद्याचन्द्र उपाध्याय आदि ललितपुरका पण्डितहरू जम्मा पारी आफ्ना गोष्ठीको नियम लेखी राखियो । सो यस प्रकाका छ - सातिग्ल, पुलवहार, कोवाहार, महापालका मरे भने परस्परमा डेढ-महीनासम्म आशौच वार्नु पर्छ । श्रीश्रीराजाले चाहिँ राजदरवारबाट बाहिर गएकाको १२ दिन आशौच वार्नू ।

उप्रान्त लवत भाजु (मठ्याहा)मध्ये नोगल, स्वथर यंछे, यी तीन घरका जातले परस्परमा श्रीराजकुमार वा राजाको समेत लवटहरूले डेढ महिना नै आशौच वार्नु पर्छ।
उप्रान्त बनिम्ह, वाहर लुखाका अधिका लवट जति सबैले दसैंमा खड्ग लिन आउनु पर्छ। फेरि तुंथिल र बाहार लुखाकाहरूको यस्तो स्थिति हो।
यी नियम लेखिएअनुसार जसले मान्दैनन्, उनलाई श्री ३ परमेश्वरी इष्टदेवताको कदृष्टि परोस्। दृष्ट साक्षी बाहिर लुखा येताहरूका चौतारा भोगल भा।
ने.सं. ८१९ (वि.सं. १७५५) माघ शुक्ल पूर्णिमा। सबै संसारको शुभ होस्।

★★★

(२४२)

## चापागाउँ धुसिटोल गणेश देवलको शिलालेख

### मूलपाठ

१. ॐ नमो श्रीगणेश्वरायनमो, श्रेयोऽस्तु सम्व-
२. त् ८१९ मार्ग्गशिल, शुक्र सप्तमि ॥ सत-
३. भिषनक्षत्र ॥ वजयोग अंगवार थ्व कु-
४. न्हु धुसिठानसके सिया तोरन दय-
५. कं प्रधिस्था याडाः दिन जुरो ॥ देवरामजु
६. भारो, सिवदासजु भारो ॥ कासिराम भावो
७. भावसिंङ भावोः घरके भावोः वासिं-
८. ङ भावोः वदे भावोः निकुसिंङ भावोः
९. दित राज भावो ॥ वदे भावोः छोसिङ
१०. भावो ॥ मांदेव भावो, थुति समुहन
११. धरंमकेस निम्हो फुकिजिं छे-
१२. हमाय जुस्यं धुनका जुरो पुन-
१३. चिन्ता याक ॥ वासिंङ भावोः शुभ ॥

★★★



(२४३)

## पाटन तबहालभित्र क्वापाल देवताका सिँढीको शिलालेख

### मूलपाठ

१. नमः श्रीक्वाचपार भट्टारकाया। यतोसत्य त-
२. तो लक्ष्मी यतो लक्ष्मी ततो हरि यतो हरिस्त-
३. तो धर्म्म। यतो धर्म्मस्ततो जयः श्रेयोऽस्तु सम्व-
४. त् ८१९ पौषमासे कृष्णपक्षेः ॥ सप्तम्यान्ति-
५. थौ चित्रानक्षत्रे ॥ धृतिपर शूलयोगे वृह-
६. स्पतिवासरे ॥ थ्व कुन्हु श्रीतवबाहार ननि
७. वंकेलि गृहं ॥ काशि भारो सी गंगा, ज्ये-
८. ष्ठ पुत्र विशेश्वर भारो, मध्य पुत्र धनेश्वर
९. भारो, कन्ष्ठ पुत्र महेश्वरः भारो, पुत्री गौ-
१०. री थ्वर्तिस्ति काय ल्याच संमत जुस्य स ए-
११. व श्रीतवबाहार ननि येतागृह ॥ श्रीमत्
१२. श्रीश्रीक्वाचपाल भट्टारका प्रीतिन, म्ह २
१३. लोहोन सिंह तस्यं प्रतिष्ठा याङा दिन
१४. जुरो ॥ थ्व सिंह सुनानं सेनकरसा पंचमहा-
१५. पातक ला जुरो ॥ शुभ ॥

★★★

(२४४)

## ल.पु.ई. नखुयप्याका वैष्णवीदेवीको चौघेराभित्र द्वारपालसिंहका मुनि रहेको शिलालेख

### मूलपाठ

१. ॐ श्री ३ वैष्णवी नमः ॥ वैष्णवी स्याम वणाङ्गी निशेषमय नाशनीवि-
२. न्दुपात्र धरी देवी ॥ नमस्ते गरुडासनी ॥ श्रेयोऽस्तु सम्वत् ८१९ माघ

## अनुवाद

कल्याण होस् । ने.सं. ८८२ (वि.सं. १८१९) आश्विन शुक्ल दशमी । श्रीपशुपतिचरणकमलेत्यादि । श्रीमानिगलका अधिपति महाराजाधिराज श्रीश्रीजयरणजित मल्लदेव प्रभु ठाकुरले यसभन्दा पहिले मंगलभट्टको (ललितपुरको राजधानीको) नीतिमार्ग विग्रिरहेको हुनाले मंगलभट्टको नीतिमार्ग स्थितिरीति परिपाटीको वन्दोवस्त गर्नाको लागि यो ताम्रपत्र लेखिराखियो ।

यसको वेहोरा ... यसभन्दा पहिले असल वा खराब जे भयो, भयो । अब उप्रान्त न्यायनिसाफ गर्दा कसैले पनि पक्षपात गर्नु हुँदैन । अपराधअनुसार सजाय गर्नु पर्छ । तीनै पक्ष (राजा, भारादार प्रजा) को उपस्थिति नभइकन सजाय गर्नु हुँदैन । अपराधको परीक्षा नगरीकन कसैको चलअचल सम्पत्ति हरण गर्नु हुँदैन । न्यायनिसाफ गर्दा न्याय माग्नेले र न्याय गर्नेले पनि विमति (आफूले गरेको कुरामा पश्चाताप) हुँदा माफ माग्न पाइन्छ ।

फेरि (अर्को) वेहोरा... मूलचोकमा तमाखु भाङ खान हुँदैन, थुक्न हुँदैन । जुत्ता लाएर आउन हुँदैन । जुत्ता राख्न हुँदैन ।

उप्रान्त जसले पक्षपात गरी अन्याय गर्छ, त्यसलाई श्री ३ करुणामय (रातामछिन्द्रनाथ) श्री ३ हरिसिद्ध, श्री ३ तलेजु श्री ३ देगुतले श्री ३ पशुपति श्री ३ गुह्येश्वरी श्री ३ चाँगुनारायण यी देवताको कुदृष्टि पन्चमहापातक लागोस् यस नीतिमार्ग अनुसार काम गऱ्यो भने उसलाई यी देवताको सुदृष्टि परोस् । अश्वमेध यज्ञ गर्दाको फल मिलोस् ।

फेरि (अर्को) वेहोरा ... श्री श्रीराजाबाट अन्याय भयो भने भारादार प्रजाले श्रीश्रीराजासँग बिन्ती गर्नुपर्छ । भारादारहरूले अन्याय गरे भने श्री २ राजा र प्रजाहरूले बिचार गर्नुपर्छ । प्रजाहरूले अन्याय गरे भने श्री २ राजा र भारादारहरूले बिचार गर्नुपर्छ ।

यस ताम्रपत्रका दृष्ट साक्षी दलाछेंका चौतारा रत्नसिंह भारो, धनवन्तसिंह भारो, देवीदास भारो, अमृतसिंह भारो, वीरनरसिंह भारो, जयनरसिंह भारो, भवानीदास भारो, कीर्तिलक्ष्मीसिंह बाबु, कृष्णशंकर बाबु, लक्ष्मीधर भारो । शुभ ।

★★★

## (३९५)

# पाटन हकटोल पाटीको भित्ताको शिलालेख

## मूलपाठ

१. ? ॐ नमः श्रीलक्ष्मी नारायण ॥ ॥ लक्ष्मी नारायणं
२. वन्दे जगतप्रतिपालकं । तार्क्षकुर्म्भासनं देवं प्र-
३. भु लक्ष्मीहरिं भजेत् ॥ श्रेयोऽस्तु ॥ सम्वत् ८८३ पौष
४. मासे कृष्ण पक्षे ॥ अमावास्यान्तिथौ ॥ श्रवणानक्षे-
५. त्रे ॥ सुद्धियोगे ॥ चतुष्यदकरणे ॥ शिवमुहुत्तके ॥



६. बुधवासरे ॥ मकररासिगते सवितरि ॥ सएव रासि-
७. गतेचन्द्रमसि ॥ अस्मिन्दिने दिवंगत स्वभर्त्ता विप्र श्रीरघु-
८. नाथ उझास नामन श्री सुन्दरी व्राम्हणीसन श्री ३ ल-
९. क्ष्मीनारायण प्रीतिन, न्हुलक्वाठ वु रोव षु छ-
१०. न्ता ॥ थ्व वुयां वलसानन, वर्षप्रतिं थ्व तिथि कुन्हु
११. श्रीव्राम्हणजुपनि निम्ह ३० भोपस्के मार ॥ प्रासाद चतुर्द-
१२. शी कुन्हु श्री ३ कौमारि माजुस्के, म्हं १ हं स ज्याङ्गुप्रताक
१३. दयकं पूजा याय मार ॥ फलेस प्वा ६ मत छोयकं दे-
१४. व पूजा यास्यं, पानति हायके मार ॥ नित्य पूजा या-
१५. त जाक्य फं ४५ पूजा वारियात विय मार ॥ सेल्हो-
१६. यात दं सं मो टं १ लेनके मार ॥ थ्व चोस्यंतको मया-
१७. तसा गोव्राम्हणादि पंचमहापातक राक जुरो, शुभं ॥

## अनुवाद

श्री लक्ष्मीनारायणलाई नमस्कार । संसारको प्रतिपालन गर्ने, गरुड र कछुवामा बसेका प्रभु लक्ष्मी र नारायणलाई ढोग्दछु ।

कल्याण होस् । ने.सं. ८८३ (वि.सं. १८१९) पौष कृष्ण औंसी, बुधबार, श्रवणानक्षत्र शुद्धियोग चतुष्पदकरण, शिवमुहूर्तमा, मकरराशिमा सूर्य र चन्द्रमा भएको बेलामा, यस दिन दिवंगत आफ्ना पति ब्राह्मण श्रीरघुनाथ उझाको नामले श्रीसुन्दरी ब्राह्मणीले श्री ३ लक्ष्मीनारायणलाई प्रसन्न पार्न न्हल क्वाठ खेत ६ रोपनी चढाइन् ।

यस खेतको आयस्ताले प्रतिवर्ष यो तिथिमा दुइजना श्रीव्राम्हणलाई भोज खुवाउनू । प्रसादचतुर्दशी (पाशाचह्रे) को दिन श्री ३ कौमारीमाजुलाई ९७टा हाँस, पाँच हात प्रताक (पताका रूपको कपडा विशेष) राखी पूजा गर्नू । पाटीमा ६ बटा वत्ती बाल्नू; देवपूजा गरी पानति चढाउनू । नित्य पूजाको लागि चामल ४५ पाथी पुजारीलाई दिनू । मरम्मत गर्न वर्षमा एक रुपियाँ बाँकी राख्नू । यहाँ लेखिए जति गरेनन् भने गोहत्या, ब्राह्मणहत्या आदि पन्चमहापाप लागोस् ।

शुभ होस् ।

★★★

(३९६)

## पाटन पिंबहालभित्र पूर्वपट्टि सानो देवलको शिलालेख

### मूलपाठ

१. ................................ भवाण्यै ॥ वन्देहं कालिका देवी भू-
२. ..... हितां शिवां ॥ चण्डमुण्डशिरछेदका-
३. रिनीं चारुहासिनीं ॥ ॥ संवत् ८८४ मार्ग्ग
४. शिर शुक्ल षष्ठयां तिथौ श्रवणानक्षेत्र वृद्धियो-
५. गे सोमवासरे तस्मिन्दिने ॥ ॥ अत: परं ने-
६. पाल भाखा ॥ अतावलि विया श्रीरुद्रशंकर-
७. शर्म्मा, तस्य भार्य्या धनलक्ष्मी मयी ॥ पुन:
८. पिंथुवाहालया भाजुदेव भारो थ्व स्वम्ह
९. सम्मतन श्रीथंथुदेवया थास चोङ जल-
१०. धेने जीर्ण्णजुयाओ जीर्ण्णोद्धार याङाओ
११. संक्षेप मात्र पूजा प्रतिष्ठा याङा दिन जुलो
१२. शुभं ॥

### अनुवाद

..... भवानीलाई नमस्कार । .. हित गर्ने, कल्याण गर्ने, चण्डमुण्डको टाउको काट्ने, राम्रो हाँस भएकी कालिका देवीलाई ढोग्दछु । ने.सं. ८८४ (वि.सं. १८२०) मार्ग शुक्ल षष्ठी सोमबार श्रवणानक्षेत्र वृद्धियोग, सोमबार ।

अब नेपालभाषा (नेवारी) मा लेखिएको कुराको अनुवाद........ श्री रुद्रशंकर शर्मा उनकी पत्नी धनलक्ष्मी मयी, फेरि पिंथुवहालका भाजुदेव भारो, यी तीन जनाको सल्लाहले श्रीथंथुदेवको ठाउँमा रहेको जलद्रोणी जीर्ण भएको हुनाले जीर्णोद्धार गरी संक्षेपमा पूजा गरी प्रतिष्ठा गरियो ।

शुभ होस् ।

★★★



(३९७)

## पाटन ज्याबहाल बहिलको बाहिर ऐंका सिँढीमा रहेको शिलालेख

### मूलपाठ

१. ? ॐ नमो वुद्धाय ॥ सधर्म्म पुण्डरिकाक्ष, सर्व्वज्ञ करु-
२. णामकं समन्तभदसास्तारं. साक्यसिंह नमाम्य-
३. हं ॥ श्रेयोऽस्तु सवत् ८८४ चैत्रशुद्धि षष्टमि श-
४. निश्चवाल, थ्व कुन्हु प्रतिष्ठा याङा दिन जुरो ॥
५. ॥ श्रीज्यावाहार वहिरया श्रीवजाचार्य्य शुभ जो-
६. तिजु. श्रीकुतुजु. श्रीसिद्धिकजु. धंगुरी कृष्णसिं भावो
७. ... कोया तुयिख्वान भावो. सुबार. लकोयाकृ-
८. ष्णसि भावो, रकोया भागीदेव भावो. रंथया
९. पादु भावो रंथया मसिकर भावो. रंथया हदि-
१०. ... भावो रंथया परिदेव भावो. थुति समो-
११. .. वहिरया फले रायव दयका दिन
१२. जुरो शुभ : ॥

★★★

(३९८)

## ठैव गाउँ, अन्तरीटोल, चिबहालमा रहेको अभिलेख

१. शुभ ॥ सं ८८४ चैतकृष्ण: । नवम्यान्तिथौ ॥
२. धनेष्ठा नक्षेत्रे ॥ व्रम्हयोगे ॥ आदित्यवासरे
३. थ्व कुन्हु श्री ३ वुद्धदेव विष्णुदेवी, गणे-
४. स ङा ४ थ्वत देवस्के ग्व १ घंथ तया ॥ पा-
५. हानजु मुल्मी, लक्ष्मी नारायन मुल्मी चि-
६. कतिजु मुल्मी, गङ्गाधर मुल्मी, धंचां-
७. मुल्मी थ्वत प्रमुखन थ्व घंथ सुनान
८. रोमयातसा पन्च माहापाप राक ॥

९. जुरो ॥ नाम संगतिन तया जुरो ॥
१०. शुभ ॥

### अनुवाद

ने.सं. ८८४ (वि.सं. १८२१) चैत्र कृष्ण नवमी आदित्यबार धनिष्ठानक्षत्र, ब्रम्हयोग, यस दिन श्री ३ वुद्धदेव, विष्णुदेवी, गणेश... यति देवतालाई घण्टा चढाइयो।

पाहानजु मुल्मी, लक्ष्मीनारायण मुल्मी चिकतिजु मुल्मी गंगाधर मुल्मी धंचा मुल्मी यति प्रमुख भई घण्टा चढाइएको हो। यस घण्टामा कसैले लोभ गरे भने पन्चमहापाप लागोस्। नामसंगीति-खलकले राखेको हो। शुभ होस्।

★★★

### (३९९)

## पाटन उकुबहालभित्र ईशान कुनाको भित्तामा टाँसिएको अभिलेख

१. नमनो रत्न त्रयाय ॥ श्रेयोऽस्तु ॥ सम्वत् ८८५
२. चैत्रमासे कृष्ण पक्षे चतुथयां तिथौ रेवति-
३. नक्षत्र वृहस्पतिवासरे, थ्व कुन्हु श्री ३ शाक्यमुनि
४. श्री वज्रबाराहि प्रतिन, थ्वतेन सतर दयका प्र
५. तिष्ठा याङा दिन जुरो। थ्ववेरस .. स्थविर श्री-
६. अदिकजु श्रीजयरत्नजु श्रीधर्मजु। श्रीतेज-
७. मुनिजु श्रीजयसिंहजु श्रीत्यांपासिंजु श्रीप-
८. द्ववजु श्रीरत्नदेवजु श्रीधर्म्मपाजु श्रीशु-
९. र्जमुनिजु भणालि श्रीजय श्रीजवेसन व-
१०. वु श्री सिद्धिकरजु जोतिराजजु थ्वते-
११. ....... दानपति वंकुवाहार ... हा पु-
१२. छेया श्रीन्हुरछेमा भार्या जयलक्ष्मी थ्व नेम्ह
१३. स्त्री पुरुषसंमतन दयंका जुरो ॥ शु
१४. भमस्तु जगतां सदा



### अनुवाद

रत्नत्रयलाई नमस्कार। कल्याण होस्। ने.सं. ८८५ (वि.सं. १८२२) चैत्र कृष्ण चतुर्थी बृहस्पतिबार, रेवतीनक्षत्र, यस दिन श्री ३ शाक्यमुनि र श्रीवज्रबाराहीलाई प्रसन्न पार्न सत्तल बनाई प्रतिष्ठा गरियो।

यसबेला .... स्थविर श्रीअदिकजु, श्रीजयरत्नजु, श्रीधर्मजु, श्रीजेश मुनिजु श्रीजयसिंहजु श्रीत्यापासिंजु श्री पद्धवजु, श्रीरत्नदेवजु श्रीधर्मपाजु श्रीसूर्यमुनिजु भडानी श्रीजयश्री... बाबु श्री सिद्धिकरजु, ज्योतिराजजु, यति ...।

दानपति वंकुवहाल ... का श्रील्हुरछें मा, पत्नी जयलक्ष्मी यी दुइ पति पत्नीले सल्लाह गरी बनाएका हुन्। संसारको सधैं शुभ होस्।

★★★

### (४००)

## पाटन यकछेटोल दगुबाहालभित्र दक्षिणपट्टिको घरको भित्तामा रहेको अभिलेख

### मूलपाठ

१. स्वस्ति:। अद्य श्वयत वलाहकल्पे वैवस्व मन्तले कलिजुगे प्रथ-
२. मचरने जांभूदिप्य भरतखण्ड आज्यावर्त्त पून्यस्थाने वाशुकिक्षेत्रे
३. पसुपति सन्निधान्य वाग्मत्या दिकिन कूरे नेपारांगत ललितेपरे य-
४. हैव पुन्य भूमौ ॥ ॥ सम्वत् ८८५ फाल्गुण शुक्ल पुर्ण्णमासि श्रीचन्द्रग्रास
५. पर्व दिन्ने ॥ थ्व कुन्हु ॥ श्रीवन्तवाहार भत्तारकस्य वुद्ध भगवान् प्रीतिन
६. ग्व १ घण्ठ धर्म्मसारा दयकं दुन्ता जुरो, वकनगहार छास फेर यौन्तागृह
७. देविदासभारो, भाजुरुकुनिमिनि भार्य्या शिवलक्ष्मी थुते समूहोन थुवते नमन दु
८. न्ता भूयो भाखा ॥ क्रख २ कु २ भुततेकोव थ्वते नेपु कत्या वुया वरसानन्-
९. .. श्रीग पूजा यायमार.. छामग्यआडा २ पिवरुनमहाया वु धर्मसारा सत्रया वर्सान-
१०. कमार ॥ भूय ॥ श्रीदुशर गलयात डाओ कुन्हु अ ३ चेकन देवया क-
११. दुव .. पिकायाय धर्मसारा सत्रस छोयके माक दानपिते थ्वते इन्द्रजात्रा-
१२. मा.. गर यात कुन्हु .. न्हापाया थे दानतिते मत छोयके ओयं जुरो ॥ भूय भाखा

१३. वन्तवाहारया जेरवाहारया नायकजुपनित्वं मोपं भार म्हं १ गुर्वाहार म्हं १ म्होय-
१४. म्हं १ जरजोतिवाउर्म्मा धुरि जुको जुरो ॥ भाखा ॥ थ्वते धुस्वर .. दनसास्य .. या
१५. मिवम्ह तयमार ॥ थ्व गुथि श्री २ वंन्तवाहारदेवस्के ३ विस्यंतया ॥ थ्व गुथिया
१६. चिंता याक ' वाहारया थरपा प्रमुखन नायकजुपनिसेन चिन्ता
१७. याययमार ॥ सारा क जुरोरे पधिस्था दिनस परराकजुस्यन रिसिक तिथिसजु-
१८. रो पधिस्था दिन माघ कृष्ण पूर्ण्णमासि थ्व कुन्हु जुरो ॥ स्वदत्तं परदत्तं वा
१९. यो हरेत्सुरविप्रयो ... यां जायते विट्भू वर्षाणामयुताजुतै । रोमरो-
२०. म या काले ग्वहथ्या पन्त महाप्राप राक जुर, उत्तरोत्तर जुकाले शुभ जुसे

## अनुवाद

कल्याण होस् । आज श्वेतवराहकल्प, वैवस्वतमन्वन्तर, कलियुगको प्रथमचरण, जम्बूद्वीप, भरतखण्ड, आर्यावर्त्त पुण्यस्थान, वासुकिक्षेत्र, पशुपतिको नजीकै, वाग्मतीको दक्षिण किनारामा, नेपालअन्तर्गत ललितपुर, यहीं पुण्यभूमिमा ।

ने.सं. ८८५ (वि.सं. १८२१) फाल्गुन शुक्ल पूर्णिमा, श्रीचन्द्रग्रहणको पर्व दिनमा श्रीवन्तवहालका भट्टारक बुद्धभगवान्लाई प्रसन्न पार्न एउटा घण्टा चढाइयो; धर्मशाला बनाइयो । वकनगहारछ्रास फरे यौन्ता गृहका देवीदास भारो, आमा रुक्मिणी, पत्नी शिवलक्ष्मी, यति समूहले यतिको नामले चढाइयो ।

बेहोरा.. भुततेको खेत, दुइ कर्ष दुइ हात । यति .. खेतको आयस्ताले ... को पूजा गर्नु पर्छ । ... विरुनमहा खेत धर्मशाला, सत्तलको लागि हो । फेरि श्रीदुशरगल यात्राको दिन, चीनजस्ता तेलले देवतालाई बत्ती बाल्नू । धर्मशाला, सत्तलमा बत्ती बाल्नू; दान यस प्रकार दिनू- इन्द्रजात्राको दिन, ... जात्राको दिन पहिलेको जस्तै वत्ती बाल्नू । अर्को बेहोरा.. वन्तवहाल र जेरवहालका नायकजतिलाई भोज खुवाउनू । एक जना गुरुबहाल, एकजना मोही, एक जना जरजोति ... । ..... यो गुठी श्री २ वंन्तवहालका देवतालाई चढाइएको छ ।

यस गुठीका चिताइदार .... वहालका धरपा प्रमुख नायकहरू हुन् । उनीहरूले हेरचाह गर्नु पर्छ । .... माघ कृष्ण पूर्णिमाको दिन प्रतिष्ठा गरिएको हो । आफूले वा अरूले ब्राह्मण र देवतालाई दान दिएको जसले हर्ला; त्यो लाखौं वर्षमा नरकमा पर्ला । लोभ गरे भने गोहत्या आदि पन्च महापाप लागोस् । लोभ गरेन भने उत्तरोत्तर शुभ होस् ।

★★★



## (४०१)

## खोकनाको अभिलेख

### मूलपाठ

१. ॐ नमः श्रीरुद्रान्यै देव्यैः ॥ सर्व्व मङ्गलमाङ्गल्यसर्व्वभूत वशङ्करी । क-
२. वचंकीत्तना देव्या सर्व्वपार्थैः प्रसद्यतेः ॥ ॥ श्रेयोऽस्तु ॥ सं ८८३ वै-
३. शुक्ल ॥ अष्टमि ह्यक्षे शूलयोगे बृहस्पतिवाल प्रतिष्ठा दि-
४. न जुरो ॥ श्रीजितापुरी स्थाने खोकनादेश व्हेलवुयोता गृह सिद्धि
५. सिङ भावो सूपिताफछि भावो भार्य्या पूर्ण्णवती उमयस नाम्न फले
६. दयकं श्रीद्यातक... प्रतिमा तस्यं ... आय दुन्ता ॥ रोहजेपि वु रोव
७. ङा ५ कोथ्वदेशवु रोव २ खतवु कर्ष ... कोतवुकर्ष १ साहा
८. गचो वुकर्ष .................... तया दिन कुन्हु जु १ पू-
९. जामल म्हं १ .................... थ्वते यंज-
१०. माल ॥ पुन .... अष्टि कुन्हु ..... यास्य गोष्ठिन-
११. केमाल जुरो । ....... षष्ठी कुन्हु श्री ३ रुद्रायणी पूजा या-
१२. स्यं म्हं १ वाहान .... दं २ दक्षिणा थ्वते यास्यं चपाडस
१३. गण ........................ त धात ३ मूलयात
१४. ओचार- काययात ........... जुरो । म्हं १ वाहान
१५. ....... खड्ग .... थ्वते ... अविछिन्न याङान यंजमाल
१६. जुरो । गुथिचिन्तायाक दाता .... सिद्धिसिं भावो विष्णु भावो धनसि
१७. ह भावो परिदेव भावो ... थ्वते समोहन ... तया जुरो । थ्वते गु-
१८. थि चिन्तायास्यं भक्षाभोजन यादो । रोभयाकाल्य पंन्च महा-
१९. पातक लाक जुरो, रोभ भयात काल्यरत्तरोत्त जुरो । शुभमस्तु ॥

★★★

## (४०२)

## फर्पिङ्ग उमामहेश्वरको आसनको शिलालेख

### मूलपाठ

१. ? श्रेयोऽस्तु संवत् ८८६ वैशाख कृष्ण द्वितीयायां तिथौ मूलानक्षत्र सोमवाल थ्व कुन्हु श्री
२. राजवंजीः धंचा भारोः स्व भाय्र्या शीतरा लक्ष्मीः भात् सहभातृ भाय्या सहः पुत्र दाति आदि सहः पु-
३. त्र भाय्या सहः थ्वती समूहनः ववु पशुरामः माम देवीः मृतकादिः जीव कादिः सकलस ना-
४. मन श्री ३ उमामहेश्वर प्रतिमा दयकः प्रतिष्ठा याङा दिन जुरो ॥ शुभं सर्वेषां एव
५. ........... ? गजसिं ॥ ? रामानन्द ॥ ? धनवंत ॥ ? जगसिं ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ८८६ (वि.सं. १८२३) वैशाख कृष्ण द्वितीया सोमबार मूलनक्षत्र, यस दिन श्रीराजवंशी धंचाभारो, पत्नी शीतलालक्ष्मी, भाइ र भाइबुहारी, छोरा नाति आदि, बुहारी समेतको समूहले बाबु परशुराम, आमा देवी दिवंगत र जीवित सबैको नामले श्री ३ उमामहेश्वरको प्रतिमा बनाई प्रतिष्ठा गरियो । सबैका शुभ होस् ।

★★★

## (४०३)

## पाटन वुलुगाउँ, लाछीटोल पाटीमा टाँसिएको अभिलेख

१. स्वस्ति श्री सम्वत् ८८६ ज्येष्ठमासेशुक्लपक्षे पूर्णि-
२. मायांतिथौ, मूलनक्षेत्रे, शुक्लयोगे, आदित्य
३. वासरे अस्मिदिने, थ्व कुन्हु साला प्रतिस्थाया-
४. ङा दिन, पशुपतिदेश सिवपूलि देश ग्रा-
५. मे श्रीश्रीद्विजजवल श्रीहर्षपंथ काजि श्रीश्री-



६. द्विज व्र ग्यविन्द पंन्थ निम्सेन्पूहजुया पेम्ह पा
७. थ्व फरे जिर्ण्ण जुयाओ ... थ्व गुलि
८. दाङा जुरो ॥ शुभ

### अनुवाद

कल्याण होस् । ने.सं. ८८६ (वि.सं. १२८६) ज्येष्ठ शुक्ल पूर्णिमा आदित्यबार, मूलनक्षत्र, शुक्लयोग, यस दिन पाटीको प्रतिष्ठा गरियो । पशुपतिदेश, शिवपुरीदेश ग्राममा श्रीश्रीद्विजवर श्रीहर्षपन्थ काजी र द्विजवर गोविन्द पन्थ दुइ जना प्रमुख भई अघिको पाटी जीर्ण भएको हुँदा .... यो पाटी बनाइएको हो ।

★★★

## (४०४)

## कीर्तिपुर, बाघभैरव मन्दिरको अभिलेख

= Regmi 1966 III no. 88

### मूलपाठ

१. ........... समो धीरः सर्व्वगुण ..........................
२. ............ पतिरभूत्क्षीराम्वुधो चन्द्रवत् ...............
३. ... मित तेजसापुरवरसौधावली राजितं श्रीमत् .....
४. लितं । नाना काचनकुंरस्मिरचनादेदीव्यमानाम्वर ...
५. .. शंकरात्मनः ॥ तदा व्याघ्रेश्वरस्यास्मिं भग्नवेश्मशिरः सुच । चूलिकोत्या-
६. .. हैमास्त्रयो घटाः ॥ अहोरात्रेण यज्ञेन विधिरस्य समापित : । सपत्नीक-
७. .. तेन जगत्यालेन वर्म्मणा । जिर्न्नोधारविधानेस्मिं जीतदेवो द्विजोतमः..
८. .. धायस्तथा चैव माधवोंपि क्रियाद्विजः ॥ दैवज्ञः कथितो वावुराचार्यो..
९. .. क महावि ... महाकर्म्म वेदविद्याविचक्षणः ॥ श्रीमतजगत्पालवर्म्म-
१०. त्नीको महायशाः । यजमानो विद्यानस्य वेदोक्तस्य समन्ततः । पुण्ये-
११. .... नेन राष्ट्रे भवतु मंगलं ॥ सपत्नीको जगत्पालो भुक्तिं मुक्तिं च ..
१२. ... वर्षे नेपालजाते शरगुणरसके कार्त्तिके कृष्ण ...
१३. ... दिति कथिते मे च योगे शुभाख्ये बारे चन्द्रस्य कर्क्कस्थितहिमकिर-
१४. .... कस्थे च सूर्ये श्रीमद्व्याघ्रेश ..... मतिसुभगस्वर्ण कुंभा ...
१५. .... ॥ ० ॥ अतः पर नेपालभाषा ॥ श्रेयोऽस्तु ॥ सम्वत् ६३५ कात्तिक
१६. कृष्ण पक्षे चतुर्थ्यायान्तिथौ ॥ पुनर्व्वसुनक्षत्रे शुभयोगे सोमवा-

१७. ... छ राशिगत सवितरि कर्क्कतराशिगते चन्द्रमसि ॥ थ्व दिन कोन्हु
१८. श्रीश्रीव्याघ्रेश्वरभटारकस्य निवास जिर्न्नोधार याङा चूलिका ...
१९. .. जुडि स्यंपो वेदमन्त्रविधानेन दशकर्म्म संपूर्ण याङ छेया ...
२०. ... ॥ थ्वन षुन्हु न्हवने श्रीपिण्डवहार न्हवने ... वीया मतषात याङा नि-
२१. थ्वन संति स्वडंदेशस यज्ञसंभार दयकं ध्वजायात याङदेश ओया ॥
२२. .. संति यं स्वंदेशश शुध्वजाभायातन देश ओयाव कीर्तिपुरी वंङा ॥ थ्वन संति
२३. ..लकर्म्भयाङा अहोरात्र यज्ञ ॥ संति पूर्णा ॥ यजमान श्रीमाणीग्ल श्रीपिण्ड
२४. .. वहार महापात्र श्रीजगत्पाल वर्मनस्य यजमानी श्रीरूपक्ष्मी ठकिरिनी..
२५. ॥ पुत्र श्रीरक्षापालवर्मनस्य पत्नी श्रीदेवलक्ष्मी ठकुरिनीस श्रीअमृतलक्ष्मी ठ-
२६. कुरिनीस ॥ थ्व सकलस पर्ज्यावस कीर्त्ति याङन दयका जुरो ॥ प्रोहित श्री
२७. सोहलनिम्हं श्रीजीतदेवजुत्वं श्रीमाधवदेवजुत्वं अभयस्यं वेदविधान
२८. सं क्रिया याङा यिहितिवावु भारो आचार्य जीवकेश भारो ॥ थ्वत्येया पुन्येन
२९. आयुआरोग्र एइ(श्व) र्य जनधन लक्ष्मी खड्गसिद्धि प्रताप वृद्धिरस्तु ॥

## अनुवाद

... त्यसबेला व्याघ्रेश्वरको जीर्ण यस मन्दिरको उद्धारको लागि ... चूलिका स्थापना गरियो ...... आरोहरण गरियो तीनवटा गजुर चढाइयो। अहोरात्र यज्ञ गरीकन यस जीर्णोद्धारको विधि समाप्त गरियो । पत्नीसहित... उहाँ जगत्पालवर्माले गर्न लाइएको यस जीर्णोद्धारको काममा असल ब्राह्मण जितदेव नियुक्त गरिए तथा ब्राह्मण माधव पनि यस विधानमा नियुक्त गरिए । जोशी... आचार्य ... .... .... क्रियाकर्म र वेदविद्यामा निपुण... । वैदिक विधान अनुसारको यस कामका यजमान सपत्नीक, ठूलो कीर्ति फैलिएका श्रीजगत्पालवर्मा हुनुहुन्छ । ..... यस पुण्यले राष्ट्रमा मंगल होस् । सपत्नीक जगत्पालले भुक्ति र मुक्ति पाऊन् । ने.सं. ६३५ (वि.सं. १५७१) कार्तिक कृष्ण । (चतुर्थी तिथि पुनर्वसु) नक्षत्रे शुभयोग सोमबार, कर्कटराशिमा चन्द्रमा र वृश्चिकराशिमा सूर्य रहेमा, श्रीव्याघ्रेश्वर ........

यसपछि नेपालभाषामा लेखिएको कुरा.... कल्याण होस् । ने.सं. ६३५ (१५७१) कार्तिक ... चतुर्थी पुनर्वसुनक्षत्र शुभयोग सोमबार वृश्चिम राशिमा सूर्य, कर्कटाराशिमा चन्द्रमा रहेमा, यसदिन श्रीश्रीव्याघ्रेश्वर भट्टारकको मन्दिरको जीर्णोद्धार गरियो । चुलीका .... वेदमन्त्रविधानअनुसार दशकर्म सम्पूर्ण गरियो । यसको छ दिनअघि श्रीपिण्डवहाल अगाडि... गरियो । यसको भोलिपल्ट खडदेश (देउपातन) मा यज्ञ गरीकन 'ध्वजयात्रा' गरी कीर्तिपुर देशमा आइयो । ... भोलिपल्ट कान्तिपुर आदि तीनै देशमा 'शुभयात्रा' गरी कीर्तिपुर देशमा फर्कियो । यसको भोलिपल्ट ... कर्म गरियो । अहोरात्र यज्ञ गरियो । भोलिपल्ट संपूर्ण गरियो ।

यजमान श्रीमाणिग्ल श्री ... विहारका महापात्र श्रीजगत्पालवर्मा, यजमानी श्रीरूपलक्ष्मी ठकुरिणी, छोरा श्रीरक्षपालबर्मा पत्नी श्रीदेवलक्ष्मी ठकुरिणी, अमृतलक्ष्मी ठकुरिणी, यी सबैको पालामा कीर्ति राखिएको हो । पुरोहित श्रीसोहलनिम्हंका श्रीजितदेवजु, श्रीमाधवदेवजु, दुवैले वैदिक विधान अनुसार क्रिया गरियो । थिहिती भारो, आचार्य जीवकेश भारो । यसको पुण्यले आयु आरोग्य ऐश्वर्य जनधन लक्ष्मी प्रतापको वृद्धि होस् । खड्गसिद्धि होस् ।



व्याख्या

ललितपुरको इतिहासमा 'महापात्रयुग' निकै चाखलाग्दो छ । साथै, यसबेलाको ललितपुरको इतिहासलाई क्रमबद्ध गर्ने काम त्यत्तिकै जटिल रहेको छ । शासनाधिकार अनेक महापात्र-शाखामा विभक्त हुने हुँदा यस ताकाको इतिहास समग्र रूपमा चित्रित गर्न सकिएको छैन । त्यसबेला दक्षिणविहार, उत्तरविहार, पिंबिहार आदि विहारहरूद्वारा ललितपुरको वर्गीकरण भएको थियो । तत्तत् बिहारका इलाकाका शासकका रूपमा महापात्रहरूको वंशपरम्परा चलेको थियो । स्थिति मल्लको पालासम्म पुग्दा यस्ता महापात्रहरू सप्तकुटुम्ब अर्थात् सात परिवारमा केन्द्रित भइसकेका थिए । ती सप्तकुटुम्वज (सात परिवारका) मध्येका तीन महापात्र मुख्य भई ललितपुरमा शासन गर्दथे । यी महापात्रहरू गद्दीनशीन राजाको आज्ञा मानी शासन गर्दथे तापनि पुस्तैनी अधिकार पाएका हुँदा यिनीहरू पनि शक्तिशाली थिए ।

स्थिति मल्लभन्दा निकै अघिदेखि ललितपुरमा तीन महापात्रहरूको सत्ता कायम रहेको पाइन्छ तापनि सप्तकुटुम्बज मध्ये तीन महापात्र मुख्य भई शासन चलाउने कुराको स्पष्ट उल्लेख चाहिँ स्थिति मल्लको पालादेखि बढी पाइन्छ । स्थिति मल्लको पालाको ने.सं. ५१२ ( वि.सं. १४४९) को पाटन कुम्भेश्वरको अभिलेखमा "....ललितपत्तन नगरोत्तमे... महाराजाधिराज श्रीश्रीमत्जयस्थितिराज मल्लदेवेन संभुज्यमान विजयराज्ये ॥ श्रीमत्सप्तकुटुम्वज प्रधान मूर्त्यंगमहापात्र श्री त्रिभयपात्र प्रमुखादानः संपाल्यमाने" भनी लेखिएको छ । यसबाट स्थिति मल्लको पालामा सप्तकुटुम्बजमध्ये तीन महापात्र मिली ललितपुरको प्रशासन चलाउने पद्धति प्रचलित भइसकेको थाहा पाइन्छ । यसपछिका ललितपुरका अभिलेखमा पनि यही कुरा लेखिएको पाइन्छ । उदाहरणार्थ यक्ष मल्लको पालाको पाटन बालकुमारी क्वाछेँनिरको ने.सं. ५६७ (वि.सं. १५०४) को अभिलेखलाई देखाउन सकिन्छ । त्यसमा श्रीयक्ष मल्लो भूपोऽस्ति नेपाले तेन पालिते, त्रिभिःप्रधानैः पात्रैश्च पालितो ललितपुरः भन्ने उल्लेख परेको छ । विष्णुसिंह ललितपुरमा एकच्छत्र शासन नचलाउन्जेल यही पद्धति कायम नै रह्यो ।

सप्तकुटुम्वजमध्ये तीन महापात्रको छनौट कसरी गरिन्थ्यो; यो कुरा स्पष्ट भएको छैन । गद्दीनशीन राजाद्वारा तीन महापात्रका रूपमा नियुक्ति दिइएको वा सप्तकुटुम्वजहरूमा पालोपालो गरी महापात्र छानिन्थे ? यो कुरा थाहा पाउन सकिएको छैन । शुरुमा सप्तकुटम्वज मध्ये केही मल्लहरू पनि थिए । पछि भने तिनीहरूले ' मल्ल' भनी लेख्न छोडिएको पाइन्छ ।

यी सप्तकुटुम्बज मध्ये एक थरी 'पाल' हरू पनि थिए । पाटन पिंबिहार भेकका शासकका रूपमा 'पाल' हरूको उल्लेख आएको छ । यी पालहरूको वंशक्रम जोड्ने सामग्री प्राप्त भएको छैन । यिनीहरूको फाटफुट उल्लेख मात्र पाइएको छ । अहिलेसम्म प्राप्त ललितपुरका पालवंशजमध्ये वरपाल बढी प्रख्यात छन् । ने.सं. २१९ मा उनको मृत्यु भएको घटनालाई गोपालवंशावलीकारले महत्त्व दिई टिपेका छन् । साथै, वरपाललाई लगाइएको विशेषण विचारणीय छ । गोपालवंशावलीमा वरपालको मृत्यु हुँदा यसरी टिपिएको छ–सम्वत् २१९ माघ कृष्ण अष्टम्याम् मूलनक्षत्र, यह्म येथोवहार वरपाल भारोटों नायक नेपालया विक्षात, महाप्रभुतः उभयराजकुल उधरण धारण समर्थः ॥ अस्त वर्ष ८७ । यसबाट वरपाल निकै शक्तिशाली व्यक्ति थिए; त्यसबेलाका दुइ राजकुलमा गद्दीको लागि संघर्ष भएको बेला उनले महत्त्वपूर्ण भूमिका खेलेका थिए भन्ने थाहा पाइन्छ ।

पालवंशी ललितपुरका महापात्रमध्ये अर्का प्रसिद्ध मेघपाल हुन् । ने.सं. ४७० मा बंगालका सुलतान शमसुद्दीनले नेपालमा आक्रमण गर्दा पशुपति स्वयम्भू आदि उपत्यकाका प्रसिद्ध देवमन्दिरहरू भत्काउने काम पनि गरेका थिए । त्यसबेला ललितपुर पिंवहालको प्रसिद्ध चैत्य पनि

समसुद्दीनले भत्काइदिएका थिए । त्यस चैत्यको जीर्णोद्धार सात वर्षपछि महापात्र मेघपालले गराएका थिए । त्यस उपलक्ष्यमा मेघपालले एक शिलालेख पनि राख्न लाएका थिए । त्यस अभिलेखमा महापात्र मेघपालको वर्णन निकै गरिएको छ । त्यहाँ उनलाई **त्रिमय कुलोद्भव** भनिएको छ । साथै, मेघपालका प्रधानमन्त्री जगत्पति अमात्यको चर्चा पनि त्यहाँ परेको छ । पिंबहाल भेकको प्रशासन **पालवंशी** महापात्रको हातमा थियो भन्ने यताबाट थाहा पाइन्छ ।

यो अभिलेख राख्न लाउने पिंबहालका महापात्र जगत्पाल मेघपालकै सन्तान हुन् भन्ने देखिन्छ । यक्ष मल्लका सन्तानहरूमा परस्परमा कलह भएपछि बनेको रत्न मल्ल-गुटको साथ यी जगत्पालले पनि दिएका थिए । त्यसबेला महापात्र त जगत्पालका पिता हर्षपाल थिए तर जगत्पाल पनि त्यसैबेला राजनीतिक दाउपेच खेल्न मैदानमा उत्रिसकेका थिए भन्ने कुरा ने.सं. ६१५ (वि.सं. १५५२) को पशुपतिको सन्धिपत्रबाट थाहा पाइन्छ । दाजु राय मल्लको विरुद्ध रत्न मल्लले आफ्ना भाइहरूसँग मिली गरेको त्यस सन्धिपत्रमा ललितपुरतर्फबाट भाग लिनेमा जगत्पाल पनि एक प्रमुख थिए । तर यस बेला जगत्पाल **त्रिभय महापात्र**मा चाहिँ परेका थिएनन् । ने.सं. ६२० (वि.सं. १५५७) मा लेखिएको **साधन्तकोशसार**मा ललितपुरका शासकका रूपमा जगत्पालको वर्णन परेको छैन; हर्षपालको मात्र त्यसमा वर्णन परेको छ ।

रत्न मल्ल-गुटको शासन ललितपुरमा कायम गराउनामा जगत्पालको प्रमुख हात रहेको आभास पाइन्छ । यस घटनापछि जगत्पालको राजनीतिक अधिकार बढ्नाको साथै उनलाई आर्थिक लाभ पनि निकै भएको अनुमान हुन्छ । यसो हुँदा ने.सं. ६३५ (वि.स. १५७१) तिर जगत्पालले निकै कृतिहरू राख्न लाएका छन् । विशेष गरेर कीर्तिपुरमा जगत्पालका ठूलठूला कृति गरेका छन् ।

कीर्तिपुरमा जगत्पालले राखेका कृतिमध्ये व्याघ्रेश्वरको मन्दिरको जीर्णोद्धार गराउनु पनि एक हो । व्याघ्रेश्वर कीर्तिपुरका प्रख्यात देवता हुन् । यसैले व्याघ्रेश्वर मन्दिर जीर्ण भएको देखेर जगत्पालले वैदिक विधानअनुसार त्यसको विधिपूर्वक जीर्णोद्धार गर्न लाए । तीनवटा सुनका गजुर राख्न लाए । अरू आवश्यक विधान पनि पूरा पारेर यो अभिलेख कुँद्न लाएका हुन् । यो अभिलेखको केही भाग खण्डित भइसकेको छ तैपनि बीचको धेरै भाग बचेको हुँदा कुरा बुझिन्छ ।

यस अभिलेखमा जगत्पाललाई **श्रीमाणीग्लश्रीपिण्ड-वहारमहापात्र** भनिएको छ । उनकी पत्नी रूपलक्ष्मीलाई **ठकुरिनी** भनिएको छ; बुहारी देवलक्ष्मी, अमृतलक्ष्मीहरूलाई पनि ठकुरिनी नै भनिएको छ । जगत्पालहरूले चाहिँ सोझै आफूलाई ठाकूर लेखाएका छैनन् तापनि स्वास्नी, बुहारीहरूलाई ठकुरिणी लेखाएका हुन् । जगत्पालहरू आफूलाई ठाकूर भनी देखाउन चाहन्थे भन्ने यताबाट थाहा पाइन्छ । पाटन पिंबहालको अभिलेखमा मेघपालले आफूलाई रघुवंशी (सूर्यवंशी) लेखाएका छन् । यसो भए तापनि मल्ल राजाहरूले जस्तै यिनीहरूले आफूलाई सोझै ठाकुर लेख्न सकेका थिएनन् । विष्णुसिंह मात्र अन्त्य समयमा आफूलाई सोझै ठाकुर लेख्न समर्थ भएथे ।

यसैगरी यो अभिलेख तात्कालिक केही कुरा जान्न पनि उपयोगी छ ; विशेषगरी कीर्तिपुरको इतिहासको लागि यो अभिलेख अझ बढी उपयोगी रहेको छ ।

★★★



(४०५)

## कीर्तिपुर चिलंचो चैत्यको अभिलेख

### मूलपाठ

१. (ॐ नमो भग) वते परमधर्म्म धातुवागीश्वराय ................ प्रभाश्वर...
२. .... प्रथितः ...... स व .... सकलगणगुणमय ................
३. ............ ॥ नेपाले ........ दारण .... म्भागे ...... सदा ..........
४. ............. श्री ........ मल्लनृपति .......... धर्म्म .... वन पाल ... कनक ... पात्रवंश...
५. ..... प्रशस्तिप्रमाश्वर .... सप्त ..... पालके .... संपालि .. वश .... वदार .... इ (त्यु)...
६. ..... रमण महापात्र समस्त पद्म .... पात्रज ...... लकः ॥ ....... जययोग्य मान ...: श्रीदेवलक्ष्मीपति नेपाले खलु-
७. लस्य विजयी श्रीविश्वकर्मा .. यः ॥ ... गुणनिधि .... चूडामणिर्न्नाम्ना श्रीपरि .... पालक जगत्श्रीमज्जगत्पा-
८. लकः ॥ तस्य भार्या च विख्याता .... कीर्तिपुर .... । श्रीरमलकीर्ति नाम्ना लक्ष्मी.... संयुक्त ....
९. स्मित ..... नो भूसमो धीरः सर्वगुणाकरैकजलधिर्वशे ........................
१०. त्नाम्ना श्रीमति ....... विक्रम ..... श्री .... पालो जयी । तेनेवामिततेजसा.... विराजित ..... श्रीमत्कान्तिपुरं .... पतनै ...
११. ...... भास्कर .... रचना देदीप्यमानो .... तत्रैव ... करणे.......... मनः ।
१२. अत्र कीर्तिपुरे .... त्रिषुलोकेषु विश्रुत । पद्मकाष्टगिरिर्नाम्ना भाति स्वर्ग्ग .... तथा .. महापात्र श्रीजगत्पालक
१३. वर्म्मणा । तनैव भक्तिभावेन वुद्धधर्म्मार्णवेन च ॥ ० ॥ भू ...... कार..... त्या खलु जगत्पाल .... वेदशास्त्रविधानेन स्व ..........
१४. श्रीपञ्चतथागतान् ॥ नाना .... वीणा.. सुमंगलेः । पन्चचेत्यानि निर्भायविधानतः । प्रत्येक ....
१५. ........... च । त प्राकार ....... नानाचितैः सगोपने ॥ ॥ राजा प्रजापातु समस्तवृन्द .... धर्म्म ..... श
१६. .......... विधाय ........ रिदगीतवाधै : .......... विलोभनीया । आरम्य ............ दिन ..... नानासम्भारपूरितं मया यज्ञं...

१७. .................... त्तमशोभनै : । पंच ..... शिर स्वर्णचक्रध्वजावली । नाना मणिगणाकीर्णो ..... नोप श्रीजि .... सिंह
१८. पात्र जगत्पाल वर्म्मणेह निदेशिता । तथागतविशेषज्ञा वौद्धधर्म्मस्य पारगाः ...... सवेदेश ....
१९. नाभोजनै .... भिक्षुसंघेन विधिरस्य समापिताः । श्रीजयरूप क्रियावज्र आचार्य ( जन) जीवकः । हृदयसेन ....
२०. पाध्याय इति ख्याते श्वकर्मठः । जगत्पालः सपत्नीको यजमानोस्य कीर्तितः । अनेन महता पुण्यसंचयेन महात्म-
२१. नः । महापात्र जगत्पालवर्मनः परमार्थिन : । लोकाश्व सुखिनः सन्तु राष्ट्रं मंगलमस्तु च । जगत्पालः सपत्नीको
२२. भुक्तिं मुक्तिं च विन्दतां । क्रियाचार्या ..... लभतां विपुलं फलं ॥ कुण्लैः कण्ठकैः पट्टवस्त्रदानेरलंकृता । विश्वकर्म-
२३. ...... सर्वे कर्म्मिणोऽपि विचक्षणाः ॥ ॥ वर्ष नेपालजाते शरगुणशके जेष्ठशुक्लाष्टमीके नक्षेत्रे पूर्व फाल्गुन्य...
२४. ....... वज्रयोगे ..... बारे चान्द्रे वृषष्ठे ..... सिंहराशिस्थचन्दे पञ्च श्रीवुद्ध चैत्य प्रथितव-
२५. रशिरः स्वर्णच्छत्रावरोहः ॥ ॥ श्रेयोऽस्तु । सम्वत् ६३५ फाल्गुण शुक्ल प्रतिपद्यां तिथौ पूर्वभदनक्षत्रे ....
२६. शिव प्र साध्ययोगे वुधवासरे थ्व दिन कोन्हु पादस्थापन ॥ फाल्गुण शुक्ल दशम्यायां तिथौ आर्दानक्षत्रे सो...
२७. भाग्ययोगे शुक्रवासरे थ्व कोन्हु द्वारस्थापन ॥ ० ॥ वैशाख शुक्ल द्वितीया प्रदुतृतीयायां तिथौ कृतिक प्ररोहिनि
२८. नक्षेत्रे सोभनयोगे सोमवाशरे थ्व दिन कोन्हु येतशि सोङा पिवखा देवस्था पन ॥ ० ॥ जेष्ठ शुक्ल सप्तमीं प्र अष्ट-
२९. मी आदीत्यवाशरे थ्व कोन्हु अग्निस्थापना । थ्वनं सति प्रतिष्ठा ॥ थ्वनं सति रात्रिक्रिया थ्वन सति पूर्णा दीन ॥
३०. स्वस्ति श्रीललितपट्टने ॥ श्रीश्रीमत्पशुपतिचरणकमलशोवित श्रीश्रीमानेश्वरीवरलव्ध प्रसादिन प-
३१. रमभट्टारक परमेश्वर महाराजाधिराज श्रीश्रीजयरत्न मल्लदेवस्य ॥ श्रीश्रीजयरण मल्ल देवस्य ॥ श्रीश्री-
३२. जयरा मल्लदेवस्य विजयराज्ये ॥ ॥ श्रीश्रीमानीगलके ॥ श्रीमत्श्रीश्रीमदार्यावलोकितेश्वर चरण पंकजशे-
३३. वित श्रीश्रीमत् श्री ............ राधन ॥ श्रीमत् श्रीश्रीजलमण्डपथलचैत्यपंच तथागत सेवा तत्पर



३४. श्रीमत् श्रीश्री ..... चक्रअर्च्चन श्रीमन् श्रीश्रीहरसिद्धिवरलव्धप्रसादित श्रीमत्श्री-
३५. श्रीमहावीर .... श्रीमत् श्रीश्रीइन्द्रायणी व्याघ्रेश्वर पूजननिरत तथा च श्रीमत्
३६. श्रीश्रीमानेश्वरीचरण ...... श्रीश्रीससक्तियोगाम्वराराधनतत्परमिति श्रीमत् श्रीश्री-
३७. चक्र सम्वर वज्रबाराही ....... जास्थापनाचार्य लुब्धराजगजांकुश सरणागत रा-
३८. ज वज्रपंजर भ्रं ...... सप्तकुटुंवज प्रधान महापात्र असुर नाराय
३९. ण श्रीजय जग (त्पाल) .......................... ॥ तस्यात्मज चक्रनारायण श्रीजय-
४०. रक्षपालवर्मा ......................... क्ष्मी ठकुरिणीसन मन्त्रि श्रीवच्छवहा-
४१. र वशुरा ............. विहार श्रीमत् श्रीश्रीपञ्जचैत्य भट्टार-
४२. कत्वं नि ............... विहार मूलाचार्य श्रीज्ञानजीणजु
४३. त्वं ॥ कर्म्म .................. जयश्रीहृदयसेनजुत्वं ॥ पुनभापा
४४. ........ क्यवं बु प्येक ............. नकबहार दंज्या सिज्याक
४५. ............ कुसुमजु ............. नकविहारी श्रीवृद्धि .... त्वं श्रीहृ-
४६. ............ निवा (सि) ..... जुत्वं श्रीजय .... जुत्वं ॥ ताम्वका(र)
४७. ............. नाठू भारो । कोविछें ................................
४८. ...........................॥ थ्वते ॥ कर्म्मस ........................
४९. ........................... (रु) पसिंह भारो ॥ ० ॥
५०. .................... शुय ३० स .................. भिक्षुभेजिनप दम्म-
५१. ... दम्म ............ भोजनपे ...... ॥ पुनभाखा ॥ वशु .....
५२. ......................... रूपजुसन वलि ............. श्रीहृदयसेन जुस्यं ....
५३. पाठ ................. जजमान ........ भारो ॥ चिताकार्ययाक जिवरख भारो थ्वतेस ....
५४. ख्येप ............. जजमानस्य सभार्या सपुत्रपोत्रादीनां ..
५५. खड्गसिद्धि प्रतापवृद्धि .... धन .... (ल) क्ष्मी ..... शुखसम्पदं अनुत्तर पदं भवतु ॥ ॥ शुभमस्तु ॥

## अनुवाद

भगवान् परम धर्म्मधातु वागीश्वरलाई नमस्कार । ............ नाउँ चलेका ........ सारा आकाश स्वरूप गुणले युक्त भएका ..................................... नेपालमा ............ सधैं ................. श्री (रत्न) मल्ल राजा ....... धर्म ...:.......... सुन ........ पात्रवंशका .................. प्रशस्तिले सुहाएका ....... ... सप्त (कुटुम्वज) .......... पालना गर्ने ..................... महापात्र सारा पद्म .............. पात्रकुलमा जन्मेका .......... जितबाजीका पात्र भएका ......... श्रीदेवलक्ष्मीका पति, नेपालमा पक्का ................ विजय गर्ने

श्रीविश्वकर्माका ..................... गुणका खानि भएका .......... शिरोमणि भएका ............ नाउँ भएका ........... पालना गर्ने श्रीजगत्पाल, उहाँका पत्नी नाउँ चलेकी ............. कीर्तिपुरकी, सफा कीर्ति फैलिएकी, ............ लक्ष्मी..... युक्त भएकी, ............ पृथ्वीजस्ता धैर्य भएका, सारा गुणहरूका खानि भएका, ......... नाउँ भएका ...... पराक्रम ......... जित्ने श्री .......... पाल ठूलो तेज भएका उहाँले .......... सुहाएको श्रीकान्तिपुरलाई ............ सूर्यजस्ता ........... रचनाले गर्दा सुहाएका, ............ त्यहीँ...... मन ......

यस कीर्तिपुरमा ... तीनै लोकमा प्रख्यात पद्मकाष्ठगिरि भन्ने नामले ..... स्वर्गजस्तै सुहाइरहेको छ । बुद्ध धर्मको समुद्रजस्ता उहाँ महापात्र श्रीजगत्पाल वर्माले भक्तिभावपूर्वक ............. वैदिक विधान अनुसार श्रीपञ्चतथागत, पञ्चचैत्यहरू बनाएर प्रत्येकलाई ...... स्थापना गर्नु भयो । ......... पर्खाल आदि पनि बनाउनु भयो ....... राजाले प्रजालाई रक्षा गरून् । सारा ..... धर्म्म ...... बनाएर ..... गीत बाजाहरूले ..... रहरलाग्दो गरी ........... अनेक सामग्री सहित पारी यज्ञ गरियो । ........... उत्तम राम्रा ....... पञ्च चैत्यको शिरोभागमा सुनको चक्रध्वजावली चढाइयो । अनेक किसिमका मणिहरू जडिएको । .................. महापात्र जगत्पालवर्माको आज्ञा अनुसार तथागत सम्बन्धी कुरा जान्ने बौद्ध धर्ममा पारङ्गत भएका ........ नाना भोजनहरूले ....... भिक्षुसंघले यसका विधि विधानहरू पूरा पारे । क्रियाकर्मका आचार्य श्रीजयरूप, .......जीवक र कर्मठ उपाध्याय चाहिँ हृदयसेन थिए । यस कर्मका यजमान चाहिँ सपत्नीक जगत्पाल हुनु हुन्थ्यो ।

परमार्थ सप्रियोस् भनी चाहने महात्मा महापात्र जगत्पालवर्माको यस ठूलो पुण्य कार्यले दुनियाँ सुखी होऊन्; राष्ट्रमा मंगल होस्; सपत्नीक जगत्पालले भुक्ति र मुक्ति पाऊन् । क्रियाचार्यहरूले ..... पनि ठूलो फल पाऊन् । यसमा भाग लिने विश्वकर्मा र अरू सबै विद्वान्हरूले कानका गहना, घाँटीमा लाउने गहना र रेशमी कपडाको दानले सिँगारिएका थिए ।

ने.सं. ६३५ (वि.सं. १५७२) ज्येष्ठ शुक्ल अष्टमी सोमबार पूर्वफाल्गुनी नक्षत्र .... वज्रयोग वृषराशिमा सूर्य सिंहराशिमा चन्द्रमा रहेमा, पञ्च बुद्ध चैत्यको शिरमा सुनको छत्र चढाइयो ।

कल्याण होस् । ने.सं. ६३५ (वि.सं. १५७१) फाल्गुन शुक्ल प्रतिपदा बुधबार पूर्वभाद्रनक्षत्र, त्रिव उप्रान्त साध्ययोग, यस दिन पादस्थापना गरियो ।

फाल्गुन शुक्ल दशमी शुक्रबार आर्द्रानक्षत्र सौभाग्ययोग, यस दिन द्वारस्थापना गरियो ।

वैशाख शुक्ल द्वितीया उप्रान्त तृतीया सोमबार, कृत्तिका उप्रान्त रोहिणीनक्षत्र शोभनयोग, यस दिन यासिं (मूल मौलो) गाठी पिक्खादेव स्थापन गरियो ।

ज्येष्ठ शुक्ल सप्तमी उप्रान्त अष्टमी आदित्यबार, यस दिन अग्निस्थापन गरियो । यसको भोलिपल्ट प्रतिष्ठा गरियो । यसको भोलिपल्ट रात्रिक्रिया गरियो । यसको भोलिपल्ट पूर्णा गरियो ।

कल्याण होस् श्रीललितपुरमा, श्रीश्रीमत्पशुपतिका चरण कमलको सेवा गरेका श्रीश्रीमानेश्वरीबाट वरप्रसाद पाएका, परमभट्टारक परमेश्वर महाराजाधिराज श्रीश्रीजयरत्न मल्लदेव, श्रीश्रीजयरण मल्लदेव, श्रीश्रीजयराम मल्लदेवको विजयराज्यमा ।

श्रीश्रीमानिगलमा, श्रीश्रीश्रीआर्यावलोकितेश्वरका चरणकमलको सेवा गरेका श्रीश्रीश्री..... आराधना गरेका, श्रीश्रीश्रीजलमण्डपस्थल चैत्य पञ्चतथागतको सेवामा लागेका, श्रीश्रीश्री ...... चक्रको अर्चना गरेका, श्रीश्रीश्रीहरसिद्धिबाट वरप्रसाद पाएका, श्रीश्रीश्रीमहावीर...... आराधना गरेका, श्रीश्रीश्री इन्द्रायणी व्याघ्रेश्वरको पूजामा लागेका, श्रीश्रीश्रीमानेश्वरीको चरणको ..... सेवा गरेका, शक्तिसहित श्रीश्रीश्रीयोगाम्वरको आराधनामा लागेका, श्रीश्रीश्री चक्रसम्वर वज्रबाराहीको ...... आराधनामा लागेका, ....... राज्यच्युत राजालाई फेरि स्थापना गर्नामा आचार्यजस्ता



भएका, लोभी राजारूपी हात्तीमा अंकुसे लाउने, शरण पर्न आएका राजालाई रक्षा गर्नामा वज्रको पिंजराजस्ता ..... सप्तकुटुम्बज प्रधान महापात्र, असुरनारायण श्रीजयजगत्पाल ..... उहाँका छोरा चक्रनारायण श्रीजयरक्षपालवर्मा, ..... लक्ष्मी ठकुरिनीले र मन्त्री श्रीवच्छवहालका वसुराज.... श्रीश्रीश्रीपञ्चचैत्य भट्टारक स्थापना गरियो । .... यसका मूलाचार्य श्रीज्ञानजीवजु, ...... कर्माचार्य श्री हृदयसेनजु ।

फेरि बेहोरा ..... बारी खेत चार रोपनी, ..... यो बनाउने कलाकार ...... कुसुमजु, ........ नकविहारका श्रीबुद्धि .......... बस्ने ......... श्रीजय ......... ताम्रकार ......... नाठू भारो । को विछेंका ......... यस कर्ममा ............. रूपसिंह भारो । ................ तीस ३०, ...... भिक्षु भोजन गराई .... दम्मले ........ दम्मले ............... भोजनगराउनू । अर्को बेहोरा ............ बसु ....... रूपजुले ........ श्रीहृदयसेनले......... पाठ गराउनू ........ जजमान ......... भारो । हेरचाह गर्न जीररख भारो यति ...............।

पत्नी छोरा नाति सहितका जजमानको खड्गसिद्धि प्रतापवृद्धि होस् । धनको वृद्धि होस्; सुखसम्पत्ति बढोस् । अनुत्तरपद प्राप्ति होस् । शुभ होस् ।

**व्याख्या**

५५ पङ्तिको यस अभिलेखको निकै भाग खण्डित भइसकेको छ । सुरक्षाको अभाव हुँदा जान्न सकिने राजनीतिक, धार्मिक, आर्थिक, सामाजिक कुरामा यस अभिलेखबाट पर्न सक्ने निकै प्रकाश अब धमिलो भएको छ । हुन पनि विशाल यस अभिलेखमा तात्कालिक राजनीतिक कुरा पनि केही परेका छन् । हाम्रो परम्परागत धार्मिक उदारताको छाप पनि यसमा परेको पाइन्छ । साथै, सामाजिक र आर्थिक कुराको पनि एक झलक यस अभिलेखबाट पाउन सकिन्छ, तर निकै खण्डित हुँदा अब निकै कुरा गुमेका छन् । जेहोस्; बचेको कुराको संक्षिप्त चर्चा अब यहाँ गरिन्छ ।

पिंवहालभेकका महापात्र जगत्पालले युवक उमेरमै तात्कालिक राजकाजमा भाग लिन थालेथे भन्ने चर्चा माथि पनि गरिसकेको छ । यक्ष मल्लको मृत्युपछि नेपाल उपत्यकाको राजकाजमा जुन प्रवाह चल्यो; त्यसको स्वभावतः ललितपुरको अवस्थामा पनि असर पा-यो । रत्न मल्लले कान्तिपुरका महापात्रहरूलाई पन्छाई त्यहाँ आफ्नो सोझै शासन कायम गरेपछि ललितपुरका महापात्रहरू यसबाट सावधान भए । यसो हुँदा ललितपुरमा सोझै आफ्नो शासन कायम गर्न रत्न मल्ल समर्थ भएनन्, तर महत्त्वाकाङ्क्षी रत्न मल्लको दृष्टि ललितपुरमा पनि नगाडिएको होइन् । रत्न मल्लले दाजु राय मल्लको विरुद्ध भाइहरूसँग गरेको सन्धिमा ललितपुरका सबै महापात्रहरूले साथ दिएका थिए । यो कुरा पशुपतिको सन्धिपत्रबाट थाहा पाइन्छ । रत्न मल्लको साथ दिनेमा यी जगत्पाल र उनका बाबु हर्षपाल पनि थिए, तर सो सन्धिको पालना ललितपुरेहरूले राम्ररी गरेनन्; राय मल्ल जीवित छउन्जेल ललितपुरेहरूले उनलाई पनि पाटनका राजा मान्दै रहे भन्ने चर्चा ललितपुरका अभिलेखको व्याख्याको सिलसिलामा गरिसकेको छ ।

जगत्पाल चाहिँ रत्न मल्ल-गूटका पूरा समर्थक थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । यस अभिलेखको संस्कृत भागमा रत्न मल्लको विशेष तारिफ गरिएको बुझिन्छ । खण्डित हुँदा कुरा अलि स्पष्ट छैन तापनि रत्न मल्लको विशेष वर्णन परेको कुरामा शङ्का छैन । तल नेवारी भागमा चाहिँ रत्न मल्लका साथै उनका गूटका भाइहरूको पनि आदरसाथ नामोल्लेख गरिएको छ । यस अभिलेखमा रत्न मल्लको साथै रण मल्ल, र राम मल्लको पनि चर्चा गरिएको छ । पशुपतिको सन्धिपत्रमा रत्न मल्ललाई साथ दिने गूट यही नै हो । पशुपतिको

सन्धिपत्रमा भीम मल्ल पनि रत्न मल्लको साथमा छन् । कीर्तिपुरको यस अभिलेखमा भने भीम मल्लको उल्लेख परेको छैन । यसबेला भीम मल्लको मृत्यु भइसकेको अनुमान हुन्छ । यसै हुँदा यहाँ भीम मल्लको उल्लेख नभएको बुझिन्छ ।

रत्न मल्लहरूको चर्चा गर्दा यहाँ पूर्ण राजकीय प्रशस्ति साथ गरिएको छ । उनको अगाडि परमभट्टारक परमेश्वर महाराजाधिराज आदि पूर्ण स्वतन्त्र राजालाई जनाउने पदवीहरूको उल्लेख गरिएको छ । साथै, मल्लराजाहरूले विशेषरूपमा पूजिएका पशुपति र मानेश्वरीको सुदृष्टि र रत्न मल्लहरूमा परेको भाव यहाँ व्यक्त गरिएको छ । मल्लराजाहरूका प्रशस्तिमा **श्रीश्रीमत्पशुपतिचरणकमलसेवित** भन्ने आशयको विशेषण प्रायः गरिरहन्छ । मल्ल राजाहरूका लालमोहर, सनदपत्रको शिरानमा पनि पशुपतिर्जयति भन्ने वाक्य रहेको हुन्छ । मानेश्वरी चाहिँ मल्लराजाहरूका इष्टदेवता, कुलदेवता नै हुन् । यसो हुँदा **श्रीश्रीमानेश्वरीवरलब्धप्रसाद** भन्ने विशेषण मल्लराजाहरू लिने गर्दथे । जगत्पालको यस अभिलेखमा रत्न मल्लहरूको चर्चा गर्दा उक्त प्रशस्ति पनि लेखिएको छ । यसबाट जगत्पाल रत्न मल्लहरूलाई प्रसन्न पार्न चाहन्थे भन्ने स्पष्ट छ ।

रत्न मल्लको साथ दिएका हुनाले पाटनका महापात्रमध्ये जगत्पालको शक्ति बढेको संकेत यस अभिलेखबाट पाइन्छ । यस अभिलेखमा जगत्पाल र उनका परिवारको मात्र वर्णन गरिएको छ । सप्तकुटुम्बज अरू महापात्रहरूको नामोल्लेखसम्म पनि यहाँ गरिएको छैन । साधारणतः पाटनको प्रशासनको चर्चा गर्दा तीन महापात्रको चर्चा गर्ने जुन परम्परा थियो; त्यसको अवहेलना यस अभिलेखमा गरिएको छ । यसबाट पाए जगत्पालले रत्न मल्लहरूलाई प्रसन्न पारी ललितपुरमा एकलौटी शासन खडा गर्ने सपना देख्न थालेको आभास यताबाट पाइन्छ । यसबाट विष्णुसिंहलाई ललितपुरमा एकच्छत्र प्रभुत्व जमाउने बाटो देखाउने काम प्रकारान्तरले जगत्पालले गरेका हुन् भन्ने अनुमान गर्ने ठाउँ नभएको होइन ।

राजनीतिक प्रभाव बढ्नाको साथै यसताका जगत्पालको आर्थिक समृद्धि पनि भएको अनुमान हुन्छ भन्ने कुरा माथि अर्को अभिलेखको व्याख्याको प्रसङ्गमा गरिसकेको छ । हुन पनि जगत्पालले विशेष गरी कीर्तिपुरलाई धार्मिक, सांस्कृतिक दृष्टिले उल्लेखनीय बनाउने महत्त्वपूर्ण काम गरेको स्पष्ट देखिन्छ । यहाँनिर एउटा कुरामा दृष्टि दिनु आवश्यक छ । यी जगत्पाल पाटन पिंबहाल भेकका महापात्र हुन् । पाटन पिंबहाल भेकमा जगत्पालले केही कृति राखेको उल्लेख पाइएको छैन । कीर्तिपुरमा भने व्याघ्रेश्वरको मन्दिरको भव्यरूपमा जीर्णोद्धार गर्नाको साथै चिलंचोमा एक विहार नै बनाउन लाए । जगत्पालले बनाउन लाएको हुनाले चिलंचो चैत्यको अर्को नाम जगत्पालविहार भनेर प्रसिद्ध भएको छ । यसकारण जगत्पालले कीर्तिपुरमा किन कीर्ति राख्न लाए भन्ने प्रश्न स्वभावतः उठ्छ । यस प्रश्नको जबाफ यस अभिलेखबाट पाइन्छ । यहाँ जगत्पालकी पत्नीको वर्णन गर्दा तस्य भार्या चं विख्याता ... कीर्तिपुरे.... भनी लेखिएको छ । यसबाट जगत्पालकी पत्नी कीर्तिपुरकी रहिछन् भन्ने बुझिन्छ । अभिलेख फुटेको हुनाले अलि स्पष्ट छैन तापनि प्रसङ्गबाट उक्त कुरा सजिलैसँग थाहा पाउन सकिन्छ ।

यसरी जगत्पालकी पत्नी कीर्तिपुरकी हुँदा उनैको प्रेरणामा जगत्पालले कीर्तिपुरमा कृतिहरू राखेका हुन् भन्ने देखिएको छ । यसै हुँदा यस अभिलेखमा र माथि गएको बाघ-भैरवको अभिलेखमा सपत्नीक जगत्पालले यो कीर्ति राखेका हुन् भन्ने उल्लेख धेरै पटक गरिएको छ । जगत्पालकी ती पत्नी को हुन् भन्ने कुरा फुटेको हुँदा यस अभिलेखबाट त स्पष्ट थाहा पाइँदैन, तर माथि भएको बाघभैरवको अभिलेखबाट जगत्पालकी धर्मात्मा ती पत्नी रूपलक्ष्मी हुन् भन्ने थाहा पाइन्छ ।



यसबेलाको नेपालको उदार धार्मिक प्रवृत्तिलाई पनि यस अभिलेखले स्पष्ट पार्छ । एकातिर जगत्पाल वैदिक परम्पराका अनुयायी छन्; अर्कोतिर उनी बौद्ध धर्म र तान्त्रिक सम्प्रदायका पनि पूरा भक्त छन् । व्याघ्रेश्वरको मन्दिरको जीर्णोद्धार गर्दा वेद जान्ने ब्राह्मण द्वारा वैदिक पद्धति अनुसार पूजाआजा गराएको कुरा उनले लेखाएका छन् । **वेदमन्त्रविधान दशकर्म** संपूर्ण याङ आदि वाक्य उक्त अभिलेखमा ठाउँठाउँमा लेखिएको छ । चिलंचोमा चैत्य स्थापना गरी, विहार बनाउन लाइराखेको यस अभिलेखमा पनि वैदिक विधानअनुसार चैत्यको प्रतिष्ठा गराएको कुरा पनि उनले लेखाएका छन् । चिलंचोको यस अभिलेखमा जगत्पालले आराधना गरिएका अनेक देवदेवीको स्पष्ट उल्लेख परेको छ । **श्रीमत् श्री श्री मदार्यावलोकितेश्वरचरणपंकजशेवित** लेखाई जगत्पालले ललितपुरका सबभन्दा प्रमुख देवता मत्स्येन्द्रनाथ प्रति श्रद्धा व्यक्त गरेका छन् । पाटनका मल्ल राजाहरू आफ्ना टकमा समेत **लोकनाथ** अंकित गराउँथे । यस्तै परम्पराको अनुसरण जगत्पालले पनि गरेका हुन् । त्यसपछि जगत्पालले पञ्च चैत्य तथागत, हरसिद्धि, महावीर, इन्द्रायणी, व्याघ्रेश्वर, मानेश्वरी सशक्ति योगाम्बर चक्रसम्बर बज्रबाराही आदि देवताको आराधना, सेवा गरेको कुरा यस अभिलेखमा कुँदाएका छन् । उपयुक्त देवतामा कुनै शैव कुनै बौद्ध आदि सम्प्रदायका देवता हुन् भन्ने स्पष्ट छ । यसरी जगत्पाल धर्मप्रति उदार विचारका थिए भन्ने सिद्ध हुन्छ । यसताका नेपालको धार्मिक क्षेत्रमा तान्त्रिक देवताले पनि विशेष स्थान पाएको झलक यसबाट पाइन्छ ।

मध्यकालको शुरुशुरुमा नेपालको केन्द्रमा दुइ राजवंशको अस्तित्त्व रहन थालेपछि गद्दीमा बस्ने कुरामा ती दुइ राजवंशमा बराबर संघर्ष भएथ्यो । त्यस्तो बेला पाटनका महापात्रहरूले आफ्ना अनुकूल व्यक्तिलाई राजा थाप्ने; शरण पर्न आएका राजालाई शरण दिने आदि केही काम गरेका थिए । ने.सं. २१९ मा पाटनका एक जना महापात्र वरपालको मृत्यु हुँदा उनलाई *महाप्रभुत* **उभयराजकुल रधरण धारण समर्थ** भनी लेखिएको कुराको चर्चा माथि गरिसकेको छ । यसो हुँदा पछिसम्म पनि पाटनका शक्तिशाली महापात्रहरूले आफूलाई **भग्नराजास्थापनाचार्य, लुब्धराजगजांकुश, शरणागत राजवजंपञ्जरजस्ता** विशेषण आफ्नो प्रशस्ति जोड्ने गरेका थिए । यस अभिलेखमा जगत्पालमा पनि उक्त विशेषण जोडिएका छन् । यसबाट रत्न मल्लहरूलाई साथ दिएको हुँदा जगत्पालको प्रभाव बढेको थियो भन्ने कुराको पुष्टि हुन्छ ।

यसैगरी यस अभिलेखबाट तात्कालिक अनेक कुरामा प्रकाश पर्छ । चैत्य बनाउँदा शुरुदेखि के के विधान पूरा गरे; त्यसको लागि कति समय लाग्यो; जगत्पाल र उनका पत्नी छोरा बुहारीहरूले अर्थात् पूरा परिवारले त्यसमा कसरी सक्रिय भई भाग लिए; इत्यादि कुरा यस अभिलेखबाट थाहा पाइन्छ । अभिलेख खण्डित नभई पूर्ण भएको भए अझ बढी कुरा थाहा पाइन्थ्यो ; यस अभिलेखको बढी महत्त्व रहने थियो; तर निकै भाग सुरक्षाको अभावले गर्दा खण्डित भइसकेको छ । केही वर्ष पहिले यसको बढी भाग पढ्न सकिएको थियो; छ सात वर्ष यता पहिलेभन्दा पनि बढी क्षतिग्रस्त भइसकेछ । यस्ता ऐतिहासिक महत्त्वको कुराको संरक्षण गर्ने व्यवस्था हुन आवश्यक छ ।

★★★

## (४०६)

# कीर्तिपुर. सिंहद्वारको ताराको पादपीठको अभिलेख

## मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ६३६ जैष्ट शुक्ल द्वितीयायां तिथौ रो-
२. हिनिनक्षेत्रे शुभयोगे शनेश्चरवासरे वृषराशिगते स-
३. वितरि स एव राशिगते चन्द्रमशि दानपति श्रीनकविहारि लिवि
४. छें शुक्षेम भारो तसय भार्या विजयलक्ष्मी नामनेन स्वप्रतिमा श्रीआयुर्य-
५. तारा भट्टारिका प्रतिस्था कृतं ॥ पुन भाषा फले सहदम्मशिवका ४
६. थ्वतेया वरसानन कतिनि पुनिसिन कवलप्रति प्वाठ ५ दिन प्रति प्वा-
७. ठ १ मतं, जवा २ धरि जवा २ फल्के जवा २ ला जवा २ थ्व.. दान बिंय
माथिको थपेको
८. अनेक पुनेन शुखसंपदं भवतु शुभ ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ६३६ ( वि.सं. १५७३) ज्येष्ठ शुक्ल द्वितीया रोहिणीनक्षत्र शुकर्मायोग शनैश्चरबार वृषराशिमा सूर्य, सोही राशिमा चन्द्रमा रहेमा, दानपति श्रीनकविहारि लिविछेंका सुक्षेम भारोले उनकी पत्नी विजयलक्ष्मीको नामले आफ्नो प्रतिमा श्रीआर्यतारा भट्टारिकाको प्रतिष्ठा गरे ।

फेरि बेहोरो– पाटी सहित चार दम्मशिक्का चढाइयो । यसको आयस्ताले कार्तिक पूर्णिमाको दिन प्रत्येक कवलमा पाँच बत्ती बाल्नू; प्रतिदिन एक बत्ती बाल्नू । दुइ जवा दही, दुइ जना चिउरा, दुइ जवा मासु, दुइ जवा जाँड.. दान दिनू ।

यस पुण्यले सुख, सम्पत्ति होस् । शुभ होस् ।

**व्याख्या**

ने.सं. ६३६ (वि.सं. १५७३) सुक्षेम भन्ने एक भारदार परिवारको व्यक्तिले आफ्नी पत्नी विजयलक्ष्मीको नाउँले आर्यताराको स्थापना गरी पाटी बनाई यो अभिलेख कुँदाइएको हो । यो ताराको मूर्ति ढुङ्गाको सानो भए पनि निकै कलात्मक रहेको छ । यस मूर्तिले यस ताका कीर्तिपुर भेकमा सिद्ध हस्तकलाकार भएको संकेत गर्छ । कीर्तिपुर त्यति ठूलो बस्ती होइन तापनि धार्मिक र सांस्कृतिक दृष्टिले कीर्तिपुर निकै समृद्ध रहेको छ । यहाँ बौद्ध, शैव वैष्णव, शाक्त आदि अनेक सम्प्रदायका देवदेवीहरू छन् । यही परम्परामा सुक्षेमले महायानी बौद्ध सम्प्रदायकी प्रसिद्ध देवता स्थापना गरेका हुन् ।



आर्यताराको स्थापनाको साथै जनतालाई आराम गर्न सुविधा होस् भनी सुक्षेमले पाटी पनि बनाएका थिए । प्रायः हरपाटीमा विशेष दिन केही दानदिने बन्दोवस्त हुन्थ्यो; त्यसबाट गरीबगुरुवालाई गुजारा गर्ने केही आधार मिल्थ्यो । यस पाटीमा पनि कार्तिक पूर्णिमाको दिन दान दिने अलिकता व्यवस्था मिलाइएको छ ।

यस्तो दानदिन प्रायः गरी जग्गा गुठी राखिएको पाइन्छ । कहीँकहीँ नगद पनि गुठी राखिएको पाइन्छ । यस अभिलेखमा पनि नगद गुठी राखिएको छ । त्यसको संख्या धेरै छैन; ४ दम्मशिक्का मात्र छ । तर आजकालजस्तो मुद्रास्फीति नभएको हुँदा ४ दम्मशिक्का पनि धेरै नै हुन्थ्यो । यसरी नगद गुठी राखेको ठाउँमा सो रकम ऋण दिई उठेको व्याजबाट काम चलाइन्थ्यो ।

यसबेलासम्म मोहरको प्रचलन भएको थिएन । यसको केही दशकपछि मात्र महेन्द्र मल्ली मोहरको प्रचलन गरेथे । त्यसो हुँदा यस बेलासम्म मध्यकालको शुरुदेखि प्रचलित दम्मशिक्का, शिक्का, द्रम्म आदि मुद्रा नै प्रचलित थिए । द्रम्म, शिक्का चाँदीको हुन्थ्यो । तात्कालिक सामग्रीमा यस कुराको स्पष्ट उल्लेख पाइन्छ तर दुर्भाग्यले यस्ता मुद्राको नमुना पनि अहिलेसम्म पाउन सकिएको छैन । यसकारण द्रम्मशिक्का आदि मुद्राको आकारप्रकार के कस्तो थियो भन्ने थाहा पाउन सकिएको छैन ।

★★★

## (४०७)

# कीर्तिपुर पालेफलटोलको गणेशको पाटीको शिलालेख

## मूलपाठ

१. ॐ श्रेयोऽस्तु ॥ सम्वत् ६४८ पौष्यमासे कृष्णपक्ष नवमि प्र-
२. दशम्यां तिथौ, अनुराधनक्षत्रे, वृद्धियोगे वृहस्पति वा-
३. सरे ॥ थो कोन्हु श्रीगणेश्वर भट्टारकत्वं प्रतिस्था या-
४. ङा दिवंगत पुत्र लुतेया उदेशान दानपति श्रीकि-
५. र्त्रिपुरीदेश तुथिको क्वथु फोइछे मानापडुनी ववा रु-
६. पतेज सहानुभतन देव दयका ॥ थ्व दिनन लत्या न्हव-
७. अंगारबार कुन्हु मे फिया थन स्वन्हु न्हव आदित्यबार
८. कुन्हु पात्र श्रीजगत्पालजु कुथिस दिरङास्य ववाइ जा-
९. र वले लाङावो मथिलंश अङ्गथातन मोचकम्
१०. अपभित्तन लुंते भोक्व दिन; थ्वते पुन्यन यजमा-
११. नस गनपरिबारन्त, आयु आरोग्य जन धनन्ती वृ-
१२. द्धिरस्तु दिवगत पुत्र लुते स्वर्गराभ थजुर जुरो
१३. हाकु भालोन चिता याङा ज्या याको मखन डोय शुभ

१४. मनिकजुतो जगचंद रव्वक नामि, थ्व मंङ तंङ गुठि जुरो शुभ ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ६४८ (वि.सं. १५८४) पौष कृष्ण नवमी उप्रान्त दशमी बृहस्पतिबार, यस दिन श्रीगणेश भट्टारकको प्रतिष्ठा गरियो । दिवंगत छोरा लुंतोलाई लख गरी स्थापना गरिएको हो । दानपति श्रीकीर्तिपुर देश तुथिको क्वथु भोहछेकी आमा पडनी, बाबु रूपतेज मिली देवता बनाइएको हो ।

यसको ४१ दिन अगाडि मंगलबारको दिन अग्निदाह गरियो । यसको तीन दिन अगाडि आदित्यबारको दिन पात्र श्रीजगत्पालजु किल्लामा रहनु भएको थियो । ववाकाले हमला गर्दा पक्रिएका हुँदा .... बाटोमा अंगघात गरी मारिनु भयो । लुते पनि अपमृत्युले मरे ।

यस पुण्यले सपरिवार यजमानको आयु आरोग्य धन... वृद्धि होस् । दिवंगत छोरा लुंतेलाई स्वर्ग प्राप्त होस् ।

हाकु भारोले हेरबिचार गरिएको हो । यसमा काम गर्न मखन डोय हुन् । शुभ होस् । मणिकजु, हरसिद्धिका जगच्चंद्र यी नपुगेको थप्ने गुठियार हुन् । शुभ ।

**व्याख्या**

एउटा सानो पाटीमा रहेको यस सानो अभिलेखले तात्कालिक एक महत्त्वपूर्ण घटनालाई ओगटी बसेको छ । ने.सं. ६४८ (वि.सं. १५८४) पौषमा कीर्तिपुरका एक पति- पत्नीको जोडीले दिवंगत छोराको संभनामा गणेश स्थापना गरी यो अभिलेख कुँदन लाएको हो । छोराको मृत्यु साधारण किसिमले अर्थात् रोगव्याधि लागी भएको थिएन; तिनको मृत्यु लडाइँको मैदानमा भएको थियो । यस कुराले बाबुआमाको मायालु हृदयमा असर पारिरहेको हुँदा आफ्ना छोराको मृत्यु हुनाको कारण पनि अलिकता खुलाई यहाँ लेखिएको छ । उनको छोराको मृत्यु भएको कुरा कोट्याउँदा ललितपुरका एकजना प्रख्यात महापात्र जगत्पालको मृत्यु भएको घटनाको उल्लेख पनि यहाँ गरिएको छ । यसो हुँदा यस अभिलेखको महत्त्व बढ्न गएको छ ।

यो अभिलेख राखिनुभन्दा डेढ महिना जति पहिले ववा (चापागाउँ भेक) का बासिन्दाहरूले कीर्तिपुरभेकमा आक्रमण गरेछन् । त्यसबेला महापात्र जगत्पाल किल्लामै थिए । किल्ला फुट्दा उनी पक्रिए; अनि शत्रुहरूले उनलाई बाटोमा अङ्गघात गरी मारेछन् । यसै काण्डमा यो अभिलेख राख्न लाउनेका छोरा लुंते पनि मारिए छन् । मारिएको केही दिन पछि मात्र उनको दाहक्रिया गरिएछ । अनि यसको ४५ दिनपछि छोराको लत्या गरी यी गणेश स्थापना गरिएका हुन् ।

महापात्र जगत्पाल रत्न मल्लका पूरा अनुयायी थिए । रत्न मल्ल जीवित छउन्जेल यिनको शक्ति बढेथ्यो । ने.सं. ६४० (वि.सं. १५७७) मा रत्न मल्लको मृत्युपछि जगत्पालको पनि शक्ति घटेको अनुमान हुन्छ । यसैबीच पाल्पाका मुकुन्द सेनको आक्रमणले गर्दा नेपाल-उपत्यकाको राजकाजको सन्तुलन केही खलबलिएथ्यो । ने.सं. ६४६ फाल्गुनमा मुकुन्दसेनले कीर्तिपुरमा हमला गरेथे; कीर्तिपुरमा हमला गरेको भोलिपल्ट ववा (चापागाउँ भेक) मा पनि मुकुन्दसेनको सैन्यले हमला गरेथे । यसको अघिल्लो वर्ष पनि मुकुन्दसेनको सैन्यले आक्रमण गरेथे । त्यसबेला पनि कीर्तिपुरमा आगो लाउने काम गरिएको थियो ।



यस घटनाले जगत्पालको शक्ति भन् घटेको अनुमान हुन्छ । अनि उनका प्रतिद्वन्द्वीले कीर्तिपुरको विरुद्ध चापागाउँभेकका जनतालाई उठाई ल्याई गृहकलह गराइएछ । त्यसै गृहकलहमा महापात्र मारिएछन् । उनलाई पक्रेर लगी बाटामा अंगअंग काटी मारेको हुनाले उनीसँग बदला लिइएको स्पष्ट छ । यसकारण यस काममा उनका प्रतिद्वन्द्वीको हात छ भन्ने स्पष्ट छ । उनीपछि विष्णुसिंको उदय भएको हुँदा उक्त काण्डमा विष्णुसिंहको त हात छैन ? भनी अनुमान गर्ने आधार नभएको होइन, तर कुनै आधारको अभावमा त्यसै अनुमान गर्न मिल्दैन । भविष्यमा हुने खोजले यस विषयमा प्रकाश पर्ने अनुमान गर्न सकिन्छ ।

★★★

(४०८)

# कीर्तिपुर दवुचाटोलको लक्ष्मीनारायणको पादपीठको अभिलेख

## मूलपाठ

१. श्रीयोस्तु ॥ सम्वत् ६५० वैशाष शुक्ल एकादस्या तिथौ उत्रफाल्गुने
२. प्र हस्तनक्षत्र वर्ज प्र शुद्धियोगे शनेसचलवाशरे थ्व कुन्हु हाको यिदिशि
३. हात्वं दिवंगत जुव दिन जुलो । हेरमित्वं सहगामिनि सहितन श्रीश्रीश्री इद्र पु-
४. त्नंव शुभ ॥ शुभ मस्तु शर्व्वदा भवतु जथारस्तु शुभ ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ६५० (वि.सं. १५८७) वैशाख शुक्ल एकादशी शनिबार उत्तरफाल्गुनी उप्रान्त हस्तनक्षत्र, वज्र उप्रान्त शुद्धियोग, यस दिन ज्योतिषी हाकु दिवंगत भए । हेरभि आदि सती गए । श्रीश्रीश्री इन्द्र ........... सधैं शुभ होस् । जसरी शुभ होस् ।

**व्याख्या**

मल्लकालमा सतीप्रथा बारे बिचार गर्न यो सानो अभिलेख केही उपयोगी रहेको छ । हाम्रो यहाँ लिच्छविकालमा भन्दा मल्लकालमा सतीप्रथाले उग्ररूप लिएको थियो । तात्कालिक अभिलेख, ठ्यासफुहरूमा सती गएका अनेक घटना टिपिएका छन्, तर तिनमा राजा र राजपरिवारभित्रका सतीसँग सम्बद्ध कुरा बढी परेका छन् । यस अभिलेखमा भने एक जोशी (ज्योतिषी) को मृत्यु हुँदा सती गएको कुरा परेको छ । त्यसबेलाको समाज सती जाने नजाने दुइ वर्गमा छुट्टिएको पाइन्छ । जोशीहरूको चाहिँ सती जाने प्रथा थियो भन्ने कुरा यस अभिलेखले देखाउँछ । सती जाँदा त्यसको सम्भनाको लागि केही कीर्ति राख्ने चलन पनि थियो भन्ने कुरा यस अभिलेखले देखाउँछ ।

★★★

## (४०९)

# कीर्तिपुर पालेफलटोलको गणेशको पाटीको शिलालेख

## मूलपाठ

१. स्वस्तिः श्रीमन्नेपालिकः । श्रेयोऽ-
२. स्तु ॥ सम्वत् ६६७ चैत्रमासे शुक्लपक्षे
३. एकादश्यान्तिथौ मघनक्षत्रे गंध जो-
४. गे जथाकर्ण्णमुहूर्त्ते वृहस्पतिवास-
५. रे थ्व क्वन्हु श्रीकीर्त्तिपुरि देश गार-
६. षपुर्र टोलक क्वथुफोड गृह अग्र-
७. स माको कूप्र प्रतिस्था याङा दिन जुरो
८. थ्व तुथि दोयका दानपतिः त्वाल ना-
९. यक नाथु भारो प्रमुख चिता याक कम-
१०. लसिंङ क्वाठनायक भारोस प्रमुखन
११. लुगुभारो त्याक दंगुरि गंगाराज
१२. जसिराज यंदुनाथ्व, थुते भेरा-
१३. व जास्य कफित जुस्इ तुथि होका-
१४. या सास्न चोया जुरो जथुते धर्म्म की
१५. त्रि दोयका पुनेन जनधन ल-
१६. क्ष्मी संतति संतान आयि वृदि र-
१७. तु शुभ ॥ ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ६६७ (वि.सं. १६०४) चैत्र शुक्ल एकादशी बृहस्पतिबार मघानक्षत्र गण्डयोग, पर्नुपर्ने करण मुहूर्त परेको बेलामा, यस दिन श्रीकीर्तिपुर देश गोरखपुरीटोल कुथुफोङगृहको अगाडि इनार प्रतिष्ठा गरियो ।

यो इनार बनाउने दानपति टोलका नाइके नाथु भारो हुन् । यसको देखरेख गर्ने प्रमुखहरू क्वाठनायक कमलसिंह भारो, लुगु भारो, त्याक दंगुरी, गंगाराज, जसिराज, पंदुनाथ, यिनीहरूले इनार बनाएको सम्बन्धी शिलालेख लेखाएका हुन् ।

यो धर्म कीर्ति राखेको पुण्यले जन, धन, लक्ष्मी, सन्तान र आयुको वृद्धि होस् । शुभ होस् ।



**व्याख्या**

कीर्तिपुर एक 'देश' को रूपमा विकसित बस्ती हुँदा यहाँ अनेक टोलहरू कायम छन् । त्यसमध्ये एक टोल उहिले 'गोरखपुरी टोल' भनी प्रचलित भएको रहेछ । त्यही टोलमा सार्वजनिक इनार बनाई यो अभिलेख कुँदाइएको हो । त्यसबेला प्रत्येक टोलमा नायक (नाइके) निर्धारित हुन्थे । नाइकेले आफ्नो टोलका बासिन्दाहरूको जीवनका लागि आवश्यक कुराको बन्दोवस्त गर्नेतिर ध्यान दिनु पर्थ्यो । यस अभिलेखमा टोल नाइकेले इनार बनाई प्रतिष्ठा गरेका कुरा परेको छ । यसबाट टोलनाइके नाथु भारोले आफ्नो कर्तव्य पूरा गरेको देखिन्छ । टोल नाइकेको जनहित हुने यस कार्यमा क्वाठनायक आदि कीर्तिपुरका अरू प्रमुखहरूले पनि सहयोग गरेको उल्लेख यस अभिलेखमा परेको छ । निर्माणकार्य सानो भए पनि सहयोगात्मक रूपमा काम गर्ने परम्पराको यो राम्रो उदाहरण हो भन्न सकिन्छ ।

★★★

## (४१०)

# कीर्तिपुर तुंफोटोलको मञ्जुश्रीको पादपीठको अभिलेख

## मूलपाठ

१. ॐ नम मंजुनाथाय ॥ स्वस्ति : श्लेयोस्तः सम्वत ६८६ कार्ति-
२. कमासे कृष्णपक्षे प्रतिपद्याया तिथो थ्व दिन कुन्हु दिवंगत
३. पूरचोया जम्षुजुयात निमित्तन छय जयराजजु फुकिजु
४. दोयेकाः नवकृतपतिकाः खर्गमंजुश्री पुन्य
५. सारस्त्रोक्त मस्तु ॥

### अनुवाद

मञ्जुनाथलाई नमस्कार । कल्याण होस् । ने.सं. ६८६ (वि.सं. १६२२) कार्तिक कृष्ण प्रतिपदाको दिन पुलचोकका दिवंगत जम्वजुको लागि नाति जयराज, र भाइले नयाँ पाटी बनाइयो; खड्गमञ्जुश्रीको स्थापना गरियो । शास्त्रमा बताएको पुण्य होस् ।

**व्याख्या**

कीर्तिपुर बस्ती बसाइको दृष्टिले त्यति ठूलो होइन; तैपनि सुरक्षाको दृष्टिले, सांस्कृतिक दृष्टिले निकै उल्लेखनीय रहेको थियो । यस बस्तीलाई सांस्कृतिक दृष्टिले उल्लेखनीय बनाउनमा स्थानीय जनताको पनि हात रहेको छ । जनताले राखेका यस्ता अभिलेखले उक्त कुराको पुष्टि गर्छन् । यस अभिलेखमा दिवंगत बाजेको नाममा नातिले पाटी बनाई खड्गमञ्जुश्रीको स्थापना गरेको कुरा परेको छ । अहिले पाटी त बचेको छैन, तर खड्ग मञ्जुश्रीको मूर्ति भने बचेको छ । यो अभिलेख

उक्त मूर्तिको पादपीठमा नै कुँदिएको हो । मूर्ति कलाको दृष्टिले ठीकै खालको छ, तर धार्मिक दृष्टिले यसको ध्यानमुद्रा मननीय छ ।

★★★

(४११)

## कीर्तिपुरको पुरन्दरसिंहको पालाको अभिलेख

कीर्तिपुरमा बाघभैरवको प्रसिद्ध मन्दिर रहेको छ । सो मन्दिरको ढोकाको दायाँपट्टि रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ ने.सं. ७०७ दिइएको छ ।

संशोधन-मण्डलद्वारा इतिहास-संशोधनको प्रमाण प्रमेय मा यो छापिएको छ ।

१. ॐ स्वस्ति ॥ सम्वत् ७०७ कार्तिक शुक्ल द्वादशीप्रच त्रयोदश्यां
२. तिथौ उत्तरभद्रनक्षत्रे व्याघाटयोगे शुक्रवासरे तस्मिन् दि-
३. वसे समस्तसूप्रसस्त्यलंङ्कृतसद्विराजमानश्रीश्रीजयपुरन्द-
४. रसिंहदेवेन राशा पालितायां श्रीकीर्तिपुर्यां श्रीगुद्रेस्थाना-
५. धिपतिश्रीश्रीश्रीभीमसेनभट्टारकप्रासादोपरि स्वर्ण्णकलश-
६. ध्वजारोहनं भवति ॥ यजमान जकेराज क्वाटनायकेन कृतमिति ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७०७ (वि .सं. १६४३) कार्तिक शुक्ल द्वादशी उप्रान्त त्रयोदशी उत्तरभाद्रनक्षत्र व्याघातयोग शुक्रबारको दिन, सारा असल प्रशस्तिले खूपसँग सुहाएका राजा श्रीश्रीजयपुरन्दरसिंहदेवले पालना गरिएको श्रीकीर्तिपुरमा श्रीगुंदेस्थानका अधिपति श्रीश्रीभीमसेन देवताको मन्दिरमाथि यंजमान क्वाठनायक (किल्लाका अधिकारी) जकेराजले सुनको गजुर ध्वजा चढाइयो ।

**व्याख्या**

छ पङ्क्तिको यो सानो अभिलेख हो तापनि तात्कालिक केही कुरामा अलिकता प्रकाश यस अभिलेखबाट पर्छ । यस कारण अब त्यतातिर दृष्टिदिनु परेको छ ।

ने.सं. ७०७ (वि.सं. १६४३) को कीर्तिपुरको यस अभिलेखमा राजाका रूपमा पुरन्दरसिंहको उल्लेख परेको छ । मल्ल राजाहरू सरह नै उनमा अब 'श्रीश्री' 'जय' 'देव' पद जोडिन लागेको यताबाट थाहा पाइन्छ । उनी विधिपूर्वकका राजा नै हुन् भन्ने दर्शाउनाको लागि यहाँ उनमा 'समस्तसुप्रशस्त्यलङ्कृत' (सारा असल प्रशस्तिले सुहाएको) भन्ने विशेषण पनि लाइएको छ । यसरी पुरन्दरसिंह अब पूर्ण राजाको रूपमा यसताका देखापर्न थाले भन्ने थाहा पाइन्छ । हुन त



विष्णुसिंह नै वास्तवमा पाटनका स्वतन्त्र राजा बनिसकेका थिए । उनैमा पनि 'श्री मानिगलाधिपति', 'ठाकुर' 'देव' राजा आदि विशेषण जोडिन थालेथ्यो, तैपनि विष्णुसिंहले आफूलाई महापात्र भनी लेख्न छोडेका थिएनन् । उनका छोराहरूले चाहिँ पछि आफूलाई महापात्र भनी लेख्न छोडे । यस कुराको चर्चा माथि पनि गरिसकेको छ । पछि पुरन्दरसिंहले एक्लै शासन गर्न थालेपछि उनमा राजोचित विशेषणहरू अझ बढी रहन लागे भन्ने कुरा यस अभिलेखले देखाउँछ । पुरन्दरसिंहका यस पछिका अरू अभिलेखबाट पनि उक्त कुराको पुष्टि हुन्छ ।

कीर्तिपुरलाई तात्कालिक परिभाषा अनुसार एक शहरको रूपमा बसाउने काम राजा शिवदेवले गरे भन्ने कुरा गोपालवंशावलीमा परेको छ । साथै, शिवदेवले बलखुमा बाँध बाँधी यस इलाकामा खेतीको विशेष प्रवन्ध पनि गरेको उल्लेख छ । कुनै पनि बस्ती त्यसबेला 'पुर' (शहर) कहलाउन दुइ कुराको विशेषता हुनु पर्थ्यो । एक त सो बस्ती सुरक्षाको दृष्टिले मजबुत अर्थात् वन, जंगल, खाइ, पर्खाल आदिले घेरिएको 'गढ' रूपको हुनुपर्थ्यो; दोस्रो कुरा सो वस्तीको सास्कृतिक विकास पनि हुनु पर्दथ्यो; अर्थात् देवमन्दिरहरू, मण्डपहरू आदि संस्कृतिका द्योतक कुराहरू त्यहाँ हुनुपर्थ्यो । यसरी कीर्तिपुरको बस्तीले राजा शिवदेवको पालामा अर्थात् विक्रमको बाह्रौं शताब्दीमा उपर्युक्त परिभाषाले युक्त 'पुर' को रूप लिएको देखिएको छ ।

एक 'पुर' को रूप कीर्तिपुरको उक्त बस्तीले बाह्रौं शताब्दीमा मात्र लिएको देखिएको छ तापनि यो बस्ती त्यसभन्दा निकै परानो थियो भन्ने देखिएको छ । प्रचलित वंशावली अनुसार गोपालवंशीराजाहरूका पालामै यतातिर केही बस्ती बसेको थियो भन्ने झल्किन्छ । हुनपनि कीर्तिपुरमा गोपालहरू (ग्वालाहरू) लाई संझाउने स्थल आदि अझै केही छन् । यसो हुँदा कीर्तिपुर भन्ने नामकरण हुनुभन्दा पहिले यहाँको बस्तीको नाम के हुँदो हो भन्ने प्रश्न उठ्छ । हुन त कीर्तिपुरको अर्को नाम 'पद्म काष्ठ गिरि' भन्ने पनि नपाइने होइन । तर यो नाम पनि त्यति प्राचीन होइन भन्ने देखिएको छ । बरु कीर्तिपुरको पुरानो नाउँ 'गुंदे' थियो कि भन्ने कुरा यस अभिलेखबाट झल्किएको छ । यहाँ भीमसेनको विशेषण श्रीगुन्देस्थानाधिपति भन्ने दिइएको छ । दोलखाका भीमसेनलाई दोलखाधिपति लेखिन्थ्यो । तात्कालिक अभिलेखमा यसको उल्लेख पाइन्छ । आफ्नो इलाकाका प्रसिद्ध देवतालाई त्यो ठाउँका अधिपति मान्ने चलन थियो । कीर्तिपुरका भीमसेनलाई श्रीगुंदेस्थानाधिपति भनिएको हुँदा कीर्तिपुरको पुरानो नाम गुंदे थियो कि भन्ने यताबाट देखिएको छ । यस कुराको केही पुष्टि कीर्तिपुरको अरू अभिलेखबाट पनि हुन्छ ।

कीर्तिपुरको तात्कालिक परिभाषा अनुसार एक शहरको रूप लिए पनि प्रशासनिक दृष्टिले भने यसको स्तर त्यति माथि उठ्न सकेको देखिँदैन । ललितपुरमा महापात्र युग छँदै यो बस्ती प्रशासनिक दृष्टिले ललितपुर अन्तर्गत थियो । ललितपुर स्वतन्त्र राज्य हुँदा त्यस अन्तर्गत ठूलठूला बस्तीमा प्रशासनको लागि 'प्रमान' (बडा हाकिम) नियुक्त गर्ने गरिन्थ्यो । प्रमान मन्त्रिस्तरका हुन्थे । तर कीर्तिपुरमा भने स्थायी रूपमा 'प्रमान' नियुक्त गरिएको हामी पाउँदैनौं । प्रायः क्वाठनायक ले नै प्रमानको काम चलाएको देखिन्छ । ललितपुर राजधानीबाट ज्यादै नजिकको प्रदेश हुँदा यहाँ छुट्टै 'प्रमान' नियुक्त नगरिएको हुन सक्छ । यस अभिलेखमा कीर्तिपुरका क्वाठनायक जकेराजको उल्लेख परेको छ । क्वाठनायक जकेराजले भीमसेनको मन्दिरमा सुनको गजुर र ध्वजा चढाइ यो अभिलेख राख्न लाएका हुन् ।

★★★

(४१२)

# कीर्तिपुर खासीबजारको अभिलेख

## मूलपाठ

१. ॐ श्रेयेऽस्तु ॥ संम्वत् ७४६ माघ शुक्ल ॥ पन्चम्यां
२. तिथौ । श्रवन नक्षत्रे ॥ सोभनयोगे ॥ आदित्य
३. वासरे ॥ थ्व कुन्हु प्रतिष्ठा दिन ॥ श्रीचैतलंडया गु
४. रुभराड श्री रजतदेवजु मात्रा आदिकाजु, नकग्रा-
५. मया रथन - नायक पति ॥ जयचन्द भा-
६. वो जिवो ........... जिवनसिंह भा-
७. वो ... रश्व ... श्रीमत् श्रीश्रीचैत्रभराड द्व-
८. यकं ... व ........ सेडचोंगा ल्होङा जुरो
९. थ्वते ......... दयका
१०. ................. दयका ॥ थ्वते प्रमुखन धर
११. मुनि म्ह ३३ थ्वते धरमुनिया .... र थ्वते ॥
१२. वोशनेया अजरीख भावो ल्वहको तखाया
१३. म्हं १ वलवुया म्हं १ थ्वतेभय शयस्वम्ह
१४. ३३ जुरो ॥ थ्व दिन क्वन्हु थ्व चैतभराड प्रति
१५. याङा जुरो ॥ थ्व दिन कुन्हु बोसाधन ङाय-
१६. के मार जुरो ॥ शुभ ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ७४६ (वि.सं. १६८२) माघ शुक्ल पञ्चमी आदित्यबार श्रवण नक्षत्र, शोभनयोग, यस दिन (चैत्यको) प्रतिष्ठा गरिएको हो । श्रीचेतलंड (चितलाङ) का गुरुभाजु श्रीउजोतदेव जु आमा आदिकाजु, नकग्राम (नगाउँ) का रत्न, ... नायक ... जयचन्द भावो, ... जीवनसिंह भावो ... श्री ३ चैभट्टारक बनाए । .... पहिलेको बिग्रिरहेको जीर्णोद्धार गरेका हुन् । ........... यी ........ बनाइयो । यति प्रमुख भई ३३ जना धर्मात्माहरूले उक्त चैत्य बनाइएको हो । धर्मात्माहरूमा बोसनेका अजरीख भावो, लोहंकोट्खाका एकजना, बलम्बुका एकजना, इत्यादि ३३ जना हुन् ।

उक्त दिन चैत्य भट्टारकको प्रतिष्ठा गरिएको हो । त्यस दिन बुसाधन गर्नू । शुभ होस् ।

★★★



(४१३)

# तःननी चैत्यको पूर्वपट्टि पेटीमा रहेको शिलापत्र

## मूलपाठ

१. (श्रे) योऽस्तु ॥ सम्वत् ७५० अशुनिमास्य
२. (शु) क्र पक्ष पूर्णमावास्यां तिथौ ॥ अ (नु)
३. (रा ढा न) क्षत्रे वैधृतियोग्य आदितवासल्य
४. (थ्व) कुन्हु पञ्चनेत्र भरादसके उल्हा
५. तभाव प्रमुखन अहोरात्र धर्म दयका
६. शुवर्ण्ण छत्रस तथा घंथ ग्वड ४ ध्वया
७. चितायाक श्री नात स्वनजु हाकु भावो
८. (रा) मसिंङ भावो । भुतिगामया चैत्र भा
९. रो र श्रीजिवनजु प्रमुखं ल्होङा
१०. पिवखादेव दयका जिकेराम
११. या छम्हं । जता जया - म्ह ॥ रुं छ
१२. ... दयका .......................
१३. रोर ता .........................
१४. ....................................

## अनुवाद

कल्याण होस् । ने.सं. ७५० (वि.सं. १६८७) आश्विन शुक्ल पूर्णिमा आदित्यबार अनुराधानक्षत्र वैधृतियोग, यस दिन पञ्चचैत्य भट्टारकलाई उल्हात भाव प्रमुख भई अहोरात्र धर्म गरी सुनको छत्र चढाइयो, चारवटा घण्टा पनि चढाइए ।

यसको हेरचाह गर्न श्रीनातस्यनजु, हाकु भावो, रामसिंह भावो, भुतिगामया चैत्र भारो र श्रीजीवनजु प्रमुखले जीर्णोद्धार गरी पिवखादेव बनाइए ।

जिकेराम .......... बनाइयो । ...........

★★★

(४१४)

## कीर्तिपुर हर्षकीर्ति-विहारको अभिलेख

### मूलपाठ

१. नमो बुद्धाय ॥ सम्वत् ७६२ जेष्ठ कृष्ण अष्टम्याम् तिथौ । उत्तभद्र
२. प्र रेवतिनक्षत्रे शोभन योग्य शुक्रवासरे ॥ थ्व कुन्हु श्रीशाक्य-
३. वंश हाकु दानपतिनं । श्रीशाक्यमुनि श्रीधर्म्मधातु वागीश्वर
४. अहोरात्र यज्ञ याङ स्थापना याङा जुरो ॥ तस्य भार्य्या मनिका
५. द्वितीय भार्य्या वरना तृतीयजमूना ॥ पुत्र सहितेन, पुण्यन जनध-
६. नसन्तान लक्ष्मी आयु आरोग्यमस्तु ॥ शुभ ॥

### अनुवाद

बुद्धलाई नमस्कार । ने.सं. ७६२ (वि.सं. १६९९) ज्येष्ठ कृष्ण अष्टमी उत्तर भाद्र उप्रान्त रेवतीनक्षत्र, शोभनयोग, शुक्रबार, यस दिन दानपति श्रीशाक्यवंश हाकुले श्रीशाक्यमुनि श्रीधर्मधातु वागीश्वरको स्थापना अहोरात्र यज्ञ गरी गरे । उनकी पत्नी मणिका, माहिली पत्नी वरना, कान्छी पत्नी जमुना र छोरा सहित भई उक्त काम गरिएको हो । यस पुण्यले जनधन सन्तान लक्ष्मी आयु आरोग्यको वृद्धि होस् । शुभ होस् ।

(४१५)

## कीर्तिपुर डबुचा टोल गणेश स्थानको ताम्रपत्र

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ७६५ श्रावणमास्य कृष्णपक्ष ॥ अमावास्यायां तिथौ ...
२. नक्षेत्रे परिधजोगे ॥ सोमवासरे थ्व कुन्हु श्रीकीर्तिपुरिदेशाया तुंतिया
३. त्वाल चैत्र २ ङन येता बाहारिया श्रीश्रीगणेस्त शुवर्ण्ण मुख ङकुरिधर्म
४. न दयका जुरो ॥ सिजरः छि मुखयात कृष्णसिंङ भारोन स्वहस्तेन दु
५. ता ॥ थ्वते चितायाक ॥ श्रीरक्ष्मिधर ब्राम्हन ॥ विष्णु भारो ॥ विष्णुसिंह भा-
६. रो ॥ गुनि भारो ॥ गोपार भारो कृष्ण भारो ॥ हरिराम भारो थ्वते
७. चितायाक जुरो ॥ श्रीसदानन्द व्राम्हण हरिराम भारो थ्वते धाक थाक



८. म्हं ३५ थ्वते धमुनि ॥ कफितं, कृष्ण सिंङ भारो ॥ सकरे समुचयन, ङ-
९. च्छान दयका जुरो ॥ फरे खकवर यात सिथकारि ... या गोष्ठी
१०. ङकुरिधनमन दुंवीया शुभ ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७६५ (वि.सं. १७०२) श्रावण कृष्ण आमावास्या सोमबार ... नक्षत्र परिधयोग, यसदिन श्रीकीर्तिपुर देशका तुंतियाटोल चैत्य रङदेखि ... तिरको विहारीका श्री ३ गणेशलाई ङकुरिधर्मखलकले सुनको मुख बनाई चढाइयो । मुख बनाउन तामा जति कृष्णसिंह भारोले आफ्नै हातले चढाए ।

यसको हेरचाह गर्न श्रीलक्ष्मीधर ब्राह्मण, विष्णु भारो, विष्णुसिंह भारो गुणी भारो, गोपाल भारो, कृष्ण भारो, हरिराम भारो हुन् । श्रीसदानन्द ब्राह्मण हरिराम भारो यिनीहरू धाकथाक हुन् । जम्मा ३५ जना धमुनि (धर्मगर्ने) हरू हुन् । कफी- कृष्णसिंह भारो । सबै समुच्चयले इच्छा गरीकन बनाएका हुन् ।

तीन कवल भएको पाटीको लागि काठ थकाली... ङकुरी धर्म गोष्ठीले दिएको हो शुभ होस् ।

★★★

(४१६)

## कीर्तिपुर याकबहालभित्र सालिकका पश्चिमपट्टिमा रहेको शिलालेख

### मूलपाठ

१. ॐ नमो रत्नत्रयायः । त्रयोरि सतत
२. नम सर्व्ववुद्धं नमस्यामिधर्मञ्च जिन-
३. माषितं संधञ्च शीरसंप्रन्न रत्नत्रय नमस्तु ते ॥
४. श्रेयोऽस्तु संम्वत् ७६७ ज्येष्ठ कृष्ण चतुर्थी, धनेष्ठ
५. नक्षतेः विस्तम्भे योज्ञः शुक्रवासरे ॥ थ्व कुन्हु श्रीजि-
६. वधर्ममहाविहार स्थापना ॥ श्री ३ शाक्यमुनिः धर्म्मधातु
७. चैत्य धजालोहनः श्री २ म(न) रसिंह मल्ल ठाकुर विज्याचक
८. अहोरात्र जज्ञ याङ प्रतिष्ठा याङा जुरो ॥ दानपति
९. श्रीवजाचाज्य राथस्यनजु त्रस्य भाज्या रक्ष्मि माता
१०. तस्य पुत्र श्रीजिवराज देव ॥ तस्यभार्य्याः
११. धवनिः दि-ज्या, रुकुमनि तस्य

१२. पुत्र श्रीचन्द्रजोति भात्रे ईन्द्रजो-
१३. तिः थ्वते समूहन याङा जुरो ॥०॥
१४. २ पुनः दिवंगत श्रीजिवराज देवजुयातः ना-
१५. मनः श्रीसंम्वरदेव-देविः श्रीवौद्ध धर्म्मसंघः ग-
१६. णेस, महाकार दयक पतिथा याङा जुरो ॥ सम्वत् ७८३ भाद्र पन्द्र शुक्र दसमि
१७. कुन्हु दानपतिः तस्य पुत्र श्रीचन्द्रजोतिः ईन्द्रजोतिः निम्ह समूहन दय-
१८. का जुरो ॥ ० ॥ पुनभाषा थ्वते देव वाहार व्रखप्रति जज्ञ याङ वोसार्द्धन या-
१९. यमारः पून रसपति दसमि पूजा याथमारः कतिनि पून्हिसि कुन्हु धृ-
२०. त दिवा छोयके मार ॥ नृत्य पूजा यायमाल ॥ देवया मुरछे विहार रि-
२१. वि स्यल्हो मतकार जुरोः थ्वतेयात आसः कफर वु रोव १ वु रोवु
२२. रोव ३ थ्वते दि जुरो ॥ ० ॥ पुन संम्वत् ८०१ पौष शुके पन्चम्यां-
२३. तिथौः वृहस्पतिवालः थ्व कुन्हु थ्व थ्वत दिवा शारिक तया ॥ पुन ग-
२४. जुरिसः स्वत छत्र दोहरपा ॥ पुसक्वचपाल न्हवन चोङ त-
२५. थागतयाकेः मतुक दोहोलपा ॥ थ्वतेया दानपति ॥
२६. श्रीचन्द्रजोति ॥ तस्य भार्य्या मजुनि ॥ तस्य ज्येष्ठपुत्र श्रीदातजो-
२७. ति ॥ दितिय पुत्र श्रीरजोति ॥ तृतिपुत्र क्षानजोति ॥ थ्वते
२८. समोहन दयका जुरो ॥ ० ॥ शुभमस्तु सर्व्वदा ॥ ॥ शुभ ॥

### अनुवाद

**त्रिरत्न** (बुद्ध, धर्म, संघ) लाई नमस्कार । ......... सबै बुद्धलाई नमस्कार गर्दछु । बुद्धले बताएको धर्मलाई पनि नमस्कार गर्दछु । शीलले युक्त संघलाई पनि नमस्कार गर्दछु । यसरी त्रिरत्नलाई नै नमस्कार छ ।

कल्याण होस् । ने.सं. ७६७ (वि.सं. १७०४) ज्येष्ठ कृष्ण चतुर्थी शुक्रबार धनिष्ठानक्षत्र विष्कुम्भयोग, यस दिन श्रीजीवधर्मविहार स्थापना गरियो । श्री ३ शाक्यमुनि धर्मधातु चैत्यमा ध्वजारोहण गरियो । श्री २ सिद्धिनरसिंह मल्ल ठाकुर पाल्नु भएको थियो । अहोरात्र यज्ञ गरी प्रतिष्ठा गरियो ।

दानपति श्रीरथस्यन वज्राचार्य, तिनकी पत्नी लक्ष्मी तिनका छोरा श्री जीवराजदेव, तिनकी पत्नी धवनी ... रुक्मिणी, तिनका छोरा श्रीचन्द्रज्योति, भाइ इन्द्र ज्योति, यति समूहले बनाइएको हो ।

फेरि दिवंगत श्रीजीवराजदेवको नाउँले श्रीसम्वरदेव, देवी, श्रीबुद्ध, धर्म, संघ, गणेश, महाकाल बनाई प्रतिष्ठा गरियो । ने.सं. ७८३ (वि.सं. १७२०) भाद्र शुक्ल दशमीको दिन दानपति तिनका ( जीवराजका) छोरा श्रीचन्द्रजोति इन्द्रज्योति दुइजनाले बनाइएको हो ।

अर्को बेहोरा– यी देवता र बहालको प्रतिवर्ष यज्ञ गरी बुसाधन गर्नुपर्छ । फेरि प्रतिमहीना दशमी-पूजा गर्नुपर्छ । कार्तिक पूर्णिमाको दिन घिउको बत्ती बाल्नुपर्छ । नृत्यपूजा गर्नुपर्छ । देवताको मूलघर विहारको मरम्मत गरी 'बत्ती लिने' काम गर्नुपर्छ । यसको लागि कफरखेत डेढ रोपनी, बुरोवु तीन रोपनी गुठी राखियो ।



फेरि ने.सं. ८०१ (वि.सं. १७३७) पौष शुक्ल पञ्चमी बृहस्पतिबारको दिन बत्तीसहित सालिक राखियो । फेरि गजुरमा तीनतल्ले छत्र चढाइयो । क्वचपाल देवताको सामुन्ने रहेका तथागत (बुद्ध) लाई मुकुट चढाइयो । यसका दानपति श्रीचन्द्र ज्योति, तिनकी पत्नी मजुनी, तिनका जेठा छोरा श्रीदानज्योति, माहिला छोरा श्रीरज्योति कान्छा छोरो ज्ञानज्योति, यति समूहले बनाइएको हो । सधैं शुभ होस् ।

★★★

## (४१७)

## कीर्तिपुर तःननी चैत्यको अभिलेख

### मूलपाठ

१. श्रीऽस्तु संम्वत् ७६८ पौषमासे कृष्णपक्षे
२. पंचम्याया तिथो उत्रफागुणक्षत्रे सौरन जो-
३. गे वसुवासरसर, श्री ३ धम्मधातु चै
४. तवाहारया, उत्ररस, लोहोन तोरन
५. तयाव पतिथा याङ दि जुरो, थुतिया
६. दानपति वोराकतक समोमोहा याङा-
७. न दोहोरपा जुरो, थुति समोहोन त-
८. या देवरामजु भारो छेकफित
९. नुगुराम भाव माघसिङ भाव
१०. खोसिङ भाव, परसिङ भाव विन्हसि-
११. ङ भाव, माघसिङ भाव, शुभ ॥

### अनुवाद

कल्याण होस् । ने.सं. ७६८ (वि.सं. १७०४) पोष कृष्ण पञ्चमी बृहस्पतिबार उत्तरफाल्गुनीनक्षत्र शोभनयोगको दिन, श्री ३ धर्मधातु चैत्य भट्टारकको उत्तरपट्टि ढुङ्गाको तोरण राखी प्रतिष्ठा गरियो । यसका दानपति बोरा-कतक समूहले यो चढाइएको हो । राख्ने समूह यस प्रकारको छ– देवराम भारो, छेंकफित नुगुराम भाव, माघसिङ भाव खोसिङ भाव, पासिङ भाव, परसिङ भाव, विन्हसिङभाव, माधवसिङ भाव । शुभ होस् ।

★★★

## (४१८)

# शाक्यमुनि मन्दिर (सिंहदुवाल लोहंदेवल) को शिलापत्र

### मूलपाठ

१. आर्य्यावलोकेशस्तार, सवल भारवलान्तकं देवदेव । धिपं ना-
२. थं महाबोधिं नमाम्यहं ॥ भगवन निशादुल, लोकलोकानुचे-
३. तकं । सर्व्वदेवोत्तमं वन्दे गुनसागरसागरं ॥ श्रेयोऽस्तु ॥ संम्वत्
४. ७६९ माघमास्य शुक्लपक्ष ॥ द्वादश्यायां तिथौ, मृर्गशिलनक्षत्रे
५. वेधतिजोगे, जथाकर्ण्णमुहुत्रे, सोमवासरे, मकरागते स-
६. वितरि, वृषरासिगते चन्द्रमसि, थ्व कुन्हु लक्षाहुति द्वादशा-
७. निग्क्रिया आरंभ याङन ध्वजरोहन याङा पञ्चस्वर वाद्य-
८. रानृत्य पदसाधन मुङा प्रकास याङान, देबारय संजुक्ता
९. याङन श्रीश्रीमहावोधि शाक्यमुनि स्थापन याङा, दिवंगत दे-
१०. वकृत जुयातन स्वमाता लन्हाजुयात, नेम्ह उभयस्त नाभन द-
११. यका दानपति श्रीशाक्यवंश हाकुजुन स्थापना याङा तस्य भा
१२. र्य्या मनिका, द्वितीया भार्य्या वरुना, तृतीय भार्य्या जमुना, तस्य पु-
१३. त्र धर्म्मजोति द्वितीय पुत्र गुनजोति, ऐते दानपतीनां जनध-
१४. न लक्ष्मी संप्रान्पुवन्तु, आयु आरोग्य भुंगुति भुगुक्ति फलं
१५. तथागतपदं प्रान्पुवन्तु, मूलाचार्य्य श्रीचेत्ररंड्या जुगिदेव
१६. उपाध्या यंरया श्रीवुवाहार श्रीदेव कर्म्माचार्य्य श्रीवुंग
१७. पया नायक गुनचन्द्र, थ्वते जुरो ॥ श्रीमानिगलाधिपति
१८. श्रीश्रीश्रीसिद्धिनरसिंह मल्ल प्रभु, तसय पुत्र श्री-
१९. श्रीश्रीनिवास मल्ल प्रभु, थ्व नेम्हस विजय राज्य
२०. वेलस, थ्व नेम्ह उभय विज्याचकं रक्षाहुति
२१. देवप्रतिष्ठा ध्वजालोहन याङा दिन जुरो ॥
२२. तस्य पुण्यानुभावेन दानपतिना यथेच्छा
२३. फलप्राप्तमस्तु ॥ शुभमस्तु सर्व्व जगतां
२४. ॥ ॥ ॥



### अनुवाद

आर्य्यावलोकितेश्वर, वलशाली, मारको बल सखाप पार्ने, देवताका पनि देवता महाबोधिसत्त्वलाई नमस्कार गर्दछु । ... शार्दूलजस्ता, लोकलाई अनुकम्पा गर्ने, देवताहरूमा उत्तम भएका, गुणको खानि भएका ती देवतालाई नमस्कार गर्दछु ।

कल्याण होस् । ने.सं. ७६९ (वि.सं. १७०५) माघ शुक्ल द्वादशी सोमवार मृगशिरानक्षत्र, वैधृतियोग, पर्नुपर्ने करण मुहूर्त परेको बेलामा, मकरराशिमा सूर्य रहेमा, वृषराशिमा चन्द्रमा रहेमा, यसदिन लक्षाहुति, द्वादशाग्निक्रिया आरम्भ गरी, ध्वजारोहण गरी, पञ्च स्वर वाद्य.... नृत्य पदसाधन, मुद्राप्रकाश गरी देवालय तयार पारी श्रीश्रीमहाबोधि शाक्यमुनि स्थापना गरिए । दिवंगत देवकृतजु र आफ्नी आमा लन्हाजु दुवैको नामले बनाइएको हो ।

दानपति श्रीशाक्यवंश हाकुजुले स्थापना गरिएको हो । तिनकी पत्नी मनिका माहिली पत्नी वरुणा, कान्छी पत्नी जमुना, तिनका छोरा धर्म्मज्योति, माहिला छोरा गुणज्योति, यति दानपतिहरूलाई जनधन लक्ष्मीको प्राप्ति होस् । आयु आरोग्य भुक्ति मुक्तिफल प्राप्त होस् । तथागतपद प्राप्ति होस् ।

मूलाचार्य श्रीचैत्यरंड (चितलाङ) का जुगिदेव, उपाध्याय पाटन श्रीबुबहालका श्रीदेव कर्म्माचार्य, श्रीबुंग्मतीको नायक गुणचन्द्र यति हुन् ।

श्रीमानिगलका अधिपति श्री ३ सिद्धि नरसिंह मल्ल प्रभु, उहाँका छोरा श्री २ श्री निवास मल्ल प्रभु, यी दुइजनाको विजयराज्य चलेको बेलामा, उहाँ दुवै जनाको सावरी गराई, लक्षाहुति गरी देवताको प्रतिष्ठा गरियो; ध्वजारोहण गरियो । त्यस पुण्यको प्रभाव दानपतिहरूलाई चिताए अनुसारको फल प्राप्ति होस् । सारा संसारको शुभ होस् ।

★★★

## (४१९)

# कीर्तिपुर उमामहेश्वरको ताम्रपत्र

### मूलपाठ

१. ? ॐ नमः श्रीभवानीशर्कराभ्यां ॥ अद्यश्वेत वालाहकल्पे वैवश्वतत्मन्वंतरे
कलियुगे प्रथमचरणे जम्बुद्वीपे भरतखण्डे आर्य्यावर्त्त पून्यदेशे हिमवत्पाद प-
२. शुपतिसन्निधाने वाशुकिक्षेत्र वाङमत्यां दक्षिणकुले नेपालदेशान्तर्ग्गत ललितपट्टने
इहैवपुन्यभुमौ ॥ श्रेयोस्तु सम्वत् ७७५ वैशाषमासे शुक्लपक्षे एकाद-
३. श्यां तिथौ हस्तनक्षत्रे सुद्धियोगे आदित्यवासरे एत स्मिनदिवसे पदमकाष्ठ
गिरिस्थाने त्वंवाहार पात्रवंश राउर्त्त विश्वनाथ वावुसन स्वेष्ठदेवता प्रीतिन

४. भवानीशंकर मूर्त्ति स्थापना याङा दिन जुरो ॥ थ्वयात अर्थन वु दुंता रोव साल्ह १० ल मला अफल रोव गु ९ पांगक्वः रोव इलमषु १६ क्वाथवोको कर्ष गु ९ चोवाहार-
५. क्वथेलछि १ चोगल फाजन वार्त्तिका थ्वते वुयावरसानन वुसाधन आदिन मालहन जुरो ॥ पूजा जो १ चेत स्वान अस्तानसिं २ जाकि रिश्राव जोनसि २ माधेता नसि २
६. मेतयात चेकन कुड छि १ रसप्रति, थ्वते न्हितयात, जाक्य फं पियङा ४५ देव पूजायाक ब्राम्हनजुस्त, वजि फं षु ६ धेल कुड स्व ३ साखर कुडस्व ३ थ्वते वंशगोपाल-
७. यात दक्षिन तोचके जुरो ॥ देवया निश्राव वजि जोकोजोन सियाधरि सहपूजा वारि व्राम्हणयात जुरो ॥ माधेजुको देवयात वछि काय जुरो ॥ देवया वाशा माधेता नसि
८. २ श्रीवावुजुयात, ता नसि २ यजमान यात, तानसि २ वेशत्रयात, थ्वते माधेवेश तनरसछिस वियमार, परशेवलेको माधे मियाव देवयात तय जुरो ॥ पुन भाषा
९. इन्द्रजात्रा पेन्हु ४ तोन्हिन फंछिन चावथ्य श्रीश्रीश्रीभवानीशंकर देवस्त चाक मत छोयके माल, वलषु मण्डलयात चापात कुन्हु चाक्रमत छोयके माल मेत
१०. प्वात डापोरन प्वाठ चयङा ८५ दयकं छोयके जुरो ॥ भुर्य रोव षु ६ लठाला अफल वुः थ्व वुया वरसानन अवा- सिम दयका मण्डप जलधेनु सदाननिय मेषसं-
११. क्रान्ति कुन्हु जुरो ॥ भुय रोवस्य ३ व्याकसहखरक वु, थ्वया वरसानन वोसाधन कुन्हु चाक्रमेत प्वात छ्यछि ८१ श्री ३ धूवाहारस्क छोयके, केतकि स्वानस शुकि छि
१२. १ व्रषंप्रति तन्यजुरो ॥ थ्वतेया चिन्ता याक गोष्ठि मधुराज भारो वैकुण्ठराम भारो तेकनसिंह भारो रामकृष्ण भारो रामकृष्ण क्वाठनायक भवाणीदास थ्वते गुथि भाद
१३. न चोस्यंतको अविछिन निस्त्रपबंज माल ॥ मनिस्त्रपं रोपारोपयाकारे पञ्चमाहापातकि, निस्त्रपंहंतोरे उर्त्तरत ॥ थ्वतेया साक्षि वखनिम्ह ली विश्वनाथ
१४. उपाध्या सर्म्मा जुरो ॥ थ्वते हस्यनरि मो ट साल्ह १० रे तकेमार सेल्हो यात ॥ स्वदर्त्तपरदर्त्तं वायोहरेत्सुर विप्रयोः । वृर्त्तिस जायते विदुकुवर्षाणाम जतायु-
१५. तेः ॥ द्वेषणलोभरप संङयाते कोटि शिवलिंग मोचका पाप राक जुरो ॥ भुय ऋषङा ५ खोचलपाख ॥ पुनभाषा षुत्वालया त्वालनायकपनि प्रजा
१६. सुधाप्रषा जगात सेल्होमारको याय मार जाक्य फं सतछि १०० व्याहारन गुथिन विय माल, थ्व जाक्य दशपति छत्वारन नय, सेल्होमाल कोषुत्व-



१७. रनयाय, षुत्वालया त्वालनायक न ल्होने सनेकसंङ सपति चिन्ता ... तवघंङ सेल्होस देवरया माल साङ ... त्व जगति या माल गुथि-
१८. ..........
(दायापट्टि थपेको)
१९. पात २ धरि व्याहारन

★★★

(४२०)

## कीर्तिपुर चिथुबहिलको ताम्रपत्र

### मूलपाठ

१. श्रेओऽस्तु ॥ सम्वत् ७७९ श्रावण
२. शुक्ला ॥ पूर्णमास्यां तिथौ ॥ श्रलव
३. णक्षमत्रे ॥ शनैश्चरवासरे ॥ थ्व कु-
४. न्हु किर्त्तिपुरविहार व्रम्हचर्य्य वि-
५. क्षु श्रीदेवरधनजु स्व श्रीमतश्री ३ ग-
६. न्युरिदेवस्के खादरुथि प्वात १ दुन्ता
(छेउमा) जुरो ॥ शुभः

### अनुवाद

कल्याण होस् । ने.सं.७७९ (वि.सं. १७१६) श्रावण शुक्ल पूर्णिमा शनेश्चरबार श्रवणनक्षत्रं, यस दिन कीर्तिपुर बहिलका ब्रम्हचर्य भिक्षु श्रीदेव रत्नले श्री ३ गन्धुरी देवतालाई एक खादरुथि चढाए । शुभ होस् ।

★★★

(४२१)

## कीर्तिपुर चिलंचोबहालको शिलालेख

### मूलपाठ

१. ? ॐ नमः श्रीधर्म्मधातवे ॥ आकाशो निर्म्मलो भूत्वा
२. निष्प्रपञ्चगुणाश्रया ॥ पञ्चस्कन्धमनशान्ता त-
३. स्मे स्तूपात्मने नमः ॥ स्वस्ति सम्वत् ७८१ वै-
४. शाष शुक्र सप्तम्यांतिथौ वृहस्पतिवासरे
५. थ्व कुन्हु श्रीपद्मकास्थगिरिमहाविहारे श्री
६. धर्म्मधातु वागीश्वर भट्टारकसके ध्वजा-
७. रोहन गजुरि छाया दिन जुरो ॥ ० ॥
८. थुतिया दानपति जेष्ठ श्रीजकेसिंहजु स-
९. सिर्जुलगाछि ॥ श्रीमनिपालजुस मो टं २
१०. श्रीमयलजुस मो टं १०, श्रीनासिं देवजु-
११. स मो टं ५ ॥ श्रीमंजुस मो टं. १ । श्रीमनिथ-
१२. नजुस मो टं. ४ ॥ श्रीदेवजुस मो टं. १ श्री
१३. सगनजुस मो टं २ श्रीदेवजु मो टं १
१४. श्रीदेवचन्द्रजुस मो टं १ । श्रीदेवरा-
१५. जजुस मो टं १ ॥ लषमीजुस मो टं १
१६. मषनाजुस मो टं. १ जुति थव गोस्ति
१७. समूहन याङा जुरो ॥ थुतिया पुण्यया-
१८. प्रमावन धन सन्तान वृद्धिरस्तु ॥ शुभ ॥

### अनुवाद

धर्मधातुलाई नमस्कार ॥ आकाशजस्तै निर्मल भएका, प्रपञ्च नभएका, गुणी, पञ्चस्कन्धमनले शान्त भएका, ती स्तूपरूप देवतालाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७८१ (वि.सं. १७१८) वैशाख शुक्ल सप्तमी बृहस्पतिबार, यस दिन श्रीधर्मधातुलाई नमस्कार ॥ आकाश जस्तै निर्मल भएका, प्रपञ्च नभएका, गुणी, पञ्चस्कन्धमनले शान्त भएका, ती स्तूपरूप देवतालाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७८१ (वि.सं. १७१८) वैशाख शुक्ल सप्तमी बृहस्पतिबार, यस दिन श्रीपद्मकाष्टगिरिमहाबिहारमा श्रीधर्मधातु वागीश्वर भट्टारकलाई ध्वजारोहण गरी, गजुर चढाइयो ।



यसका दानपति ज्येष्ठ श्रीजकेसिंहजुको तामा जति । श्रीमणिपालको दुइ रुपियाँ, श्रीमयलजुको दश रुपिया, श्रीनासिंदेवजुको पाँच रुपिया, श्रीमंजुको एक रुपिया, श्रीमाणथनजुको चार रुपियाँ, श्रीदेवजुको एक रुपियाँ, श्रीसगनजुको दुइ रुपियाँ, श्रीदेवजुको एक रुपियाँ, श्रीदेवचन्द्रजुको एक रुपियाँ, श्री देवराजजुको एक रुपियाँ, लक्ष्मीजुको एक रुपियाँ, मयनाजुको एक रुपियाँ । यति आफ्नै गोष्ठी समूहले उक्त काम गरिएको हो । यति पुण्यको प्रभावले धन र सन्तानको वृद्धि होस् । शुभ होस् ।

★★★

(४२२)

## कीर्तिपुर, इन्द्रायणीस्थानको, बायाँपट्टिको सिंहको पादपीठको अभिलेख

### मूलपाठ

१. ॐ श्रेयोस्तु ॥ सम्वत् ७८१ जेष्ठमास्य शुक्लपक्षे ॥ षष्टम्यां तिथौ ॥ मघनक्षत्रे शुक्रबार कुन्हु मनहलनं दुन्ता जुरो,
२. प्रमुख विजय भाव ॥ पुत्र ङकुरसिं भाव, पुत्र पेंडव भाव, चिता याक प्रमुखन मनिसिंङ भाव
३. थानविहार

### अनुवाद

कल्याण होस् । ने.सं. ७८१ (वि.सं. १७१८) ज्येष्ठ शुक्ल षष्ठी शुक्रबार मघानक्षत्रको दिन मनोहरले यो सिंह चढाएका हुन् । प्रमुख विजयभाव छोरा ङकुरसिंह भाव, छोरा पाण्डव भाव । हेरचाह गर्ने प्रमुख मनिसिङ भाव, थान विहार ।

★★★

## (४२३)

## कीर्तिपुर इन्द्रायणीस्थानको दायाँपट्टिको सिंहको पादपीठको अभिलेख

### मूलपाठ

१. ? सम्वत् ७८१ जेष्ठमासं शुक्लपक्षे षष्टम्यां तिथौ मघनक्षत्र शुक्रबार कुन्हुतया जुरो
२. थानबाहर धरमजिनी प्रमुखन दयका जुरो, पुत्र जुगीदेव भाव
३. पुत्र बावुदेव भाव

### अनुवाद

ने.सं. ७८१ (वि.सं. १७१८) ज्येष्ठ शुक्ल षष्ठी शुक्रबार मघानक्षत्रको दिन यो सिंह राखियो । थानबहालका धरमजिनी प्रमुख भई छोरा जुगीदेव, भाव छोरा बाबुदेव भावले बनाइएको हो ।

★★★

## (४२४)

## कीर्तिपुर गुल्फु पुखुसीटोलको शिलालेख

### मूलपाठ

१. स्वस्ति ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८० चैत्रमासे कृष्णपक्षे ॥
२. अमावास्यान्तिथौ ॥ रेवतिनक्षत्रे ॥ विस्कंम्भयोगे ॥ शु-
३. क्लवासरे ॥ थ्व कुन्हु किर्तिपुरिया दिवंगत जेकराज
४. क्वाटनायक भारासेन श्रीमत् श्रीश्रीनारायन मूर्त्ति-
५. त्वं स्थापना सुवर्णाकलेश ध्वजावरोहोन याङ तया-
६. स आवगुथि भारो समूहन दुबारस सिह सादोल
७. धापना याङा पे कुनस् सिंह थापना याङा दुबार
८. झ्पयारस तोलन तथा जुरो ॥ थ्वतेया चिन्ता याक गुथि
९. भारो बलिराम क्वाथनायक; पात्रवंश राउत्त काशि-



१०. राम बावुस, धलणीधर क्वाठनायक विश्वराम भारो
११. हाकुदेव मुरमि थ्व डाह्म गुथि भारोस ल्हाको फलस
१२. सर्व्वदा कल्याण मङ्गल ॥ शुभ ॥

### अनुवाद

कल्याण होस् । ने.सं ७८० (वि.सं. १७१७) चैत्र कृष्ण अमावास्या शुक्रबार रेवतीनक्षत्र विष्कुम्भयोग, यस दिन कीर्तिपुरका दिवंगत क्वाठनायक जकेराज भारोले श्री ३ नारायण मूर्ति स्थापना गरी सुनको गजुर र ध्वजा चढाउने काम गरिराखेकोमा अब गुठियार-समूहले ढोकामा सिंह, शार्दूल स्थापना गरी चार कुनामा सिंह स्थापना गरियो; ढोकाको झ्यालमा तोरण राखियो ।

यस कुराको हरबिचार गर्ने गुठियार क्वाठनायक बलिराम भारो, पात्रवंश राउत्त काशीराम बाबु, क्वाठनायक धरणीधर, विश्वराम भारो, हाकुदेव मुल्मी यी पाँच जना गुठियारलाई शास्त्रमा बताएजति फल प्राप्त होस् । सधैं कल्याण मंगल शुभ होस् ।

★★★

## (४२५)

## कीर्तिपुर खासीबजार शिवमन्दिरको अभिलेख

### मूलपाठ

१. ॐ नमो शिवाय ॥ कण्ठे जस्य लसत्करारगललं गंगाजरं मस्तके ॥ वामांगे
२. गिरिराजराजतनया याद्या भवानि सति, नन्दिस्कन्दगणाधिराज
३. वशित श्रीविश्वनाथ प्रभु, काशिमण्डिरसंस्थितो क्षिरगुरु धयात्सदा मं-
४. गलं ॥ ॥ स्वस्ति ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८१ कार्त्तिकमासे कृष्णपक्षे ॥ षष्ठम्या
५. न्तिथौ प्वक्षनक्षत्रे व्रम्हजोगे, सोमवासरे ॥ अस्मिन्दिने श्रीकिर्तिपुरि देश
६. वंथवत्वाल सत्रयन्तागृह मानसिंह भारोन स्वहस्तेन स्ववाचा प्रतिपन्नेन भृ-
७. ते सीरारचित प्रासाद देवरसह स्वप्रतिशिरामूत्ति श्रीमच्छ्रीश्रीमहादेव
८. स्थापना याङन शिरो झमरसिपोदो क्षेत्र, रोव छि १ जव नसि २ मोहोरटंका ८ ए
९. ते कृत दाम शिवरोक प्राप्तिकामनार्थ सप्रदत्तं ॥ पुनः स्वज्येष्ठ पुत्र मनोहोरसिंह
१०. भारो भ्राते हरिहरसिंह भारो नेम्ह फुकिजसन स्वहस्तने निक्षेपन न्हाव वुन वो
११. यका श्रीश्रीश्रीमहादेवस्के वोसाधन जज्ञ याय निमित्तिनं चोवु रोव १ जवा

१२. तवलिवु रोवछि १ जव स्व ३ एतेन रासि क्षेत्र संप्रदत्तं ॥ एते न्हायानो स्वदंर्त्त परद
१३. र्त्ताम्वा जो हरेत् सुरविप्रयो वृत्तिंस जायते विट्भू वर्षानांमजुतायुते ॥ भाषाः थ्वते बुया
१४. दामयां वर्षप्रति वरसानन कार्त्तिक कृष्ण षष्टमी कुन्हु बोसाधन याय कुन्हु पुं ३ संष्बारन
१५. देवरपासे दं ३ घेर कस्ति साषर दं २ सा दुदु सा घरि पूजा जो ३ फं २ जाकेया मधी रूपयात
१६. कुड २ दखेन । के चतुद्दशी पूर्णमाशी संक्रान्ति स्वरपोरयात फं ६ पूजा वारिके जुरो ॥ दक्षि-
१७. ना दं १ वुसाधन कुन्हु ॥ पुनः यज्ञेयात सोसि, सिमत, कुड १ तेछो, कुड १ अक्षत कु
१८. ड १ हामर कुड १ पु १ कि प्र २ धेर पात ८ सादुदु घरि, छ्यात्री फं १ अष्टव्रीहि
१९. कस्ति साषर व्कार जज्ञ ओषधिमारको कुड ५ वलिजा, कुड ७ मतके देव
२०. दक्षिना दं ४ प्रोहित श्रीविष्णुधरजु म्हं १ जोशि म्हं १ आचार्ज्य म्ह १ दक्षिना म्हति
२१. दं २ विय ॥ पुनः शिवरात्रि कुन्हु पुजा जो १ घेर दिवा पू र प्र २ घेरन चाछि सा धरि
२२. दुदु पात २ दं १ धेर कस्ति साषर दं १ दक्षिंना जो १ निश्रव ॥ प्रसेखर को गुथिया
२३. ॥ गुथि भारो मानसिंदेव भारो, दुर्ग्गादाश भारो विष्णुसिंह माहात जजमान मान-
२४. सिंह भारो ॥ थ्वतेसन निस्त्रपमार ॥ सास्त्रार्थस ल्हाको प्राप्ति कामनार्थ ॥ शुभ ॥
२५. षासि ग्वड १ चतन पू १ दुता ॥ पूजावारि श्री रावरजु म्ह १ सतेराम जो

### अनुवाद

महादेवलाई नमस्कार । जसको घाँटीमा कडा विष रहेको छ; शिरमा गंगाजल रहेको छ; बायाँपट्टि अङ्कमा पार्वती छिन्; जुन पहिले सतीदेवी थिइन्; नन्दी, स्वामिकार्तिक, गणेशहरू रहेका छन्; काशीको मन्दिरमा रहेका, साराका गुरु विश्वनाथ प्रभुले सदा मंगल गरून् ।

कल्याण होस् । ने.सं. (वि.सं. १७१७) कार्तिक कृष्ण षष्ठी सोमबार पुष्यनक्षत्र ब्रम्हयोग, यस दिन श्रीकीर्तिपुरदेश वंथटोल सत्रयन्त्तागृहका मानसिंह भारोले आफ्नै हातले, आफ्नो वचन दिई ढुङ्गे देवमन्दिर बनाई श्री ३ महादेव स्थापना गरे; आफ्नो ढुङ्गे सालिक पनि स्थापना गरे । शिरा



झमरसिपोदो खेत एक रोपनी दुइ जवर आठ रुपिया... शिवलोक प्राप्ति होस् भनी कामना गरी गुठी राखे । फेरि आफ्ना जेठा छोरा मनोहरिसिंह भारो भाइ हरिहरसिंह भारो दुइ दाजुभाइले आफ्नै हातले... श्री ३ महादेवलाई बुसाधन यज्ञ गर्नाको लागि चावु खेत एकरोपनी... जव, तवलि खेत एक रोपनी तीन जव, यति खेत गुठी राखे । यी र अघिको पनि खेत, जसले देवता र ब्राम्मणलाई दान दिएको खेत हर्ला, त्यो दसौं हजार वर्षसम्म नरकमा कीरा भएर बस्ला ।

बेहोरा– यी खेतको र दामको आयस्ताले प्रतिवर्ष कार्तिक कृष्ण षष्ठीको दिन वुसाधन गर्दा ... देवलमा चून लाउनू, तीन दम्मको घिउ मह साखर र दुइ दम्मको गाईको दूध, गाईको दही, पूजा जोर तीन, दुइ पाथी चामलको रोटी पकाई चढाउनू दुइ कुरुवा चामल दक्षिणाको लागि । चतुर्दशी, पूर्णिमा, संक्रान्ति तीन पटकलाई गरी पूजावारीलाई छ पाथी चामल, दक्षिणा १ दम्म । बुसानको दिन यज्ञको लागि सोसिं (काठविशेष) सिमत, एक कुरुवा जौ, एक कुरुवा अक्षता, एक कुरुवा तिल, पुनकि (चामलविशेष) एक कुरुवा, घिउ २ पाउ, गाईको दूधको दही आठ कहनारा, छ्यात्री (धान विशेष ?) एक पाथी अष्टव्रीहि (आठ प्रकारका धान), मह, साखर, ... चाहिने जति यज्ञ-ओषधि, पाँच कुरुवा बलिजा (बलिको लागि भात), सात कुरुवा मतके (बत्तीको लागि चामल) देवतालाई दक्षिणा ४ दम्म, पुरोहित श्रीविष्णुधरजु १ जना, जोशी एक जना, आचार्य एक जना, यतिलाई जनैपिछे दुइ दम्म दक्षिणा दिनू ।

फेरि शिवरात्रिको दिन पूजासामग्री एकजोर, घिउको बत्ती एक, दुइ पाउ घिउले पुग्ने जति बाल्ने, गाईको दूधको दही दुइ कहतारो, एक दम्मले घिउ मह, सख्खर, १ दम्म दक्षिणा, एक जोर निश्राव ॥

यति गरी बाँकी जति गुठियारले खानू । गुठियारहरू .. मानसिंहदेव भारो, दुर्गादास भारो, विष्णुसिंह माहात, यजमान मान सिंह भारो । यिनीहरूले चलाउनू । शास्त्रमा बताएजति फल प्राप्ति होस् । शुभं ।

एकवटा खासी (भाँडो विशेष) एकवटा चतन पनि चढाइयो । पुजारी श्रीरावरजु एक जना, सत्यराम.. ।

★★★

(४२६)

## कीर्तिपुर लोहंदेवलको अभिलेख

### मूलपाठ

१. नमो रत्नत्रयाय ॥ श्रेयोस्तु सम्वत् ७८४ कात्तिक कृष्ण प्रतिपद्यां तिथौ रोहिणी नक्ष-
२. त्रे शिवयोगे शुक्रवासरे थ्व कुन्हु भूमिशोधन एकाशि पूजा दिन जुरो ॥ थ्व

३. च्यान्हुरिव नवम्यां तिथौ पूर्व्वफाल्गुणीनक्षेत्रे विष्कम्भयोगे शुक्रवासरे थ्व कुन्हु ज-
४. वालोपन दिन जुरो ॥ ॥ थ्वन च्यान्हुरिव प्रतिपद्यां तिथो जेष्ठानक्षत्रे धृतियोगे शु-
५. क्रवासरे ॥ थो कुन्ह् - गुलिपूजा गोग्रास... दिन जुरो ॥ कात्तिक पूर्ण्णमा कृ-
६. त्तिकनक्षत्रे परिधयोगे वृहस्पतिवासरे ॥ थो कुन्हु पादस्थापना याङा जुरो ॥
७. ? श्रेयोस्तु सम्वत् ७८ कार्त्तिक शुक्ल चतुर्थी प्रञ्चम्यां.. प्र मूल नक्षत्र अति (गण्डयो)-
८. गे वृहस्पतिवासरे ॥ थ्व कुन्हु रत्नन्यास देवस्थापन .... जिमप्यन्हुरिव द्वितीयायां
९. तिथौ कृत्तिक प्रोहिणी नक्षत्रे परिधयोगे वुद्धवासरे ॥ थ्व कुन्हु देव प्रतिस्था दिन जुरो ॥
१०. अहोरात्र यज्ञ याङन ध्वजावरोहन याङन श्रीश्रीनिवास मल्ल विज्याचकं ॥ श्रीकीर्त्तिपुरीदेश गा-
११. लफलस्थाने ग्रन्थकूट दयकं सुवर्ण्ण कलश... लिपत श्रीश्रीश्रीवुद्ध धर्म संघत्रयो देव-
१२. ता... श्रीदेव, ऐते देवप्रीतिस्था याङा दिन जुरो ॥ श्रेयोस्तु सम्वत् ७८५ पौष कृष्ण
१३. अमावास्यान्तिथौ उत्राषाढनक्षत्रे वज्रयोगे यथाकरण मूहुत्तरे शुक्रबार ॥ मक्रराशिगते स-
१४. वितरि वृषरासिगते चन्द्रमसि (एतस्मिन्) श्रीश्रीसूर्यग्रामपर्वदिवेसे ॥ दानपति श्रीपुरवो
१५. ..... याक तर्छ ॥ सुगतराम भारो तस्य भार्य्या शिवदुती थ्व नेम्ह स्त्रीपुरुषन स्वहस्तेन स्ववि-
१६. द्यमानेन स्ववाचा प्रतिपन्नेन भूतेन रोव ५ थेवगलवु कर्ष ६ परिडावतिव - यकलिव्वाक
१७. सह क्रष छ परिडाद्वर... कर्ष २ भाजनबुंवातिका ॥ मोहर टंक २० ॥ ए त क्षेत्र संप्रस्दत्तं ॥ स्वदत्त
१८. परदत्तं वा यो हरेत्सुरविप्रयो, विर्त्तिस जायते विट्भुक वर्षाणामयुतायुतै ॥ भाषा थुति वुओ-
१९. या वरसानन दिनप्रति अष्ठा १ पूजा के । के फं ३ स्वानके प्र २ वजिं नेव्यद्य... वा धेर वा
२०. धेवा साषर, प्र २ चेकन, रछियात, थुति नित्यपूजादि जुरो ॥ क्लुषु मंडल देशयात मधु तो-



२१. रे मतप्वात ३७ छोयकेमार ॥ इन्द्रयात्रा द्वादशि कुन्हुनिस्य पेन्हुतो मत छोयकेमार ॥
२२. वर्षप्रति जोक फं ४५ देवरहिकयात गुथिन विय जुरो ॥ थुतिया चिन्ता याक द ... गोष्ठि वाहा-
२३. रया चन्द्रजोतिजु भात्य सह चैत्रलङ युतागृह ज्ञानचन्द्रजु परारयाव लि-मजु, तनमा-
२४. रसिंजु ॥ थुति जुरो ॥ फं १ सियाफलके, फं २ जिथ्वं कुड रा पारु मात सन्हान थुति दयकं द्वादसि-
२५. निसिवन थारन दान बिय जुरो ॥ बुसाधन कुन्हु होम छोयकेमार नेश्रावजु १ कु २ थापं दं ३ (द)
२६. क्षिणा देव गुरुवाहार उपाध्याययात, थुति चोस्यं तक्व दयकं नित्यपूजा याङ मत विस्यं दान
२७. पतेस्यं, यंजमार ॥ भाषा थ्व लोपं या कारे पंञ्चमहापातक जुरो ॥ लोपं मयाकाले उत्तारो-
२८. त्तर जुदुरो ॥ थुतिया साक्षि भ्राता नरहरि भारो, भात्य सिद्धिराम, हरि कृष्ण त्रय दृष्टा ॥

## अनुवाद

त्रिरत्न (बुद्ध, धर्म, संघ) लाई नमस्कार ॥ कल्याण होस् । ने.सं. ७८४ (वि.सं. १७२०) कार्तिक कृष्ण प्रतिपदा रोहिणीनक्षत्र शिवयोग शुक्रबार, यस दिन भूमिशोधन, एकाशिपूजा गरियो । यसको आठ दिनपछि नवमी पूर्वफाल्गुनीनक्षत्र विष्कुम्भयोग शुक्रबार, यस दिन जवालोपन ( ?) गरियो । यसको आठ दिनपछि प्रतिपदा ज्येष्ठानक्षत्र धृतियोग शुक्रबारको दिन-गुलिपूजा गरियो । ... कार्तिक पूर्णिमा कृत्तिकानक्षत्रे परिधयोग बृहस्पतिबार यस दिन पाद स्थापन गरियो ।

कल्याण होस् । ने.सं. ७८५ (वि.सं. १७२१) कार्तिक शुक्ल चतुर्थी उप्रान्त पञ्चमी ... उप्रान्त मूलनक्षत्र अतिगण्डयोग बृहस्पतिबार, यसदिन रत्नन्यास र देवस्थापन गरियो । .... १४ दिनपछि द्वितीया कृत्तिका उप्रान्त रोहिणी नक्षत्र परिधयोग बुधबार, यस दिन देवप्रतिष्ठा गरियो; अहोरात्र यज्ञ गरियो; ध्वजारोहण गरियो । श्रीश्रीनिवास मल्ल राजा पाल्नु भएको थियो । श्रीकीर्तिपुरदेश, गालफलस्थानमा ग्रन्थकूट देवल बनाई सुनको गजुर... चढाइएको थियो । ... श्री ३ बुद्ध धर्म संघ तीन देवता र ... देवता यति देवताले प्रतिष्ठा गरियो ।

कल्याण होस् । ने.सं. ७८५ (वि.सं. १७२१) पौष कृष्ण अमावास्या शुक्रबार उत्तराषाढा नक्षत्र वज्रयोग, पर्नुपर्ने करण मुहूर्त परेको बेलामा, मकर राशिमा सूर्य गएमा, वृषराशिमा चन्द्रमा गएमा, श्रीसूर्यग्रहणको यस पर्व दिनमा । दानपति श्रीपुलचोक.... तर्छेका सुगतराम भारो, तिनकी पत्नी शिवदूती, यी दुइ स्त्रीपुरुषले आफ्नै हातले आफू अगाडि रही आफ्नो वचन दिईकन थेवगल खेत रोपनी ६½ कर्ष, परिडा वतिव... यकलिव्वाक जम्मा छ वर्ष परिडाडोल, माजनवुको बारी २ कर्ष तथा बीस रुपियाँ यति खेत गुठी राखे । आफूले दान दिएको वा अरूले

दान दिएको देवता र ब्राह्मणका खेत जसले हर्ला, त्यो मानिस दशौं हजार वर्षसम्म नरक खाने भई नरकमा पर्नेछ ।

यसको बेहोरा- यति खेतको आयस्ताले प्रतिदिन एक अस्ता पूजाको चामल । फूलको लागि चामल तीन पाथी, २ पाथी चिउरा नैवेद्य ... घिउ साखर, २ पाथी तेल, यति एक महीनाको लागि । यतिले नित्यपूजा गर्नू । बलुखु मण्डल देशको जात्रा नसिद्धियुन्जेल बत्ती ३७ वटा बाल्नु पर्छ । इन्द्रयात्राको द्वादशीदेखि चार दिनसम्म बत्ती बाल्नू । प्रतिवर्ष ४५ पाथी चामल देवतापालेलाई गुठीले दिनु पर्छ । यसको हेरबिचार गर्न ... वहालका चन्द्रज्योति र भाइ चितलाङ युतागृहका ज्ञानचन्द्र ... मारसिं, यति हुन् ।

भुटेको चिउरा एक पाथी, जिथ्वं (जाँड विशेष) दुइ पाथी, मासु १ कुड, अदुवा मातसन्हान यति राखी द्वादशी... दान दिनुपर्छ । बुसाधनको दिन होम गर्नु पर्छ । निश्राव एक जोर, दुइ कुरुवा थाषकि (चामल), ३ दम्म दक्षिण्ण देवता, गूरवहाल (वज्राचार्य) र उपाध्यायलाई । यति लेखिएजति राखी नित्य पूजा गरी बत्ती बाली दान गर्नू ।

यसबेहोराको लोप गरे पञ्चमहापाप लागोस्; लोप गरिएन भने उत्तरोत्तर वृद्धि होस् । यसका दृष्ट साक्षी भाइ नरहरि भारो, भाइ सिद्धिराम र हरिकृष्ण हुन् ।

★★★

(४२७)

## कीर्तिपुर लोहंदेवलको अभिलेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय ॥ वन्दे श्रीआदिबुद्धं प्रवरगुणनिधिं देवदेवाधिदेवं बुद्धं ज्ञानमुनीन्द्रं परमपदवरं मोक्षदं बुद्धना-
२. थं संसारे सारभूतं भवभंयहरणं सस्वसंसारतार भावाभावस्वरूपं, सकलभयहरं शाक्यसिंहन्नमामि ॥ ० ॥ प्रशादे-
३. वी पवित्री परमपदरी, विश्वमायाधरीन्तां सत्त्वानां मातभूतां भवभयहरणी मुक्तिमार्गप्रदेयां विश्वेषां वि-
४. श्वरूपी गगणसमगतां भावनाभावरूपीं शुन्यांगी शुन्यरूपीं सुखकर प्रवरा बुद्धमाता नमामि ॥ ० ॥ लोकेशं
५. लोकनाथं तिमिरमलहरं, सर्व्वलोकानुकंपं, सत्त्वानां मोक्षहेतुं प्रवरवलधरं पद्महस्तं सुशुद्धं शुद्धं सर्व्वार्थ का-
६. मं समपदगमनं मुक्तिमार्ग प्रदाता, सर्व्वे देवासुरान्तं प्रणमत चरणं लोकनाथं नमामि ॥ ॥ शुभ ॥



### अनुवाद

बुद्धलाई नमस्कार । ठूलठूला गुणका खानि भएका देवताहरूमा पनि मुख्य देवता भएका, ज्ञानी, ठूला मुनि, परमपदप्राप्त गरेका, मोक्ष दिने, संसारमा साररूप भएका, संसारको भय हर्ने, संसारबाट तार्ने, भाव र अभाव स्वरूप भएका सबै भय हेर्ने, शाक्यसिंह बुद्धलाई नमस्कार गर्दछु ।

पवित्र भएकी, परमपदमा पु-याउने, विश्वको मायालाई धारणा गरेकी, प्राणीहरूकी आमा जस्ती भएकी, संसारको भय हर्ने, मोक्षको बाटो देखाउने, विश्वरूप लिएकी, आकाश समान भएकी, भावनाभावरूप भएकी, शून्यस्वरूप भएकी सुख दिने, ठूली, बुद्धकी मातास्वरूपकी प्रज्ञा देवीलाई नमस्कार गर्दछु ।

अन्धकाररूप मयल हर्ने, सारा लोकलाई दया गर्ने, प्राणीहरूलाई मोक्ष दिने, ठूलो बलधारण गरेका, शुद्धरूपका, सबै कामना पूरा गर्ने, समानपदमा जाने मोक्षको बाटो देखाउने, सारा देवता दानवहरूले ढोगिएका, पद्मपाणि लोकेश्वरलाई नमस्कार गर्दछु ।

शुभ होस् ।

★★★

(४२८)

## कीर्तिपुर चिथुटोलको चैत्यको अभिलेख

### मूलपाठ

१. मानसिंङ भारोण तया
२. त्वरं सम्वत् ७८५

### अनुवाद

ने.सं. ७८५ (वि.सं. १७२२) मा मानसिंह भारोले यो तोरण चढाएका हुन् ।

★★★

(४२९)

## कीर्तिपुर तःननीको अभिलेख

### मूलपाठ

१. ॐ नमो बुद्धाय, नमो धर्म्माय, नमो संघायः ॥ श्रेयोऽस्तु ॥ सम्वत् ७८५ आश्णिीमासे शुक्लपक्षे
२. ॥ पूर्णमावाश्यायान्तिथौ ॥ अश्विणीनक्षेत्रे, वज्रजोगे, शुल्कबार ॥ थ्व कुन्हु श्रीश्रीश्रीचैत्रभट्टा-
३. रिकासके सुवर्ण्ण अंवलसाल, सुवर्ण्ण चकलि दोहोलपा, सुवर्ण्ण अक्षव देव मुख दयकं ध्वजावल्व-
४. हन संपूर्णाहुति याडा जुरो ॥ थ्वतेया गुरुभलार श्रीइन्द्रजोतिजु, कफित ग्वपिराम भा-
५. वो चिन्ता याक वन्दुसिंह भावो, खोसिंङ भावो माधवराम भावो मान सिंङ भावो थ्वते प्र-
६. मूखन अहोरात्र धम्मुणी सकरे समूहन दयका जुरो ॥ मोहोरटंका ५ चिन्तायाक डाम्हसे
७. न तडा जुरो ॥ भुय थ्वदेवया व्रषबन्धन याय निर्मितिन स यव ग्वपिराम भावो नर स्वहस्ते-
८. न दुन्ता नाय छेदो वार्त्तिका कर्ष १ थ्वतेया- स्यनं दिवा पु १ छोयके मार ॥ पुन स यव ग्व-
९. पिराम, पुनुसिंह, हाकुख्बार, खोसिंह, माधवराम, मानसिंह, थ्व षुम्ह गुथिसमुहन श्री
१०. ३ वैरोचन भट्टारिकासके ल्वहो त्वरण दोहोरपा जुरो ॥ कल्यान मंगल शुभमस्तु

### अनुवाद

बुद्धलाई नमस्कार, धर्मलाई नमस्कार, संघलाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७८५ (वि.सं. १७२२) आश्विन शुक्ल पूर्णिमा शुक्रबार अश्विनीनक्षत्र, वज्रयोग, यस दिन श्रीश्रीचैत्यभट्टारकलाई सुनको अंवलसाल, चक्रावली चढाइए; सुनको अक्षोभ्य देवको मुख बनाई ध्वजारोहण गरी सम्पूर्णाहुति गरियो । यसका गुरुभाजु श्रीइन्द्रजोतिजु कफी गोपीराम भावो हेरचाह गर्ने पन्दुसिंह भावो, खोसिङ भावो, माधवराम भावो, मानसिंह भावो, यति प्रमुख भई अहोरात्र धर्म गर्ने सकल समूहले उक्त कुरा बनाइएको हो । पाँच रुपियाँ चिन्ता गर्नेहरूले थपेका हुन् ।

फेरि यी देवताको वर्षबन्धन गर्नाको लागि सोही गोपीराम भावोले आफ्नै हातले नायछेदो बारी १ कर्ष चढाए । यसको आयस्ताले बत्ती १, बाल्नु पर्छ । फेरि ती गोपीराम पुनुसिंह, हाकुख्बार, खोसिंह, माधवरा, मानसिंह, यी ६ जना गुठियारको समूहले श्री ३ वैरोचन भट्टारकलाई ढुङ्गाको तोरण चढाइयो ।

कल्याण मङ्गल शुभ होस् ।

★★★

(४३०)

## कीर्तिपुर चिथुबहिलको अभिलेख

### मूलपाठ

१. ..................... सम्वत् .................. ४ वैशाक (शु) क्लः ॥ ....... तिथौ
२. ................................................... योगे । सोम (वासरे) ..............
३. ................... श्री ................त्रकोगृह .....................
४. .................. नाम .................. नाने ......... चा प्रति .... न ...... ते
५. यदाफलबु पञ्चरोपनिक .... भ क्षेत्र रोवाङ्ग रोव .............
६. ५ प .. नसि २ विक्षु कीर्तिपुरि बिहालस, च ............
७. ङा ....... दयकं ..........' न संप्रदत्त ' भाषा थ्व बुया बरसा-
८. न .............. नि ............. त वा वियमाल, कतिनि पुनि
९. स कुन्हु मतप्व्रात पीयच्या ४८ चेकन कुड षु छ दवथें जु
१०. रो ......... फं ९० पि बियमार । म .......... विक्षुश्रीमयन-
११. सिंङजु, गोवर्धनसिंङजु श्री .... जिनिदेवजु थ्व पेम्ह
१२. ........... निस्त्र ..... क विम ............. न प्रति
१३. ........... ङन चैत्यभडाडसके ............ नित्यं पू (जा) यायमार
१४. ......... यमार थ्व ............. वैशाषशुक्ल द्वाद-
१५. शि कुन्हु होम याङन बुसाधन यायमार ॥ श्रीजित्रसिंजु गुरु-
१६. भडाड विज्याचकेमार थ्वया चिन्ता याक गोष्ठि सएवभिषुजु...
१७. ......... पुत्र ........................ थ्वते
१८. ........................... जुरो ॥ शुभमस्तु

## अनुवाद

.... ने.सं. ... वैशाख शुक्ल .... सोमबार .... त्रकोगृहका .... यंदा फलखेत ५ रोपनी, ... दुइ, भिक्षु कीर्तिपुर बहिल ..... बनाई दिइयो । बेहोरा यी खेतको आयस्ताले ... दिनु पर्छ । कार्तिक पूर्णिमाको दिन ४८ वटा बत्ती छ कुरुवा तेल पुगे जति बाल्नू । ...... नव्वे पाथी दिनु पर्छ । ...

... भिक्षु श्रीभयनसिंह गोवर्धन सिंह ..... जिनिदेव यी चारजनाले .... चैत्यभट्टारकलाई नित्यपूजा गर्नू । ....... वैशाख शुक्ल द्वादशीको दिन होम गरीकन बुसाधन गर्नू । श्रीजित्रसिंह गुरु भाजुलाई बोलाउनू ।

यसको हेरचाह गर्ने गुठियार सोही भिक्षु ..... छोरा । ..... यति । .... शुभ होस् ।

★★★

## (४३१)

# कीर्तिपुर क्वाचोटोल गोरखनाथ मन्दिरको शिलालेख

## मूलपाठ

१. ? ॐ नमो श्रीगोलोकनाथाय ॥ श्री-
२. यो्ऽस्तु ॥ सम्वत् ७८७ फार्ल्गुणमासे शु-
३. क्रपक्षे ॥ एकादश्यांन्तिथो ॥ पुनव्वसु
४. प्र पक्षनक्षत्रे: सोभनजोगे: आदिते-
५. त्यवासरे: थ्व कुन्हु श्रीमत श्रीश्री गो-
६. रोखनाथत्ती थाप्ना सपूर्णहुति
७. याङा जुरो; श्रीश्रीभैलवत्वं थापना
८. याङा जुरो; थ्वतेया दानपति यङा द-
९. र्शधारि: वरवुया: धलम जोगी: किं-
१०. त्तिपुरिया देविदाश जोगी: शिराम जो-
११. गि: लथनदाश जोगी: थ्व ङाम्ह समु-
१२. च्चयन चतुर्दर्शीस्यवा जोयाव देवल
१३. त्वं दयका जुरो ॥ आयुरारोज्ञ-
१४. संतान वृद्धिरस्तु सुभः गंगा
१५. नाथ गोजी सुभः



## अनुवाद

श्रीगोरखनाथलाई नमस्कार । कल्याण होस् । ने.सं. ७८७ (वि.सं. १७२३) फाल्गुन शुक्ल एकादशी पुनर्वसु उप्रान्त पुष्यनक्षत्र शोभनयोगे आदित्यबार, यस दिन श्रीश्रीश्रीगोरखनाथको स्थापना गरियो; सम्पूर्णाहुति गरियो । श्रीश्रीश्रीभैरवको स्थापना पनि गरियो ।

यसका दानपति यङा दर्शनधारी, बखुका धर्म जोगी, कीर्तिपुरका देवी दाश जोगी, श्रीराम जोगी, रत्नदास जोगी, यी पाँच जनाको समुच्चयले चतुर्दशी सेवा गरी देवल बनाइएको हो । आयु आरोग्य र सन्तानको वृद्धि होस् । शुभ होस् । गंगानाथ जोगीको शुभ होस् ।

★★★

## (४३२)

# कीर्तिपुर बाह्रिगामटोल गणेशपाटीको शिलालेख

## मूलपाठ

१. ? श्रेयो्ऽस्तु सम्वत् ७८८ चैत्रशुक्ल ॥ प्रति-
२. पद्यायां तिथौ ॥ उर्त्तरभद्रनक्षत्र ॥ शु-
३. क्रयोगे ॥ अंगालवासरे ॥ थ्व कुन्हु गृह-
४. अलांकार फले दयकं श्रीश्रीविघ्नेश्वल
५. भट्टारिका थाप्ना याङन, काष्ठ त्वरन
६. तस्य संपूर्णाहुति याङा, थ्वतेया चिन्ता
७. याक गडा भावो प्रमुखन सत्यराम
८. भारो, वद्य भावो, खोय एव भावो, पण्ड-
९. व भावो, फछि भावो, थ्व गुम्ह समूह
१०. दयका जुरो ॥ आयुरारोज्ञमस्तु ॥ शुभ ॥

## अनुवाद

कल्याण होस् ॥ ने.सं. ७८८ (वि.सं. १७२५) चैत्र शुक्ल प्रतिपदा मंगलबार उत्तरभाद्रनक्षत्र शुक्रयोग, यसदिन घरलाई सिँगार्ने पाटी बनाइयो । श्रीश्रीविघ्नेश्वर(गणेश) देवता स्थापना गरियो । काठको तोरण चढाई संपूर्णाहुति गरियो ।

यस कुराको देखरेख गर्ने प्रमुख गदा भावो सत्यराम भारो वद्य भावो खायएव भावो, पाण्डव भावो, पछि भावो, यी छ जनाको समूहले बनाइएकोले ।

आयु आरोग्यको वृद्धि होस् । शुभ होस् ।

★★★

(४३३)

## कीर्तिपुर चिलंचोबहालको शिलालेख

### मूलपाठ

१. २ ॐ नमः श्रीधर्म्मधातु वागीश्वराय ॥ आकाशोनिम्मलीभूत-
२. निष्प्रपञ्चगुणाश्रयः । पञ्चस्कन्धमनशान्तस्तस्मै स्तूपात्मने न-
३. मः ॥ श्रेयोऽस्तु सम्वत् ७८८ आश्विनी शुक्र पूर्ण्णमास्यान्तिथौ
४. रेवतीनक्षत्रे, हर्षनयोगे, शुक्रवासरे ॥ थ्व कुन्हु श्रीचैत्य-
५. रङ धर्म्मधातु भट्टारकसके, लोहोन मार्शरि दयकं प्रति-
६. स्था याङा दिन जुरो ॥ दानपति चैत्य रङ पछि गृहाधिवासित
७. श्रीवजाचार्य्य गुनचन्द्र प्रमुखन, श्रीदेवजोति, श्रीग्यारवुं श्री-
८. सुनादेव, श्रीजयजोति, श्रीगुरुदेव, श्रीजयमुनि, श्रीहृद-
९. यपार, श्रीदेवजोति, श्रीरत्न, श्रीदेवजोति, श्रीधनपति
१०. थुति बुद्धगीत गोस्थि समूहन दयका जुरो ॥ भुय थुतिस-
११. नं घण्ठगोड १ दोहोरपा जुरो ॥ भुय मशिरिया देवनें सुव-
१२. र्ण्ण चंक्र तयाया चिन्ता याक, श्रीजयदेव, श्रीगुणचन्द्र श्री
१३. धनदेवया, सिजर जुक्व जुरो ॥ बुद्धगीतया गुरु श्रीपुन-
१४. देव जुरो ॥ शुभ ॥ श्रीश्रीश्रीनिवास मल्ल देवस्य विजय रा-
१५. ज्य समय बेलस दयका जुरो ॥ थुलि पुन्यया प्रभाव-
१६. न शास्त्रोक्त फल प्राप्तमस्तु ॥ शुभमस्तु सर्व्वदा ॥

### अनुवाद

श्रीधर्मधातु वागीश्वरलाई नमः । आकाशजस्तै सफा भएका, प्रपञ्च नभएका, गुणी, पञ्चस्कन्धमनले शान्त भएका स्तूपस्वरूप ती धर्मधातुलाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७८८ (वि.सं. १७२५) आश्विन शुक्ल पूर्णिमा शुक्रबार रेवती नक्षत्र हर्षणयोग, यस दिन श्रीचैत्यरङ (श्रीचिलंचो चैत्य) का धर्मधातु भट्टारकलाई ढुङ्गाको मशिरि बनाई प्रतिष्ठा गरियो ।



दानपति चैत्यरङको पश्चिमपट्टिको घरमा बस्ने श्रीवज्राचार्य गुणचन्द्र प्रमुख भई श्रीदेवज्योति श्रीग्याखु श्रीसुनादेव, श्रीजयज्योति, श्रीगुरुदेव, श्रीजयमुनि, श्रीहृदयपाल, श्रीदेवज्योति श्रीरत्न श्रीदेवज्योति, श्रीधनपति, यति बुद्धगीत गोष्ठी समूहले बनाइएको हो । फेरि यतिले एउटा घण्टा चढाइयो । फेरि मशिरि माथि राखिएको सुवर्णचक्रको देखरेख गर्ने श्रीजेयदेव, श्रीगुणचन्द्र । तामा जति धनदेवको हो । बुद्धगीतका गुरु श्री पूर्णदेव हुन् । शुभ होस् ।

श्रीश्रीश्रीनिवास मल्लदेवको विजयराज्यमा सो बनाइएको हो । पुण्यको प्रभावले शास्त्रमा बताइए अनुसार फल प्राप्त होस् । सधैं शुभ होस् ।

★★★

(४३४)

## कीर्तिपुर चिलंचोबहालभित्र चैत्यको शिलालेख

### मूलपाठ

१. श्रेयोऽस्तु ॥ सम्वत् ७८८ आश्विणीमा-
२. सं कृष्णपक्षे ॥ चर्तुथी प्र पञ्चम्यां-
३. तिथौः मृगशिलनक्षत्रेः परिध-
४. योगेः बुधवासरेः पदमकाष्ठग्री-
५. स्थानेः थ्व कुन्हु दानपति माधनक्ष-
६. लननि गृह ॥ साक्यवंश सतमुनि
७. जु ग्यनजर जु, अमृतचन्द्रजु, वे-
८. षा भारो, मानसिङ भारो विश्वदे-
९. व भारो, दर्व्यराम भारोः थ्वते समूह-
१०. न बुधगीत धर्म्मन श्रीश्रीश्री
११. धर्म्मधातु भट्टारकस्य द्वार दक्षिण वा-
१२. मे, क्रोधराज प्रतिमा नेम्ह द्वयकं
१३. प्रतिष्ठा याङा स्थापना याङा दिन
१४. जुरो शुभ ॥ थ्वते पुन्यया प्रभा-
१५. वेन शास्त्रोक्त फल प्राप्तमस्तु ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ७८८ (वि.सं. १७२५) आश्विन कृष्ण चतुर्थी उप्रान्त पञ्चमी मृगशिरानक्षत्र परिधयोग बुधबारमा ।

पद्माकाष्ठगिरिस्थानमा यस दिन दानपति माधनखेल ननीगृहका शाक्यवंश सत्यमुनिजु ज्ञानजरजु अमृतचन्द्रजु, वेखा भारो मानसिंह भारो विश्वदेव भारो द्रव्यराम भारो यति समूहले बुद्धगीतधर्म्म खलकले श्रीश्रीश्रीधर्मधातु भट्टारकको ढोकाको दायाँ बायाँपट्टि दुइ क्रोधराजका मूर्ति बनाई प्रतिष्ठा गरी स्थापना गरियो ।

यसको पुण्यको प्रभावले शास्त्रमा बताए अनुसारको फल प्राप्ति होस् ।

★★★

(४३५)

# चिलंचो चैत्यको पशुपति गुह्येश्वरीको दक्षिणको शिलालेख

## मूलपाठ

१. ॐ नमः श्री (धर्म्मधा) तु वागीश्वराय ॥ नमो भगवते .....
२. धर्म्म धातु ...............
३. ........................ मोह सुदन ॥ जनमी सर्व मुताना ............
४. .... दायिनि ॥ त्रैलोकय व्यापिनी देवी गुह्यश्वरी .................
५. ते ॥ ० ॥ स्वस्ति सम्वत् ७८८ अशुनी कृष्ण चतुर्थी .....
६. ............................... योग वुधवासरे ..................
७. ......................... श्रीगुह्यश्वरी .... मण्डल निगुली दयकं ...
८. ................................... दानपति .......................
९. ............................. राम भारो थुति समूहन दयक ................
१०. जुरो ॥ सम्वत् ७८९ आश्विनी शुक्र पंचमि अनुराढ नक्षेत्र सो
११. मवासरे थ्व कुन्हु ॥ दान पति पिरागराम भारोस-
१२. न, थ्व लोहो खम्म घण्ठ सहितनं ॥ दिवंगत स्व पिता कृ
१३. ष्णाराम भारो, स्व जननी, पुत्री सुभद्रा थवत नामन
१४. .............. म्ह सारिक दयकं थापना याङा ..........
१५. ............. ॥ श्रीश्रीश्रीनिवा मल्लस्य (विजयराज्य समय)
१६. स दयका जुरो ॥ भाषा गोम्हन मण्डल घण्ठ सारि
१७. क स्यनकरसा गोहथ्या व्रम्हहथ्या पञ्चमहापा



१८. तक राक राय जुरो ॥ शुभ ॥

## अनुवाद

श्रीधर्मधातु वागीश्वरलाई नमस्कार । भगवान् धर्मधातु ..... लाई नमस्कार । ....... मोह नाश गर्ने, सबै प्राणीकी आमा,..... दिने तीनै लोकमा व्यापी भएकी देवी गुह्यश्वरीलाई नमस्कार ।

कल्याण होस् । ने.सं. ७८८ (वि.सं. १७२५) आश्विन कृष्ण चतुर्थी .... योग बुधबार, श्रीगुह्यश्वरी .... दुवै मण्डल बनाइए । .... दानपति ... राम भारो यति समूहले बनाएको हो ।

ने.सं. ७८९ (वि.सं.१७२६) आश्विन शुक्ल पञ्चमी अनुराधा सोमबार, यस दिन दानपति पिरागराम भारोले यो ढुङ्गे स्तम्भ र घण्टा चढाए; दिवंगत आफ्नो बाबु कृष्णराम भारो, आफ्नी आमा तथा छोरी सुभद्रा र आफ्नो नामले ... वटा सालिक बनाई स्थापना गरे ।

श्रीश्रीश्रीनिव मल्लको विजयराज्यमा यो बनाइएको हो । बेहोरा– जसले मण्डल, घण्टा सालिक विगार्ला; त्यसलाई गोहत्या, ब्रम्हहत्या आदि पञ्चमहापातक लागोस् । शुभ होस् ।

★★★

(४३६)

# कीर्तिपुर चिलंचोबहालको शिलालेख

## मूलपाठ

१. २ श्रेयोऽस्तु सम्वत् ७८९ आश्विनशुक्र पञ्चम्यान्तिथौ अनुराधा प्र जेष्ठनक्षत्रे
२. २ आयुष्मानयोगे सोमवासरे थ्व कुन्हु श्रीधर्म्मधातु वागीश्वर भट्टार-
३. २ कसके, द्वार, जव खव किसिम नेम्ह प्रतिष्ठा याङ तया दिन जुरो ॥ ० ॥
४. २ दानपति छेकफ्कित वेखा भारो, श्रीरत्नदेव, रामदास भारो, विन्हुसिं भारोः सर्व्वराम भा-
५. रो, वैकुण्ठराम भारो, राय भारो, रत्नसिह भारो, सुषुरसिं भाव ॥ थुति समूहन
६. तया जुरो ॥ शुभमस्तु सर्व्वदा ॥ ० ॥

## अनुवाद

कल्याण होस् । ने.सं. ७८९ (वि.सं. १७२६) आश्विन शुक्ल पञ्चमी सोमबार, अनुराधा उप्रान्त ज्येष्ठानक्षत्र, आयुष्मान्योग, यस दिन, श्री धर्मधातुवागीश्वर भट्टारकलाई ढोकाको दायाँबायाँ गरी दुइटा हात्ती चढाई प्रतिष्ठा गरियो ।

